# श्रीमद्भगवद्गीता

(नेपाली रूपान्तरण)



अनन्त राज उपाध्याय

श्रीमद्भगवद्गीता (नेपाली रूपान्तरण)
अनन्त राज उपाध्याय
१३३ घर नं. गौरी शंकर पथ, हेटौंडा-४
मोबाइल: ९८४५३५४११५

भाषा सम्पादन
विष्णुप्रसाद गौतम

कम्प्युटर सेटिङ
जनक लम्साल

आवरण सजावट
दिलकुमार राई

प्रति २५०
संस्करण : प्रथम २०७८

मुद्रक
प्रयास_हेटौंडा
फोन: ०५७-५२१९२५

मूल्य रू. ४००।-

# मन्तव्य



जीवन के हो ? जीवनको कारण के हो ? जीवनको कर्तव्य के हो ? किन जन्म-मृत्यु हुन्छ ? सबै प्रकारका प्राणीहरू भन्दा विवेकशील मानिने मानव नै राग, द्वेष, अहंकार र असन्तोषले किन ग्रसित छ ? इत्यादि विषयहरूलाई आधार मानी श्रीमद्भगवद्गीतामा विवेचना गरिएको छ। गीता वेद वेद्य ब्रह्मको स्वरूप हो। यो ब्रह्म ज्ञानको माध्यम हो। कृष्णात्मना अवतरित ब्रह्मको यो उपदेश हो।

यो आश्चर्यजनक जगतलाई अवलोकन गर्दा यस्को स्रष्टा को होला ? भनेर जिज्ञासा हुनु स्वाभाविकै हो। सर्जकको स्वरूप प्रत्यक्ष चर्म चक्षुद्वारा नदेखिने हुनाले आ-आफ्नो भावना विचार अनुसार जगत्का कारणको अस्तित्व उत्सुक मानिसहरूद्वारा स्वीकार गरिएको पाइन्छ। जस्तै :

**यं शैवाः समुपासते शिव इति ब्रह्मेति वेदान्तिनो**
**बौध्दा बुध्द इति प्रमाणपटवः कर्तेति नैयायिकाः।**
**अर्हन्नित्यथ जैनशासनरताः कर्मेति मीमांसकाः**
**सोऽयं नो विदधातु वाञ्छितफलं त्रैलोक्यनाथो हरिः॥**

(शैव धर्मका अनुयायीहरूले शिव रूपमा, वेदान्तीहरूले ब्रह्मको रूपमा, बौद्धहरूले बुद्धको रूपमा, प्रमाण दिन कुशल न्याय दर्शनका अनुयायीहरूले कर्ताको रूपमा, जैन धर्मावलम्बी : अर्हन र मिमांसकहरूले कर्मको रूपमा जुन परमात्माको उपासना गर्दछन् उनै त्रैलोक्याधिपति भगवान् श्रीहरिले हामीलाई वाञ्छित फल प्रदान गरून्।)

जगत्को कारण भएको ब्रह्म पद वाच्य परेश्वरको ज्ञान नभई **"ऋते ज्ञानात् न मुक्तिः"** अर्थात् (ज्ञान नभई मुक्ति पाइन्न) यस सांसारिक माया जालबाट हामीलाई मुक्ति पाइन्न। मोक्ष प्राप्तिका निमित्त :

**भोक्ता भोग्यं प्रेरितारं च मत्वा**
**जुष्टस्ततस्तेनामृतत्वमेति।**

को अनुसार तत्वत्रयपद वाच्य जीव, ईश्वर र अचित तत्वको ज्ञान हुनु नितान्त आवश्यक छ। तत्व ज्ञानको उपदेशका साथ दुःख द्वन्द्वबाट मुक्त भई शाश्वत सुख प्राप्तिको उपाय गीतामा वर्णन गरिएको हुनाले :

**गीता सुगीता कर्तव्या किमन्यैः शास्त्रविस्तरैः।**
**या स्वयं पद्मनाभस्य मुखपद्माद्विनिः सृता॥**

गीतालाई राम्ररी पढेर अर्थ र भाव सहित अंतःकरणमा धारण गर्नु मुख्य कर्तव्य हो, यो स्वयं श्री पद्मनाभ विष्णु भगवानको मुखारविन्दबाट निस्केको छ, फेरि अन्य शास्त्रको विस्तारको के प्रयोजन भनेर भनिएको हो। गीताको यथार्थता हृदयंगम हुने हो भने व्यक्ति विलक्षण बन्दछ, भौतिक प्रवृतिबाट निवृत्त भई आध्यात्मिकतामा प्रवृत हुन्छ, कर्म र अकर्मको भेद छुट्याउन सक्दछ। यस प्रकार **स्वे स्वे कर्मण्यभिरतः संसिध्दिं लभते पराम्** बमोजिम आ-आफ्ना स्वाभाविक कर्महरूमा तत्परताको साथ लागेका मानिसले भगवत्प्राप्ति रूप परमसिद्धि प्राप्त गर्दछ।

यसरी गीतामा वर्णित ज्ञान र कर्म योगहरूको अनुष्ठानले परमानन्दस्वरूप ब्रह्म ज्ञान एवं देहावसान पछि मोक्ष प्राप्त हुन्छ भनी भनिएको छ :

**उभाभ्यामेव पक्षाभ्यामाकाशे पक्षिणां गतिः**
**तथैव ज्ञानकर्मभ्यां प्राप्यते परमेश्वरः ।**

प्रस्थानत्रयीमा परिगणित अध्यात्म शास्त्रको आधार स्तम्भरूप भगवद् गीताको अनुवाद गरी विभिन्न भजन संग्रहका साथ प्रकाशित गर्नु हुने त्रिभुवन विश्वविद्यालय, वन विज्ञान अध्ययन संस्थानमा सम्बध्द भई समाजको समुचित समुन्नतिका निमित्त समाजशास्त्रको अध्यापनबाट निवृत्तभै वानप्रस्थ जीवनमा रहनु हुने श्रीमान् अनन्त राज उपाध्यायज्यूको प्रकृत प्रयासबाट समाज आध्यात्मिकतामा समृद्ध बन्ने अभिलाषा म राख्दछु।

**गीता गंगोदकं पीत्वा पुनर्जन्म न विद्यते।**

(महाभारतको अमृतमय सर्वस्य, विष्णुको मुखबाट निस्केको गीता गंगाको जल पान गरेमा पुनर्जन्म हुन सक्दैन।)

**प्रा. चतुर्भुज अधिकारी**
**साहित्य वेदान्ताचार्य**
**श्री त्रिदण्डिदेव संस्कृत**
**महाविद्यालय, अयोध्या।**

# श्रीमद्भगवद्गीता

## (नेपाली रूपान्तर)

**पृष्ठभूमिः**

गीताको अर्को नाम मोक्ष ग्रन्थ पनि हो । महाभारतको भीष्म पर्वमा एउटा श्लोक उल्लेखित छ : **या स्वयं पद्मनाभस्य मुखपद्माद्विनिःसृता** अर्थात गीता राम्रो गरी मनन गरेर हृदयमा धारण गर्ने योग्य छ । यो पद्मनाभ श्रीभगवान्को मुखबाट निस्केको वाणी हो । यसमा जीवनको लागि उपयोगी हुने ज्ञानको महासागर लाई सारभूत रूपमा वर्णन गरिएको छ । यस्लाई महाभारतको भीष्म पर्वबाट उधृत गरिएको हो । द्वापरयुगमा महाभारत युद्धमा भारतको कुरूक्षेत्रमा आइतवार एकादशीको दिनमा श्री कृष्णले जगत हितको लागि गीताको उपदेश मित्र तथा भक्त पाण्डुपुत्र अर्जुनलाई दिनु भएको हो ।

वेद तथा महाभारतको रचयिता महर्षि वेदव्यासले यस्को रचना गर्नु भयो । यसमा भगवान्का गुणहरू, प्रभावहरू, मर्महरू, जगतका सत्य तथ्य, सांख्ययोग आदि विभिन्न विषयहरूको बारेमा दक्षतापूर्वक वर्णन गरिएको छ । यसको ज्ञान परम दयामय भगवान् श्री कृष्णको कृपाले मात्र हामीले बुझ्न सक्दछौँ । हामीमा श्रद्धा, भक्ति तथा प्रेम भएमा त्यो कृपा हामीलाई सहजै उपलब्ध हुनेछ । गीतामा १८ अध्यायहरू अन्तर्गत ७०० श्लोकहरू रहेका छन् । यस्मा मूलतया अनित्य देह भन्दा नित्य आत्मालाई प्रश्रय दिइएको छ ।

यसमा श्रध्दालु र भक्तियुक्त मनुष्य मात्रको अधिकार छ, चाहे त्यो कुनै पनि वर्ण एवं आश्रममा बसोबास गर्ने किन नहोस् । भगवान्को आदेशानुसार परम गति प्राप्त गर्न यसको प्रचार प्रसार भक्तहरूले गर्नु पर्दछ । अर्जुन, हामी सबै तथा बिशेषतः स्त्री, वैश्य, शूद्रहरूमध्ये पापयोनीमा रहेकाहरूको लागि मोक्ष प्राप्ति गर्न योगका मार्गहरू यस्मा सुझाइएका छन् । जस्मा मूलतया ज्ञान, भक्ति र कर्म योगका मार्गहरू पर्दछन् । यसलाई अध्ययन गर्दा हामीले आफुलाई अर्जुन ठानेर अध्ययन गर्नु पर्दछ ।

यस्का ज्ञानहरू सबै कालमा बहुउपयोगी रहेकाले पाठकवर्गहरूको सहजताको लागि भगवद्गीताको विश्वका विभिन्न भाषाहरूमा उल्था गरिएको पाइन्छ । यस संसारमा हामी जीवहरू एक दास पात्र मात्र हौ र जबसम्म हामीले दासझैँ एकाग्र भई कृष्णको सेवा भक्ति गर्दैनौ, तबसम्म हामीहरू जीवन–मरणको चक्रमा परिरहन्छौ । यस शाश्वत सत्यलाई हृदयंगम गरी जगतको हितमा हामी सबैको हित रहेको छ भन्ने ठानी मनुष्यहरूले श्रीकृष्णबाट दिइएको आत्मा–परमात्माको ज्ञान लिनु पर्दछ । जीवात्मा भगवान्को अंश रूप हो । त्यसैले श्रीकृष्ण हाम्रो जीवनको सारथी वा मार्ग दर्शकको रूपमा यस्मा प्रश्तुत हुनु भएको छ ।

यस्लाई नेपाली भाषामा प्रकाशन गर्नुको उद्देश्य हामीले सहज रूपमा गीताको भावार्थ बुझ्न सकौ तथा दैनिक जीवनमा यस्लाई ढाली परम पद प्राप्त गरौ भन्ने हो । नेपाली बुझ्नु हुनेले यस्लाई पढेर आफ्नो स्वभावमा ढाल्न सक्नु भयो भने म आफुलाई सफल ठान्नेछु । साथै पाठकवर्गले यसको मूल आशयलाई मनन गर्नु भई ईच्छुकहरूको लागि अझै यस्लाई विस्तारित गरिदिनु भयो भने म साह्रै नै कृतज्ञ हुने छु । जीवनको महत्त्वको यथार्थ बुझी यस्को सदुपयोग गरौँ । माया तथा मोह मात्र श्रीकृष्णप्रति गर्नको लागि परोपकारी बन्दै सत्कर्ममा लागौँ । यही मेरो हजुरहरूसँग प्रार्थना छ । यस्मा केही त्रुटि देखिएमा क्षमा याचना गर्दै मूल आशयमा ध्यान दिनु हुन सादर अनुरोध गर्दछु । यस कार्यमा सहयोगी हातहरूः श्रीमती ललिता आचार्य, श्रीमती राधा घिमिरे, श्री सरोज घिमिरे, आदरणीय साहित्य वेदान्ताचार्य श्री चतुर्भुज अधिकारी, भाषाविद् श्री विष्णु प्रसाद गौतम, आरवी आचार्य तथा जनक लम्सालजी लगायतका सबै कृतज्ञताको पात्र हुनुहुन्छ । अस्तु !

अनन्त राज उपाध्याय
हेटौँडा-४, गौरीशंकर पथ ।

## विषय सूचि

अध्याय नौं

**राजविद्याराजगुह्य योग**



अध्याय दश

**विभूति योग**



अध्याय एघार

**विश्वरूप दर्शन योग**



अध्याय बारह

**भक्ति योग**



अध्याय तेह्र

**क्षेत्र-क्षेत्रज्ञ विभाग योग**



अध्याय चौध

**गुणत्रय विभाग योग**



अध्याय पन्द्रह

**पुरूषोत्तम योग**



अध्याय सोह्र

**दैवासुरसम्पद्विभाग योग**

अध्याय सत्र

**श्रद्धात्रयविभाग योग**



अध्याय अठार

**मोक्ष संन्यास योग**



**केही भजनहरू :**

श्रीपरमात्मने नमः

अथ प्रथमोकध्यायः

# प्रथम अध्याय

# अर्जुन विषादयोग

धृतराष्ट उवाच (भन्दछन्)

**धर्मक्षेत्रे कुरूक्षेत्रे समवेता युयुत्सवः ।**
**मामकाः पाण्डवाश्र्चैव किमकुर्वत संजय ॥ १ ॥**

धृतराष्ट्र भन्दछन्ः हे संजय ! धर्मभूमि कुरूक्षेत्रमा एकत्रित, युध्द गर्ने इच्छा भएका मेरा र पाण्डुका पुत्रहरूले के गरे ?

वैदिक युगदेखि कुरूक्षेत्रको युध्दस्थल एक पवित्र तीर्थस्थलको रूपमा रहिआएको छ । यस युध्दस्थलमा अर्जुनको पक्षमा भगवान् श्रीकृष्ण स्वयं उपस्थित हुनु हुन्छ । अर्कोतिर कौरवको पक्षमा रहेका आँखाले अन्धो राजा घृतराष्ट्र राजमहलमा बसी आफ्नो सचिव संजयद्वारा युध्दको विवरण जानकारी लिइरहेको छन् । तर राजा धृतराष्ट्र दिमागले अन्धो छैनन् । राजा धृतराष्ट्रले पुत्रमोहको कारणले शान्तिको ठाउँमा युद्ध रोजेका छन् । धृतराष्ट्रलाई युद्धको विवरण अवगत होस् भन्ने उद्देश्यले संजयले युध्दको दृश्य महल मै बसी देख्न सक्ने शक्ति महर्षि व्यासबाट दिइएको हो । सोही शक्तिको प्रयोग गरी युध्दमा भइरहेका घटनाहरूको विवरणलाई संजयले प्रत्यक्ष वर्णन गर्दै छन् । यसै क्रममा धृतराष्ट्रले युध्दक्षेत्रमा दुबै पक्षहरूले के–के गर्दै छन् भनी संजयसँग सोधेर जानकारी लिन खोजेका हुन् ।

संजय उवाच (भन्दछन्)

**दृष्ट्वा तु पाण्डवानीकं व्यूढं दुर्योधनस्तदा ।**
**आचार्यमुपसङ्गम्य राजा वचनमब्रवीत् ॥ २ ॥**

संजयले भनेः त्यसबेला राजा दुर्योधनले व्युहरचनायुक्त पाण्डवहरूको सेनाहरूलाई देखेर द्रोणाचार्यको नजिक गएर यो वचन भने ।

दुर्योधन प्रधान सेनापतिको रूपमा रहेका द्रोणाचार्यलाई पाण्डव सेनाहरूको यथार्थ व्युह रचना बारेमा बताउन गएको छन् भनी धृतराष्ट्रलाई संजयले जानकारी



दिए । संजयले जे देखिरहेका छन् , त्यही वर्णन गरिरहेको छन् । आफ्नो तर्फबाट केही थप–घट गरिरहेका छैनन् । अर्को शब्दमा प्रत्यक्ष–प्रसारण गरिरहेको छन् भन्दा हुन्छ ।

**पश्यैतां पाण्डुपुत्राणामाचार्य महतीं चमूम् ।**
**व्यूढां द्रुपदपुत्रेण तव शिष्येण धीमता ॥ ३ ॥**

हे आचार्य ! तपाईंको बुध्दिमान शिष्य द्रुपदपुत्र धृष्टद्‌युम्नद्वारा व्यूहाकार गरी उभिएका पाण्डुपुत्रहरूको यस ठूलो सेनालाई हेर्नुहोस् ।

यस श्लोकद्वारा राजनीतिज्ञ दुर्योधन कौरव सेनापति द्रोणाचार्यको दोषलाई दर्शाउन खोजिरहेको छ । अर्जुनकी श्रीमती द्रोपदीको पिता द्रोपदसँग विगतमा द्रोणाचार्यको राजनीतिक झगडा भयो । त्यसै झगडाको कारणले राजा द्रोपदले द्रोणाचार्यलाई सिध्याउन एउटा महान यज्ञ सम्पन्न गरे । त्यस यज्ञको प्रभावले उनीले द्रोणाचार्यलाई बध गर्न सक्ने पुत्र वरदानमा पाए । यो विषय द्रोणाचार्यलाई पनि अवगत छ । तर राजा द्रुपदको छोरा धृष्टद्युम्नलाई युध्द शिक्षाको लागि जब गुरू द्रोणाचार्यलाई सुम्पियो उनीले शिक्षामा सबै सैनिक रहस्यहरूको बारेमा कुनै भेदभाव नगरी उस्लाई ज्ञान दिए । गुरू द्रोणाचार्यबाट प्राप्त ज्ञानको सदुपयोग गरेर नै उनीले यो व्यूहरचना गर्न सफल भए । यहाँ व्यूहरचना भन्नाले सेनाहरूको संगठित व्यवस्थापन बुझ्नु पर्दछ । त्यस रचनामा एक त प्रवेश गर्न नै मुश्किल हुन्छ, दोश्रो पसिसकेपछि निस्कन झनै गाह्रो हुन्छ । यसै सन्दर्भमा विपक्षको सेनाको आँकलन गर्नुहोस् भनी दुर्योधनले सेनापतिलाई भन्यो ।

**अत्र शूरा महेष्वासा भीमार्जुनसमा युधि ।**
**युयुधाना विराटश्र्च द्रुपदश्र्च महारथः ॥ ४ ॥**

**धृष्टकेतुश्र्चेकितानः काशिराजश्र्च वीर्यवान् ।**
**पुरूजित्कुन्तिभोजश्र्च शैब्यश्र्च नरपुङ्गवः ॥ ५ ॥**

**युधामन्युश्र्च विकान्त उत्तमौजाश्र्च वीर्यवान् ।**
**सौभद्रो दौपदेयाश्र्च सर्व एव महारथाः ॥ ६ ॥**

यस सेनामा ठूल–ठूला धनुषधारण गरेका तथा युद्धमा भीम तथा अर्जुनझैं शुरवीर सात्यकि र विराट तथा महारथी राजा द्रुपद, धृष्टकेतु र चेकितान तथा

बलवान् काशिराज, पुरूजित्, कुन्तिभोज र मनुष्यहरूमा श्रेष्ठ शैब्य, पराक्रमी युधामन्यु तथा बलवान् उत्तमौजा, सुभद्रापुत्र अभिमन्यु एवं द्रौपदीका पाँच छोराहरू–यी सबै महारथीहरू छन् ।

दुर्योधनले सेनापति द्रोणाचार्यलाई भन्दैछ कि त्यस रचना भित्र ठूल–ठूला शूरवीर, महारथी, बलवान, पराक्रमी योद्धा एवं सेनाहरूः भीम, अर्जुन, सात्यकि र विराट, राजा द्रुपददेखि द्रौपदीका पाँच सन्तानहरू रहेका छन् । दुर्योधनले विपक्षीका सेनाहरूको विवरण सुनाउँदै छ । दुर्योधनले विपक्षको सैन्य शक्तिको बारेमा अवलोकन गरेर भन्दै छ । यसबाट हामीलाई यो जानकारी हुन्छ कि हामीले हाम्रा जीवनका शत्रुहरूको बारेमा सबै कुराहरू बुझ्नु आवश्यक हुन्छ । उनीहरूको प्रत्येक चाल, कौशलता वा समस्याको बारेमा हामीले जान्नु पर्दछ । अनि मात्र उनीहरूलाई सहज रूपमा परास्त गरी मोक्ष प्राप्त गर्न सकिन्छ ।

**अस्माकं तु विशिष्टा ये तान्निबोध व्दिजोत्तम ।**
**नायका मम सैन्यस्य संज्ञार्थं तान् ब्रवीमि ते ॥ ७ ॥**

हे ब्राह्मणश्रेष्ठ ! हाम्रो पक्षमा पनि जो प्रधान छन्, उनीहरूलाई पनि स्मरण गर्नु होस् । हजुरको जानकारीको लागि मेरो सेनामा जो–जो सेनापतिहरू छन्, तिनीहरूको बारेमा भन्दछु ।

दुर्योधनले त्यसपछि भने कि तपाईंले पाण्डुहरूको सेनालाई त अवलोकन गर्नु भयो । अब हाम्रो पक्षमा जो–जो प्रधानहरू वा सेनापतिहरू छन् तिनीहरूको बारेमा पनि बुझ्नु होस् । युद्धमा आफ्ना सेनाहरूको दरिला पक्षहरू तथा कमजोर पक्षहरूको बारेमा जान्नु आवश्यक हुन्छ ।

**भवान् भीष्मश्र्च कर्णश्र्च कृपश्र्च समितिंजयः ।**
**अश्र्वत्थामा विकर्णश्र्च सौमदत्तिस्तथैव च ॥ ८ ॥**

हजुर–द्रोणाचार्य र पितामह भीष्म तथा कर्ण र संग्रामविजयी कृपाचार्य तथा त्यस्तै अश्र्वत्थामा, विकर्ण र सोमदत्तको पुत्र भूरिश्रवा आदि छन् । दुर्याधनले यी सबै अद्वितीय युध्दवीरहरूको नामहरू उल्लेख गर्यो ।

यहाँ दुर्योधनले दुबै पक्षका सेनाहरूको बारेमा अध्ययन गरी तिनीहरूको मूल्याङ्कन गर्ने परिपाटीको महत्त्व दर्शाउँदै छ । राम्रा पक्षहरू तथा चुनौतीहरूलाई



हरेक पक्षबाट विश्लेषण गर्ने कार्यमा दुर्योधनले आफ्ना पक्षका महान योद्धाहरूको विवरण प्रश्तुत गरी पृष्टभूमि पेश गर्दैछ ।

**अन्ये च बहवः शूरा मदर्थे त्यक्तजीविताः ।**
**नानाशस्त्रप्रहरणाः सर्वे युध्दविशारदाः ॥ ९ ॥**

अरू पनि मेरो लागि जीवनको आशा त्याग गर्नेवाला धेरैजसो शूरवीरहरू विभिन्न किसिमका शस्त्रास्त्रहरूले सुसज्जित छन् तथा सबैजसो युध्दमा बाठा छन् ।

दुर्योधनको एक इसारामा उस्का सुरवीर सेनाहरू लडन–मर्न तैयार छन् । दुर्योधनको लागि जीवन उत्सर्ग नै गर्न जयद्रथ, कृतवर्मा तथा शल्यहरू छन् । यसरी आफ्नो तर्फका सूरवीरको नामावली सम्झेर निर्मित संयुक्त शक्तिको कारण दुर्योधन आफ्नो विजयप्रति आश्वस्त छ भनी संजयले सुनाउँदै छन् ।

**अपर्याप्तं तदस्माकं बलं भीष्मभिरक्षितम् ।**
**पर्याप्तं त्विदमेतेषां बलं भीमाभिरक्षितम् ॥ १० ॥**

भीष्म पितामहद्वारा रक्षित हाम्रो यो सेना सबै प्रकारले अजेय छ तथा भीमद्वारा रक्षित यिनीहरूको त्यो सेनालाई जीत्न सजिलो छ ।

यहाँ दुर्योधनले दुबै पक्षहरूका सेनाहरूको तुलनात्मक विवरण प्रस्तुत गरेको पाइन्छ । दुर्योधनले यहाँ घमण्ड देखाइरहेको छ । उसको धारणामा अत्यन्त अनुभवी सेनानायक भीष्म पितामहद्वारा बिशेष रूपले संरक्षित रहेको कारणले उस्को आफ्नो पक्षको सशस्त्र सेनाहरूको शक्ति अजेय छ । अर्कोतर्फ पाण्डवहरूको सेनाको सुरक्षा भीष्मको दाँजोमा कम अनुभवी नायक भीमव्दारा भइरहेकोले उनीहरूको सुरक्षा कमजोर छ । भीमको दाँजोमा भीष्मको युद्ध कौशल धेरै नै उत्कृष्ट रहेकोले दुर्योधनले आफनो विजय निश्चित छ भन्ने ठानेको छ । युद्धमा जीत हुन्छ भनी आत्मविश्वास हुनु राम्रो हो तर घमण्ड हुनु पराजयको लक्षण पनि हो भनिन्छ ।

**अयनेषु च सर्वेषु यथाभागमवस्थिताः ।**
**भीष्ममेवाभिरक्षन्तु भवन्तः सर्व एव हि ॥ ११ ॥**

तसर्थ सबै मोर्चाहरूमा आ–आफ्ना स्थानहरूमा स्थित रहेर तपाईंहरू सबैले निःसन्देह भीष्म पितामहलाई सबै तिरबाट रक्षा गर्नुहोस् ।

भीष्म पितामहको सैन्य शौर्यको प्रशंसा गरिसकेपछि दुर्योधनले अन्य सेनाहरूले भीष्मको दाँजोमा हामीलाई कम आँकलन गरियो भन्ने नसोचुन् भनेर आफ्नो सहज कुटनीतिक ढङ्गले उपर्युक्त वाक्य भनेको हो । युद्धको लागि भीष्मको धेरै नै आवश्यकता रहेकोले उहाँको रक्षा गर्नु पर्ने दुर्योधनले यहाँ रणनीति लियो । उनी बाँचिरहेमा वा युद्धमा बीरगति प्राप्त नगरेसम्म युद्धमा जीतको सम्भावना उच्च रहेको छ । उस्ले भन्यो भीष्म पितामह निःसन्देह वीर योद्धा हुनुहुन्छ । तर उहाँ अब बृद्ध भएकोले उहाँले एकातिर युद्ध गर्नु होला, अर्कोतिरबाट उहाँमाथि शत्रु पक्षबाट आक्रमण हुनसक्ने सम्भावना भएकोले विशेष सुरक्षाको लागि भीष्मलाई सबैतिरबाट रक्षा गर्नु होस् भनी भनेको हो ।

**तस्य संजनयन् हर्षं कुरुवृद्धः पितामहः ।**
**सिंहनादं विनद्योच्चैः शंख दध्मौ प्रतापवान् ॥ १२ ॥**

कौरवहरूमा बृद्ध बडो प्रतापी पितामह भीष्मले त्यस दुर्योधनको हृदयमा हर्ष उत्पन्न गर्दै उच्च स्वरले सिंहको गर्जन समान गर्जेर शंख बजाए ।

वयोबृद्ध भीष्म पितामहले दुर्योधनको मनोभाव बुझेर उसप्रतिको स्वभाविक दयावश उसलाई प्रसन्न राख्न ठूलो स्वरमा आफ्नो शंख बजाए । शङ्खको ठूलो गर्जना सहितको स्वर उनको सिंहको गर्जन जस्तै रहेको तथा उनको व्यक्तित्वसँग मिल्दो छ । त्यस स्वरले दुर्योधन निश्चय पनि खुशी भयो ।

**ततः शंखाश्र्च भेर्यश्र्च पणवानकगोमुखाः ।**
**सहसैवाभ्यहन्यन्त स शब्दस्तुमुलोऽभवत् ॥ १३ ॥**

यसपछि शङ्ख र नगारा तथा ढोल, मृदंग र नरसिंहा आदि बाजाहरू एकैसाथ बजे । बाजाको त्यो शब्द बडो डरलाग्दो भयो ।

युद्ध भयङ्कर हुने गर्दछ । यो इतिहास कै भयंकर युद्ध आरम्भको अवस्था हो । भीष्मको शङ्खको ठूलो स्वरपछि नगारा, ढोल, मृदंग, नरसिंहा आदि बाजाहरू बजे । तिनीहरूको संयुक्त आवाज डरलाग्दो छ । हरेक युद्ध तथा चुनौतिले आफ्नै किसिमका अवस्थाहरू लिएर साथमा आएका हुन्छन् । तिनीहरूको अनुमानित अवस्था बमोजिम नै तैयारी गरिएको हुन्छ । यसरी संजयले जानकारी गराउँदै छन् ।

**ततः श्र्वेतैर्हयैर्युक्ते महति स्यन्दने स्थितौ ।**
**माधवः पाण्डवश्र्चैव दिव्यौ शङ्खौ प्रदध्मतुः ॥ १४ ॥**



त्यसपछि सेता घोडाहरूले युक्त उत्तम रथमा बस्नु भएको श्रीकृष्ण महाराज र अर्जुनले पनि आ–आफ्ना अलौकिक एवं दिव्य शंखहरू बजाए ।

श्रीकृष्ण तथा अर्जुनले सेता घोडाहरू भएको रथमा रही बजाएका दिव्य शङ्खहरूको ध्वनीबाट यो अवगत हुन्छ कि कृष्ण पाण्डवहरूको पक्षमा रहेकोले विपक्षी कौरव पक्षको विजय हुने कुनै आशै छैन् । जहाँ–जहाँ भगवान हुनुहुन्छ लक्ष्मी पनि त्यही हुनुहुन्छ । भनिएकै छः 'जयस्तु पाण्डुपुत्राणां येषां पक्षे जनार्दनः' । लक्ष्मी श्रीको प्रतिमूर्ति हुन् । तसर्थ विजय तथा श्री दुवैले पाण्डु पुत्रहरूको प्रतिक्षा गरिरहेका छन् भनी बुझ्दा हुन्छ । फेरि तीनै लोकहरूमा यो प्रसिध्द थियो कि अग्निदेवले दिनु भएको त्यस रथमा यी दुवै संयुक्त रूपमा जहां गए पनि यिनीहरूको विजय निश्चित हुनेछ भनी जान्नु आवश्यक छ ।

**पाञ्चजन्यं हृषीकेशो देवदत्तं धनंजयः ।**
**पौण्ड्रं दध्मौ महाशंख भीमकर्मा वृकोदरः ॥ १५ ॥**

श्रीकृष्ण महाराजले पाञ्चजन्य–नामक, अर्जुनले देवदत्त–नामक र भयानक कर्मवाला (अतिभोजी तथा अतिमानवीय कार्य गर्न सक्षम) भीमले पौण्ड्र–नामक महाशङ्ख बजाए ।

यस श्लोकमा भगवान् श्रीकृष्णलाई ऋषीकेश भनिएको छ । कुरुक्षेत्रको युध्दभूमिमा भगवान् श्रीकृष्णले अर्जुनको दिव्य इन्द्रियहरूलाई निर्देशित गरिरहनु भएको छ । ब्रह्माण्डका समस्त जीवहरू तथा तिनका इन्द्रियहरू उहाँकै भिन्नांश हुन् तथा उहाँबाटै ती संचालित हुने शक्ति प्राप्त गर्दछन् । ती शक्तिहरूले जीवहरू तथा तिनका इन्द्रियहरूलाई यस्तरी निर्देशित गर्दछन् कि तिनीहरूले उहाँको शरण लिउन् । पाण्डवहरूको पक्षमा यी सबैद्वारा विशेष प्रकारका शंखहरू बजाइनु युध्द गर्ने सैनिकहरूमा उत्साह सृजना गर्नको लागि हो । सँगैमा विपक्षमा न परम निर्देशक श्रीकृष्णनै हुनुहुन्छ र नै भाग्यकी देवी श्री नै । तसर्थ हामीले पनि हाम्रा कर्महरू अनुसारका कामहरू गर्न चुनौतिहरूलाई चिर्दै साहसपूर्ण किसिमले अघि बढन मनलाई एकाग्रचित्त पार्नु पर्दछ ।

**अनन्तविजयं राजा कुन्तीपुत्रो युधिष्ठिरः ।**
**नकुलः सहदेवश्र्च सुघोषमणिपुष्पकौ ॥ १६ ॥**

कुन्तीपुत्र राजा युधिष्ठिरले अनन्तविजय–नामक तथा नकुल एवं सहदेवले सुघोष र मणिपुष्पक–नामक शङ्ख बजाए ।

युद्धमा जीत हाँसिल गर्न सैनिकहरूलाई युद्धप्रति उत्प्रेरित तुल्याउन युधिष्ठिर, नकुल, सहदेव आदि सबै पराक्रमी योद्धाहरूले आफ्ना–आफ्ना शंखहरू बजाए ।

**काश्यश्र्च परमेष्वासः शिखण्डी च महारथः ।**
**धृष्टद्युम्नो विराटश्र्च सात्यकिश्र्चापराजितः ॥ १७ ॥**

**द्रुपदो द्रौपदेयाश्र्च सर्वशः पृथिवीपते ।**
**सौभद्रश्र्च महाबाहुः शंखान्दध्मुः पृथक्पृथक् ॥ १८ ॥**

श्रेष्ठ धनुर्धर काशीराज र महारथी शिखण्डी एवं धृष्टद्युम्न तथा राजा विराट र अजेय सात्यकि, राजा द्रुपद एवं द्रौपदीका पांचौ छोराहरू तथा महाबाहु वा ठूला हातहरू भएको सुभद्राको छोरा अभिमन्यु–यी सबैले, हे राजन ! सबैतिरबाट बेग्ला–बेग्लै शंखहरू बजाए ।

महाभारतको युद्धमा ठूल–ठूला योद्धाहरू सहभागी भइरहेका छन् । सबैले आ–आफ्ना अस्तित्व बोकेको उत्प्रेरणापूर्ण शंख बजाइरहेका छन् । यिनीहरू युद्धलाई जीवन तथा चुनौती मानेर तत्पर भई उभिएका छन् । सबै योद्धाले शंख बजाउनु भनेको आफु भएको आभास गराउनु तथा अन्य सैनिकहरूलाई युद्धको लागि उत्प्रेरित तुल्याउनु हो ।

**स घोषो धार्तराष्ट्राणां हृदयानि व्यदारयत् ।**
**नभश्र्च पृथ्वी चैव तुमुलो व्यनुनादयन् ॥ १९ ॥**

र त्यस भयानक शब्द ध्वनीले आकाश र पृथ्वीलाई पनि गुञ्जायमान तुल्याउँदै राजा धृतराष्ट्रको अर्थात हजुरका पक्षहरूको हृदयलाई छिन्न-भिन्न तुल्यायो ।

कौरवको तर्फबाट जब भीष्म तथा दुर्योधनले शंख बजाएका थिए त्यतिबेला पाण्डवहरूको हृदय छिन्न–भिन्न भएन् । तर पाण्डवहरूको तर्फबाट शंख बज्दा उनीहरूको हृदय छिन्न–भिन्न एवं जीर्ण हुन पुग्यो । यस्को कारण कौरवहरूको यो विश्वास हो कि पाण्डवहरूमध्ये अर्जुनको रथको श्रीकृष्ण सारथी युक्त सेना उनीहरूको भन्दा तुलनात्मक रूपमा सक्षम छन् । यो कुरा संजयले महशुस गरेर सुनाए । तसर्थ



परमेश्वरको शरणमा रहनेहरूलाई जस्तोसुकै बिपत्तिको घडीमा पनि कुनै पनि किसिमको भय रहन्न भन्ने मूल अर्थ पनि यहाँ बुझ्नु पर्ने हुन्छ ।

**अथ व्यवस्थितान्दृष्ट्रवा धार्तराष्ट्रान् कपिध्वजः ।**
**प्रवृत्ते शस्त्रसम्पाते धनुरूद्यम्य पाण्डवः ॥ २० ॥**
**हृषीकेशं तदा वाक्यमिदमाह महीपते ।**

अर्जुन उवाच (भन्दछन्)

**सेनयोरूभयोर्मध्ये रथं स्थापय मेऽच्युत ॥ २१ ॥**

हे राजन ! त्यसपछि कपिध्वज (हनुमान अंकित) झण्डा रहेको रथमा सवार अर्जुनले मोर्चा बाधेर डटेर रहेका धृतराष्ट्रका सम्बन्धीहरूलाई देखेर शस्त्र चलाउन तैयार रहेको अवस्थामा हृषीकेश श्रीकृष्ण महाराजलाई यी वचनहरू भनेः हे अच्युत ! मेरो रथलाई दुवै पक्षका सेनाहरूको बिचमा लानुस् ।

त्रेतायुगका राम तथा रावण बिचको युध्दमा हनुमानले भगवान् रामलाई सहायता गरे र विजय पनि प्राप्त भयो । त्यो विजयसूचक हुन पुगेको थियो । यस पटकको हुन गइरहेको युध्दमा अर्जुनको रथमा उसलाई सहायता गर्न राम रूपी श्रीकृष्ण तथा हनुमान दुवै विराजमान हुनुहुन्छ । अच्युत भनी श्री कृष्णलाई सम्बोधन गर्नुको तात्पर्य उहाँ कहिल्यै नाश नहुने जस्को साथमा र पक्षमा हुनुहुन्छ भन्ने अर्थमा हो । तसर्थ अर्जुनलाई कुनै पनि शत्रुबाट भय मान्नु पर्ने कारण थिएन् । साक्षात्त भगवान् अर्जुनको साथमा हुनुको अर्थ हो धर्म उनको साथमा हुनु हो । धर्म जस्को साथमा हुन्छ ऊ कहिल्यै हार्दैन । यसरी अर्जुनले रथलाई दुबै पक्षहरूको सेनाको बिचमा लान अनुरोध गरे ।

**यावदेतान्निरीक्षेऽहं योध्दुकामानवस्थितान् ।**
**कैर्मया सह योध्दव्यमस्मिन् रणसमुद्यमे ॥ २२ ॥**

र जबसम्म युध्दक्षेत्रमा डटेर बसेका युध्दका अभिलाषी यी बिपक्षीहरूलाई मैले राम्ररी नहेरिसकु कि यस युध्द व्यापारमा मैले कस-कससँग युध्द गर्नु उपयुक्त हुन्छ, तबसम्म रथलाई उभ्याई राख्नुस् भनी अर्जुनले भने ।

यहाँ सारथीको रूपमा श्रीकृष्णले अर्जुनको आज्ञाको पालना गर्नु पर्ने छ । साथै भगवान् तथा भक्तको सम्बन्ध अत्यन्त मधुर तथा दिव्य रहेको देखाइएको छ ।

धर्म तथा भक्तको हितको लागि भगवान्ले अर्जुनको सारथी बन्न पनि स्वीकार गर्नु भएकोबाट यसको पुष्ट्याइँ हुन्छ । कहिले सेवक स्वामी भगवान्को सेवा गर्न उद्यत रहन्छ भने कहिले भगवान् सेवक भक्तको केही न केही इच्छाहरू पुरा गर्न अग्रसर रहेको पाइन्छ । भगवान्लाई यहाँ अच्युत भनी सम्वोधन गरिएको छ । तथापि नश्वर शरीर भएको शुद्ध भक्तले उहाँलाई आज्ञा दिंदा उहाँ आनन्दित हुनुहुन्छ । यसबाट उहाँलाई दिव्य आनन्दको अनुभूति हुन्छ । भगवान्को शुध्द भक्त भएको कारणले अर्जुनलाई आफ्नै बन्धु बान्धवहरूसँग युध्द गर्न कत्ति पनि ईच्छा छैन । तर मूलतया इन्द्रप्रस्थ वा पांचवटा गाऊंहरू पाण्डवहरूलाई दिने शान्ति प्रस्तावलाई दुर्योधनले ठाडै अस्वीकार गरेकोले युध्दभूमिमा उनी सहितका योद्धाहरू आएका छन् । यतिखेर को–को बिपक्षीहरू युध्द गर्नलाई आतुर भई अग्रणी स्थानमा हुनु हुन्छ उनीले त्यसको अवलोकन गर्न चाहेर रथलाई दुबै सेनाहरूको माझमा उभ्याउन भनेको हो ।

**योत्स्यमानावेक्षेऽहं य एतेऽत्र समागताः ।**
**धार्तराष्ट्रस्य दुर्बुध्देर्युध्दे प्रियचिकीर्षवः ॥ २३ ॥**

दुर्बुध्दि दुर्योधनको हितमा साथ दिन चाहनेहरू जो–जो यी
राजाहरू यस सेनामा आएका छन्, ती युध्द गर्नेवालाहरूलाई म हेर्नेछु ।

यो सर्वविदित छ कि आफ्नो पिता धृतराष्ट्रको साँठगाँठले दुर्योधनले पापपूर्ण योजनाहरू बनाई पाण्डवहरूको राज्यलाई आफ्नो अधीनस्थ पार्न चाहान्थ्यो । उनीहरूको साथमा मिली युध्द गर्न आएकाहरू पनि उस्कै समान स्वभावका हुन् भनी अर्जुनले सहज अनुमान लगाए । दुर्योधनको जिद्दीपनालेनै यो युद्ध प्रारम्भ हुन गइरहेकोले अर्जुनले यहाँ उसलाई दुर्बुद्धि भनी सम्बोधन गरेको पाइन्छ । शत्रु पक्षको रणनीति, रणव्यवस्था आदिलाई सम्पूर्ण रूपमा अर्जुनले हेर्न र बुझ्न चाहान्छन् । ती कत्तिको शक्तिशाली छन् वा तिनीहरूको कमजोर पक्ष के–के छन् त्यस बारेमा मूल्यांकन गर्न चाहन्छन् ।

संजय उवाच (भन्दछन्)

**एवमुक्तो हृषीकेशो गुडाकेशेन भारत ।**
**सेनयोरूभयोर्मध्ये स्थापयित्वा रथोत्तमम् ॥ २४ ॥**

**भीष्मद्रोणप्रमुखतः सर्वेषां च महीक्षिताम् ।**
**उवाच पार्थ पश्यैतान् समवेतान् कुरूनिति ॥ २५ ॥**



संजयले भने- हे धृतराष्ट्र ! अर्जुनद्वारा यसप्रकार भनिएपछि महाराज श्रीकृष्णचन्द्रले दुबै पक्षका सेनाहरूको बीचमा भीष्म तथा द्रोणाचार्यको सामुन्ने तथा सम्पूर्ण राजाहरूको अगाडि उत्तम रथलाई खडा गरेर यसरी भन्नु भयो कि हे पार्थ ! युध्दको लागि एकिकृत भएर आएका यी कौरवहरूलाई हेर ।

यसमा अर्जुनलाई गुडाकेश भनी सम्वोधन गरिएको छ । गुडा को अर्थ हुन्छ निन्द्रा अर्थात जस्ले निन्द्रालाई जितेको हुन्छ । फेरि निन्द्राको प्रतीकात्मक अर्थमा अज्ञान पनि हुन्छ । अर्जुनले श्रीकृष्णसँगको मित्रताको कारण निन्द्रा तथा अज्ञान दुबै माथि विजय प्राप्त गरेका छन् । प्रत्येक क्षणमा कृष्णको सम्झना, चिन्तन गरिरहने भएकोले अर्जुन कृष्णभावनामृतमा मग्न रहन्छन् । कुन्तिको अर्को नाम पृथा पनि हो । अर्जुन कुन्ति वा पृथाको छोरो भएकोले श्रीकृष्णले मित्र अर्जुनलाई पार्थ भनेर पनि सम्वोधन गर्नु भएको छ । पार्थको अर्को अर्थ शंकामा घेरिएको पनि हुन्छ । यहाँ अर्जुन शङ्कामा घेरिएकोले पनि पार्थ शब्दले उनीलाई सम्वोधन गरिएको हो । मित्रको रूपमा श्रीकृष्णले अर्जुन उनको पिताकी बहिनी पृथा वा कुन्तिको छोरा भएकोले, ऊ धर्मको पक्षमा रहेकोले उहाँ सारथी बन्न तैयार भएको हो । श्रीकृष्णले कुरूहरूलाई हेर भन्नुको अर्थ उनीहरूको सैन्यशक्तिको पूर्ण मूल्याङ्कन गर भन्न खोजिएको हो ।

**तत्रापश्यत्स्थितान् पार्थः पितृनथ पितामहान् ।**
**आचार्यान्मातुलान्भ्रातृन्पुत्रान्पौत्रान्सखींस्तथा ॥ २६ ॥**
**श्रवशुरान् सुहृदश्र्चैव सेनयोरूभयोरपि ॥ २७ ॥ को पूर्वार्ध**

त्यसपछि पृथापुत्र अर्जुनले ती दुबै सेनाहरूमा उपस्थित ठूलो बुवाहरू, काकाहरू, हजुरबुवाहरू, जिज्यु हजुरबुवाहरू, गुरूहरू, मामाहरू, दाजुभाईहरू, छोराहरू, नातीहरू तथा साथीहरू, ससुराहरू र शुभचिन्तकहरूलाई पनि देखे ।

महाभारत युद्ध धर्मको लागि गरिएकोले यसलाई धर्मयुद्ध पनि भनिन्छ । अर्जुनले युध्दभूमिमा आफ्ना धेरैजसो सम्बन्धीहरूलाई देखे । त्यसमा उनको बुवा पाण्डुको समकालीन भूरिश्रवा, भीष्म तथा सोमदत्त जस्ता पितामहहरू, द्रोणाचार्य तथा कृपाचार्य जस्ता गुरूहरू, शल्य तथा शकुनी मामाहरू, दुर्योधन जस्तो भाइ, लक्ष्मण जस्तो छोरो, अश्वस्थामा जस्ता मित्रहरू तथा कृतवर्मा जस्ता शुभचिन्तकहरू सबैलाई देखे । उनले ती सेनालाई पनि अवलोकन गरे जस्मा उनका धेरै शुभचिन्तक साथीहरू छन् ।

**तान् समीक्ष्य स कौन्तेयः सर्वान् बन्धूनवस्थितान् ॥ २७ को उत्तरार्ध**
**कृपया परयाविष्टो विषीदन्निदमब्रवीत् ॥ २८ को पूर्वार्ध**

ती उपस्थित भएका सबै बन्धु-बान्धवहरूलाई देखेर उनी कुन्तीपुत्र अर्जुन धेरै नै करूणामय भएर शोक गर्दै यी वचनहरू भन्न थाले ।

यी आफन्तजनहरूलाई देखेर अर्जुनले दुबै पक्षहरूमा सबै आफ्ना नै छन् भनी महशुस गरे । सबै आफन्तहरू दुई पक्षहरूमा विभाजित छन् । त्यसमध्ये एक पक्ष शत्रु हुन पुगेको छ । शत्रुपक्षमा रहेका सबैसँग उनको कुनै व्यक्तिगत लडाई छैन् । तर युद्धमा विपक्षी समुहमा गएपछि युद्ध गर्नु पर्ने परिस्थिति सृजना भएको छ । यसरी त्यस्ता प्रति, आफन्तहरू प्रति उनको हृदय करूणामय हुन पुग्यो ।

अर्जुन उवाच (भन्दछन्)

**दृष्ट्वेमं स्वजनं कृष्ण युयुत्सुं समुपस्थितम् ॥ २८ ॥ को उत्तरार्ध**
**सीदन्ति मम गात्राणि मुखं च परिशुष्यति ।**
**वेपथुश्र्च शरीरे मे रोमहर्षश्र्च जायते ॥ २९ ॥**

अर्जुनले भने :- हे कृष्ण ! युद्धक्षेत्रमा डटेर बसेका युद्धका अभिलाषीहरू यी आफन्तहरूको समुदायलाई देखेर मेरा अङ्गहरू शिथिल हुँदै गइरहेका छन् तथा मुख सुकिरहेको छ एवं मेरो शरीरमा कम्पन भई म रोमाञ्चित भइरहेको छु ।

मानिसमा हुने स्वभावको बारेमा यहाँ वर्णन गरिएको छ । युद्धको समयमा, परीक्षाको समय वा कुनै गाह्रो कामको समयमा मानिसले शिथिलता तथा मुख सुकेको महशुस गर्दछ । त्यस्तै यहाँ अर्जुनले पनि महशुस गरिरहेको छन् । सहीमा भक्तिमा युक्त व्यक्तिमा, सत्पुरूषमा वा देवताहरूमा करूणा, ममता, दया जस्ता गुणहरू रहेका हुन्छन् । अर्जुन श्रीकृष्णको पूर्ण भक्त हुन् । उनीमा पनि यी गुणहरू छन् । उनी आफ्ना सैनिकहरू प्रति त सुरूदेखि नै दयालु छन् भनी अवलोकन गरि सकेपछि विपक्षीमा आफन्तहरू रहेका सेनाहरू प्रति पनि उनी उत्तिकै करूणामय हुन पुगे । विपक्षीहरूका सैनिकहरू प्रति उनीहरूको मृत्यु हुने भयो भनी उनीमा दयाको भाव जागृत भयो । यी सबै सोचेर उन्का अङगहरू काम्दै रोमाञ्चित हुन पुगे भनी अर्जुनले वर्णन गर्दैछन् ।



**गाण्डीवं स्रंसते हस्तात्त्वक्चैव परिदह्यते ।**
**न च शक्नोम्यंवस्थातुं भ्रमतीव च मे मनः ॥ ३० ॥**

हातबाट गाण्डीव धनुष झरिरहेको छ र शरीरका छालाहरू धेरै पोलिरहेका छन् तथा मेरो मन भ्रमित जस्तो भइरहेको छ । त्यसैले म उभिरहन पनि समर्थ छैन् ।

आफन्तजनहरू विपक्षमा रहेको तीसँग युद्ध गरी तिनीहरूलाई मार्नु पर्ने दायित्वलाई स्मरण गर्दै हुन गएको अर्जुनको शारीरिक समस्याहरूको बारेमा अर्जुनले वर्णन गरेका छन् । उनीलाई द्विविधा महशुस भइरहेको छ । उनी डराएर भ्रमित भइरहेको छन् । युद्धमा आफन्तजन तथा भौतिक सामग्रीहरूको क्षति हुन्छ भन्ने भयले अर्जुनको विख्यात धनुष गाण्डीव उनको हातबाट झरिरहेको छ र उनका छालाहरूमा जलन उत्पन्न भइरहेको छ । यस्तो अपुरणीय क्षति हुने हुँदा उनको मन अधैर्य भई उनीलाई आत्मविस्मृति भइरहेकोले उभिन पनि गाह्रो महशुस भइरहेको अवस्थाको वर्णन गरिएको छ ।

**निमित्तानि च पश्यामि विपरीतानि केशव ।**
**न च श्रेयोऽनुपश्यामि हत्वा स्वजनमाहवे ॥ ३१ ॥**

हे केशब ! म लक्षणहरूलाई पनि विपरीत नै देखिरहेको छु तथा युद्धमा स्वजन समुदायलाई मारेर कल्याण हुने पनि देख्दिन ।

विश्वको सबैभन्दा बलशाली योद्धा अर्जुन हतास अवस्थामा हुन पुगे । युद्धभूमिमा अर्जुनलाई शत्रु पक्षको पराजय भए पनि त्यसले दुखदायी परिस्थिति मात्र सृजना गर्ने भनी उनीलाई महशुस भइरहेको छ । युद्धमा आफन्तजनलाई मारेर के फाइदा हुन्छ र ? कस्को कल्याण हुन्छ र ? अर्जुनले उनको स्वार्थ मात्र कृष्णमा निहित छ भन्ने सन्दर्भ बिर्सिरहेको छन् । यो माया, मोह, स्वार्थको बद्ध अवस्थाबाट मुक्ति नपाएको अवस्था हो । उनीले सोचिरहेको छन् कि उनको विजय मात्र उनको लागि शोकको अवस्था बन्न सक्छ । भनिन्छ दुइ प्रकारका मनुष्यहरू जाज्वल्यमान सूर्यमण्डलमा प्रवेश गर्ने वा मृत्यु प्राप्त गर्ने योग्य हुन्छन् । पहिलो यस्ता क्षत्रियहरू जो कृष्णको आज्ञाले युद्धभूमिमा मर्दछन् र दोश्रो सन्यासीहरू जो आध्यात्मिक अनुशीलन वा सतत गम्भीर अभ्यासमा लागिरहन्छन् । तर उनी क्षत्रिय भएर पनि र युद्धमा विजय हुने भएता पनि श्री कृष्णको आदेशलाई पालना नगरी युद्ध नगर्ने तर्फ सोचिरहेको छन् ।

**न काङ्क्षे विजयं कृष्ण न च राज्यं सुखानि च ।**
**किं नो राज्येन गोविन्द किं भोगैर्जीवितेन वा ॥ ३२ ॥**

हे कृष्ण ! म न त विजय चाहन्छु र न राज्य तथा सुखहरू नै । हे गोविन्द ! हामीलाई यस्तो राज्यको के आवश्यकता छ अथवा यस्ता भोगहरू तथा जीवनबाट पनि के लाभ छ ?

अर्जुन शंका, डर र दुःखको परिकल्पनामा सबै कुराहरू त्याग्न तैयार रहेको यहाँ देखिन्छ । उनीले सोचिरहेको छन् कि आफ्ना सम्बन्धीहरूलाई मारी सुख भोग गरेर के फाइदा ? उनी आफ्ना शत्रुहरू तथा सम्बन्धीहरू कसैलाई पनि मार्न ईच्छुक छैनन् । उनी यस युद्धबाट बच्न खोज्दैछन् । आफन्तजन वा सम्बन्धीहरूलाई मारी विजय प्राप्त गरेर पाएको राज्यको, सुखभोगको तथा जीवनको के नै लाभ हुन्छ र ? भनेर अर्जुनले श्री कृष्णलाई प्रश्न गर्दैछन् ।

**येषामर्थे काङ्क्षितं नो राज्यं भोगाः सुखानि च ।**
**त इमेऽवस्थिता युद्धे प्राणांस्त्यक्त्वा धनानि च ॥ ३३ ॥**

हामीलाई जस्को लागि राज्य, भोग र सुखादि चाहिएको छ उनीहरू नै यस युद्धभूमिमा सबै धन र जीवनको आशा त्यागेर उभिइरहेका छन् ।

हरेक व्यक्ति आफ्नो बैभवको प्रदर्शन आफ्ना आफन्तजनहरूको समक्ष गर्न चाहान्छ । उनीले आफुले प्रगाढ स्नेह गर्नेहरू, शुभचिन्तक आदिलाई समेत युद्धभूमिमा देखिसके पछि अन्ततः उनीले युद्धमा विजय प्राप्त गरे पनि त्यो वैभव, सुख, सम्पत्ति कस्को अगाडि प्रदर्शन गर्नु भन्ने उनीलाई लागिरहेको छ । हामीले जीवनमा हरेक काम, युद्ध, सुखभोग, शान्ति आफन्तहरूको लागि गर्दछौँ । त्यस हुन गइरहेको युद्धमा सबै धन तथा जीवनको सुखभोग त्यागेर आफन्तहरू नै आफन्तहरूलाई मार्न युद्धमा उभिइरहेका छन् । यस्तो संसार र सुख सुविधाको के काम ? भन्ने द्विविधा अर्जुनको मनमा छ ।

**आचार्याः पितरः पुत्रास्तथैव च पितामहाः ।**
**मातुलाः श्वशुराः पौत्राः श्यालाः सम्बन्धिनस्तथा ॥ ३४ ॥**

गुरूजन, ठूलो बुवा, काकाहरू, केटाहरू र त्यस्तै हजुरबुवाहरू, मामाहरू, ससुराहरू, नातीहरू, सालाहरू र अभै अन्य सम्बन्धी व्यक्तिहरू छन् ।



युद्धभूमिमा उपर्युक्त सबै महानुभावहरू आफ्नो सम्पत्ति तथा जीवन नै त्याग गर्न तैयार भएर युद्ध गर्ने उद्येश्यले आएको अर्जुनले देख्दछन् । अर्जुनको अघिल्तिर युद्ध गर्न तैयार भई उभिएका छन् उनका उपर्युक्त आफन्तजनहरू । अर्जुनले आफ्ना यी हरेक सम्बन्धीलाई चिनिरहेको छन् र बताइरहेका छन् भनी संजयले राजा धृतराष्ट्रलाई सुनाइरहेको छन् ।

**एतान्न हन्तुमिच्छामि घ्नतोऽपि मधुसूदन ।**
**अपि त्रैलोक्यराज्यस्य हेतोः किं नु महीकृते ॥ ३५ ॥**

हे मधुसूदन ! मैले यिनीहरूलाई मारे पनि वा मैले तीनै लोकहरूमा राज्य गर्न पाए पनि म यी सबैलाई मार्न चाहान्न, अनि पृथ्वीको लागि त के नै भन्नु पर्नेछ र ?

युद्धमा अर्जुनले विपक्षमा रहेकाहरूमध्ये आफन्तहरूलाई छुट्याएर अन्यलाई मात्र मार्न सक्दैनन् । युद्धमा त सबै शत्रुहरू हुन्, सबैलाई मार्नै पर्दछ । यही अवस्थाले अर्जुनलाई द्विविधामा पुर्याएको छ । अर्जुनले यी सबैलाई कदापि मार्न चाहिरहेका छैनन् । भौतिक जीवनको परम्परा अनुसार यिनीहरूलाई मारेर पाएको राज्यभोग र सुखभोग आदि वैभवहरू कस्लाई देखाउनु, त्यसमा पनि यी सबै आफन्तजन ठहरे । यसका लागि तीनै लोकहरूको सुख सुविधा प्राप्त भए पनि उपयोगी छैन् भने यस पृथ्वीलोकको त के कुरा ? भनी अर्जुनले आफ्नो विचार श्रीकृष्ण समक्ष प्रस्तुत गरे ।

**निहत्य धार्तराष्ट्रान्नः का प्रीतिः स्याज्जनार्दन ।**
**पापमेवाश्रयेदस्मान् हत्वैतानाततायिनः ॥ ३६ ॥**

हे जनार्दन ! धृतराष्ट्रका छोराहरूलाई मारेर हामीलाई के प्रसन्नता प्राप्त हुन्छ र ? यी दुष्ट र अत्याचारीहरूलाई मारेर त हामीलाई पाप नै लाग्छ ।

शत्रुपक्षमा आफन्तहरू खराब भए पनि उनीहरूलाई मार्नु त पर्दछ । तिनीहरूलाई मारेर के नै फाइदा हुन्छ र ? आफन्तलाई मारेर पुण्य त पाइन्न । वैदिक आदेशानुसार आततायीहरू वा दुष्टहरू ६ प्रकारका हुन्छन् । विष दिनेवाला, घरमा आगो लगाउनेवाला, घातक हतियारले आक्रमण गर्नेवाला, धन लुट्नेवाला, अर्काको जग्गा हड्पिनेवाला र पराई स्त्रीलाई अपहरण गर्नेवाला । यहाँ अर्जुन साधु स्वभावको भएकोले उनीले उनीहरूसँग साधुवत व्यवहार गर्न खोजेको पाइन्छ । आफन्तजन अत्याचारी भए पनि

तिनीहरूलाई मार्नाले त अझै पाप लाग्ने हुँदा किन पाप बोक्ने ? भनी अर्जुनले आफ्नो विचार व्यक्त गर्दैछन् ।

**तस्मान्नार्हा वयं हन्तुं धार्तराष्ट्रवान् स्वबान्धवान् ।**
**स्वजनं हि कथं हत्वा सुखिनः स्याम माधव ॥ ३७ ॥**

तसर्थ हे माधव ! आफ्नै बान्धव धृतराष्ट्का छोराहरूलाई मार्नको लागि म योग्य छैन्, किनकि आफ्नै कुटुम्बलाई मारेर हामी कसरी सुखी हुन्छौ ?

यहाँ अर्जुन समक्ष विशेष किसिमका दुष्ट एवं अत्याचारीहरू विपक्षी भई युद्ध गर्न तत्पर रहेको पाइन्छ । जस्तैः उन्का आफ्नै हजुरबुवा, गुरू, मित्र, छोरा, भाइहरू तथा नातीहरू आदि । तसर्थ शत्रुको रूपमा आफन्तहरूलाई मारेर उनी सुखभोग गर्न इच्छुक छैनन् । यी सबै आफन्तजन भएकाले यिनीहरूसँग सामान्य दुष्ट वा अत्याचारीसँग गरिने दण्डनीय व्यवहार गर्न अर्जुन तत्पर रहेको पाइदैन् । उनको धारणा बमोजिम साधु स्वभावको पुरूषहरूको लागि त क्षमा दिने सुझाव पो दिईन्छ । राजनीतिक कारणले आफन्तहरूको बध गर्नुको साटो धर्म तथा सदाचारको दृष्टिकोणले तिनीहरूलाई क्षमा गर्नु पो श्रेयस्कर हुन्छ । तसर्थ एकातिर धर्म तथा सदाचारलाई मिचेर आफन्तजनको हत्या गरी कुनै अनिष्ट कार्य अर्जुनबाट नहोस् भनी अर्जुनको धारणा रहेको पाइन्छ भने अर्कोतिर श्रीकृष्णले पनि आफ्नो भक्तहरूको हातबाट झनै अनिष्ट नहोस् र अन्यजनहरू प्रताडित नहोउन भन्ने चाहान्छन् ।

**यद्यप्येते न पश्यन्ति लोभोपहतचेतसः ।**
**कुलक्षयकृतं दोषं मित्रद्रोहे च पातकम् ॥ ३८ ॥**
**कथं न ज्ञेयमस्माभिः पापादस्मान्निवर्तितुम् ।**
**कुलक्षयकृतं दोषं प्रपश्यद्भिर्जनार्दन ॥ ३९ ॥**

हे जनार्दन ! यद्यपि लोभले भ्रष्टचित्त भएका यी मानिसहरू कुलको नाशबाट उत्पन्न हुने दोषहरूलाई र मित्रहरूको बिरोध गर्दा हुने पापहरू देख्दैनन्, तापनि हे जनार्दन ! हामी कुलको नाशबाट हुनसक्ने दोषहरू बुझ्न सक्नेहरूले यस पापबाट टाढा रहन किन विचार गर्नु नपर्ने ?

क्षत्रियहरूको परम्परागत स्वभाव बमोजिम उनीहरूलाई बिपक्षीहरूद्वारा जुवा खेल्न तथा युद्ध गर्न आह्वान गरियो भने उनीहरू पछि हट्दैनन् । यहाँ दुर्योधनद्वारा



पाण्डवहरूलाई युद्ध गर्न आह्वान गरिसकिएकोले अर्जुनले युद्ध गर्दिन भनी पछि हट्न मिल्दैन । विपक्षीहरूलाई यस युद्धबाट निस्किन सक्ने दुष्परिणामको बारे जानकारी छैन् । तर पाण्डवहरूलाई यस युद्धबाट कुलको नाश हुनसक्ने दुष्परिणामहरूको बारेमा अवगत छ । युद्धको परिणाम राम्रो भएमा युद्ध गर्ने आव्हानलाई स्वीकार गरी युद्ध गर्न कर्तव्य ठानेरै अर्जुन अग्रसर हुनेछन् अन्यथा विनास निम्त्याउने दुष्परिणाम देखिन्छ भने उनी युद्ध गर्न बाध्य छैनन् भन्ने उनको धारणा रहेको पाइन्छ । तर यस्को विपरीत युद्धबाट हट्नु, हट्नेको लागि हार हुनेछ भन्ने तथ्य पनि टड्कारो रहेको छ ।

**कुलक्षये प्रणश्यन्ति कुलधर्माः सनातनाः ।**
**धर्मे नष्टे कुलं कृत्स्नमधर्मोऽभिभवत्युत ॥ ४० ॥**

कुलको नाश हुनाले सनातन कुल धर्म नाश हुन जान्छ, धर्मको नाश हुनाले सम्पूर्ण कुलमा पाप धेरै फैलिन्छ ।

युद्धको परिणामको बारेमा अर्जुनले एउटा दृष्टान्त प्रश्तुत गरेका छन् । कुलको नाशले सनातन कुलधर्म पनि स्वतः नाश हुन्छ । वर्णाश्रम व्यवस्थामा धार्मिक परम्पराहरूका विभिन्न नियमहरू छन् । तिनै नियमहरूको सहायताले परिवारका सदस्यहरूले आध्यात्मिक मूल्यहरूको उपलब्धि प्राप्त गर्दै आएका हुन्छन् । ती नियमहरूले क्रमशः रूप परिवर्तन गरी संस्कारहरूको रूप धारण गर्दछन् । संस्कारहरूलाई पुस्ता दर पुस्ता कायम राख्न परिवारको बृद्ध व्यक्तिको मुख्य भूमिका रहन्छ । तसर्थ युध्दमा कुलकै बृद्ध व्यक्तिले वीरगति प्राप्त गरेमा सनातन कुल धर्मको नाश हुन्छ र कुलमा पाप फैलिएर जान्छ भनी उनीले यहाँ पूर्व अनुमान व्यक्त गरेका छन् ।

**अधर्माभिभवात्कृष्ण प्रदुष्यन्ति कुलस्त्रियः ।**
**स्त्रीषु दुष्टासु वार्ष्णेय जायते वर्णसङ्करः ॥ ४१ ॥**

हे कृष्ण ! पाप धेरै बढानाले कुलका स्त्रिहरू धेरै नै दूषित हुन्छन् र हे वार्ष्णेय ! स्त्रीहरू दूषित हुनाले वर्णसङ्कर उत्पन्न हुन्छ ।

यस प्रकार कुलमा संस्कार, धर्म, परम्पराहरूको बारेमा जानकारी दिई तिनलाई कार्यान्वयन गर्ने गराउने व्यक्तिको युद्धको कारणले नाश भई अभाव हुन

गएमा वर्णाश्रम धर्मका नीति नियमहरू बिथोलिन पुग्दछन्। प्रत्येक राष्ट्रलाई सत्पुरुष दिन स्त्री जातिको प्रबल भूमिका हुने गर्दछ। स्त्री जातिलाई निर्देशित गर्ने र सनातन धर्मपरायण बनाउने परिवारमा जेठो सदस्य नै भएन भने स्त्रीहरू दूषित हुने डर हुन्छ। स्त्रीहरू दूषित भएको खण्डमा उनीहरूको सतीत्वको नाश हुन गई यस्ता सन्तानहरू जन्मिने भय हुन्छ कि जस्ले वर्णाश्रम धर्म विनाश गर्न सक्दछन्। धेरैजसो स्त्रीहरूलाई सनातन धर्मको ज्ञान हुँदैन। यस कारण उनीहरू विभिन्न काम पिपासु पुरुषहरूको संसर्गमा आई उनीहरूले आचरण दूषित हुने प्रबल सम्भावना हुन्छ। यसप्रकार व्यभिचार बढी वर्णसंङ्कर वा अवाञ्छित सन्तानहरूको जन्म हुन्छ। यस्ता अवाञ्छित बच्चाहरूबाट समाजमा दुष्कृत्यपूर्ण कार्यहरू गरिने हुनाले भविष्यमा परिणामस्वरूप मानव जातिले युद्ध तथा महामारीको संकट भोग्नु पर्ने हुन्छ।

**सङ्करो नरकायैव कुलघ्नानां कुलस्य च।**
**पतन्ति पितरो ह्येषां लुप्तपिण्डोदकक्रियाः॥ ४२॥**

वर्णसङ्कर सन्तानहरू कुलघाती तथा कुललाई नर्कमा लिएर जानकै लागि हुन्छन्। यस्ता सन्तानहरूले दिएको पिण्ड तथा जलको क्रियावाला तर्पणले ईच्छित कार्यसिद्धि नहुने हुदा पिण्ड तथा तर्पणबाट वञ्चित भई यिनका पितृहरूले पनि अधोगति प्राप्त गर्दछन्।

सकाम कर्म गरिने विधि विधान बमोजिम कुलका पितृहरूलाई समय–समयमा पिण्ड तथा तर्पण दिइनु पर्ने हुन्छ। पिण्डदानमा विष्णु पूजा गरी विष्णुलाई अर्पण गरिएको भोजनको उचिष्ट भाग अर्थात् प्रसाद पितृहरूले खानाले उनीहरू सबै पापकर्महरूबाट उद्धार हुन्छन्। कहिले–काहीँ पितृहरू विभिन्न पापकर्मले ग्रस्त हुन पुग्दछन्। जस्को कारणले उनीहरूले गति प्राप्त गर्न नसकी उनीहरूलाई स्थूल शरीर प्राप्त हुन सक्दैनन्। फलस्वरूप उनीहरूले सूक्ष्म शरीर धारण गरी प्रेतको रूपमा बस्नु पर्दछ। यस्तो अवस्थामा वंशद्वारा गरिएको विष्णु भगवान्को पूजा पश्चात् अर्पण गरिएको प्रसादको उचिष्ट वा बचेको भाग पितृलाई अर्पण गरिन्छ, उनीहरूले त्यस भोगलाई स्वीकार गरी पापमुक्त हुन पुग्दछन्। तर स्त्री जातिलाई दिइएको अत्यधिक स्वतन्त्रताले उनीहरूले परपुरुषसँग सम्पर्क कायम गर्दा अन्य कुलको सन्तान जन्मिन पुगी तिनीहरूले दिएको पिण्डदान पितृले स्वीकार्दैनन्। यसरी वर्णमा फरक आई कुलको सन्तानमै खोट लागेमा ती कुलघातीले कुललाई अधोगतिमा वा नर्कमा लिई जान्छन्।



**दोषैरेतैः कुलघ्नानां वर्णसंकरकारकैः।**
**उत्साद्यन्ते जातिधर्माः कुलधर्माश्र्च शाश्र्वताः॥ ४३॥**

यी वर्णसङ्करकारक दोषहरूले कुलघातिहरूको सनातन कुल-धर्म र जाति-धर्म नष्ट हुन्छन्।

सनातन धर्म वा वर्णाश्रम धर्मद्वारा मानव जातिका चार वर्णहरूको लागि निर्धारित नीति नियमहरूको व्यवस्थापन गर्नु पछिको कारण मानव जातिले परम मोक्ष प्राप्त गर्न सकुन भन्नको लागि हो। तर वर्णसङ्करकारकहरूले न सनातन धर्मलाई मान्नेछन् र नै वर्णाश्रम धर्मलाई नै। यस प्रकार समाजमा कुल–धर्म तथा जाति–धर्मको अवज्ञा भएर अव्यवस्था फैलिन्छ र मानिसहरूले उनीहरूको जीवनको उद्येश्य विष्णु पूजन तथा आराधना सबै बिर्सन्छन्।

**उत्सन्नकुलधर्माणां मुनुष्याणां जनार्दन।**
**नरकेऽनियतं वासो भवतीत्यनुशुश्रुम॥ ४४॥**

हे जनार्दन्! जस्को कुल-धर्म नष्ट भएको छ, यस्ता मनुष्यहरूको अनिश्चित कालसम्म नर्कमा वास हुन्छ, यस्तो मैले सुन्दै आएको छु।

मानिसले अनुभव प्राप्त गर्ने मूख्यतया दुइवटा श्रोतहरू छन्। पहिलो स्वअनुभवबाट र दोश्रो आचार्य गुरूजनहरूबाट। अर्जुनले पनि गुरू परम्परा बमोजिम पुस्ता दर पुस्ता हस्तान्तरण हुदै आएका धर्म, नीति, नियम र परम्पराहरू ज्ञानको रूपमा प्राप्त गरेका छन्। त्यसमध्येको एक हो जो मानिसले कुल धर्मको विनाश गर्दछ, त्यस्को सदैव नर्कमा वास हुन्छ। त्यसैले कुलको रक्षा गर्नु र त्यस्को सम्मान बढाउनु एउटा पूर्ण दायित्वपूर्ण कार्य मानिन्छ। वर्णाश्रम धर्मको एक पद्धति अनुसार मृत्यु हुनु पूर्व मानिसहरूले आफुबाट हुन गएका पापकर्महरूको प्रायश्चित गर्नु पर्दछ। यदि यस्तो गरिएन भने उस्ले नर्कको भोग गर्नु पर्दछ। तसर्थ अर्जुन पाप कर्म गरी नर्कको भोग गर्न ईच्छुक छैन भनी तर्क प्रस्तुत गर्दैछन्।

**अहो बत महत्पापं कर्तुं व्यवसिता वयम्।**
**यद्राज्यसुखलोभेन हन्तुं स्वजनमुद्यताः॥ ४५॥**

अँ! कस्तो आश्चर्य छ! हामीहरू बुद्धिमान भएर पनि महान पाप गर्न तैयार भएका छौं, राज्य तथा सुख प्राप्त गर्ने लोभले हामीले आफन्तहरूलाई मार्न उद्यत भएका छौं।

संसारको इतिहासमा यस्ता धेरै उदाहरणहरू छन् कि मानिसहरू स्वार्थले वशीभूत भएर आफ्नै भाई, बुवा, आमालाई मार्ने जस्ता पाप कर्महरू गर्दछन् । बुद्धिहिन कौरव पक्षले त बुद्धि भएन भनेर माफी पनि पाइहाले पनि बुद्धिमान पाण्डु पक्षले जानेर पनि राज्य र सुखभोगको लागि आफन्तहरूलाई मार्ने जस्तो काम गरे भन्ने बात वा पाप लाग्दैन र ? तर भगवान्को साधु भक्त भएको कारणले अर्जुन सदाचार प्रति सचेत छन् । त्यसकारण उनी यस्ता पाप कर्मबाट बच्न खोजिरहेका छन् ।

**यदि मामप्रतीकारमशस्त्रं शस्त्रपाणयः ।**
**धार्तराष्ट्रा रणे हन्युस्तन्मे क्षेमतरं भवेत् ॥ ४६ ॥**

यदि म शस्त्ररहित तथा सामना नगर्नेलाई शस्त्र हातमा लिएका धृतराष्ट्रका छोराले रणभूमिमा मारिहाल्छन भने पनि त्यो मारिनु पनि मेरो लागि धेरै कल्याणकारी होला ।

क्षत्रीहरूमा युद्धको नियम अनुसार यस्तो परम्परा छ कि अस्त्र-शस्त्र नउठाएको तथा युद्धभूमिमा युद्ध गर्न अनिच्छुक व्यक्ति माथि विपक्षीहरूबाट आक्रमण गरिनु हुँदैन । यहाँ अर्जुनले यो निश्चय गरेको बुझिन्छ कि त्यस्तो अवस्था सृजना भएको खण्डमा उनी माथि शत्रुहरूले आक्रमण गरे भने पनि ऊनी युद्ध गर्ने छैनन् । उनीले यो विचार गरेनन कि विपक्षीहरू युद्ध गर्न कत्तिको हतारमा छन् । यसलाई अर्को अर्थमा भगवान्को महान भक्त अर्जुनको शत्रुहरूको लागि समेत दयाको भावना रहेको स्पष्ट हुन्छ । उनी आफु मरियो भने पनि शत्रु पक्षलाई कुनै दोष नदिई कल्याण नै हुन्छ भनी विशाल हृदयको प्रदर्शन गरिरहेका छन् । असाध्यै माया गर्ने, हुर्काउने भीष्म पितामह, ज्ञान तथा विद्या प्रदाता गुरू द्रोणाचार्य, बालककालका साथीहरू विपक्षीको सेनामा सामेल भएको देखेर तिनीहरूलाई युद्धमा मार्न इच्छा नभएर बरू आफै मर्ने विकल्प उनले सोचेका हुन् ।

संजय उवाच (भन्दछन्)

**एवमुक्त्वार्जुनः संख्ये रथोपस्थ उपाविशत् ।**
**विसृज्य सशरं चापं शोकसंविग्नमानसः ॥ ४७ ॥**

संजय भन्दछन्: रणभूमिमा शोकाकूल मन भएका अर्जुनले यस प्रकार भनेर, वाणसहित धनुष त्याग गरेर रथको पछिल्लो भागमा गई बसे ।



संजयले रणभूमिको यथास्थिति वर्णन गर्ने क्रममा धृतराष्ट्रलाई भन्दछन् कि शत्रु सेना पक्षको अवलोकन गरिसकेको अर्जुनले आफ्ना शत्रुहरूको लागि समेत यस्तो कोमल हृदय एवं दयाभाव प्रदर्शन गर्नुबाट यस्तो दया तथा क्षमाको खानी जो भगवान्को सेवामा समर्पित रहेका छन्, निश्चय पनि आत्मज्ञान पाउन योग्य छन भन्ने बुझ्नु आवश्यक छ । यसरी अर्जुनले धनुवाण त्यागेर रथको पछिल्लो भागमा गई बसे ।

अथ द्वितीयो ध्यायः

दोश्रो अध्याय

# सांख्ययोग

संजय उवाच (भन्दछन्)

**तं तथा कृपयाविष्टमश्रुपूर्णाकुलेक्षणम् ।**
**विषीदन्तमिदं वाक्यमुवाच मधुसूदनः ॥ १ ॥**

सञ्जय भन्दछन्: त्यसरी करूणाले व्याप्त भएर र आँसुहरूले पूर्ण भएर तथा व्याकुल आँखाहरूले शोकयुक्त उनी अर्जुन प्रति भगवान् मधुसूदनले यी वचन भन्नुभयो ।

सञ्जयले रणभूमिको वस्तुस्थिति बताउने क्रममा विपक्षी आफन्तजनको, आफूलाई माया गरी संस्कार दिनेहरूको तथा भौतिक पदार्थहरूको विनाश हुने भो भनी शोकमग्न, करूणामय तथा व्याकुल अर्जुनलाई श्रीकृष्णले सम्झाउन थाल्नुभयो । अर्जुनको आशा टुटिसकेको छ, हिम्मत क्षीण भइरहेको छ । अर्जुन निराश भइसकेका छन् । अर्जुन तथा हामी सबैको शङ्का निवारणको लागि अब दिइने श्री कृष्णबाट ज्ञान नै गीताको सारांश हो । यहाँ कृष्णले मधु नामक राक्षसलाई बध गर्नु भएकोले उहाँलाई मधुसूदन भनी अर्जुनद्वारा सम्बोधन गरिएको छ ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**२ कुतस्त्वा कश्मलमिदं विषमे समुपस्थितम् ।**
**अनार्यजुष्टमस्वर्ग्यमकीर्तिकरमर्जुन ॥ २ ॥**

श्रीभगवान्ले भन्नुभयोः हे अर्जुन ! तिमीलाई यो असमयमा यो मोह कुन उद्देश्यले प्राप्त भयो ? किनकि न त यो श्रेष्ठ पुरूषव्दारा आचरित हो, न स्वर्ग दिनेवाला नै हो र न कीर्ति नै दिनेवाला हो ।

व्यासदेवको पिता परासरले संस्कृत शब्द भगवान् शव्दको व्याख्या गर्दै भन्नु भएको छ : समस्त धन, शक्ति, यश, सौन्दर्य, ज्ञान तथा त्यागले युक्त परम पुरूष नै भगवान् हुन्छ । ब्रह्मसंहितामा स्वयं ब्रह्माजीले श्रीकृष्णलाई भगवान् भनी निर्णय गर्नु भएको पाइन्छ । न कोही उहाँ तुल्य छ र नै उहाँभन्दा बढी छ । यहाँ कुतः शब्दले श्री



कृष्णले अर्जुनलाई भगवान्ले आश्चर्य व्यक्त गर्नु भई आर्य जस्तो सभ्य जातिको लागि यस्तो धमिलो विचार, देहात्मबुद्धि भएको हुनु हुन्न भनी ज्ञान दिन खोज्नु भएको छ । आर्यहरूले त जीवनको मूल्य, मान्यता जान्दछन् तथा उनीहरूको सभ्यता आत्म–साक्षात्कारमा निर्भर रहेको हुन्छ । उनी फेरि क्षत्रिय हुन र क्षत्रियले युद्ध गर्दिन भनी कायरता प्रदर्शन गर्ने कार्य शोभा दिदैन । देहात्मबुद्धि भएकाहरूलाई यो ज्ञान रहन्न कि जीवनको उद्येश्य परम सत्य, विष्णु वा भगवान्को साक्षात्कार हो । उनीहरू मात्र भौतिक जगतको बाह्य स्वरूपमा मोहित हुने गर्दछन् । उनीहरूलाई मुक्ति के हो भन्ने ज्ञान नै हुँदैन । अनि जुन व्यक्तिलाई भौतिक बन्धनबाट मुक्तिको ज्ञान हुन्न त्यस्लाई अनार्य भनिन्छ । अर्जुनले क्षत्रिय भएर युद्धबाट बिचलित हुने यस्तो कायरता प्रदर्शन गर्नु अनार्यहरूलाई मात्र शोभा दिने कार्य हो । अर्कोतर्फ धर्मको स्थापना गर्ने कार्य नगरी अधर्म गरेकालाई संरक्षण दिएको ठहर्ने भएकोले यसबाट स्वर्गको प्राप्ति पनि हुन्न । आफ्नो कर्तव्य पथबाट अर्जुन यसरी विचलित हुनु न त आध्यात्मिक जीवनमा प्रगतिको लागि सहायक हो र नै यस्तो कार्यबाट यस संसारमा ख्याति नै प्राप्त हुनसक्छ । अर्जुनले आफ्ना स्वजन प्रति प्रदर्शन गरेको करूणालाई भगवान् कृष्णले स्वीकृति दिनु भएन ।

**क्लैब्यं मा स्म गमः पार्थ नैतत्त्वय्युपपद्यते ।**
**क्षुद्रं हृदयदौर्बल्यं त्यक्त्वोत्तिष्ठ परंतप ॥ ३ ॥**

त्यसकारण हे अर्जुन ! नपुंसक बन्न नखोज, तिमीमा यो उचित देखिदैन । हे परंतप ! हृदयमा रहेको तुच्छ दुर्बलतालाई त्याग गरेर युद्धको लागि तैयार होऊ ।

भगवान्ले अर्जुनलाई सम्झाएर भन्दै हुनुहुन्छ कि जसरी बाहुनहरूले अपवित्र कार्य गरेमा उनीहरू नाम मात्रका बाहुन हुन्छन् त्यस्तै क्षत्रियहरूले युद्ध गर्नलाई अस्वीकार गरेमा उनीहरू नाम मात्रका क्षत्रिय हुनेछन् । स्वधर्म बमोजिमको कार्य नगरेमा त्यस्तो बाहुन होस् वा क्षत्रिय, ऊ आफ्नो बाबुको अयोग्य सन्तान हुन्छ । श्रीकृष्ण यो चाहनु हुन्न कि अर्जुन अयोग्य क्षत्रिय पुत्र वा नपुंसक कहलियोस् । अर्जुन अधर्मको पक्षमा रहेका आफ्ना स्वजनहरूलाई बध गर्न अनिच्छुक भई युद्ध नगर्ने पक्षमा उभिन पुगेकोमा श्रीकृष्णले त्यसलाई दुर्बलता, अधार्मिक गलत उदारता हो भन्दै अर्जुनले त्यसलाई त्याग गरी युद्ध गर्न तैयार हुनु पर्दछ भन्नु भएको छ । तसर्थ मनको दुर्बलतालाई त्याग गरेर आफ्नो कर्म गर भनी उहाँले भन्दै हुनुहुन्छ ।

अर्जुन उवाच (भन्दछन्)

**कथं भीष्ममहं संख्ये द्रोणं च मधुसूदन ।**
**इषुभिः प्रतियोत्स्यामि पूजार्हावरिसूदन ॥ ४ ॥**

अर्जुनले भन्दछन्: हे मधुसूदन ! रणभूमिमा म कसरी वाणहरूले भीष्मपितामह र द्रोणाचार्यको विरूद्धमा लडने छुँ ? किनकि हे अरिसूदन (शत्रुनाशक) ! यी दुबै पुजनीय हुनुहुन्छ ।

यहाँ अर्जुनले शिष्टाचारजन्य सन्दर्भ औँल्याएका छन् । यो सामान्य शिष्टाचार हो कि गुरूजन तथा मान्यजनहरूसँग वाग्युद्ध समेत गर्न हुन्न । यस्ता महानुभावहरूले आक्रमण नै गर्नु भो भने पनि वा गाली नै गर्नु भो भने पनि आफुले प्रतिआक्रमण वा प्रतिकार गर्न हुन्न ! त्यसैले धनुवाणले पितामह भीष्म तथा गुरू द्रोणाचार्यसँग मैले कसरी युद्ध गर्ने भनी अर्जुनले प्रश्न गरेका छन् । जस्बाट ज्ञान, संस्कार, स्नेह पाएको छु उहाँ महानुभावहरूसँग म कसरी लड्ु भनी श्री कृष्णलाई अर्जुनले सोद्धै छन् । तर बाँडले शत्रु आफन्त हो/होइन् भनेर हेर्दैनन् । के कृष्णले आफ्नो पितामह, हजुरबुवा उग्रसेन वा आफ्ना गुरू सान्दीपनि मुनीलाई आक्रमण गर्न सक्नुहुन्छ ? अर्जुनले कृष्णको समक्ष यस्तै मनसायले यो प्रश्न प्रश्तुत गरेका छन् ।

**गुरूनहत्वा हि महानुभावा –**
**ञ्छ्रेयो भोक्तुं भैक्ष्यमपीह लोके ।**
**हत्वार्थकामांस्तु गुरूनिहैव**
**भुञ्जीय भोगान् रूधिरप्रदिग्धान् ॥ ५ ॥**

त्यसैले यी महानुभाव गुरूजनहरूलाई नमारेर बरू म यस लोकमा भीक्षाबाट प्राप्त अन्न खानु कल्याणकारण ठान्दछु, किनकि गुरूजनहरूलाई मारेर यस लोकमा रगतले मुछिएको अर्थ वा लाभ र कामरूप भोगहरू नै त भोग्ने हो ।

शास्त्रहरू बमोजिम त्यस्ता गुरुहरू जो निन्दनीय कर्ममा संलग्न भइरहेका छन् र जो विवेकशून्य हुनुहुन्छ ती छाडने योग्य हुन्छन् । हस्तिनापुरबाट आर्थिक सुविधा भोग गरेको कारणले वा प्रतिज्ञा लिएको कारणले द्रोणचार्य तथा भीष्मले कौरवहरूको साथ दिइरहेका छन् । तर मात्र आर्थिक सुविधा प्राप्त भएको कारणले उहाँहरूले त्यस्तो गर्नु उचित होइन् । राज्यप्रति समर्पित हुनु भनेको समस्त मानव धर्मलाई



त्याग्नु तथा अन्याय सहन गर्नु अपराध हुन्छ । तथापि अर्जुनले सोच्दैछ कि उहाँहरू उस्का गुरू एवं मान्यवर हुनुहुन्छ । उहाँहरूलाई बध गरेर भौतिक लाभको भोग गर्नु भनेको उहाँहरूको रगत मुछिएको अवशेषको भोग गर्नु हो । यस्तो भोग उस्को लागि के काम ? भनेर उनले धारणा व्यक्त गरे ।

**नचैतव्दिद्मः कतरन्नो गरीयो**
**यव्दा जयेम यदि वा नो जयेयुः ।**
**यानेव हत्वा न जिजीविषाम-**
**स्तेऽवस्थिताः प्रमुखे धार्तराष्ट्राः ॥ ६ ॥**

म यो पनि जान्दिन कि मेरो लागि युद्ध गर्नु वा नगर्नु–यी दुबैमा कुन चाहिँ श्रेष्ठ छ, वा यो पनि जान्दिन कि तिनीहरूलाई मैले जित्ने छु वा तिनीहरूले मलाई जित्ने छन् । र जसलाई मारेर म बाँच्न चाहान्न, तिनीहरू नै मेरा आत्मीय धृतराष्ट्रका पुत्रहरू मेरो बिरूद्धमा उभिएका छन् ।

अर्जुन यहाँ द्विविधामा परेका छन्: युद्ध गर्ने वा नगर्ने भनेर । एकातिर युद्ध गरेर, अनावश्यक रक्तपात गर्ने कारण बन्नु (यहाँ स्मरणमा राख्नु पर्दछ कि युद्ध गर्नु क्षत्रियहरूको धर्म हो, त्यसबाट बिमुख हुनुहुन्न), वा यस युद्धबाट बिमुख भएर भीक्षा माँगी जीवनयापन गर्नु । किनकि शत्रुहरू माथि उनीले विजय प्राप्त गर्न सकेनन भने भीक्षा माग्नु एक मात्र बिकल्प बाँकि रहन्छ । यदि विजय भयो भने पनि धृतराष्ट्रका पुत्रहरू मर्नेछन्, तथा तिनीहरूनै रहेनन् भने पाण्डवहरूलाई बाँच्न नै कठिन हुन्छ । यसरी अर्जुनले बिभिन्न पक्ष–विपक्षहरूलाई बिश्लेषण गर्नुबाट उनी भगवान्को भक्त मात्र नभई धेरै नै प्रबुध्द व्यक्ति पनि रहेछन् भन्ने बुझिन्छ । भीक्षाटनमा जाने भनी भन्नु उनको विरक्तिको पराकाष्टा हो । यसरी भक्ति एवं मुक्तिको लागि इन्द्रियहरूलाई आफ्नो वशमा राख्नु अर्जुन दैविक गुणको द्योतक हुन भनेर मान्न सकिन्छ । आफ्नो कर्महरूलाई पुरा गर्न हामी कति सीमासम्म जानु उचित हुन्छ भनेर अर्जुनले जिज्ञासा व्यक्त गरेका छन् ।

**कार्पण्यदोषोपहतस्वभावः**
**पृच्छामि त्वां धर्मसम्मूढचेताः ।**
**यच्छ्रेयः स्यान्निश्रि्चतं ब्रुहि तन्मे**
**शिष्यस्तेऽहं शाधि मां त्वां प्रपन्नम् ॥ ७ ॥**

त्यसैले कायरता रूपी दोषले बिनाश भएको स्वभाववाला तथा धर्मको विषयमा मोहित चित्त भइरहेको म हजुरलाई सोध्दछु कि जुन साधन निश्चित कल्याणकारक छ, त्यो मेरो लागि भन्नु होस्, किनकि म हजुरको शिष्य हुँ, त्यसैले हजुरको शरणमा म आएकोले मलाई शिक्षा दिनुहोस् ।

यहाँ अर्जुन भन्दैछन् कि उनीमा करूणा वा बौद्धिक दुर्वलताको कारण धैर्य गुमाएर उनले आफ्नो कर्तव्य बिर्सिरहेका छन् । यस्तो अवस्थामा उनको लागि श्रेयस्कर जे छ त्यो निश्चित रूपमा उनीलाई बताइयोस् । म तपाईंको शिष्य हुँ र शरणागत पनि छु । वैदिक वाङ्मयले हामीलाई उपदेश दिन्छ कि जीवनमा उत्पन्न हुने समस्याहरूको समाधानको लागि हामीले परम्परागत रूपमा रहनु भएको प्रमाणिक गुरू कहाँ सम्पर्क गर्नु पर्दछ । यहाँ अर्जुनले बुझिसकेका छन कि पारिवारिक व्यक्तिहरू प्रतिको उनको प्रेम, माया नै उसको समस्याको कारण हो । तसर्थ युद्ध गर्नु/नगर्नुमा कल्याणकारक मार्ग के हो भनी उनी जान्न खोज्दैछन् । तसर्थ गुरू-शिष्यको सम्बन्ध कायम गरी उनी गम्भीर भएर श्रीकृष्णबाट अत्यन्त कल्याणकारक मार्ग दर्शनको अपेक्षा यस श्लोक मार्फत गर्दैछन् ।

**न हि प्रपश्यामि ममापनुद्या -**
**द्यच्छोकमुच्छोषणमिन्द्रियाणाम् ।**
**अवाप्य भूमावसपत्नमृद्धं**
**राज्यं सुराणामपि चाधिपत्यम् ॥ ८ ॥**

किनकि भूमिमा निष्कण्टक, धन-धान्यले सम्पन्न राज्य प्राप्त गरेर र देवताहरूले स्वर्गमा आधिपत्य जमाएर बसे झैं मैले सुखभोग गर्न पाए पनि मैले यस शोकको समाधानको उपाय देखिरहेको छैन जस्ले मेरा सुकाइरहेका इन्द्रियहरूलाई शोकबाट मुक्त गर्न सकोस भनी अर्जुनले भने ।

अर्जुन ज्ञानी भएता पनि यस समस्याको समाधानको उपाय उनीले पाइरहेका छैनन् । त्यसको लागि भगवान् कृष्ण जस्तो आध्यात्मिक गुरूको सहायताको खांचो महशुस गरिरहेका छन् । प्रामाणिक गुरूको सन्दर्भमा चैतन्य–चरितामृत, मध्य ८.१२८ मा वर्णन गरिए बमोजिम कुनै व्यक्ति चाहे उनी वैदिक ज्ञानमा दक्ष (विप्र) हुन, निम्न जातिमा जन्मेको शूद्र हुन वा सन्यासी नै हुन, यदि उनी कृष्णको विज्ञानमा दक्ष वा कृष्णतत्ववेत्ता छन् भने उनी यथार्थमा प्रामाणिक गुरू हुन् । अर्जुनले यी सबै



गुणहरूले युक्त गुरू श्रीकृष्ण पाएको छन् । यतिखेर उनीले भोग्ने समस्याको समाधान भौतिक राज्यबाट प्राप्त हुने सुख तथा देवलोकका सुखहरूबाट पनि प्राप्त नभई उनका इन्द्रियहरू सुक्दै छन् । उनका ती इन्द्रियहरूलाई सुकाउने कारण आफन्तजनहरूसँग गर्नु परेको युद्ध नै हो । तसर्थ उनी श्रीकृष्णको शरणागति परेका हुन्

संजय उवाच (भन्दछन्)

**एकमुक्त्वा हृषीकेशं गुडाकेशः परंतप ।**
**न योत्स्य इति गोविन्दमुक्त्वा तूष्णीं बभूव ह ॥ ९ ॥**

संजय भन्दछन्ः हे राजन ! निन्द्रा माथि विजय प्राप्त गर्ने अर्जुनले अन्तर्यामी श्रीकृष्ण महाराजलाई यस प्रकार भनेर फेरि श्रीगोविन्द भगवान्लाई "म युद्ध गर्दिन" यो स्पष्ट भनेर चुप लागे ।

अर्जुनले म युद्ध गर्दिन भन्दा, अब अर्जुन भीक्षाटनमा जाने भयो भनेर धृतराष्ट्रलाई अति प्रसन्नता भयो होला । अर्जुनले आफूलाई असाध्यै माया गर्ने, आफुलाई ज्ञान तथा शिक्षा दिने, संस्कार दिनेहरूसँग कसरी युद्ध गर्नु भनी तीप्रतिको माया, श्रद्धा र सम्मानको कारणले युद्ध गर्दिन भनेका हुन् । तर प्राकृतिक आवश्यकताको रूपमा रहेको निन्द्रा माथि विजय प्राप्त गर्ने तथा विभिन्न शत्रुहरू माथि विजय प्राप्त गर्न सक्ने अर्जुनले श्री कृष्ण जस्तो प्रामाणिक गुरू प्राप्त गरिसके पनि आफ्नो मोह, माया र दुर्बलताले डराइरहेको छन् । तर यस समस्याको निकास वा समाधानको बाटो अवश्य निस्कन्छ र युद्धमा अर्जुन सहभागी हुनेछ भन्ने सोची धृतराष्ट्र खिन्न पनि भए होलान् । तर अर्जुनले त्यस डर र दुर्बलतालाई जीतेर अघि बढ्न खोज्दैछन् ।

**तमुवाच हृषीकेशः प्रहसन्निव भारत ।**
**सेनयोरूभयोर्मध्ये विषीदन्तमिदं वचः ॥ १० ॥**

हे भरतवंशी धृतराष्ट्र ! अन्तर्यामी श्रीकृष्ण महाराजले दुबै सेनाहरूको बिचमा शोक गरिरहेको ती अर्जुनलाई हाँस्दै यो वचन भने ।

दुबै धनिष्ठ मित्र भएता पनि अर्जुन स्वेच्छाले श्री कृष्णको शिष्य बनेका हुन् । श्री कृष्ण हास्नुको कारण उनको मित्र अर्जुन अब उनको शिष्य बन्न पुगेको छ

जससँग उनीले गम्भीर भएर सम्वाद गर्नु पर्ने हुन्छ । एकातिर कमजोर बालक झैँ अर्जुन छन् भने अर्कोतर्फ त्रि-कालदर्शी श्रीकृष्ण हुनुहुन्छ । यस अवस्थामा हाँस्नु भएको श्रीकृष्णको स्वभावले उहाँलाई छलिया पनि भनिएको होला । दुबै सेनाहरूको बीचमा भएको सम्वाद कुनै एक व्यक्ति, परिवार, समाज वा जातिको लागि होइन, त्यो सम्वाद सबैको लागि उपयोगी छ, चाहे त्यो पक्ष वा धर्म अनुयायी होस्, वा बिपक्ष वा पाप अनुयायी होस् ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**अशोच्यानन्वशोचस्त्वं प्रज्ञावादांश्र्च भाषसे ।**
**गतासूनगतासूंश्र्च नानुशोचन्ति पण्डिताः ॥ ११ ॥**

श्रीभगवान्ले भन्नुभयोः हे अर्जुन ! तिमीले न शोक गर्नु पर्ने मानिसहरूको लागि शोक गर्दैछौँ र पंडित जस्तो वचन भन्दछौ, तर जस्का प्राणहरू गइसकेका छन्, तिनीहरूको लागि र जस्का प्राणहरू गएका छैनन् तिनीहरूको लागि पनि पंडितजनले वा विद्वान्हरूले शोक गर्दैनन् ।

श्री कृष्णको ज्ञान अन्तिम सत्य हो । उहाँले अर्जुनलाई भन्नु हुन्छ कि तिमी विव्दान जस्तो कुरा गर्छौ तर जो विद्वान हुन्छ, भन्नुको अर्थ जस्लाई यो थाहा छ कि आत्मा तथा शरीर के हो ? त्यो कुनै पनि अवस्थामा चाहे त्यो जीवित होस् वा मृत होस्-त्यसको लागि शोक गर्दैन । यस संसारमा कुनै पनि कुराको शोक गर्नु हुन्न । भन्नुको तात्पर्य अर्जुन विद्वान् त छन् तर अत्यधिक विव्दान भने छैनन् । तसर्थ उनीले शोक गर्नै नपर्नेको लागि शोक गरिरहेको छन् । यो शरीर जन्मिन्छ र एक दिन निश्चित छ, मर्छ । आत्मा कदापि मर्दैन । जस्ले यस शाश्वत सत्यलाई जान्दछ त्यो नै सहीमा विद्वान् हो । यसर्थ उसले नाशवान शरीर नाश भयो भनेर कदापि शोक गर्दैन ।

**न त्वेवाहं जातु नासं न त्वं नेमे जनाधिपाः ।**
**नचैव न भविष्यामः सर्वे वयमतः परम् ॥ १२ ॥**

न यस्तो हो कि म कुनै कालमा थिइन, तिमी थिएनौँ वा यी राजाहरू थिएनन् र नै यस्तो नै हो कि यसभन्दा अघि हामी सबै हुने छैनौँ ।



वेदहरू, कठोपनिषद् तथा श्र्वेताश्र्वतर उपनिषद् आदिमा उल्लेख गरिएको छ कि जुन असङ्ख्य जीवहरूको कर्म तथा कर्मफल बमोजिम आ-आफ्ना कायम हुने परिस्थितिहरूको लागि श्रीभगवान् पालक हुनुहुन्छ, त्यही भगवान् अंशको रूपमा प्रत्येक जीवमा वास गर्नु हुन्छ । साधु स्वभावका व्यक्तिहरूले मात्र एउटै ईश्वरलाई भित्र एवं बाहिर देख्दछन्, अनि पूर्ण तथा शाश्वत शान्ति प्राप्त गर्दछन् । हामीहरू आउँछौं, जान्छौँ यसरी समयको खेल चलिरहन्छ । त्यसरी नै युद्धभूमिमा रहेका सबै मानिसहरू चाहे ती माया, लोभ, क्रोध आदिको कारणले बृद्ध अवस्थामा रहेका हुन्, चाहे मुक्त अवस्थामा रहेका हुन भगवान् नै ती सबैको लागि पालक हुनुहुन्छ । तिनीहरू सबैको उपस्थिति प्रत्येक कालः भूतकालमा रहेको थियो, वर्तमानमा रहेको छ तथा भविष्यमा रहने छ । यो प्रकृया अनन्तकालसम्म चलिरहन्छ । तसर्थ यिनीहरूको लागि शोक गर्नु, युद्ध नगर्ने भन्नु विद्वता विहिन कार्य हो भनी अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ ।

**देहिनोऽस्मिन् यथा देहे कौमारं यौवनं जरा ।**
**तथा देहान्तरप्राप्तिर्धीरस्तत्र न मुह्यति ॥ १३ ॥**

जसरी जीवात्माको यस शरीरमा बालकपन, तरूणावस्था र बृद्धावस्था हुन्छ, त्यसरी नै उस्ले अर्को शरीर पनि प्राप्त गर्दछ, त्यस विषयमा धीर वा गम्भीर स्वभावको व्यक्ति मोहित हुँदैन ।

श्री कृष्णले जीवनको को चक्रको बारेमा अर्जुनलाई बताउँदै हुनुहुन्छ । प्रत्येक जीवको आत्मामा कुनै परिवर्तन हुँदैन तर उस्को शरीरको अवस्थामा भने परिवर्तन भइरहन्छ । यस क्रममा बालक भई जन्मेको ऊ परिवर्तन हुँदै युवा, बृद्ध तथा मृत्यु पश्चात् अर्को शरीरमा प्रवेश गरी पुनः सोही क्रम चलिरहन्छ । परिवर्तन त प्रकृतिको नियम हो । यो परिवर्तन देखिन र महशुस गर्न पनि सकिन्छ वा नदेखिन पनि सक्छ । परिवर्तन नहुने त आत्मा हो । तसर्थ अर्जुनले शोक गर्नु पर्ने आवश्यकता थिएन किनकि युद्धमा वीरगति प्राप्त गरेपछि भीष्म, द्रोणाचार्य आदिले पुरानो शरीर त्याग गरी नयाँ शरीर एवं शक्ति प्राप्त गर्नेछन् । वर्तमान जीवनमा गरिएका कर्महरू बमोजिम आगामि जीवनको मार्ग चित्र तैयार हुने हुँदा भीष्म तथा द्रोणाचार्य साधु पुरूष भएकाले उनीहरूले आगामि जीवनमा कि आध्यात्मिक शरीर प्राप्त गर्नेछन् कि कम्तिमा पनि स्वर्गको सुख भोग गर्नेछन् । यी दुबै दशाहरूमा अर्जुनले शोक गर्नु व्यर्थ छ । जो व्यक्तिलाई नश्वर शरीर, अमर आत्मा, परमात्मा, नाशवार भौतिक विषयवस्तुहरू

तथा मार्ग चित्र आध्यात्मिक प्रकृतिको बारेमा पूर्ण ज्ञान हुन्छ त्यो व्यक्तिलाई गम्भीर वा धीर पुरूष भनी भनिन्छ । उस्ले आफ्ना कर्तव्य तथा कर्मलाई कहिल्यै परित्याग गर्दैन ।

**मात्रास्पर्शास्तु कौन्तेय शीतोष्णसुखदुःखदाः ।**
**आगमापायिनोऽनित्यास्तांस्तितिक्षस्व भारत ॥ १४ ॥**

हे कुन्तीपुत्र ! सर्दी-गर्मी र सुख-दुःख दिने इन्द्रियहरू र विषयहरूको संयोग त उत्पत्ति–विनाशशील र अनित्य छ । तसर्थ हे भारत ! तिनीहरूलाई तिमी सहन गर ।

यस संसारमा जीवहरूले आ-आफ्ना कर्तव्यहरू निर्वाह गर्दा इन्द्रियहरूले महशुस गर्ने सुख र दुःख आउँछन्-जान्छन् । ती ऋतु सरह परिवर्तनशील हुन्छन् । जीवहरूले ऋतु लगायतका प्राकृतिक व्यवस्थाहरूलाई सहन गरेझैं तिमीले पनि यी भौतिक सुख तथा दुःख, भोक, निन्दा, निन्द्रा, हर्ष, उत्साह आदिलाई सहन गर । तर ऋतुमा परिवर्तन भएता पनि धार्मिक व्यक्तिले सधैं बिहान स्नान गरेर पूजा पाठ गर्दछ, आफ्नो धर्मलाई निर्वाह गर्दछ, त्यस्तै तिमी क्षत्रिय भएकोले युद्ध गर्नु तिम्रो धर्म हो, तिमी आफ्नो धर्म निर्वाह गर । युद्धमा चाहे तिम्रो मित्र होस् वा कुनै आफन्तजन । यहाँ अर्जुनलाई कौन्तेय तथा भारत भनी सम्वोधन गरिएको छ । कौन्तेय भन्नाले आमा तर्फको संस्कारहरू तथा भारत भन्नाले बुवा तर्फका संस्कारहरू अर्जुनले प्राप्त गरेका छन् । यस्तो बृहद् संस्कारयुक्त व्यक्तिले आफ्नो कर्तव्यबाट च्यूत हुन मिल्दैन भन्ने सम्बोधनको आशय हो ।

**यं हि न व्यथयन्त्येते पुरूषं पुरूषर्षभ ।**
**समदुःखसुखं धीरं सोऽमृतत्वाय कल्पते ॥ १५ ॥**

किनकि हे पुरूष श्रेष्ठ ! दुःख तथा सुखलाई समान बुझ्ने गम्भीर व्यक्तिलाई यी इन्द्रियहरू र विषयहरूको संयोगले व्याकुल तुल्याउँदैमा त्यस्ता व्यक्तिहरू मोक्षको लागि योग्य हुन्छन् ।

जो व्यक्तिले सुख एवं दुःखमा समभाव राखी तिनीहरूलाई सहज रूपमा सहन गर्दछ भने उसलाई आत्म साक्षात्कार भई उस्ले उच्च पदमा रही मोक्ष प्राप्ति गर्न सक्दछ । भौतिक तथा लौकिक दुःखमा पारिवारिक बिछोड, सम्बन्धबिच्छेद लगायतका विषय वस्तुहरू पर्दछन् । जस्ले यी सबै सुख तथा दुःखहरू निरन्तर



आउने-जाने हुन भनी तिनीहरूलाई सहन गरी जीवनमा आफ्नो कर्तव्य निर्वाह गर्दछ, कहिल्यै कर्म तथा कर्तव्य प्रति स्थीर भई अडिएर बसिरहँदैन, एकपछि अर्को कर्तव्य कर्म गर्न तत्पर रहन्छ उस्ले आत्म साक्षात्कार गरी मोक्ष प्राप्त गर्दछ । तसर्थ यहाँ अर्जुनलाई पनि आफ्नो कर्तव्य निर्वाहमा कायम रहेर क्षत्रियहरूको धर्मलाई निर्वाह गरी युद्ध गर भनी भगवान्ले सम्झाइरहनु भएको छ ।

**नासतो विद्यते भावो नाभावो विद्यते सतः**
**उभयोरपि दृष्टोऽन्तस्त्वनयोस्तत्त्वदर्शिभिः ॥ १६ ॥**

असत्य बस्तुको सत्ता हुन्न् र सत्यको अभाव हुन्न् । यस प्रकार यी दुबैका नै तत्वहरूको बारेमा तत्वज्ञानी पुरूषहरूद्वारा बुझिएको हुन्छ ।

तत्वदर्शीहरूले सत्य तथा असत्यका प्रकृतिहरूको बारेमा अध्ययन गरी यो निष्कर्ष निकालेका हुन्छन कि असत्य वस्तु भौतिक शरीर चिरस्थायी हुदैन, तर सत्य आत्मा अपरिवर्तित रहन्छ । सही तथा स्थायी विषयवस्तुको पो मोल हुन्छ, तर जो नाशवान छ त्यस्को के मोल ? शरीर परिवर्तनशील छ, यस्मा स्थायित्व रहन्न । यो बालक, तरूण, बृद्धावस्था आदिमा परिवर्तन भइरहन्छ । यसरी शरीर तथा मनमा परिवर्तन भइरहे पनि आत्मा भने परिवर्तन हुँदैन । यहाँ सत् आत्माको द्योतक तथा असत् भौतिक शरीरको द्योतक रहेका छन् । अर्जुनलाई जीवनको सार्थकताको लागि भगवान्ले तिमीले युद्धमा भौतिक शरीरलाई मार्ने छौ न कि आत्मालाई । यिनीहरू अधर्मको पक्षमा रहेकाले यिनीहरूका भौतिक शरीरलाई नाश गरी तिमीले धर्मको स्थापना गर्ने कार्य गर्ने छौ भन्दै हुनुहुन्छ । यसैबाट सम्पूर्ण जीव-जगतको हित हुन्छ । यहाँ सुख तथा दुःखको कुनै मूल्य छैन, यी शरीर झैं निरन्तर परिवर्तनशील छन्, अपरिवर्तनशील र सत्य त आत्मा हो जो कहिल्यै मर्दैन भनी सम्झाउँदै हुनुहुन्छ ।

**अविनाशि तु तद्विद्धि येन सर्वमिदं ततम् ।**
**विनाशमव्ययस्यास्य न कश्चित्कर्तुमर्हति ॥ १७ ॥**

नाशरहित त तिमीले त्यसलाई बुझ, जसव्दारा यो सम्पूर्ण जगत्-दृश्यवर्ग व्याप्त छ । यस अविनाशीलाई विनाश गर्न कोही पनि समर्थ छैन ।

स्थायी त्यो मात्र छ जस्मा यो विश्व नै अडिएको छ र समाहित भएको छ । बाँकि सबै भौतिक विषयवस्तुहरू आउने-जाने भइरहन्छन् । हाम्रो आत्मानै संसारको

सबैभन्दा ठूलो सत्यता हो । त्यस विषयलाई तिमी बुझ, अर्जुन ! भनेर श्री कृष्णले भन्दै हुनुहुन्छ । बैदिक ग्रन्थहरूले आत्मालाई साह्रै नै सूक्ष्म छ भनी वर्णन गरेका छन् । श्वेताश्र्वतर उपनिषद्को ५.९ मा यदि हामीले हाम्रो एउटा रौंको टुप्पो एक सय टुकडामा विभाजन गर्यौं र फेरि त्यसको एक भागलाई सय भागहरूमा विभाजन गर्यौं भने त्यसको प्रत्येक भाग आत्माको स्वरूपको हुन्छ । आत्मा अपरिवर्तनशील तथा नाशरहित छ । यसलाई मुण्डक उपनिषद्मा यो अणु तुल्य रहेको छ भनी वर्णन गरिएको छ । यसलाई नाश गर्ने कसैको सामर्थ छैन । यसरी परमात्मा तथा उनको अंश आत्मा नाशरहित छन्, अन्य सबै नाशवान छन भनी बुझ भनी अर्जुनलाई भन्दै हुनुहुन्छ ।

**अन्तवन्त इमे देहा नित्यस्योक्ताः शरीरिणः ।**
**अनाशिनोऽप्रमेयस्य तस्माद्युध्यस्व भारत ॥ १८ ॥**

यस नाशरहित, अप्रमेय (मापन गर्न नसकिने), नित्यस्वरूप जीवात्माले धारण गरेको यी सबै शरीरहरूलाई नाशवान् भनिएको छ । त्यस कारण हे भरतवंशी अर्जुन ! तिमी युद्ध गर ।

आत्मा नित्य छ, अविनाशी छ जबकि जीवहरू वा भौतिक शरीरहरू परिवर्तनशील छन् तथा नाशवान छन् । आत्मा यति साह्रो सूक्ष्म छ कि यसलाई आँखाले देख्न नै सकिन्न भने त्यसलाई कसैले नाप्ने र मार्ने कुरै भएन । महापुरूषहरूले यसै आत्माको बारेमा बुझ्न आफ्ना सम्पूर्ण जीवन ध्यानमा वा सन्यासमा लगाउँदछन् । वेदान्त सूत्रले जीवात्मालाई प्रकाशको रूपमा चित्रण गरेको छ । यो परम प्रकाशको अंश हो भनी बताइएको छ । जसरी सूर्यको प्रकाशले सम्पूर्ण ब्रह्माण्डलाई पोषण प्रदान गर्दछ त्यस्तै आत्माको प्रकाशले यो भौतिक शरीर पोषित हुने गर्दछ । किनकि आत्मा रूपी पोषक तत्व शरीरबाट बाहिरिए सँगै शरीर कुहिन थाल्दछ, आफुमा महत्त्वहीन हुन थाल्दछ । आत्मा अविनाशी छ, यो सत्य र शाश्वत छ, तर शरीर नाशवान छ, असत्य छ भने नाश हुने शरीर नाश हुन्छ भनेर के को शोक गर्नु ? तसर्थ तिमी तिनीहरूको लागि शोक नगरी युद्ध गर । अधर्म तथा अधर्मीहरूको नाश गर ।

**य एनं वेत्ति हन्तारं यश्र्चैनं मन्यते हतम् ।**
**उभौ तौ न विजानीतो नायं हन्ति न हन्यते ॥ १९ ॥**



जस्ले यस आत्मालाई मार्नेवाला सम्झिन्छ तथा जस्ले यसलाई मरेको ठान्दछ, ती दुबैलाई पनि यो थाहा छैन कि वास्तवमा यो आत्माले न कसैलाई मार्दछ र नै कसैद्वारा यो मारिन्छ ।

आत्मा साह्रैनै सूक्ष्म छ । यसलाई काट्न वा मार्न सकिन्न् । शरीर जन्म लिन्छ र  मर्दछ । जीवमा आत्माको आफ्नै छुट्टै सूक्ष्म आध्यात्मिक स्वरूप हुने गर्दछ । यसको हुनु नै त्यस शरीरको लागि सबै थोक हो । यो त सोच्नु पनि अज्ञान हुनेछ कि हामीले कसैलाई मार्यौं वा हामीलाई कसैले मार्यो । मानिसले आफ्नो अहङ्कारमा यस्तो ठान्दछ कि उस्ले धेरै कुरा र कामहरू गर्दछ वा गर्यो । तर यो धारणा उस्को अज्ञानता हो । आत्माको आध्यात्मिक स्वरूप भएकोले यो कतैतिरबाटः माया, लोभ, स्नेह, क्रोध आदिबाट बाँधिएको पनि हुँदैन । जसले मार्दछ र जसलाई मारिन्छ त्यो त शरीर मात्र हुन्छ, आत्मा होइन ।

**न जायते म्रियते वा कदाचि–**
**न्नायं भूत्वा भविता वा न भूयः ।**
**अजो नित्यः शाश्र्वतोऽयं पुराणो**
**न हन्यते हन्यमाने शरीरे ॥ २० ॥**

यो आत्मा कुनै कालमा पनि न त जन्मिन्छ र नै मर्छ तथा न यो उत्पन्न भएर फेरि हुनेवाला छ, किनकि यो अजन्मा, नित्य, सनातन र पुरातन छ, शरीरलाई मारिदा पनि यो मर्दैन ।

आत्माको कुनै पनि कालमा न त जन्म हुन्छ र नै मृत्यु हुन्छ । यो न कहिल्यै जन्मेको छ र नै यसले भविष्यमा जन्म लिन्छ । यो शाश्वत छ । शरीर मरे पनि यो कहिल्यै मर्दैन । गुणात्मक रूपमा हेर्दा परमात्माको अणुको अंशमा रहेको आत्मा प रमात्माबाट भिन्न छ तर आफैमा पूर्ण एवं स्थायी छ । जब केही थिएन, आत्मा थियो, जब केही रहन्न तब पनि आत्मा रहन्छ । आत्मा बाहेक सबै परिवर्तनशील छन् । यो शरीरको जस्तो विकारयुक्त छैन् । यो नजन्मिने हुँदा यसको मरण हुन्न् । यो नजन्मने हुँदा यसको भूत, वर्तमान, भविष्य छैन् । तर आत्माको उपस्थितिको कारणले पोषण पाई शरीरको संचालन एवं बृद्धि हुन्छ । आत्मा ज्ञान तथा चेतनाबाट सदैव पूर्ण रहन्छ । बादलहरूले सूर्यलाई छोपे पनि सूर्यको प्रकाशले दिनको आभास गराउने हुनाले सूर्यको उपस्थिति रहेको जानकारी मिल्दछ । त्यस्तै आत्मा पनि हो । तर परमेश्वरको

चेतना तथा आत्माको चेतनाको सीमाक्षेत्र भने भिन्न-भिन्न छन् । परमेश्वरको चेतनाको सीमाक्षेत्र बिशाल छ । यस भित्र भूत, भविष्य तथा वर्तमान सबैको पूर्ण ज्ञान निहित रहेको हुन्छ । तर क्षय हुने जीवको चेतना भने विस्मरणशील छ र उसले आफ्नो वास्तविक स्वरूपलाई बिर्सिरहन्छ । उसका सत्कर्महरू बमोजिम परमात्माको शक्तिले उसलाई आवश्यकतानुसार यसको बोध गराइरहेको हुन्छ ।

**वेदाविनाशिनं नित्यं य एनमजमव्ययम् ।**
**कथं स पुरुषः पार्थ कं घातयति हन्ति कम् ॥ २१ ॥**

हे पृथापुत्र अर्जुन ! जो पुरूषले यस आत्मालाई नाशरहित, नित्य, अजन्मा र अव्यय रहेको छ भनी जान्दछ त्यस पुरूषले कसरी कसैलाई मार्न लाउँछ र कसरी कसैलाई मार्दछ ?

प्रत्येक कार्य तथा वस्तुको समुचित उपयोगिता हुने गर्दछ । जो पुरूष ज्ञानी हुन्छ त्यसलाई त्यसको उपयोगिता कसरी र कहाँ प्रयोग गर्ने सम्बन्धी ज्ञान हुन्छ । आत्मा स्वयंमा नाशरहित र अजन्मा भएपछि कसले यसलाई मार्ने ? आत्मा नै सबैभन्दा सत्य हो, यो नित्य छ, अमर छ भन्ने जस्लाई ज्ञान छ उस्ले यसलाई मार्ने प्रयास गर्दै गर्दैन । यसलाई कसैले मार्नु र कसैद्वारा यसलाई मार्न लाउनु सम्भव नै हुन्न । जीवमा आत्माको उपस्थितिको ज्ञानबाट मानिसले ब्रह्मरूपी ज्ञानलाई बुझ्दछ । तर हामीले आत्माभन्दा हाम्रो पार्थीव शरीरलाई महत्त्व दिन थालेका छौं । मनु संहितामा हत्यारालाई प्राणदण्ड दिनु पर्दछ भनी उल्लेख गरिएको छ जस्बाट उस्लाई पुनर्जन्म पाएपछि पूर्व जन्ममा गरिएका पापहरूको दण्ड भोग्न नपरोस् । सामाजिक न्याय कायम राख्न गरिने हिंसालाई उचित ठहर गरिएको छ । त्यस्तै श्रीकृष्णद्वारा अर्जुनलाई युद्ध गर्न दिइएको आदेश धर्म एवं न्यायको रक्षार्थ दिइएको हो भनी अर्जुनले बुझी युद्ध गर्नु पर्ने खांचो वर्णन गरिएको छ । आत्मा कहिल्यै मर्दैन, यो सधैं थियो र रहन्छ ।

**वासांसि जीर्णानि यथा विहाय**
**नवानि गृह्णाति नरोऽपराणि ।**
**तथा शरीराणि विहाय जीर्णा–**
**न्यन्यानि संयाति नवानि देही ॥ २२ ॥**



जसरी मानिसले पुराना लुगाहरू त्याग गरेर अर्का नयाँ लुगाहरू लाउँदछ, त्यस्तै नै जीवात्माहरूले पुरानो शरीरहरूलाई त्यागेर नयाँ शरीरहरू धारण गर्दछन् ।

यो आत्मा अमर छ, तर यसले पुरानो शरीर छोडेर नयाँ शरीरमा प्रवेश गर्दछ भनी भगवान्ले अर्जुनलाई सम्झाइरहनु भएको छ । आत्मा बाहेक सबै परिवर्तनशील छन् । अणुको स्वरूपमा रहेको आत्माले शरीर परिवर्तन गर्नु एउटा स्वीकृत तथ्य हो । यो परमात्माको कृपाले मात्र सम्भव छ । शरीरको आयु हुन्छ जस्को समाप्ति पश्चात आत्माले त्यस शरीरलाई छाडी अर्को शरीरमा प्रवेश गर्दछ, जसरी मानिसहरूले पुरानो लुगा त्याग गरेर नयाँ लुगा फेर्दछन् । एउटा मित्रले अर्को मित्रको इच्छा पूर्ति गरे जस्तै परमात्माले अणु आत्माको इच्छा पूर्ति गर्नु हुन्छ । परमात्माको अस्तित्व, महत्त्व तथा उहाँको परम शक्तिले नै सबै संचालित छन् । मुण्डक उपनिषद् ३.१.२ तथा श्र्वेताश्र्वतर उपनिषद् ४.७ मा समान रूपले यस बारेमा पुष्टि गर्दै उल्लेख गरिएको छ :

**समाने वृक्षे पुरूषो निमग्नोऽनीशया शोचति मुह्यमानः ।**
**जुष्टं यदा पश्यत्यन्यमीशमस्य महिमानमिति वीतशोकः ॥**

आत्मा तथा परमात्मा रूपी दुइवटा चराहरू एउटै रूखमा बसेका छन्, तर फल खानेवाला चरा रूखको फलको भोक्ताको रूपमा चिन्ता तथा विषादमा बल्झिएको छ । यदि कुनै प्रकारले ऊ आफ्नो मित्र चरा, जस्ले फल खाएको छैन्, भगवान्तर्फ उन्मुख हुन्छ र उहाँको महिमालाई बुझ्दछ भने त्यो कष्ट, चिन्ता, विषाद भोग्ने चरा सबै चिन्ताहरूबाट मुक्त हुन पुग्दछ । यहाँ अर्जुन भगवान् तर्फ उन्मुख भइसकेको छन् । उनीले भगवद्गीता सुनेर सम्झिरहेको छन् । भगवानद्वारा दिइएको यस उपदेशमा तिमी आफ्नो पितामह तथा गुरूको देहान्तरमा शोक प्रकट नगर । तिमीलाई त यस धर्मयुद्ध गरी उहाँहरूको शरीरहरूलाई बध गरेर प्रसन्नता प्राप्त हुनु पर्ने हो किनकि यस युद्धबाट उहाँहरू विभिन्न कर्मफलहरूबाट अबिलम्ब मुक्त हुनु हुनेछ । बलिवेदी तथा धर्मयुद्धमा प्राण त्याग गर्ने व्यक्ति आ-आफ्ना पापहरूबाट मुक्त हुने गर्दछन् । तसर्थ तिमीले गरेको शोक उपयुक्त छैन भनेर श्रीकृष्णले सम्झाइरहनु भएको छ ।

**नैन छिन्दन्ति शस्त्राणि नैनं दहति पांवकः ।**
**न चैनं क्लेदयन्त्यापो न शोषयति मारूतः ॥ २३ ॥**

यस आत्मालाई शस्त्रले काटन सक्दैन, यसलाई आगोले पोल्न सक्दैन, यसलाई पानीले गाल्न सक्दैन् र वायुले सुकाउन पनि सक्दैन ।

परमात्माको अंशको रूपमा रहने यस आत्मालाई संसारको न कुनै अस्त्र-शस्त्रले विभाजित वा खण्डित गर्न सक्छ वा न कुनै आग्नेयास्त्र आदि अग्निले पोल्नसक्छ वा जलाउन सक्छ वा न कुनै बाढी, भेलको पानीले गाल्न सक्छ र नै कुनै हुरी बतासले उडाउन र सुकाउनै सक्छ । आत्मा कुनै वस्तु होइन जो काटियोस्, जो जलोस्, गलोस् र सुकोस् । आत्मा आफुमा अचम्मको वा अनौठो तर अविनाशी छ । यस्को अर्को उदाहरण छैन् । आत्मा सत्य छ, शाश्वत छ ।

**अच्छेद्योऽयमदाह्योऽयमक्लेद्योऽशोष्य एव च ।**
**नित्यः सर्वगतः स्थाणुरचलोऽयं सनातनः ॥ २४ ॥**

किनकि यो आत्मा अच्छेद्य छ, यो आत्मा अदाह्य (पोल्न नसकिने) छ, अक्लेद्य (भिजाउन नसकिने) छ, र निःसन्देह अशोष्य (सुकाउन नसकिने) छ तथा यो आत्मा नित्य, सर्वव्यापी, अचल, स्थिर रहने र सनातन छ ।

आत्मा पूर्ण परमात्माको अणु अंश हो । यस्लाई खन्डित, प्वाल पार्न वा विभाजित गर्न सकिँदैन, यसलाई पोल्न सकिँदैन, यसलाई भिजाएर गिलो बनाउन सकिँदैन र सुकाउन सकिँदैन । यो सनातन भएकोले यो पहिलेदेखि नै रहिआएको छ र यसमा कुनै पनि परिवर्तन नआई उस्तै रहिरहन्छ । जीव भगवान्को समग्र सृष्टिमा फैलिएको छ चाहे त्यो वायु होस्, पानी होस्, पृथ्वी होस् वा आगो होस् । नाशवन शरीरको लागि धेरै ध्यान नदिऊँ, अविनाशी आत्मालाई सम्झी कार्य गरौँ । हामीले शरीरलाई बढी महत्त्व दिए भने हामीमा मोह, लोभ, आसक्ति सबैले बास गर्नेछन तथा मुक्तिमार्ग अबरूद्ध हुन पुग्दछ भनी अर्जुनलाई क्रमशः महशुस भइरहेको छ । उनीले विपक्षमा रहेका आफन्तजनको आत्मा अमर छ भन्ने ठानी युद्ध गर्नु पर्दछ भन्ने श्रीकृष्णको धारणा रहेको छ ।

**अव्यक्तोऽयमचिन्त्योऽयमविकार्योऽयमुच्यते ।**
**तस्मादेवं विदित्वैनं नानुशोचितुमर्हसि ॥ २५ ॥**

यो आत्मा अव्यक्त छ, यो आत्मा अचिन्त्य (अकल्पनीय) छ र यो आत्मा विकाररहित छ भनेर भनिन्छ । त्यसकारण हे अर्जुन ! यस आत्मालाई माथि उल्लेख



भएबमोजिम बुझेर तिमीले शोक गर्नु उपयुक्त छैन् अर्थात तिमीले शोक गर्नु उचित छैन ।

आत्मा अत्यन्तै सूक्ष्माति सूक्ष्म छ । यसलाई हेर्न सम्भव छैन । यो यस्तो आकार प्रकारमा हुन्छ भनेर वस्तु जस्तो यसलाई सम्झाउन सकिन्न । मानवीय व्यावहारिक ज्ञानद्वारा यो अव्यक्त र अकल्पनीय छ । यस्मा कुनै विकार हुने सम्भव नै छैन किनकि यो आसक्ति विहिन छ । वेदको कथन बमोजिम आत्मा चेतना हो । यसलाई कुनै विकारले असर गर्न सक्दैन । यो अपरिवर्तनशील छ । तसर्थ आत्माको मरण हुँदैन, तिमीले कसैलाई मार्यौ भने पनि आत्माको शरीर मात्र परिवर्तन हुने हो, ऊ कहिल्यै मर्दैन । यसर्थ तिमीले शोक गर्नु पर्ने आवश्यकता छैन ।

**अथ चैनं नित्यजातं नित्यं वा मन्यसे मृतम् ।**
**तथापि त्वं महाबाहो नैवं शोचितुमर्हसि ॥ २६ ॥**

तर यदि तिमीले यस आत्मालाई संधै जन्मिने वा सधैँ मर्नेवाला सम्झिन्छौँ भने तापनि हे महाबाहो ! तिमी यस प्रकार शोक गर्ने योग्य छैनौँ ।

यहाँ श्रीकृष्णले अर्जुनलाई अर्को किसिमले सम्झाउने प्रयास गर्दै हुनुहुन्छ । उहाँले भन्दै हुनुहुन्छ कि तिमीले जस्को लागि शोक गर्दैछौँ त्यो व्यर्थ छ । यदि तिमीले आत्मालाई भौतिक वा रासायनिक वस्तुहरूको संयोगद्वारा निर्मित भई सधैँ जन्मिने तथा सधैँ मर्ने ठान्दछौ भने पनि संसारमा यस्ता भौतिक एवं रसायन तत्वहरू युद्ध लगायतका विभिन्न कारणहरूले गर्दा नाश भइरहेकै हुन्छन् । यस परिप्रेक्ष्यमा आत्माको शरीर सँग-सँगै विनाश हुन्छ । भीष्म पितामह तथा गुरू द्रोणाचार्य पनि यस्तै रसायनिक तत्वबाट बन्नु भएको हो । केही रसायनिक तत्वहरूको विनाशमा शोक मनाउनु उपयुक्त हुँदैन ।

**जातस्य हि ध्रुवो मृत्युर्ध्रुवं जन्म मृतस्य च ।**
**तस्मादपरिहार्येऽर्थे न त्वं शोचितुमर्हसि ॥ २७ ॥**

किनकि यस मान्यता बमोजिम जन्मिनेहरूको मृत्यु निश्चित छ र मर्नेको पनि जन्म निश्चित छ । त्यसकारणले पनि यो उपाय बिहिन विषयको लागि तिमी शोक गर्ने योग्य छैनौँ ।

आ-आफ्ना कर्महरू अनुसार नै मानिसहरूले जन्म लिन्छन्, भोग गर्छन् तथा कर्म अवधि समाप्त भएपछि मर्दछन् । मानिसका बाँकि रहेका कर्महरूको भोग

गर्न उस्ले पुनर्जन्म लिनु पर्ने हुन्छ। यो क्रम मनुष्यले मुक्ति प्राप्त नगरेसम्म भोगिरहनु पर्ने हुन्छ । जन्म-मरण तय भएको वा निश्चित विषयवस्तु हो । यो अपरिहार्य छ । शरीरलाई आत्मा ठान्ने हो भने पनि यो जन्मिन्छ भने एकदिन यो अवश्य मर्नुपर्छ, निश्चित छ, अनि किन शोक गर्नु। तर मानव समाजमा शान्ति व्यवस्था कायम राख्न समय-समयमा हिंसा, प्रकोप तथा युद्ध अपरिहार्य हुन्छन्। त्यसै कारणले शान्ति व्यवस्था कायम गर्न गराउन श्रीकृष्णले कुरूक्षेत्रको युद्धको व्यवस्थापन गर्नु भएको हो। सत्य तथा धर्म व्यवस्था कायम गर्नु क्षत्रियहरूको धर्म हो । आफ्नो धर्म निर्वाह गर्न अर्जुनले आफन्तजनहरूको मृत्यु हुन्छ भनी सोचेर शोक मनाउनु पर्ने आवश्यकता नै छैन्।

**अव्यक्तादीनि भूतानि व्यक्तमध्यानि भारत ।**
**अव्यक्तनिधनान्येव तत्र का परिदेवना ॥ २८ ॥**

हे अर्जुन ! सम्पूर्ण प्राणीहरू जन्मिनु अघि अप्रकट वा अव्यक्त थिए र मरिसकेपछि पनि अप्रकटनै हुनेछन्, मात्र उनीहरू यस बीचमा प्रकट रूपमा देखिन्छन्, तसर्थ यस्तो स्थितिमा के शोक गर्नु ?

दार्शनिकहरूले कायम गरेको नास्तिकवादी अवधारणा बमोजिम जीव तत्वलाई भौतिकताको उपज मान्नेहरू अनुसार भौतिक संरचना श्रृष्टि हुनु अगाडि अदृश्य हुन्छन्, त्यसपछि क्रमशः दृश्य हुन्छन् र फेरि नष्ट भई अदृष्य हुन्छन्। तर नष्ट वा मृत भएता पनि ती परमाणु अवस्थामा रहिरहन्छन्। त्यस आधारमा अर्जुनले शोक गर्नु उपयुक्त छैन्। अर्को तर्फ वैदिक निष्कर्ष बमोजिम हाम्रो भौतिक शरीर कालक्रममा नाशवान छ (अन्तवन्त इमे देहाः) तर आत्मा भने शाश्वत छ (नित्यस्योक्ताः शरीरिणः)। तसर्थ हामीले स्मरणमा राख्नु पर्दछ कि यो शरीर लगाउने लुगा समान छ, लुगा बदल्नुमा किन शोकाकूल हुने ? भनी अर्जुनलाई युद्ध गर्न सम्झाउँदै हुनुहुन्छ ।

**आश्चर्यवत्पश्यति कश्चिदेन–**
**माश्र्चर्यवव्ददति तथैव चान्यः।**
**आश्चर्यवच्चैनमन्यः श्रृणोति**
**श्रुत्वाप्येनं वेद न चैव कश्चित् ॥ २९ ॥**

कुनै एउटा महापुरूषले मात्र यस आत्मालाई आश्चर्य मानी हेर्दछ र त्यस्तै अर्को कुनै महापुरूषले नै यसको तत्वलाई आश्चर्य मानेझैँ वर्णन गर्दछ तथा अर्को



कुनै अधिकारी पुरूषले नै यसलाई आश्चर्य माने झैँ सुन्दछ तर कोही-कोही त यसलाई सुनेर पनि जान्दैन।

आत्माको बारेमा बझ्नु साह्रै नै गाह्रो कार्य हो। आत्माको सूक्ष्मतम आकार र सानो स्थानमा पनि यो असंख्य रूपमा उपस्थिति हुन सक्ने भएबाट, यस्तो सूक्ष्मतम आकारको आत्माले कसरी ठूलो रूप धारण गर्दो हो भनी अज्ञानी मानिसले आश्चर्य मानी हेर्दछ, कसैले आत्मा र शरीर एक हो भन्ने ठानी रहेको हुन्छ, कोही त इन्द्रियतृप्ती मै आफ्नो जीवनयापन गरिरहेका हुन्छन्, उसलाई आत्माको अस्तित्व बोध हुनु अत्यावश्यक छ भन्ने ज्ञान नै हुँदैन, उस्ले यस बारेमा चिन्तन नै गर्दैन। यस संसारमा यस्ता थोरै मानिसहरू छन् जस्ले आत्माको बारेमा जानकारी लिन चाहन्छन्। राम्रो व्यक्तिहरूको संगति हुन गएमा उनीहरूले आत्माको बारेमा सुन्दछन् । तर अज्ञानवश उनीहरूले परमात्मा तथा आत्मालाई एउटै ठान्दछन्। यस्तो व्यक्ति बिरलै भेटिन्छन जस्ले परमात्मा, अणु आत्मा, उनीहरूका बेग्ला-बेग्लै अस्तित्व तथा कार्यहरू, उनीहरू बीचको अन्तरसम्बन्ध तथा उनीहरूको विस्तारित कार्यक्षेत्रहरू सम्झन सकोस्। सांसारिक मोहमायाको बारेमा जान्नु छ, त्यसबाट छुटकारा पाउनु छ भने आत्माको बारेमा जान्नु आवश्यक छ । तर यदि कसैले आत्मा सम्बन्धी यी सन्दर्भहरूलाई राम्ररी बुझ्दछ भने उसको जीवन सफल भएको ठान्नु पर्दछ।

**देही नित्यमवध्योऽयं देहे सर्वस्य भारत ।**
**तस्मात्सर्वाणि भूतानि न त्वं शोचितुमर्हसि ॥ ३० ॥**

हे अर्जुन ! यो आत्मा सबैको शरीरमा संधै नै अवध्य (जस्को वध गर्न सकिन्न) भई रहेको हुन्छ। त्यस कारण सबै प्राणीहरूको लागि तिमी शोक गर्ने योग्य छैनौं।

यस प्रकार भगवान्ले विभिन्न किसिमले आत्मालाई अमर तथा शरीरलाई नाशवान बताउनु भयो। युद्ध गर्नु क्षत्रिय धर्म बमोजिम शत्रुहरू माथि विजय प्राप्त गर्न खोज्नु हो। तसर्थ भीष्म पितामह तथा गुरू द्रोणाचार्य पनि मर्ने छन भनी अर्जुनले आफ्नो कर्तव्यहरूबाट बिमुख हुनु हुँदैन। जीवन रसायनहरूको अर्न्तक्रियाहरूबाट निर्मित हो, आत्माको अस्तित्व छैन भन्ने जस्ता अवधारणाहरूलाई परित्याग गरी भगवान्को रूपमा स्वीकारिएको श्रीकृष्णको उपदेशलाई नै प्रमाण मानी यस भौतिक शरीरभन्दा आत्माको बेग्लै अस्तित्व रहेको छ भनी तिमी बुझ। आत्मा अविनाशी र

अमर छ । शरीर मात्र मर्ने हो भन्ने बुझी सम्पूर्ण प्राणीहरूको लागि तिमीले शोक गर्नु आवश्यक छैन भनी श्री कृष्णले सम्झाउँदै हुनुहुन्छ ।

**स्वधर्ममपि चावेक्ष्य न विकम्पितुमर्हसि ।**
**धर्म्याद्धि युद्धाच्छ्रेयोऽन्यत्क्षत्रियस्य न विद्यते ॥ ३१ ॥**

तथा आफ्नो धर्मलाई मनन गरेर पनि तिमी डर मान्ने योग्य छैनौं अर्थात् तिमीले भय गर्न हुन्न, किनकि क्षत्रियको लागि धर्मयुक्त युद्धभन्दा ठूलो अर्को कुनै कल्याणकारी कर्तव्य छैन ।

श्री कृष्णले अर्जुनलाई धर्मयुद्ध गर्न तैयार पार्ने क्रममा सम्झाउँदै भन्नुहुन्छ कि तिमीले संकोच गर्नु पर्ने कुनै कारण नै छैन किनकि तिमी क्षत्रिय हौ । तिमीले क्षेत्रिय धर्मलाई विचार गरेर त्यस्का पालना गर्नु पर्ने संस्कार, परम्परा, नीति, नियम बमोजिम युद्ध गर्नुभन्दा ठूलो तिम्रो लागि अर्को कुनै कल्याणकारी कर्तव्य छैन । क्षत्रियहरूले कुनै काम गर्ने निर्णय लिइसकेपछि त्यस काम गर्नलाई तन, मन र धनले लाग्नु पर्दछ । सामाजिक व्यवस्थापनमा कायम गरिएको दोश्रो वर्णमा पर्ने क्षत्रियहरूको कर्तव्य उत्तम तरिकाले शासन गर्नु हो । क्षत्रिय हिन्दू वर्ण व्यवस्था अनुसार शासक एवं राजकीय भूमिका निर्वाह गर्ने वर्ण समुह हो । जस्को अर्थ क्षत्र दिने वा रक्षा गर्ने हो । शिकार खेल्नु, जनता तथा सत्य र धर्मको रक्षा गर्नु क्षेत्रियहरूको कर्तव्य हो । युद्धमा फेरि वीरगति प्राप्त गर्नेहरूले स्वर्गलोक प्राप्त गर्ने गर्दछन् । तसर्थ स्वधर्मको पालना गरेर तिमी युद्ध गर भनी श्रीकृष्णले अर्थ्याउदै हुनहुन्छ ।

**यदृच्छया चोपपन्नं स्वर्गव्दारमपावृतम् ।**
**सुखिनः क्षत्रियाः पार्थ लभन्ते युद्धमीदृशम् ॥ ३२ ॥**

हे पार्थ क्ष स्वतः वा आफैँ प्राप्त भएको र खुलारहेको स्वर्गको ढोकाको रूप यस प्रकारको युद्धमा सहभागी हुन भाग्यमानी क्षत्रियहरूले नै पाउँदछन् ।

श्रीकृष्णको विचारमा अर्जुनले यस युद्धमा सहभागी भएर शत्रुहरूलाई मृत्यु दिनुमा केही पनि लाभ देखिरहेका छैनन्, मात्र आफ्नो कुलका व्यक्तिहरूलाई मारेर कुल तथा कुलधर्मको विनास गरेर नर्कमा उसको वास हुन्छ भन्नु उसको अज्ञानता हो । तर श्री कृष्णको अनुसार खुल्ला चुनौति, खुल्ला स्वर्गको व्दार पाउनु सबैभन्दा



ठूलो खुशी हो । क्षत्रिय त्यो हो जस्ले युद्धमा आफ्नो धर्म निर्वाह गरोस् । तिमी पनि क्षत्रिय हौं, तिमीले आफ्नो धर्म पुरा गर्नु पर्दछ । यसै सन्दर्भमा पराशर स्मृतिमा पनि पराशरले भन्नु भएको छ :

**क्षत्रियो हि प्रजारक्षन् शस्त्रापाणिः प्रदण्डयन् ।**
**निर्जित्य परसैन्यादि क्षितिं धर्मेण पालयेत् ॥**

आफ्ना नागरिकहरूलाई सम्पूर्ण क्लेषहरूबाट रक्षा गर्नु क्षत्रियहरूको धर्म हो । तसर्थ समाजमा शान्ति व्यवस्था कायम राख्न उसले हिंसा गर्नु पर्दछ । सो बमोजिम उनीले शत्रु राजाहरूका सैनिकहरूलाई जीतेर धर्मपूर्वक राज्य गर्नु पर्दछ । यस प्रकार युद्धभूमिमा रहेर अर्जुनले युद्ध गर्दिन भन्नु सर्वदा अनुचित हो किनकि यदि उनीले शत्रु माथि विजय प्राप्त गर्दछन भने उनीले राज्य भोग गर्नेछन् र यदि मर्दछन् भने स्वर्गमा उनको बास हुनेछ । युद्ध गरेर उनीलाई दुबै तिरबाट फाइदानै फाइदा छ ।

**अथ चेत्त्वमिमं धर्म्यं संग्रामं न करिष्यसि ।**
**ततः स्वधर्मं कीर्तिं च हित्वा पापमवाप्स्यसि ॥ ३३ ॥**

तर यदि तिमीले यस धर्मयुक्त युद्ध लड्दैनौं भने तिमीले स्वधर्म तथा कीर्ति गुमाएर पाप प्राप्त गर्नेछौ ।

चेतावनी दिदै श्री कृष्णले भन्नुहुन्छ कि यदि तिमीले चुनौतिलाई स्वीकार नगरी युद्ध गरेनौँ भने तिमीले पाप मात्र आर्जन गर्नेछौ । युद्ध गर्नु तिम्रो स्वधर्म हो । युद्ध गरेनौं भने तिमीले स्वधर्मको तथा कर्तव्यको उपेक्षा गरेको ठहरिने छ । धर्मको उपेक्षा गर्नु भनेको पापमा सहभागी हुनु हो । त्यसकारण तिमीलाई पाप लाग्ने छ । यसरी तिमीले योद्धाको रूपमा आफ्नो यश पनि गुमाउने छौ । अर्जुन विख्यात योद्धा हुन् । उनीले शिकारी भेषमा रहेका शिवजीलाई हराएर पाशुपतास्त्र विगतमा प्राप्त गरेका थिए । यसरी उनीले गुरू द्रोणाचार्य, पिता इन्द्र लगायतबाट विभिन्न किसिमका शक्तिशाली अस्त्र-शस्त्र प्राप्त गरेका छन् । यस्तो पुरूषार्थी व्यक्तिले युद्धको परित्याग गर्ने हो भने उनीलाई क्षत्रिय धर्मको उपेक्षा गरेको दोष लाग्नेछ तथा यशको क्षय हुनेछ र नर्क जानको लागि बाटो तैयार गरेको ठहर्छ ।

**अकीर्तिं चापि भूतानि**
**कथयिष्यन्ति तेऽव्ययाम् ।**

**सम्भावितस्य चाकीर्ति–**
**र्मरणादतिरिच्यते ॥ ३४ ॥**

तथा सबैजनाले तिम्रो लामो समयसम्म रहने अपकीर्तिलाई बयान गरिरहने छन् र मान्यजनहरूको लागि अपकीर्ति हुनु भनेको मर्नुभन्दा पनि ठूलो दोष हो ।

अर्जुनको गुरू तथा मित्र श्रीकृष्णले अर्जुनलाई युद्धबाट बिमुख नहुन अन्तिम निर्णय दिदै भन्नु हुन्छः तिमीले युद्ध सुरू हुनु अघि नै युद्ध छोड्दछौ भने तिमीलाई संसारका मानिसहरूले कायर भनेर सम्झिने छन् । यदि तिमी सोच्दछौ कि मानिसहरूले मलाई कायर भनुन् वा गाली दिउन्, तर म युद्धभूमिबाट भागेर आफ्नो ज्यान बचाएर बस्छु भन्छौ भने त्योभन्दा उत्तम तिमी युद्धभूमिमा मर्नु नै हो । तिमी जस्तो सम्मानित व्यक्तिको लागि अपकीर्ति मृत्युभन्दा नराम्रो हो । तिमीले आफ्नो प्राणको रक्षा गर्न युद्धभूमिबाट पलायन हुनु हुदैन । युद्ध गर्यौ भने तिमीले मेरो मित्रताको सम्मान गरेको तथा समाजमा आफ्नो प्रतिष्ठा गुमाएनौ भन्ने हुन्छ । तर युद्धलाई त्याग गर्दछौ भने तिम्रो अपमान हुनेछ, अपकीर्ति बढ्नेछ । जो कि मर्नुभन्दा ठूलो क्षय हो ।

**भयाद्रदुपरतं मंस्यन्ते त्वां महारथाः ।**
**येषां च त्वं बहुमतो भूत्वा यास्यसि लाघवम् ॥ ३५ ॥**

र जस्को दृष्टिमा तिमी पहिले धेरै सम्मानित भएका थियौ अब उनीहरूले तिमी प्रति लघुता (साँघुरो सोंच) बनाउने छन्, ती महारथीहरूले तिमीले डराएर युद्ध छाड्यौ भन्नेछन् ।

श्रीकृष्णले सम्झाउने क्रममा भन्दै हुनुहुन्छ कि तिमी यो नसोच कि बिपक्षका महारथी योद्धाहरूले यो सोच्दैनन् कि तिमीले आफ्नो भाई, पितामहको मायाले दया गरेर युद्ध छाड्यौ । उनीहरूले त तिमीले आफ्नो प्राण बचाउन युद्धभूमि छाड्यौ भनी सोच्नेछन् । तिमीलाई कायरको संज्ञा दिनेछन् । युद्ध छोडेर आउनेलाई समाजमा खिसीको पात्र बनाउँदछन् । हीनभावले हेर्दछन् । यसरी तिम्रो सम्मान समाप्त हुनेछ ।

**अवाच्यवादांश्च बहून् वदिष्यन्ति तवाहिताः ।**
**निन्दन्तस्तव सामर्थ्यं ततो दुःखतरं नु किम् ॥ ३६ ॥**

तिम्रा शत्रुहरूले तिम्रो सामर्थ्यको निन्दा गर्दै तिमीलाई धेरैजसो भन्नै नहुने वचनहरू पनि भन्ने छन्, त्योभन्दा बढी दुःख अरू के नै हुन्छ र ?



तिमीले डरले युद्धभूमि परित्याग गर्यौ, तिमी कायर हौ, तिमीमा सामर्थ्य छैन जस्ता कटु वचनहरू भनेर तिम्रा शत्रुहरूले तिम्रो उपहास गर्नेछन् । अर्जुनले आफ्नो उपहास, निन्दाको पात्र हुने मौका विपक्षीलाई युद्ध नगरेर दिदै छन् । उनीहरूलाई उपहास गर्ने मौका दिनु के आवश्यक छ ? त्यसकारण धर्मका शत्रुहरू प्रति दयाभाव छाडेर तिमी युद्ध गर भनी श्रीकृष्णले आफ्ना वचनहरूलाई सिद्ध गर्दै भन्नु भयो ।

**हतो वा प्राप्स्यसि स्वर्गं जित्वा वा भोक्ष्यसे महीम् ।**
**तस्मादुत्तिष्ठ कौन्तेय युद्धाय कृतनिश्चयः ॥ ३७ ॥**

कि तिमी युद्धमा मारिएर स्वर्ग प्राप्त गर्नेछौ वा युद्धमा जीतेर पृथ्वीको राज्य भोग गर्ने छौ । तसर्थ हे अर्जुन ! तिमी युद्धको लागि निश्चित भएर तैयार होऊ ।

यहाँ युद्ध गर्दाको परिणामको बारेमा श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ । यदि तिम्रो युद्धमा मृत्यु भयो भने तिमीले वीरगति प्राप्त गरी स्वर्ग जानेछौ वा युद्धमा जित्यौ भने यस संसारमा राज्य भोग गर्नेछौ । तसर्थ दृढ संकल्प गरेर तैयार होऊ र युद्ध गर भनी उहाँले सुझाव दिनु भएको छ ।

**सुखदुःखे समे कृत्वा लाभालाभौ जयाजयौ ।**
**ततो युद्धाय युज्यस्व नैवं पापमवाप्स्यसि ॥ ३८ ॥**

जय-पराजय, लाभ-हानि र सुख-दुःखलाई समान ठानी, त्यसपछि तिमी युद्धको लागि तैयार होऊ, यसरी तिमीले युद्ध गर्यौ भने तिमीले पापको भोगी हुनु पर्दैन ।

अब भने श्रीकृष्णले स्पष्टतया भन्दै हुनुहुन्छ कि अर्जुन ! तिमी युद्ध गर । युद्धको चुनौतिलाई स्वीकार गरेर आफ्नो सबै थोक होमी सकेपछि जय-पराजय, सुख-दुःख अनि सबै समान छन् भनी महशुस हुन्छ । मेरो पनि यही इच्छा हो कि तिमी युद्ध गर । कृष्णलाई गुरू मानी सकेपछि, उहाँ प्रति समर्पित भईसकेपछि शिष्यको हैसियतले यो दायित्व हुन्छ कि उनीले प्रत्येक कार्य उनै कृष्णको लागि गरून् । यस्मा भौतिक कार्यहरू, विषय वस्तुहरूको जस्तै जय होस् वा पराजय, लाभ होस् वा हानि, र सुख होस् वा दुःख होस् कुनै औचित्य र बन्धन हुँदैन ।

**एषा तेऽभिहिता सांख्ये बुद्धिर्योगे त्विमां शृणु ।**
**बुद्ध्या युक्तो यया पार्थ कर्मबन्धं प्रहास्यसि ॥ ३९ ॥**

हे पार्थ ! यो बुद्धि तिमीलाई ज्ञानयोगको विषयमा भनियो र अब तिमी यसैलाई कर्मयोगको बिषयमा सुन-जुन बुद्धिले युक्त भएर तिमीले कर्महरूको बन्धनलाई पूर्णतया त्याग्ने छौ अर्थात सर्वथा नष्ट गर्नेछौ ।

यस प्रकार श्रीकृष्णले विश्लेषणात्मक अध्ययनव्दारा ज्ञानयोगको बारेमा अर्जुनलाई सुनाउनु भयो । ज्ञान सोच्ने तथा सम्झिने कुरो हो तर कर्म ती ज्ञानहरूलाई व्यवहारमा परिचालन गर्ने हो । अब उहाँले अर्जुनलाई निष्काम कर्मयोगको बारेमा उपदेश दिनु हुँदैछ । यी कुराहरू अर्जुनले धारण गरेमा कर्म बन्धनबाट स्वयंलाई मुक्त गर्न सक्नेछन् । योग मुक्तिको मार्ग हो । ज्ञानयोगको साधनाले व्यक्ति ज्ञाता हुन्छ । ज्ञानबाट अमृत रूपी मोक्ष प्राप्तिको बाटो खुल्दछ । यस संसारमा मानिसहरू अज्ञानतावस बन्धनमा जेलिएका हुन्छन् । यस बारेका ज्ञानहरू अर्जुनलाई दिइसकियो । जो व्यक्तिले भगवान्को तुष्टिको लागि ज्ञानयोगको सिद्धान्त बमोजिम सत्कर्महरू गर्दछ, त्यो कार्य सजिलो भए पनि, गाह्रो भए पनि उस्ले दिव्य आनन्दको अनुभूति गर्दछ । त्यो फलको प्राप्तिको उद्देश्यले गरिएको कर्म हुने छैन, जस्मा पारिवारिक तथा भौतिक सुख सम्मिलित होस् । योगबाट हामीले समत्व प्राप्ति गर्नेछौ । समत्व भन्नाले सिद्धि तथा असिद्धि, सफलता तथा विफलता आदिमा समभाव राख्ने भनिएको हो । सामान्यतया कर्मलाई बन्धनको कारण मानिने गरिन्छ । तर कर्मयोगमा कर्मको त्यस स्वरूपलाई निरूपण गरी बन्धनको कारणविहीन गरिएको हुन्छ । योगको अर्को अर्थ कर्महरूलाई कुशलताले सम्पादन गर्नु हो । यस किसिमले कर्महरू सम्पादन गर्नु पर्दछ, जसबाट बन्धन उत्पन्न नहोस् । जुन कामहरू निष्काम भावले आसक्तिले रहित भएर ईश्वरको लागि गरिन्छ तिनीहरूले बन्धन उत्पन्न गर्दैनन् । तिनीहरू मोक्षरूप परमपद् प्राप्तिमा सहायक हुन्छन् ।

**नेहाभिक्रमनाशोऽस्ति प्रत्यवायो न विद्यते ।**
**स्वल्पमप्यस्य धर्मस्य त्रायते महतो भयात् ॥ ४० ॥**

यस कर्मयोगमा आरम्भको अर्थात बीजको नाश हुँदैन र उल्टो फलरूप दोष पनि पाइन्न, बरू यस कर्मयोगरूपले धर्मको अलिकति पनि साधनले जन्म मृत्युरूप महान् भयबाट रक्षा गर्दछ ।

मानिसहरूले इन्द्रियतृप्तिको आशा त्याग गरी श्रीकृष्णको हितमा कर्म गरेमा कुनै पनि किसिमको हानी नोक्सानी हुँदैन । कर्मयोगको बारेमा हामीले अलिकति पनि



बुझ्यौ भने हामीलाई जन्म तथा मृत्युको डरले सताउँदैन, हामी रक्षित हुन्छौँ । यी कर्महरू गर्दा कहीँ अधूरो रहन गएमा पनि यसबाट स्थायी प्रभाव पर्दछ वा स्थायी फल प्राप्त हुन्छ । यस संसारका भौतिक कार्यहरू तथा तिनबाट प्राप्त हुने भौतिक फलहरू उस्को मृत्यु पश्चात समाप्त हुन्छन् । तर श्रीकृष्णको इच्छा बमोजिम निष्काम कर्म गर्दा मानिसहरूको शरीर समाप्त भए पनि पुनः उस्लाई भक्ति मार्गमा लिएर जाने व्यवस्था उनै भगवान्ले गर्ने गर्नुहुन्छ । यस प्रकार मानिसलाई भविष्यमा प्रगति गर्ने अवसर प्राप्त हुन्छ ।

**व्यवसायात्मिका बुद्धिरेकेह कुरूनन्दन ।**
**बहुशाखा ह्यनन्ताश्र्च बुद्धयोऽव्यवसायिनाम् ॥ ४१ ॥**

हे अर्जुन ! यस कर्मयोगमा निश्र्चयात्मिका बुद्धि एउटै हुन्छ, तर अस्थिर विचार भएका विवेकहीन सकाम मनुष्यहरूका बुद्धिहरू निश्चय नै धेरै भेदपूर्ण तथा अनन्त हुन्छन् ।

जो-जो यस कर्मयोगको मार्गमा हिँड्दछन् उनीहरू आ-आफ्ना प्रयोजनमा दृढ रहन्छन तथा उनीहरूको लक्ष पनि एउटै हुन्छ । तर जो दृढ हुँदैन, उनीहरूको सोच विभिन्न शाखाहरूमा बिभाजित हुन पुग्दछ, एकाग्र हुँदैन, ऊ अनिर्णयको बन्दी हुन्छ । कृष्णभावनामृतमा संलग्न व्यक्तिले देहात्मबुद्धिलाई त्याग गर्दछ । पूर्व जन्ममा गरिएका राम्रा-नराम्रा कर्महरूको फलहरूले नै उस्लाई यस जन्ममा सकाम कर्ममा उन्मुख गराउँछ । उस्ले जति–जति श्रीकृष्ण प्रतिको श्रद्धाभावमा बृद्धि गर्दछ क्रमशः यो अवस्था प्राप्त गर्दै जान्छ । यस्ता व्यक्तिहरू दृढनिश्चय ज्ञानमा आधारित हुन्छन् । श्रीकृष्णमा श्रद्धा तथा विश्वासको साथ कर्म गर्नेहरूलाई यो अवगत हुन्छ कि यस संसारमा देखिने समस्त कारणहरूको मूल कारण श्रीकृष्ण हुनुहुन्छ । तर विवेकहीन अस्थिर बुद्धि भएका सकाम मानिसहरूको बुद्धि भने निश्चयरूपमा भौतिक सुविधा प्राप्त गर्न भेदपूर्ण तथा क्लेषपूर्ण भइरहन्छ ।

**यामिमां पुष्पितां वाचं प्रवदन्त्यविपश्र्चितः ।**
**वेदवादरताः पार्थ नान्यदस्तीति वादिनः ॥ ४२ ॥**
**कामात्मानः स्वर्गपरा जन्मकर्मफलप्रदाम् ।**
**क्रियाविशेषबहुलां भोगैश्र्वर्यगतिं प्रति ॥ ४३ ॥**

**भोगैश्र्वर्यप्रसक्तानां तयापहृतचेतसाम् ।**
**व्यवसायात्मिका बुद्धिः समाधौ न विधीयते ॥ ४४ ॥**

हे अर्जुन ! जस्ले भोगहरूमा तन्मय दिइरहेका छन्, जस्ले कर्मफलको प्रशंसक वेदवाक्यहरूमा नै प्रेम राख्दछन्, जस्को बुद्धिमा स्वर्ग नै परम प्राप्य वस्तु हो र जस्ले स्वर्गभन्दा ठूलो अर्को केही वस्तु छैन भनी भन्ने गर्दछन्, त्यस्ता अविवेकीजनहरूले यस प्रकारका जस्तैः पुष्पित अर्थात् देखावटी शोभायुक्त शब्दहरू भन्दछन् । जस्ले जन्मरूप कर्मफल दिने एवं भोग तथा ऐश्वर्यको प्राप्तिको लागि विभिन्न किसिमका क्रियाहरूको वर्णन गर्नेवाला छन, त्यस्ता वाणीहरूले जस्को चित्तहरण गरिसकेको छ, जो भोग तथा ऐश्वर्यमा अत्यन्तै आसक्त छन्, त्यस्ता पुरुषहरूको परमात्मामा निश्चयात्मिक बुद्धि हुँदैन ।

अल्पज्ञानी मनुष्यहरू वेदहरूका ती आलंकारिक शब्दहरू प्रति धेरैनै आसक्त रहन्छन्, जस्ले स्वर्गको प्राप्ति, राम्रो जन्म, शक्ति आदि सकाम कर्म गर्ने बताउँदछन् । वेदमा कर्मकाण्डको भागहरूमा स्वर्गमा आनन्द भोग गर्ने तथा इन्द्रियतृप्त हुने विभिन्न यज्ञादिहरूको वर्णन गरिएका छन् । तीमध्येको एक हो ज्योतिष्टोम यज्ञ । यसरी इन्द्रिय भोग र सम्पन्न जीवनको चाहना राख्ने व्यक्तिहरू योभन्दा ठूलो अरू केही छैन भन्दै चिप्ला र मीठा वचनहरू बोल्ने गर्दछन् । यी ढोंगी हुन्छन् । यस्ता व्यक्तिहरू भौतिक सुखमा रूमलिई कृष्णभावनामृतका दृढ कर्महरूमा स्थित हुन सक्दैनन् । यस्ता व्यक्तिहरूलाई भवबन्धनबाट मुक्ति पाउने तर्फ कुनै अभिरूचि हुदैन । उनीहरूको मनले आत्मालाई सम्झने तथा भगवान् प्रति भक्तिभाव राख्ने दृढ निश्चय गर्न सक्दैन । त्यस्तालाई काममा रुचि हुँदैन तर कर्मको फलमा भने असाध्यै रूचि हुन्छ ।

**त्रैगुण्यविषया वेदा निस्त्रैगुण्यो भवार्जुन ।**
**निर्द्वन्द्वो नित्यसत्त्वस्थो निर्योगक्षेम आत्मवान् ॥ ४५ ॥**

हे अर्जुन ! वेदले उपर्युक्त किसिमबाट तीनै गुणहरूको कार्यरूप समस्त भोगहरू एवं तिनका साधनहरूको प्रतिपादन गर्नेवाला छ, त्यसकारण तिमी ती भोगहरू तथा तिनका साधनहरू प्रति आसक्तिहीन भएर, हर्ष–शोकादि व्दन्दहरूबाट रहित भएर, नित्यवस्तु परमात्मामा स्थित योगमा लाग्ने तथा क्षेम (प्राप्त वस्तुहरूको रक्षा गर्ने) नचाहनेवाला भई स्वाधीन अन्तःकरणवाला बन ।



प्रकृतिका तीन गुणहरूः सत्व, रजस तथा तमस बीच अनवरत रूपले क्रिया तथा प्रतिक्रियाहरू भइरहन्छन् । वेद पनि यी तीन गुणहरूमा सीमित हुन पुगेको छ । तर त्योभन्दा अघि कर्मयोग हुन्छ । मानिसले कर्म गर्नु पर्दछ तर त्यस्को फलमा आसक्ति राख्न हुन्न । कर्मफल प्रति लगाव राख्नु हुँदैन । सकाम कर्म गरी फलको अपेक्षा गर्नेहरूको उद्येश्य भने कर्मफल तथा भौतिक जगतको बन्धनका कारणहरू हुन्छन् । तिमी त्यस्मा नलागेर वेदान्त दर्शनको आध्यात्मिक पदमा लाग, जस्मा ब्रह्म जिज्ञासा समावेश रहेको हुन्छ । परमात्मासँग सम्पर्क साधना गर्ने योगमा लाग भनी अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ ।

**यावानर्थ उदपाने सर्वतः सम्प्लुतोदके ।**
**तावान् सर्वेषु वेदेषु ब्राह्मणस्य विजानतः ॥ ४६ ॥**

सबैतिरबाट परिपूर्ण जलाशय प्राप्त भइसकेपछि सानो जलाशयमा मनुष्यलाई जति प्रयोजन हुन्छ, ब्रह्मलाई तत्वको रूपमा जान्ने ब्राह्मणलाई समस्त वेदहरूमा त्यत्तिकै प्रयोजन हुन्छ ।

सम्पूर्ण रूपले भरिपूर्ण जलासय प्राप्त भइसकेपछि एउटा सानो कुवाको जति कम प्रयोजन हामीलाई हुन्छ त्यस्तै परब्रह्मलाई जानिसकेपछि वेदमा रहेका विभिन्न भौतिक इन्द्रियतृप्तिका प्रयोजनहरू कुवा सरी कम प्रयोजनका हुन्छन् । ठूलो पोखरी वा कर्मयोगमा सफल भइसकेपछि स-साना पोखरीहरूको रूपमा रहेको वेदहरूको प्रयोजन सून्य हुन्छ । कर्मको खेल यस्तो प्रबल छ कि त्यस्को अगाडि सबै ज्ञानका विषयवस्तु साना देखिन्छन् । वेदहरूको कर्मकाण्डमा उल्लेखित अनुष्ठानहरू तथा यज्ञहरूको उद्देश्य आत्म-साक्षात्कारलाई क्रमशः प्रोत्साहन गर्नु हो तथा आत्म-साक्षात्कारको उद्देश्य भने यस संसारको आदिकारण श्रीकृष्णलाई जान्नु हो । आत्म-साक्षात्कारको अर्थ श्रीकृष्ण तथा उहाँसँगको आफ्नो शाश्वत सम्बन्धलाई बुझ्नु हो । जीवात्माहरू परमात्मा भगवान्का अंश स्वरूप हुन, तसर्थ प्रत्येक जीवव्दारा कृष्णभावानामृतलाई जागृत गरी निष्काम कर्म गर्नु सर्वोच्च अवस्था हो । यसको अगाडि वेदमा वर्णित अन्य अनुष्ठानहरूको महत्त्व नगण्य हुन्छ ।

**कर्मण्येवाधिकारस्ते मा फलेषु कदाचन ।**
**मा कर्मफलहेतुर्भूर्मा ते संगोऽस्त्वकर्मणि ॥ ४७ ॥**

तिम्रो कर्म गर्नुमा अधिकार छ, त्यस्को फलमा कहिल्यै पनि छैन । तसर्थ तिमीले कर्महरूका फलहरूलाई उद्देश्य नबनाऊ तथा तिम्रो कर्म नगर्नमा पनि आसक्ति नहोस् ।

सामान्यतया तीन किसिमका कर्महरू हुन्छन्ः कर्म (स्वधर्म), विकर्म तथा अकर्म । कर्म (स्वधर्म) त्यस्ता किसिमका कार्यहरू हुन्, जस्को आदेश प्रकृतिका गुणहरूको रूपमा प्राप्त गरिन्छ । अधिकारीको सहमतिको बिना गरिएका कर्महरूलाई विकर्म भनिन्छ तथा आफ्नो काम नगर्नुलाई अकर्म भनिन्छ । यहाँ भगवान्ले अर्जुनलाई उपदेश दिनु भएको छ कि निष्क्रिय नहुनु, बरू कर्मको फलको आसक्तिलाई परित्याग गरेर आफ्नो कर्म गर्नु । त्यसरी नै कर्मलाई पनि तीन खण्डमा विभाजन गरिन्छ । नित्यकर्म, आपत्तकालीन तथा इच्छित कर्म । नित्यकर्ममा फलको इच्छा नगरेरै शास्त्रहरूको निर्देशानुसार सत्गुणमा रहेर कर्महरू गरिन्छ । फलको चाहना गर्दै गरिएका कर्महरू मानव जीवनमा बन्धनका कारण हुने गर्दछन जो मुक्तिको पथमा बाधक सिद्ध हुन्छन् । तसर्थ भगवान्ले अर्जुनलाई फल प्रतिको आसक्तिलाई परित्याग गरेर अर्थात फलाशक्ति रहित भएर स्वधर्मको रूपमा आफ्नो युद्ध गर्ने कर्म गर भन्दै उपदेश दिनु भएको छ । अर्जुन युद्धबाट हटनु आसक्तिको अर्को पाटो ठहर्छ । यस्ता आसक्तिहरूबाट कहिल्यै पनि मुक्तिको मार्ग प्राप्त हुँदैन । अकर्म भई बस्नु वा काम नगरी बस्नु पापमय हुन्छ । कर्मलाई आफ्नो धर्म तथा कर्तव्य ठानेर कामहरू गर्दै जानु पर्दछ ।

**योगस्थः कुरू कर्माणि सङ्गं त्यक्त्वा धनंजय ।**
**सिद्ध्यसिद्ध्योः समो भूत्वा समत्वं योग उच्यते ॥ ४८ ॥**

हे धनन्जय ! तिमीले आसक्तिलाई त्यागेर तथा सिद्धि र असिद्धिमा समान बुद्धिवाला भएर योगमा स्थित भएका कर्तव्य कर्महरूलाई गर, समत्व (जुनसुकै कर्म गरियोस्, त्यो कर्म पुरा हुनुमा र नहुनुमा तथा त्यस कर्मको फलमा समभाव रहनुको नाम नै समत्व हो) भाव नै योग हो भनी भनिन्छ ।

जय तथा पराजयको समस्त आसक्तिहरूलाई तिमीले त्याग गरी समभाव कायम राखी आफ्नो कर्म गर । यस्तै समता वा समान भाव राखी गरिने कार्यलाई योग भनिन्छ । चञ्चल रहिरहने हाम्रा इन्द्रियहरूलाई वशमा राखी परमत्वमा आफ्नो मनलाई एकाग्र गरी आफ्नो कर्म गर । यहाँ श्रीकृष्ण नै परमात्व वा भगवान् हुनुहुन्छ ।



उहाँको आदेशको पालना गर्ने, जय तथा पराजय जस्ता परिणामहरूको बारेमा नसोच्ने, आफ्नो धर्म तथा कर्तव्यहरू गर्दै जानु पर्दछ भनी उपदेश दिनु भएको छ ।

**दूरेण ह्यवरं कर्म बुद्धियोगाद्धनंजय ।**
**बुद्धौ शरणमन्विच्छ कृपणाः फलहेतवः ॥ ४९॥**

यस समत्व रूप बुद्धियोगभन्दा सकाम कर्म अत्यन्त नै निम्न श्रेणीको छ । तसर्थ हे धनंजय ! तिमीले समबुद्धि मै रक्षाको उपाय खोज अर्थात् बुद्धियोगकोनै आश्रय लेऊ, किनकि फलको लागि कार्यगर्नेहरू साह्रै नै दीन दुःखी हुन्छन् ।

भगवान्को दास बनेर उहाँको उपदेश मानेर निष्काम कर्म गर्न सकियो भने जीवन मरणको क्रमलाई मनुष्यले तोड्न सफल हुन्छ । मानिसको लगन मात्र काम तथा भगवान्मा हुनु पर्दछ । यस प्रकार भव बन्धनबाट मुक्त होइन्छ । सकाम कर्म अन्तर्गत रहेर फलको आशामा कामहरू गरियो भने सदैव जन्म-मरणको चक्करमा रूमलिरहनु पर्ने हुन्छ र दुःख सहन गर्नु पर्ने हुन्छ ।

**बुद्धियुक्तो जहातीह उभे सुकृतदुष्कृते ।**
**तस्माद्योगाय युज्यस्व योगः कर्मसु कौशलम् ॥ ५० ॥**

समबुद्धियुक्त पुरूषले पुण्य र पाप दुवैलाई यसै लोकमा त्याग गर्दछ अर्थात् त्यसबाट मुक्त हुन्छ । त्यसकारणले तिमी समत्वरूप योगमा लाग् यो समत्वरूप योगमा लाग्नु नै कर्महरूमा कुशलता हो अर्थात कर्मबन्धनबाट मुक्ति पाउने उपाय हो ।

बुद्धियोगको शरणमा आउनाले फलको आश नगरी निष्काम कर्म गर्नेहरू यसै संसारमा पाप तथा पुण्यबाट मुक्त हुन्छन् । तिमी समभावले अर्थात सुख होस् वा दुःख होस् आफ्ना कर्महरू वा कर्तव्यहरू गर्दै जाऊ । यस संसारका जीवात्माहरू सृष्टिको अनादि कालदेखि नै आफ्नो राम्रो तथा नराम्रो कर्मको फलहरूलाई संचित गरेर तिनको परिणाम भोग्दै आफ्नो स्वरूपबाट उनीहरू अनभिज्ञ रहदै आएका छन् । यस चक्रबाट मुक्ति पाउन उनीहरूले परमात्मा प्रतिको आस्था, विश्वासलाई कायम राखी उहाँका उपदेशहरूको पालना गर्दै श्रीकृष्ण प्रति एकचित्त रही योगमा लाग्नु पर्दछ ।

**कर्मजं बुद्धियुक्ता हि फलं त्यक्त्वा मनीषिणः ।**
**जन्मबन्धविनिर्मुक्ताः पदं गच्छन्त्यनामयम् ॥ ५१ ॥**

किनकि समबुद्धियुक्त ज्ञानीजनले कर्महरूबाट उत्पन्न हुने फललाई त्यागेर जन्मरूप बन्धनबाट मुक्त भई निर्विकार परम पद प्राप्त गर्ने गर्दछन् ।

सामान्यतया मानिसले कर्म गर्दछ तथा त्यसको फल प्राप्त गरेपछि खुशी भएर ऊ फेरि धेरै फलको लोभमा अर्को कर्ममा लाग्दछ । यस्मा फलको बारेमा सोच्ने कार्यनै प्रधान विषय हो र जो गलत कार्य हो । यदि हामीले हाम्रो सबै शक्तिहरू, क्षमता  कर्ममा लगाउँदछौँ र फललाई बिर्सिदिन्छौ भने के हुन्छ ? हाम्रो ध्यान मात्र कर्ममा रहन्छ । हामी त्यस कर्ममा लागेर अघि बढछौँ । हाम्रो विकास हुन्छ । त्यसैगरी सबै प्रति समभाव राखेर राम्रो फल प्राप्त होस् वा नहोस् त्यसको कुनै वास्ता नगरेर आफ्ना निर्धारित कर्महरू गर्दै भगवद्भक्तिमा लागेका ठूला ऋषिगण, मुनिहरू तथा भक्तहरूले यस संसारको भवबन्धनबाट मुक्ति पाई निर्विकार परम पद (भौतिक कष्ट विहिनता) प्राप्त गर्न सफल भएका छन् । आफ्नो तथा भगवान्को अलौकिक स्वरूपको पहिचान गरी सेवक भई भगवद्भक्तिमा लाग्नु कर्मयोग तथा बुद्धियोगमा लाग्नु हो । यसैबाट मनुष्यको उध्दार हुन्छ अर्थात निर्विकार परम पद प्राप्त हुन्छ ।

**यदा ते मोहकलिलं बुद्धिर्व्यतितरिष्यति ।**
**तदा गन्तासि निर्वेदं श्रोतव्यस्य श्रुतस्य च ॥ ५२ ॥**

जुन कालमा तिम्रो बुद्धिले मोहरूप दलदललाई राम्ररी पार गर्नेछ, त्यस बेलामा तिमीले सुनेका र सुन्ने यस लोक तथा परलोक सम्बन्धी सबै भोगहरूबाट तिमीलाई बैराग्य प्राप्त गर्नेछौँ ।

विश्वमा धेरै सफल भक्तहरू यस्ता पनि छन जस्ले भगवान प्रतिको भक्तिको कारण आफ्ना वैदिक कर्मकाण्ड त्यागेर विरक्ति धारण गरे । मानिसले श्रीकृष्णको साथमा आफ्नो सम्बन्ध बुझिसकेपछि उस्मा सकाम कर्म गर्ने प्रतिका अभिरूचिहरू कम हुँदै गएको पाइएको छ । मानिसहरूलाई कर्मको फलको मोह होस् वा आफन्तजनको मोह होस् वा धनको मोह होस् यही मोहले हामीलाई फसाउँछ । आफन्तसँगको सम्बन्ध तथा धन र कर्मको फल आफैमा नराम्रो होइन तर तिनीहरूसँगको आसक्ति नराम्रो हो । आसक्तिमा डुबेपछि बुद्धिले राम्ररी काम गर्न छोडद्छ । जब बुद्धि मोहको दलदलबाट बाहिर निस्कन्छ तब परमात्मामा पुग्ने बाटो खुल्दछ । धृतराष्ट्रको पुत्र मोहले नै महाभारत जन्म्यो । जुवालाई आर्जनको एउटा श्रोतको रूपमा पनि लिइन्छ ।



आर्जन गर्न सकिन्छ भनेर जुवा खेली पाण्डवहरूले सम्पूर्ण राज्य हारे । श्रीकृष्णको भक्तिभावमा पूर्णरूपमा लागिसकेपछि मानिसहरूको लागि वैदिक कर्मकाण्ड, विधि विधानहरूमा उदासिनता आउँदछ । वेदको अन्तिम लक्ष्य श्रीकृष्णसम्म पुगी उहाँमै समाहित हुने नै त हो ।

**श्रुतिविप्रतिपन्ना ते यदा स्थास्यति निश्र्चला ।**
**समाधावचला बुद्धिस्तदा योगमवाप्स्यसि ॥ ५३ ॥**

विभिन्न किसिमका वचनहरू सुनेर विचलित भएको तिम्रो बुद्धि जब परमात्मामा अचल र स्थिर हुन्छ, तब तिमीले योग प्राप्त गर्नेछौ अर्थात तिम्रो परमात्मासँग सधैँ संयोग हुनेछ ।

जब तिम्रो मनले मानिसहरूका कुराहरू सुन्दछ त्यसै बमोजिम तिमीले सोच्न थाल्दछौ । तर जब तिमी ती कुराहरू तथा कर्मफलबाट प्रभावित नभई रहन्छौ र जब तिम्रो मन एकनिष्ट भएर परमात्मामा वा दिव्य चेतनामा स्थिर हुन्छ, तब तिमी योगमा लागेको हुन्छौ । एकैठाउँ श्रीकृष्णमा पूर्णतया समर्पित व्यक्तिको बुद्धि एकाग्रचित्त हुन्छ । एकाग्र भएर केही गर्नुलाई समाधीको स्थिति पनि भनिन्छ । यसरी मानिसले उहाँको दिव्य अवस्थालाई बुझ्दै उहाँका उपदेशहरूको पालना गर्दै श्रीकृष्णको सानिध्यता पाउँदछ ।

अर्जुन उवाच (भन्दछन्)

**स्थितप्रज्ञस्य का भाषा समाधिस्थस्य केशव ।**
**स्थितधीः कि प्रभाषेत किमासीत व्रजेत किम् ॥ ५४ ॥**

अर्जुनले भने : हे केशव ! समाधिमा स्थित परमात्मालाई प्राप्त गरेको स्थिर बुद्धि रहेको पुरूषको के लक्षण हुन्छ ? त्यो स्थिर बुद्धि पुरूष कसरी बोल्दछ ? कसरी बस्दछ र कसरी हिँड्दछ ?

यहाँ अर्जुनले श्रीकृष्णलाई सोध्दैछन् कि अध्यात्ममा लीन चेतनावाला व्यक्तिका लक्षणहरू के-के हुन्छन् ? उनीहरूका बोलिहरू, बसाइ र हिडाइ कस्ता हुन्छन् ? तिनीहरूका लक्षण र स्वभावको बारेमा अर्जुनले जान्न खोज्दैछन् । जसरी निरोगी, धनी, रोगी, बुद्धिमान व्यक्तिहरूका आ–आफ्ना लक्षणहरू हुन्छन्, त्यस्तै

श्रीकृष्णभावनामृतमा स्थिर व्यक्तिको कस्तो स्वभाव हुन्छ ? भनी अर्जुनले जानकारी लिन खोज्दैछन् ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**प्रजहाति यदा कामान् सर्वान् पार्थ मनोगतान् ।**
**आत्मन्येवात्मना तुष्टः स्थितप्रज्ञस्तदोच्यते ॥ ५५ ॥**

श्रीभगवान्ले भन्नु हुन्छ : हे अर्जुन ! जुन समयमा यो पुरूषले मनमा रहेका सबै कामनाहरूलाई राम्ररी त्याग गरिदिन्छ र आत्मीय भएर आत्मामै सन्तुष्ट रहन्छ, त्यसैबेला उस्लाई स्थितप्रज्ञ (दिव्य चेतना प्राप्त) मानिस भनिन्छ ।

जब मनुष्यले मनोधर्मव्दारा उत्पन्न हुने इन्द्रियतृप्तिका सबै कामनाहरूलाई परित्याग गर्दछ र यसरी विशुद्ध भएको उसको मन आत्माले सन्तोष प्राप्त गर्दछ । यस अवस्थामा उसलाई दिव्य चेतना प्राप्त गरेको मानिस भनिन्छ । मोह, इच्छा तथा आकांक्षालाई छोडनु नै आत्माको नजिक पुग्नु हो । जस्ले आफ्नो आत्मसन्तुष्टीको लागि अरूमा आश्रित हुनु पर्दैन तब मात्र उसले आत्मसन्तुष्टी प्राप्त गरेको ठहर्छ । व्यक्तिका इन्द्रियहहरू तथा मनबाट तिनीहरूको स्वभाव बमोजिम निस्केका विषयवस्तु सम्बन्धी सम्पूर्ण इच्छा आकाङ्क्षाहरूलाई त्याग गर्नु पर्दछ । यसको लागि कृष्णभावनामृतमा लाग्नु पर्दछ । कृष्णभावनाभावित भई भगवद्भक्त भएपछि त्यो मानिसमा महर्षिहरूमा हुने यस्ता सबै गुणहरू पाइन्छन् । धेरै उन्नत जीवात्मा वा महात्मा आफुलाई परमेश्वरको शाश्वत दास सम्झेर आत्मतुष्टमा रहने गर्दछ । उस्लाई भौतिक विषयवस्तुहरूले आकर्षित गर्न सक्दैन । उस्ले आफुलाई सदा भगवान्को दास ठान्दछ र ऊ दिव्य चेतनयुक्त मानिस कहलिन्छ ।

**दुःखेष्वनुव्दिग्नमनाः सुखेषु विगतस्पृहः ।**
**वीतरागभयक्रोधः स्थितधीर्मुनिरूच्यते ॥ ५६ ॥**

दुःखहरू पाउँदा पनि जस्को मनमा उद्वेग (व्याकुलता र दुःख) हुँदैन, सुखको प्राप्ति हुँदा जो सर्वथा निःस्पृह (प्रसन्न नहुने, खुशी नठान्ने) हुन्छ तथा जस्को राग, भय र क्रोध नष्ट भइसकेको छ भने यस्ता मुनिलाई स्थिरबुद्धि भएको मुनी भनिन्छ ।



यस्ता मुनिहरूले कृष्णभावनाभावित भई सारा सृजनात्मक चिन्तन पार गरिसकेका हुन्छन् । यिनीहरूलाई सांसारिक तीनवटै तापहरूले असर गर्न सक्दैनन् किनकि यिनीहरूले भोग्नु पर्ने वा भोगका तापहरूलाई पूर्वजन्मको दुष्कर्मको फल ठानेर भगवत कृपाबाट प्राप्त भएको ठान्दछन् । यदि उनीहरूले सुख प्राप्त गर्दछन् भने उनीहरूले सुखको लागि आफुव्दारा प्राप्त भएको होइन अर्थात त्यस्को लागि आफुलाई अयोग्य ठानी त्यस सुखलाई भगवत कृपाबाट प्राप्त भएको ठान्दछन् । यसर्थ उनीहरूले भगवान्को सेवा अझै राम्ररी गर्दछन् । उनीहरूले न कुनै विषयवस्तु प्रति कुनै राग राख्दछन् र नै विराग (आसक्तिको अभाव) । उनीहरूले आफ्ना सारा जीवन भगवत्सेवामा अर्पित गर्दछन् । तसर्थ आफ्ना कुनै प्रयास असफल भएमा पनि उनीहरू रिसाउँदैनन् । यसरी उनीहरू मुनी हुन्छन्, योगी हुन्छन् ।

**यः सर्वत्रानभिस्नेहस्तत्प्राप्य शुभाशुभम् ।**
**नाभिनन्दति न द्वेष्टि तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ५७ ॥**

जो पुरूष सबैतिर स्नेहरहित हुन्छ, ती–ती शुभ वा अशुभ वस्तुहरूलाई प्राप्त गरेर न प्रसन्न हुन्छ र नै द्वेष गर्दछ भने उस्को बुद्धि स्थिर छ ।

यस भौतिक जगतमा जो व्यक्ति न त शुभ प्राप्त हुदा हर्षित हुन्छ र न अशुभ प्राप्त गर्दा द्वेष वा घृणा गर्दछ त्यो व्यक्ति पूर्ण ज्ञानमा स्थिर हुन्छ । हामीले संयम तथा धर्मले हाम्रो जीवनमा अनुशासन ल्याउन सक्छौँ । यो संसारमा कहिले सुख प्रदान गर्ने शुभ कार्यहरू भएका हुन्छन् भने कहिले दुःखदायी अशुभ कार्यहरू । यो संसारमा सुख र दुःख बीच द्वन्द्व भइरहन्छ । ज-जस्लाई यी दुबै किसिमका यस्ता कार्यहरूले कुनै असर पार्दैन त्यस्ता व्यक्तिहरू कृष्णभावनामृत भई स्थिर हुने गर्दछन् भनी बुझे हुन्छ । उहाँ श्री कृष्ण सर्वमंगलमय हुनुहुन्छ तथा भक्तजन त्यस्तो अवस्थामा रहनु भनेको समाधिमा रहनु हो ।

**यदा संहरते चायं कूर्मोऽङ्गानीव सर्वशः ।**
**इन्द्रियाणीन्द्रियार्थेभ्यस्तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ५८ ॥**

र कछुवाले आफ्नो बाहिरी खोल भित्र जसरी आफ्ना सबै अंगहरूलाई समेट्दछ, त्यस्तै जब यस्तो पुरुषले इन्द्रियहरूलाई इन्द्रियहरूबाट उत्पन्न विषयहरूबाट सबै तरिकाले हटाउँदछ, तब उस्को बुद्धि स्थिर छ भनी बुझ्नु पर्दछ ।

यस संसारमा योगी, भक्त वा आत्मसिद्ध व्यक्तिले आफ्नो योजना बमोजिम आफ्ना इन्द्रियहरूलाई आफ्नो वशमा गर्न सक्दछन्, अनि मात्र उनीहरूको बुद्धि स्थिर हुन पुग्दछ भनी बुझ्नु पर्ने हुन्छ। तर यस संसारका धेरैजसो व्यक्तिहरू आफ्ना इन्द्रियहरूको दास हुन्छन्। इन्द्रियहरूको तुलना विषयुक्त सर्पसँग गरिन्छ। सपेराले सर्पलाई वशमा राखे जस्तै योगीहरूले इन्द्रियहरूलाई वशमा राख्दछन्। कृष्णभावभावित व्यक्तिहरूका इन्द्रियहरू मात्र भगवान्को विशिष्ट सेवामा काम गर्दछन्। यदि सेवामा उपयोग गर्न सकिएन भने ती इन्द्रियहरूलाई कछुवाले शरीरलाई खुम्च्याए भैँ संकुचन वा खुम्च्याउने गरिन्छ। तिनका आकाङ्क्षाहरूलाई त्याग गरिन्छ। यहाँ अर्जुनलाई श्रीकृष्णद्वारा उपदेश दिइँदै छ कि उनीले आफ्ना इन्द्रियहरूलाई आत्मतुष्टिमा नलाएर भगवान्को सेवामा लगाउन्। यही जीवनको उपयुक्त मार्ग हो।

**विषया विनिवर्तन्ते निराहारस्य देहिनः।**
**रसवर्जं रसोऽप्यस्य परं दृष्ट्वा निवर्तते ॥ ५९ ॥**

इन्द्रियहरूद्वारा विषयहरूलाई नलिने पुरूषको पनि मात्र विषय त निवृत हुन्छ, तर तिनमा रहेको आसक्ति निवृत हुँदैन। यस्तो स्थितप्रज्ञ पुरूषको त आसक्ति पनि परमात्माको साक्षात्कार भएर निवृत हुन्छ।

शरीरधारी जीव इन्द्रियहरूको विषय भोगबाट टाढा रहे पनि उस्मा इन्द्रियभोग गर्ने इच्छा भने जीवित नै रहन्छ। मनको इच्छा तथा आसक्तिलाई समाप्त पार्नु नै मोह समाप्त गर्नु हो। मनमा उत्तम रसको प्रभावकारिताबाट यस्ता इन्द्रियभोगसँग सम्बन्धित सुखभोगबाट बन्चित रही भक्तिमा स्थिर हुन पुगिन्छ। मानिसमा आध्यात्मको प्राप्ति नभएसम्म उस्ले इन्द्रियभोगबाट विरक्ति प्राप्त गर्न सक्दैन्। इन्द्रियसंयम मनको लागि अष्टाङ्ग योग जस्ता विधिलाई प्रयोगमा ल्याएर गरिन्छ, ती हुन् : यम, नियम, आसन, प्राणायाम, प्रत्याहार, धारणा, ध्यान र समाधि। यी विधिहरूको प्रयोगले विषय त निवृत हुन्छ। तर त्यस प्रतिको आसक्ति भने कम हुन्न। तर जो कृष्णभावनामृत रसमा डुबिसकेका छन्, जस्ले परमेश्वर श्री कृष्णको सौन्दर्यको र सास्वादन गरिसकेका हुन्छन्, उनीलाई सांसारिक भौतिक विषयवस्तुमा कुनै आसक्ति रहन्न्।

**यततो ह्यपि कौन्तेय पुरूषस्य विपश्चितः।**
**इन्द्रियाणि प्रमाथिनि हरन्ति प्रसभं मनः ॥ ६० ॥**



हे अर्जुन ! आसक्ति नाश नभएको कारण यी प्रमथन (प्रबल तथा तेजिलो) स्वभावका इन्द्रियहरूले प्रयास गर्दै बुद्धिमान पुरूषको मनलाई पनि जबर्जस्ती हरण गर्दछन्।

यस भौतिक संसारबाट मुक्ति खोज्नेहरूमध्ये धेरैजसो विद्वान्हरू, ऋषिहरू, दार्शनिकहरू तथा आध्यात्मवादीहरूले आ–आफ्ना इन्द्रियहरूलाई वशमा राख्न प्रयास गर्दा-गर्दै पनि तीमध्ये ठूल–ठूलाहरू पनि कहिले-काहीँ विचलित मनको कारणले इन्द्रियभोग गर्न पुग्दछन्। जबसम्म हामीले आफ्ना इन्द्रियहरूका आसक्तिहरूलाई त्याग्दैनौं तबसम्म तिनीहरूले हाम्रो मनलाई हरण गरी इन्द्रियतृप्तिका कार्यहरूमा लगाउन खोज्दछन्। यहाँसम्म कि विश्वामित्र जस्ता महर्षि तथा पूर्ण योगी पनि मेनकासँगको विषयभोगमा लाग्नु भयो। विश्व इतिहासमा यस्ता धेरै उदाहरणहरू रहेका छन्।

**तानि सर्वाणि संयम्य युक्त आसीत मत्परः।**
**वशे हि यस्येन्द्रियाणि तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ६१ ॥**

तसर्थ साधकको लागि यो आवश्यक छ कि उस्ले ती सबै इन्द्रियहरूलाई वशमा गरेर चित्त समाहित गरेर वा मेरो परायण भएर (स्थिर भई म प्रति पूर्ण आसक्तिको साथमा) ध्यानमा बसोस्, किनकि जुन पुरूषका इन्द्रियहरू वशमा हुन्छन् उस्कै बुद्धि स्थिर हुन जान्छ।

योगसिद्धिको परम अनुभूति कृष्णभावनामृतबाट मात्र हुन्छ। कृष्णभावनाभावित नभईकन इन्द्रियहरूलाई वशमा राख्न सम्भव छैन्। एक पटक मुनि दुर्वासा तथा राजा अम्बरीषको बीचमा भगडा पर्यो। अभिमान स्वरूप मुनि अम्बरीष माथि रिसाए र आफ्ना इन्द्रियहरूलाई बशमा राख्न सकेनन्। अर्कोतर्फ राजा मुनि जस्तो योगी थिएनन्। तर उनी श्रीकृष्णका भक्त थिए। तर उनले योगीका सबै अन्यायहरूलाई सहन गरे। अनि अन्ततः राजा अम्बरीष विजयी भए। राजाले मुनिको अन्यायहरू सहन गरे। उनको स्वभाव कस्तो थियो भने उनीले आफ्नो मन भगवान् कृष्णको चरणारविन्दमा स्थिर गर्थे, वाणीलाई भगवान्को धामको चर्चा गर्नमा, आफ्नो कानलाई भगवान्का लीलाहरू सुन्नमा, आफ्ना हातहरूलाई भगवान्को मन्दिर सफा गर्नमा, आँखालाई भगवान्को स्वरूप हेर्नमा, आफ्नो शरीरलाई भक्तको शरीरलाई स्पर्श गर्नमा, आफ्नो नाकलाई भगवान्को चरणमा अर्पित फूलको सुगन्ध सुघ्नमा, जिब्रोलाई

उहाँलाई चढाइएको तुलसीको पातहरू रसास्वादनमा, आफ्ना खुट्टाहरूलाई भगवान्को मन्दिरहरूको यात्रा गर्नमा, आफ्नो टाउकोलाई भगवान्को दर्शन गर्नमा तथा आफ्ना इच्छाहरूलाई भगवान्का इच्छाहरू पुरा गर्नमा लगाउँथे । यसरी उनको बुद्धि सम्पूर्ण रूपले भगवान्मा स्थिर हुन पुगेको थियो । तसर्थ मानिसहरूले इन्द्रियहरूलाई वशमा गरेर आफ्ना कर्तव्यहरूलाई सम्पादन गर्दै जानु पर्दछ । यस्को लागि श्री कृष्णमा चित्तलाई एकाग्र गरी लगाउनु आवश्यक हुन्छ ।

**ध्यायतो विषयान् पुंसः सङ्गस्तेषूपजायते ।**
**सङ्गात्सञ्जायते कामः कामात्क्रोधोऽभिजायते ॥ ६२ ॥**

विषयहरूको चिन्तन गर्ने मानिसको ती विषयहरूमै आसक्ति हुनजान्छ, आसक्तिले ती विषयहरूको कामना उत्पन्न गराउँदछ र कामनामा अवरोध सृजना भएमा मानिसमा क्रोध उत्पन्न हुन्छ ।

कृष्णभावनाभावित नभएको व्यक्तिमा इन्द्रियविषयक चिन्तन भई भौतिक लगायतका इच्छाहरू उत्पन्न हुने गर्दछन् । इन्द्रियहरूको स्वभाव बमोजिम ती कुनै न कुनै काममा संलग्न हुनु पर्ने हुन्छ । यदि ऊ कृष्णप्रति समर्पित भएर लागेको छैन भने ऊ निश्चय पनि भौतिक विषयहरूमा लाग्ने गर्दछ । मनुष्यलोकमा मात्र कहाँ हो र ! देवलोकमा पनि विभिन्न समयहरू तथा परिस्थितिहरूमा देवताहरू समेत इन्द्रियको वशमा रहेको अवस्था पाइएको छ । भगवद्भक्त हरिदास ठाकुरलाई माया देवीको अवतारले मोहित गर्न खोजेको थियो तर उनीले विशुद्ध रूपमा श्री कृष्ण भक्ति गरेकोले उनी कसीमा खरो देखिए । तसर्थ आध्यात्मिक सुखको स्वाद पाइसकेकाले सम्पूर्ण भौतिक सुखहरूलाई परित्याग गर्दछन् । अन्यथा विषयभोग प्रति आसक्ति भएमा ती विषयहरू प्राप्त गर्न कामना वा इच्छा हुन्छ तर ती कामनाहरू पुरा नभएको खण्डमा तिनमा क्रोध उत्पन्न हुन्छ । क्रोध आउनाले विवेक हराउँदछ । विवेक हराएपछि कार्यले उद्देश्य प्राप्त गर्न सक्दैन ।

**क्रोधाम्द्वति सम्मोहः सम्मोहात्स्मृतिविभ्रमः ।**
**स्मृतिभ्रंशाद् बुद्धिनाशो बुद्धिनाशात्प्रणश्यति ॥ ६३ ॥**

क्रोधको कारणले धेरै नै मूढभाव (मूर्खता) उत्पन्न हुन्छ, मूढभावले स्मृतिमा भ्रम सृजना गर्दछ, स्मृतिमा भ्रम हुनाले बुद्धि अर्थात ज्ञान शक्तिको नाश हुन्छ र बुद्धि नाश हुनाले त्यो पुरूष आफ्नो स्थितिबाट तल झर्दछ ।



इन्द्रिय सुखभोगलाई प्राथमिकता दिनेहरूमा त्यस्ता सुख कारणवस प्राप्त नभएको खण्डमा उत्पन्न हुनसक्ने स्थितिको बारेमा यहाँ चर्चा गरिएको छ । भौतिक विषयहरूको चाहनामा यसरी रूमलिएको मानिसले इच्छा गरेको वस्तु प्राप्त नभएपछि उसलाई रिस उठ्छ, रिस उत्पन्न भएपछि उस्को सोच्ने शक्तिले सही तरिकाले काम नगर्नाले उस्को स्मृतिमा भ्रम सृजना हुन जान्छ, त्यस भ्रमले उसको ज्ञानलाई नाश गर्दछ, ज्ञान नाश भएपछि मानिसले दुष्कर्म गर्न थाल्दछ, जस्को प्रतिफलमा ऊ विद्यमान सामाजिक, आर्थिक र सांस्कृतिक आदि स्तरबाट तल झर्न पुग्दछ ।

**रागद्वेषवियुक्तैस्तु विषयानिन्द्रियैश्र्चरन् ।**
**आत्मवश्यैर्विधेयात्मा प्रसादमधिगच्छति ॥ ६४ ॥**

तर आफ्ना इच्छाहरूलाई अधिनमा राख्न सफल भएका अन्तः करणवाला साधकले आफ्नो वशमा गरिएका राग–द्वेषरहित इन्द्रियहरूद्वारा विषयहरूमा विचरण गर्दै अन्तःकरणमा प्रसन्नता प्राप्त गर्दछ ।

समस्त सांसारिक राग–द्वेषबाट मुक्त भई आफ्ना इन्द्रियहरूलाई संयमी बनाउन समर्थ व्यक्तिले भगवान्को पूर्ण कृपा प्राप्त गर्न सक्दछ । इन्द्रियहरू भगवान्को सेवामा लगाउनु पर्दछ भनी ज्ञान भएकोले उस्ले तिनीहरूलाई परमेश्वरको भक्ति सेवामा लगाउँदा उस्को विषयकर्महरूमा आसक्ति रहन्न् । यसरी उस्को एकमात्र उद्देश्य श्रीकृष्णलाई खुशी तुल्याउने हुन्छ । श्रीकृष्णको लागि उहाँको निर्देशानुसारका कर्महरू मात्र उस्ले गर्दछ । यस प्रकार उस्लाई हार्दिक तथा आन्तरिक प्रसन्नता प्राप्त हुन्छ । हुन पनि प्रसन्नता वा खुशी त आन्तरिक रूपमा हुने अवस्था हो ।

**प्रसादे सर्वदुःखानां हानिरस्योपजायते ।**
**प्रसन्नचेतसो ह्याशु बुद्धिः पर्यवतिष्ठते ॥ ६५ ॥**

अन्तःकरणमा प्रसन्नता भएपछि उस्मा सम्पूर्ण दुःखहरूको अभाव हुन जान्छ र त्यस प्रसन्न चित्तवाला कर्मयोगीको बुद्धि छिटै नै सबैतिरबाट हटेर एउटै परमात्मामा राम्ररी स्थिर हुन जान्छ ।

कृष्णभावनामृतमा तृप्त व्यक्तिको सांसारिक तीनवटै तापहरू नष्ट हुन जान्छ तथा यस्तो तुष्ट चेतना भइसकेपछि उसको बुद्धि छिटै नै स्थिर हुन पुग्दछ ।

यसरी एकिकृत भएर आफ्नो जीवनको लक्ष्यप्रति फल के कसो हुन्छ भनी चासो नलिई लागिरहेमा उस्लाई चित्तमा कस्तो शान्ति तथा सुख प्राप्त हुन्छ !

**नास्ति बुद्धिरयुक्तस्य न चायुक्तस्य भावना ।**
**न चाभावयतः शान्तिरशान्तस्य कुतः सुखम् ॥ ६६ ॥**

नजीतिएको मन तथा इन्द्रियवाला पुरूषमा निश्चयात्मिक बुद्धि हुँदैन र त्यस्तो अयुक्त मानिसको अन्तःकरणमा भावना पनि हुन्न तथा भावनाहीन मनुष्यलाई शान्ति पनि पाइदैन र शान्तिरहित मानिसलाई सुख कसरी प्राप्त हुन सक्छ ?

जस्को मन तथा इन्द्रियहरू भौतिक विषयवस्तुहरूकै आशामा तथा भोगमा डुबेको छ त्यस्तो व्यक्तिले स्पष्ट र सटीक निर्णय लिन सक्दैन । श्रीकृष्ण नै यज्ञ तथा फलको एकमात्र भोक्ता हुनुहुन्छ तथा समस्त ब्रह्माण्डको उहाँ मालिक हुनुहुन्छ, उहाँ संसारका सबै जीवहरूको मित्र हुनुहुन्छ भन्ने ज्ञान उस्ले पाएको हुँदैन । तसर्थ ऊ त्यस मार्गमा लाग्न पनि सक्दैन । यसको लागि उसले आध्यात्मिक विषयहरूको ज्ञान लिएर मन तथा इन्द्रियहरूलाई जीतेर बुद्धिलाई श्रीकृष्ण प्रति स्थिर गर्न सक्नु पर्दछ । त्यस्तो गर्न नसक्ने व्यक्तिको अन्तःकरणमा राम्रो भावनाले वास गर्न पाएको हुदैन । तसर्थ उस्ले शान्ति पाएको हुन्न तथा शान्ति नभईकन सुखको प्राप्ति उस्ले गर्न सक्दैन ।

**इन्द्रियाणां हि चरतां यन्मनोऽनु विधीयते ।**
**तदस्य हरति प्रज्ञां वायुर्नावमिवाम्भसि ॥ ६७ ॥**

किनकि जसरी पानीमा हिडने डुंगालाई हावाले आफ्नो गति बमोजिम लिएर जान्छ, त्यस्तै विषयहरूमा विचरण गरिरहेको मानिसका इन्द्रियहरूमध्ये मन जुन इन्द्रियको साथमा रहन्छ त्यो एउटै इन्द्रियले पनि त्यस अयुक्त पुरूषको बुद्धिलाई हरण गर्दछ ।

जसरी पानीमा बगिरहेको डुङ्गालाई हावाले बगिरहेको दीशामा लिएर जान्छ, त्यस्तै विचरणशील इन्द्रियहरूमध्ये कुनै एक जस्मा मन धेरैजसो लागिरहन्छ ले मनुष्यको बुद्धिलाई हरण गर्दछ । यदि मानिसका सबै इन्द्रियहरू भगवान्को भक्तिमा र सेवामा लागेका छैनन्, त्यसमध्ये एउटा पनि भोग र तृप्तिमा लागेको छ



भने त्यस्ले भक्तलाई दिव्य प्रगति पथमा जानबाट रोक लगाउँदछ । यदि ऊ क्रोधको अवस्थामा छ भने उस्को विवेकले काम गर्दैन । कसैसँग आसक्ति वा प्रेममा छ भने उस्ले अरू कर्महरू गर्नलाई बिर्सेको हुन्छ । इन्द्रियहरूलाई वशमा राखेर कर्तव्य गर्दै गएमा सबै कार्यहरू हुन सम्भव हुन्छन् । यसर्थ भगवत भक्ति र सेवा नै यस्ता इन्द्रियहरूलाई वशमा राख्ने मार्गहरू हुन् ।

**तस्माद्यस्य महाबाहो निगृहीतानि सर्वशः ।**
**इन्द्रियाणीन्द्रियार्थेभ्यस्तस्य प्रज्ञा प्रतिष्ठिता ॥ ६८ ॥**

त्यस कारणले हे महाबाहो ! जुन पुरूषका इन्द्रियहरू इन्द्रियहरूका विषयभोगहरूबाट सबै प्रकारले हटाइएका छन्, उसैको बुद्धि स्थिर हुन्छ ।

जुन पुरूषले आफ्ना इन्द्रियहरूको इच्छा, आकाङ्क्षाहरूमा रोक लाएको हुन्छ उस्को बुद्धि स्थिर हुन्छ । बुद्धिले इन्द्रियहरूको साहारा लिइरहेको हुन्छ । यदि बुद्धि माथि विजय पाउनु छ भने इन्द्रियहरूलाई वशमा गर्नै पर्दछ । यसको लागि पुरूषले आफ्ना सबै इन्द्रियहरूलाई भगवान्को दिव्य प्रेमाभक्तिमा लगाएमा इन्द्रियतृप्तिको शक्तिलाई दमन गर्न सक्दछ । भगवान्को सेवा नै मानव जीवनको परम् लक्ष्य हो भनी अवगत हुनेले भगवान्को सेवा एवं भक्तिमा लाग्नाले उस्का इन्द्रियहरूका आकाङ्क्षाहरू स्वतः संयमित हुन पुग्दछन् । यसैबाट उसको बुद्धि पनि स्थिर हुन्छ । प्रामाणिक गुरुहरूले यस कार्यलाई गर्न गराउन महत्त्वपूर्ण भूमिका निर्वाह गरेको पाइन्छ ।

**या निशा सर्वभूतानां  तस्यां जागर्ति संयमी ।**
**यस्यां जाग्रति भूतानि सा निशा पश्यतो मुनेः ॥ ६९ ॥**

सम्पूर्ण प्राणीहरूको लागि जुन समय रात्रीको समान छ, त्यस समयमा नित्य ज्ञानस्वरूप परमानन्दको प्राप्तिमा स्थितप्रज्ञ योगी ब्यूँझिरहन्छ तथा जुन नाशवान सांसारिक सुखको प्राप्तिको लागि सबै प्राणीहरू जुन समयमा जागा रहन्छन्, परमात्मालाई तत्व जान्ने मुनिको लागि त्यो रात्रीको समान हुन्छ ।

जुन समय सबै जीवहरूको लागि रात्री छ, त्यो समय आत्मसंयमी योगीको लागि साधना गर्दै, भक्ति गर्दै ब्युँझिरहने समय हो अर्थात दिन हो । त्यो रात्रीको समय ज्ञानको प्रकास पाउने समय हो, परमेश्वरसँग मिलनको समय हो । जुन समस्त जीवहरूको लागि जाग्ने समय दिन हो, जुन समयमा उनीहरू आफ्नो लागि

तथा आफन्तजनको लागि सकाम कर्ममा लागेका हुन्छन् त्यो समय आत्मनिरीक्षक मुनीको लागि, जो लोभ, मोह, माया र आसक्तिरहित हुन्छ, को लागि रात्री हो। यहाँ मानिसहरूलाई दुइ श्रेणीमा बिभाजन गरिएको छ। पहिलो श्रेणीमा त्यस्ता विचारवान र आत्मनिरीक्षक मुनिहरू पर्दछन जो रात्रीमा जागा रही आत्म साक्षात्कार गर्दछन्। ज्ञानस्वरूप परमानन्द प्रकाशमय समय हो भनी उनीहरू रमाउँछन्, उनीहरू भगवान्को सेवा र आराधनामा तल्लिन रही जीवन बिताउछन, अनि त्यसैलाई दिन मान्दछन्। त्यो समय भौतिकतामा लिन व्यक्तिको लागि रात्री हुन्छ। दोश्रो श्रेणीमा त्यस्ता मानिसहरू पर्दछन् जो सांसारिक भौतिक विषयवस्तुहरूको इन्द्रियतृप्ति गर्नमा निपुण हुन्छन् र दिउँसभरी त्यसै काममा तल्लीन रहन्छन्। तर परमानन्दको सेवामा, आराधनामा समय बिताउने कार्य उनीहरूको लागि रात हुन्छ। त्यस प्रति उनीहरूलाई अनभिज्ञता हुन्छ। भौतिकमा लिन व्यक्तिको लागि भएको दिन आत्मसाक्षात्कारमा लागेको व्यक्तिको लागि भने ऊ ती कार्यहरूमा चासो नलिने हुदा रात्री समान हुन्छ।

**आपूर्यमाणमचलप्रतिष्ठं**
**समुन्द्रमापः प्रविशन्ति यव्दत्।**
**तव्दत्कामा यं प्रविशन्ति सर्वे**
**स शान्तिमाप्नोति न कामकामी ॥ ७० ॥**

जसरी विभिन्न नदीहरूको जल सबैतिरबाट परिपूर्ण, अचल प्रतिष्ठायुक्त समुन्द्रमा, उस्लाई अलिकति पनि विचलित नगरेर, सामेल हुन्छ त्यस्तै नै सबै भोगहरू जुन स्थितप्रज्ञ पुरूषमा कुनै प्रकारको विकार उत्पन्न नगरेरै संयमित भएर रहन्छन्, त्यही पुरूषले परम शान्ति प्राप्त गर्दछ, भोगहरूलाई भोग गर्ने वा त्यस प्रति चाहना राख्नेले होइन।

परमात्माको बिशुद्ध भक्त समुन्द्रको भाँति हुन्छ। जसरी समुन्द्रमा पानी रहिरहे तापनि त्यस्मा वर्षा ऋतुमा वेगको साथ बढी मात्रामा विभिन्न नदीहरूबाट जल थपिएको अवस्थामा पनि समुन्द्र शान्त तथा स्थिर रहन्छ। उस्मा बिचलन आउँदैन। त्यस्तै स्थितप्रज्ञ पुरूषका इन्द्रियहरू संयमित रहने हुँदा उहाँको ईश्वर प्रतिको साधनामा एकाग्रता, तल्लिनताको दह्रो प्रभावले इन्द्रियहरूका कामनाले परमेश्वरको सेवामा कुनै असर पार्न सक्दैन। शान्त रहन्छ। तसर्थ हामीले इन्द्रियद्वारा क्रोधावस्था सृजना गरी आफ्ना कर्तव्य, परमेश्वर प्रतिको सेवाभक्तिलाई कहिल्यै



बिथोल्न हुँदैन। श्रीकृष्णको सेवारत व्यक्तिका इच्छाहरू भगवतभक्तिमा मात्र रहेको हुन्छ। त्यस्तो व्यक्तिले आफ्ना सबै इन्द्रियहरूलाई निस्तेज गरेर राखेको हुन्छ। उस्को कुनै भौतिक इच्छा नै हुदैन् र ऊ शान्त र प्रसन्न रहन्छ।

**विहाय कामान्यः सर्वान्पुमांश्र्चरति निःस्पृहः।**
**निर्ममो निरहङ्कारः स शान्तिमधिगच्छति ॥ ७१ ॥**

जुन पुरूषले सबै कामनाहरूलाई त्यागेर ममतारहित, अहंकाररहित र स्पृहारहित (इच्छा वा कामना) भएर कार्यरत रहन्छ उसैले शान्तिलाई प्राप्त गर्दछ अर्थात उस्ले शान्ति प्राप्त गरेको हुन्छ।

जो व्यक्तिले आफ्ना इन्द्रियहरूका सबै इच्छाहरू, कामनाहरूलाई परित्याग गरिसकेको हुन्छ, जस्ले आफ्ना ममता एवं अहङ्कारलाई पनि त्याग गरेको हुन्छ, उसैले वास्तविक शान्ति प्राप्त गर्न सक्दछ। यस्को लागि कामना, इच्छा त्यागेर घमण्ड नराख्ने, संसारमा रहेर पनि संसारबाट बेग्लै बस्नु पर्दछ। निस्पृह हुनु भनेको इन्द्रियतृप्तिको लागि कुनै पनि इच्छा नगर्नु हो। हाम्रो यो शरीर मिथ्या छ, नाशवान् छ, शरीर आत्मा कदापि होइन भन्ने धारणा बमोजिम संसारका कुनै पनि भौतिक वस्तुको कामना नगर्ने व्यक्तिले नै शान्तिको अनुभूति गर्दछ। यहाँका सबै वस्तुहरूका स्वामी श्रीकृष्ण हुनुहुन्छ, तसर्थ भौतिक विषयवस्तुको सदुपयोग उहाँको इच्छा बमोजिम उहाँको तृप्तिको लागि मात्र गर्नु पर्दछ। यो दिव्य ज्ञान आत्मसाक्षात्कारको ज्ञान हो। यस ज्ञान अनुरूप यहाँका प्रत्येक जीव श्रीकृष्णको अंश हो। यही शाश्वत तथ्यले हामीलाई शान्ति तर्फ डोऱ्याउँछ।

**एषा ब्राह्मी स्थितिः पार्थ नैनां प्राप्य विमुह्यति।**
**स्थित्वास्यामन्तकालेऽपि ब्रह्यनिर्वाणमृच्छति ॥ ७२ ॥**

हे अर्जुन ! यो ब्रह्म प्राप्त गरेको पुरूषको स्थिति हो, यस्लाई प्राप्त गरेर योगी कहिल्यै मोहित हुँदैन र अन्तकालमा पनि यस ब्राह्मी स्थितिमा स्थित रहेर ब्रह्मानन्दलाई उस्ले प्राप्त गर्दछ।

यो आध्यात्मिक तथा ईश्वरीय जीवनको बाटो हो, जस्मा हिँडिसकेपछि मानिस कहिल्यै पनि कुनै विषयवस्तु प्रति मोहित हुँदैन। ब्रह्मको अर्थ हो सबैभन्दा ठूलो सत्य योभन्दा अगाडि केही पनि हुँदैन। यी लक्षणहरू भएको पुरूषले आफ्नो

बुद्धिलाई स्थिर राखेर ब्रह्मको प्राप्ति गर्दछ । यस प्रकार जीवन यापन गर्ने मानिसले आफ्नो जीवनको अन्तिम कालमा भगवद्धाम प्राप्त गर्दछ । श्रीकृष्णभावनामृत कसैलाई एकै क्षणमा पनि प्राप्त हुनसक्छ र कसैलाई विभिन्न जन्महरूमा पनि प्राप्त भएको हुँदैन । भौतिकतामा डुबेको व्यक्तिको लागि यो जीवन नै सबै थोक हो, यो जीवन पछि केही छैन । तर आध्यात्मवादीहरूको अनुसार वा भगवद्गीताको अनुसार मनुष्यको जीवनको प्रारम्भ त यो भौतिक शरीरको त्यागपछि शुरू हुन्छ । तर यस जीवनको समाप्ति हुनु अगावै कोही कृष्णभावनाभावित हुन्छ भने उस्ले अबिलम्ब ब्रह्म निर्वाण प्राप्त गर्दछ । भगवान्को दिव्य प्रेमाभक्तिमा व्यस्त हुनु नै भगवतद्धाम प्राप्त गर्नु हो । ब्रह्मको स्थितिमा पुग्नु नै भौतिक कार्यहरूको पदमा नहुनु हो । खट्वाङ्ग महाराजले उनको मृत्युको केही क्षण अघि यस्तो स्थिति प्राप्त गरेका थिए । यसलाई निर्वाण वा मुक्तिको अवस्था भनिन्छ ।



अथ तृतीयोऽध्यायः

# तृतीय अध्याय

# कर्मयोग

अर्जुन उवाच (भन्दछन्)

**ज्यायसी चेत्कर्मणस्ते मता बुद्धिर्जनार्दन ।**
**तत्किं कर्मणि घोरे मां नियोजयसि केशब ॥ १ ॥**

अर्जुनले भने : हे जनार्दन ! यदि तपाईंलाई कर्मको अपेक्षा ज्ञान श्रेष्ठ छ भने फेरि हे केशव ! तपाईँले मलाई भयंकर कर्ममा किन लाउँदै हुनुहुन्छ ?

यस श्लोकमा अर्जुनले उत्तम शिष्यको रूपमा श्रीकृष्णलाई ज्ञानयोगको पथ सर्वश्रेष्ठ पथ हो भने मलाई किन कर्मयोगको पथ सुझाएर युद्ध गर भनी सुझाव दिनु भएको ? ज्ञान नै ठूलो हो भने मलाई आफन्तहरू मार्ने कर्ममा जान किन सुझाव दिइरहनु भएको छ ? भनी उपयुक्त प्रश्न गरेका छन् । यसै आधारमा श्रीकृष्णले यस अध्यायमा कर्मयोग अर्थात कृष्णभावनाभावित कर्मको बारेमा विस्तृत रूपमा वर्णन गर्नु भएको छ ।

**व्यामिश्रेणेव वाक्येन बुद्धिं मोहयसीव मे ।**
**तदेकं वद निश्चित्य येन श्रेयोऽहमाप्नुयाम् ॥ २ ॥**

हजुरले मिलाएर भन्नु भएका वचनहरूले मेरो बुद्धिलाई लाग्दछ मोहित गरि रहेका छन् । त्यसकारण त्यो एउटा कुरालाई निश्चित गरेर भन्नुहोस् जसबाट मैले कल्याण प्राप्त गरौँ ।

श्रीकृष्णले यस अघिका अध्यायहरूका श्लोकहरूमा अर्जुनलाई साङ्ख्ययोग, बुद्धियोग, इन्द्रियनिग्रह, निष्काम कर्मयोग, सकाम कर्मयोग तथा त्यस सम्बन्धी विभिन्न स्थितिहरूको बारेमा वर्णन गर्नु भयो । ती सबैको बीचको तारतम्य अर्जुनले बुझ्नु पर्ने ठाउँमा उनी त अल्झिरहेका पो रहेछन् । उनीलाई कुन मार्ग ठीक छ भनी पहिल्याउनलाई गाह्रो भइरहेको छ । श्री कृष्णले बताउनु भएको बाटो गुढ वा गहिरो छ । उहाँले भन्नु भएका कुराहरूले अर्जुन द्विविधामा परेकोले कुन राम्रो हो ? भनी उनीले सोधेका हुन् । अर्जुनले स्पष्टताको लागि निश्चित रूपमा श्रेयस्कर मार्ग कुन हो भनी बुझ्न तथा तद्अनुरूप कर्म गर्नको लागि व्यवस्थित रूपरेखाको खाँचो

महशुस गरे । यसैले अर्जुनले ती भ्रामक विषयवस्तुहरूबाट श्रीकृष्णसँग स्पष्टताको लागि माँग गर्दै प्रश्न गरेको हुन् ।

**लोकऽस्मिन्द्विविधा निष्ठा पुरा प्रोक्ता मयानघ ।**
**ज्ञानयोगेन सांख्यानां कर्मयोगेन योगिनाम् ॥ ३ ॥**

श्रीभगवान्ले भन्नुभयो : हे निष्पाप ! यस लोकमा दुइ प्रकारका निष्ठा वा विश्वासहरू मव्दारा पहिले नै बताइसकिएका छन् । तीमध्ये साङ्ख्ययोगिहरूको निष्ठा त ज्ञानयोगबाट र योगिहरूको निष्ठा कर्मयोगबाट हुन्छ ।

यहाँ अर्जुनलाई निष्पाप भनी सम्बोधन गरिएको छ तथा आत्मसाक्षात्कारको प्रयत्न गर्ने दुई प्रकारका योगीहरू हुन्छन् भनी वर्णन गरिएको छ । केहीले यसलाई ज्ञानयोगद्वारा सम्झिने प्रयत्न गर्दछन् भने केहीले यसलाई भक्तिमय सेवाद्वारा । यहाँ पहिलो साङ्ख्ययोगमा आत्मा तथा पदार्थको प्रकृतिको बैश्लेषिक अध्ययन ती मनुष्यहरूको लागि हो जस्ले व्यवहारिक ज्ञान तथा दर्शनद्वारा वस्तुहरूको चिन्तन तथा मनन गर्न चाहान्छन् । दोश्रोमा श्रीकृष्ण भावनामृतमा रहेर कार्य गर्दै मनुष्यहरूले कर्म बन्धनबाट छुटकारा पाउँछन् । निष्काम कर्म भनेको कर्मको फलमा आसक्ति नराख्नु हो । यो पद्दतिमा कुनै दोष रहन्न । यी दुबै प्रकारका योगहरू धर्म तथा दर्शनको रूपमा अन्योन्याश्रित रहेका छन् । यी दुबै प्रकारका पद्दत्तिहरूको उद्देश्य भने परमात्माको सम्बन्धमा आफ्नो वास्तविक स्थिति बुझ्नु हो । पहिलो अप्रत्यक्ष्य रूपमा रहेको दार्शनिक चिन्तन हो जसमा क्रमशः कृष्णभावनामृतसम्म पुग्न सकिन्छ । तर दोश्रो प्रत्यक्ष पद्दत्तिमा श्रीकृष्णभावनामृतमा नै प्रत्येक वस्तुसँग सम्वन्ध गास्न सकिन्छ । यसमध्ये दोश्रो श्रीकृष्णभावनामृतमा रही वस्तुसँगको सम्बन्ध गाँस्ने मार्ग उपयुक्त छ । किनकि यसमा स्वयंले नै शुद्ध गर्ने प्रकृया रहेको हुन्छ । साथै भक्तिको प्रत्यक्ष विधि सरल तथा दिव्य पनि हुन्छ ।

**न कर्मणामनारम्भान्नैष्कर्म्यं पुरूषोऽश्नुते ।**
**न च संन्यसनादेव सिद्धिं समधिगच्छति ॥ ४ ॥**

मनुष्यले कर्महरूलाई आरम्भ नगरिकन न त निष्कर्मता वा योगनिष्ठा प्राप्त गर्दछ र न कर्महरूलाई मात्र त्याग गरेर सिद्धि वा साङ्ख्यनिष्ठा प्राप्त गर्दछ ।

मानिसले न त कर्महरूबाट बिमुख भएर कर्मफलबाट छुटकारा पाउन सक्छ र न मात्र सन्यास लिएर सिद्धि पाउन सक्छ । यस संसारमा भौतिकवादी परिवेशमा



रहेका मानिसहरूको मन तथा व्यवहारमा रहेका भौतिक क्लेश हटाई सफा गर्न जे– जस्ता कर्महरू निर्धारित गरिएका छन् ती कर्महरू गरी शुद्ध भएको मानिसले सन्यास लिन सक्दछ । ज्ञानयोगीहरूको अनुसार मानिसले सकाम कर्महरूवाट विरक्तिएपछि मात्र सन्यास लिएमा ऊ नारायणको समान हुन्छ । हृदयको शुद्धि नगरिकन सन्यास धारण गरेमा सामाजिक व्यवस्था छताछुल्ल हुन पुग्दछ । भगवान्को सेवा गर्नेले यदि नियत कर्म (शास्त्र विधि बमोजिम सँगरहित भएर गरिने यज्ञादि कर्महरू) गरेन भने पनि त्यस सन्यास लिएर गरिएको सेवालाई भगवान्ले स्वीकार गर्नु हुन्छ ।

**न हि कश्चित्क्षणमपि जातु तिष्ठात्यकर्मकृत् ।**
**कार्यते ह्यवशः कर्म सर्वः प्रकृतिजैर्गुणैः ॥ ५ ॥**

निःसन्देह कुनै पनि मनुष्यले कुनै पनि कालमा एक क्षण पनि कर्म नगरिकन बस्न सक्दैन, किनकि सारा मनुष्य समुदायलाई प्रकृति जनित गुणहरूद्वारा बसिभूत गराई कर्म गर्नलाई बाध्य गराइन्छ ।

मन स्वभावगत रूपमा सधैँ सक्रिय रहन्छ, एकक्षणको लागि पनि स्थिर हुन सक्दैन । त्यसैको कारणले शरीर पनि चलायमान रहिरहन्छ । तसर्थ मनलाई कृष्णभावनामृतको सत्कर्ममा लगाउनु पर्दछ, नभए त्यो माया-जालको अधीनस्थ हुन पुग्दछ । मायामा फसेपछि ऊ भौतिक सुख भोगहरू प्राप्त गर्न आकर्षित हुन थाल्दछ । यस अवस्थामा यस्ता आकर्षणहरूबाट उसलाई शुद्ध राख्न शास्त्रहरूव्दारा व्यवस्थित कर्महरूमा संलग्न गराउनु पर्दछ । यस संसारमा प्रतिपल कर्महरू भइरहेका हुन्छन् । जसरी प्रकृतिले हामीलाई बनाएको छ, उस्को गुण यही हो कि हामीले हरेक क्षण कर्म गरौँ । प्रकृतिमा कहिल्यै केही कार्य रोकिँदैन । स्वास चलिरहन्छ, जीवन चलिरहन्छ, क्रमशः जीवन चक्र चलिरहेकै छ । जीवन रहेसम्म कर्म पनि रहन्छ । तसर्थ प्रकृतिले मनुष्यहरूलाई दिएका स्वभावहरूलाई आ-आफ्ना धर्म, संस्कारहरू बमोजिम निर्देशित कर्महरू गरेमा सम्बन्धित मनुष्यको कल्याण निश्चित छ ।

**कर्मेन्द्रियाणि संयम्य य आस्ते मनसा स्मरन् ।**
**इन्द्रियार्थान्विमूढात्मा मिथ्याचारः स उच्यते ॥ ६ ॥**

जुन मूढबुद्धि मानिसले सबै इन्द्रियहरूलाई जबरजस्ति माथिबाट रोक्दछ तर ती इन्द्रियहरूका इच्छा वा आकाङ्क्षाको बारेमा चिन्तन गरिरहन्छ भने त्यस्ता मनुष्यलाई मिथ्याचारी वा दम्भी भनिन्छ ।

जस्ले आफ्ना कर्मेन्द्रियहरूलाई जबरजस्ति बसमा गर्दछ तर भित्र-भित्रै इन्द्रियविषयहरूको अर्थात तिनीहरूको इच्छा वा चाहनाको परिपूर्तिको बारेमा चिन्तन गरिरहन्छ भने उस्ले आफैलाई धोखा दिएको हुन्छ र ऊ फटाहा हुन्छ । संसारमा देखावटी रूपमा कृष्णभावनामृतमा रहेको देखाउने तर शरीरका इन्द्रियहरूले मागे बमोजिमका कृयाकलापमा संलग्न हुने व्यक्तिहरूको जमात धेरै ठूलो छ । यस संसारमा धेरैजसो यस्ता साधु तथा सन्यासीहरू मैले यस दुनियालाई त्याग गरिसके त भन्दछन् तर तिनै विषयवस्तुको मोह, चाहनाको बारेमा सोंचिरहने गर्दछन् । यस्ता व्यक्तिहरूले धर्म-दर्शनको बारेमा उपदेश दिन्छन् तर आफैले तिनलाई अंगिकार नगरेकोले तिनीहरूको ज्ञान व्यर्थ हुन्छ ।

**यस्त्विन्द्रियाणि मनसा नियम्यारभतेऽर्जुन ।**
**कर्मेन्द्रियैः कर्मयोगमसक्तः स विशिष्यते ॥ ७ ॥**

तर हे अर्जुन ! जुन पुरूषले मनमा इन्द्रियहरूलाई वशमा गरेर अनाशक्त भएका सम्पूर्ण इन्द्रियहरूद्वारा कर्मयोगको आचरण गर्दछ, त्यही श्रेष्ठ हो ।

कुनै निष्ठावान व्यक्तिले आफ्नो मनव्दारा समस्त कर्मेन्द्रियहरूलाई वशमा गरेर बिना कुनै किसिमको आसक्तिले कर्मयोगको आचरण गर्दछ भने ऊ उत्कृष्ट व्यक्ति हो । मनुष्यहरूले आत्म-साक्षात्कारको लागि शास्त्रानुमोदित संयमित जीवन कायम गर्न इन्द्रियहरूलाई वशमा गरेर विषयवस्तु प्रति अनाशक्ति राखेर जस्तोसुकै लक्षित सत्कर्महरू गर्न सक्दछन् । यसको लागि उनीहरूलाई सर्वप्रथम तिनीहरूको लक्ष कि यस भवबन्धनबाट मुक्त भई भगवद्धाम जानु पर्नेछ भन्ने बारेमा जानकारी भएको हुनु पर्दछ ।

**नियतं कुरू कर्म त्वं कर्म ज्यायो ह्यकर्मणः ।**
**शरीरयात्रापि च ते न प्रसिद्धयेदकर्मणः ॥ ८ ॥**

तिमी शास्त्र अनुरूपका नियमित कर्तव्य तथा कर्महरू गर, किनकि कर्म नगर्नुभन्दा कर्म गर्नु श्रेष्ठ हो तथा कर्म नगर्नाले तिम्रो शरीर निर्वाह वा जिउँदो रहनु पनि सम्भव हुँदैन ।

श्रीकृष्ण यो चाहान्थे कि अर्जुन मिथ्याचारी र आडम्बरी न हुन् । उनीले क्षेत्रियको लागि निर्दिष्ट धार्मिक कर्तव्यहरूलाई अनुशासित भई पालना गरून् । सबैले आ-आफ्ना निर्धारित कर्तव्य वा कर्म गर्नु पर्ने हुन्छ । आफ्नो देह निर्वाहको लागि



गरिएका तथाकथित त्याग वा सन्यास धारण गर्नुको कुनै प्रयोजन रहन्न् । तसर्थ भौतिकवादी वासनाहरूलाई शुद्धि गर्दै नियत कर्म गरेर आफ्नो जीवनलाई सिद्ध बनाउन श्रीकृष्णले यस श्लोकको माध्यमले सुझाव दिँदै हुनुहुन्छ । कर्म गरिरहनु नै सर्वथा उपयुक्त हुन्छ भनी सुझाव दिनु भयो ।

**यज्ञार्थात्कर्मणोऽन्यत्र लोकोऽयं कर्मबन्धनः ।**
**तदर्थं कर्म कौन्तेय मुक्तसङ्गः समाचर ॥ ९ ॥**

यज्ञको लागि गरिने कर्महरूभन्दा बाहेक अरू कर्महरूमा लाग्नाले नै यो मनुष्य समुदाय कर्महरूमा बाँधिन्छन् । त्यसकारण हे अर्जुन ! तिमी आसक्तिहरूबाट रहित भएर त्यस यज्ञको लागि नै राम्ररी कर्तव्य कर्म गर ।

श्री विष्णुको लागि यज्ञको रूपमा हामी सबैले कर्महरू गर्नु पर्दछ, त्यस बाहेका अन्य कर्महरूव्दारा यस भौतिक जगतमा बन्धन उत्पन्न हुन्छ । यस श्लोकमा समाजको कल्याणको कुरा गरिएको छ । उहाँको प्रसन्नताको लागि नियत कर्म गर । यस प्रकार तिमी बन्धनबाट सदा मुक्त हुने छौ भनी सुझाइएको छ । वेदमा भनिएको छ : 'यज्ञो वै विष्णुः' । यज्ञको अर्थ भगवान् विष्णु हो । समस्त यज्ञहरू भगवान् विष्णुलाई प्रसन्न गर्न भनेर गरिन्छ । कृष्णमा भावनामृत हुनु यज्ञ नै हो । यस जगतमा विष्णुको प्रसन्नताको लागि गरिएको यज्ञ बाहेकका अन्य कर्महरूले भवबन्धनबाट मानिसहरूलाई मुक्ती दिँदैनन् । तसर्थ हामीले इन्द्रिय तृप्तिको लागि हैन कि कृष्णको सेवामा कर्महरू गर्नु पर्दछ ।

**सहयज्ञाः प्रजाः सृष्ट्वा पुरोवाच प्रजापतिः ।**
**अनेन प्रसविष्यध्वमेष वोऽस्त्विष्टकामधुक् ॥ १० ।**

प्रजापति ब्रह्माले कल्पको प्रारम्भमा यज्ञ सहित प्रजाहरूको रचना गरेर उनीहरूलाई भन्नु भयो कि तिमीहरू यस यज्ञद्वारा बृद्धि प्राप्त गर्नु र यो यज्ञले तिमीहरूको लागि इच्छित भोग दिने होस् ।

सृष्टिको प्रारम्भमा ब्रह्माले यज्ञ सहित देवताहरू, मनुष्यहरू तथा अन्य संरचनाको रचना गर्नु भयो । त्यसपछि उनीहरूलाई भन्नु भयो कि तिमीहरू यस यज्ञद्वारा सुखी रहनु किनकि यज्ञ गर्नाले तिमीहरूलाई सुखपूर्वक रहने तथा मुक्ति प्राप्त गर्नको लागि समस्त आवश्यक वस्तुहरू प्राप्त हुन सक्नेछ । यज्ञ हाम्रो

संस्कारहरूको संगठित रूप हो । यज्ञले हामीलाई जीवनमा बाटो देखाउँदछ । यस संसारमा सबै जीवहरूको मालिक नारायण हुनुहुन्छ । उहाँले यस लोकका संरचनाहरूको निर्माण जीवहरूलाई वध्द अवस्थाबाट उद्धार गर्ने उद्येश्यले गर्नु भएको हो । तर जीवहरूले उहाँसँगको सम्बन्ध नै बिर्सिदिए । जीव तथा भगवान्सँगको शाश्वत सम्बन्धलाई बुझ्न सहज बनाउनको लागि वैदिक नियमहरू पनि व्यवस्थित गरिएको छ । 'वेदैश्र्च सर्वैरहमेव वेद्यः' अर्थात वेदको उद्येश्य हो उहाँलाई सम्झिनु । भगवान्ले यस भौतिक जगत रूपी संरचनाको निर्माण गरेर वद्ध अवस्थामा रहेका जीवहरूले सिकुन कि कसरी यसको निर्माता, संरक्षक, सम्बर्धकलाई श्री विष्णुको यज्ञ गरेर यस संसारमा चिन्ता, क्लेषरहित रूपमा सुखी भएर बाँच्न सकिन्छ । यसो गरेमा मोह बन्धनलाई त्याग गरी उनीहरू देवतुल्य हुन्छन् । तर कलियुगमा भने जीव उद्धारको लागि वैदिक शास्त्रहरूले संकीर्तन यज्ञ अर्थात भगवान्को नामको जपको बिधान गरेका छन् । वेदमा उल्लेखित यज्ञलाई व्यवस्थित विधान बमोजिम सम्पादन गर्न गराउन आजको युगमा सम्भव नभएकोले पनि यो प्रावधान कायम गरिएको हो ।

**देवान्भावयतानेन ते देवा भावयन्तु वः ।**
**परस्परं  भावयन्तः श्रेयः परमवाप्स्यथ ॥ ११ ॥**

तिमीहरूले यस यज्ञद्वारा देवताहरूलाई उन्नत वा विकसित बनाऊ र ती देवताहरूले पनि तिमीहरूलाई उन्नत बनाउनु हुनेछ । यस प्रकार निःस्वार्थ भावले एक अर्कालाई उन्नत गर्दै तिमीहरूले परम् कल्याण प्राप्त गर्नेछौ ।

यज्ञद्वारा तिमीहरूले देवताहरूलाई प्रसन्न तुल्याउने तथा देवताहरूले पनि तिमीहरूलाई प्रसन्न तुल्याउनु हुनेछ । ईश्वरको नाम सही तरिका, पद्धतिले लिने कार्य नै यज्ञ हो । यसले यज्ञकर्ता तथा देवताको बीचको सम्बन्धलाई कायम राख्दछ । यस प्रकार मनुष्यहरू तथा देवताहरू बीच आपसी सहयोगले तिमीहरू सबैको कल्याण भई सम्पन्नता प्राप्त गर्नेछौ । जीवहरूलाई शरीर धारण गर्न आवश्यक वायु, जल, प्रकाश तथा अन्य सबै वर (भगवान्द्वारा दिइने वस्तु, सेवा आदि) उनै देवताहरूको अधिकारमा रहन्छन् । जुन भगवान्को शरीरहरूको विभिन्न भागहरूमा असंख्य सहायकको रूपमा रहने गर्दछन् । यस प्रकार देवगण सांसारिक कार्यहरूको लागि आधिकारिक प्रशासक हुन् । तसर्थ मनुष्यहरूव्दारा गरिने यज्ञको आधारमा उहाँहरूको प्रसन्नता वा अप्रसन्नता निर्भर गर्दछ । यज्ञलाई सुचारू रूपले सञ्चालन गरेपछि यी विभिन्न बिभागहरूका अधिकारी देवगण प्रसन्न भएर प्राकृतिक पदार्थहरूको



अभाव हुन दिँदैनन्, यसरी यज्ञकर्ताहरूलाई भवबन्धनबाट मुक्ति दिलाउँछन्, सबै कर्महरू तथा पदार्थहरूलाई पवित्र तुल्याउँछन् । यज्ञकर्ता मनुष्यहरूले शुद्ध खाद्य पदार्थ खानाले उनीहरूको स्मृतिका तन्तुहरू शुद्ध हुन्छन्, उनीहरूको जीवन शुद्ध हुन्छ, उनीहरूले यसरी मुक्ति मार्गको बारेमा चिन्तन-मनन गर्दछन् ।

**इष्टान्भोगान्हि वो देवा दास्यन्ते यज्ञभाविताः ।**
**तैर्दत्तानप्रदायैभ्यो यो भुङ्क्ते स्तेन एव सः ॥ १२ ॥**

यज्ञको माध्यमले भक्तिभाव एवं सेवा गरिएका देवताहरूले नमागे पनि तिमीहरूलाई इच्छित भोग अवश्य पनि दिइरहनु हुनेछ । यसप्रकार ती देवताहरूद्वारा दिइएका भोगहरूलाई जुन व्यक्तिले उहाँलाई नचढाएर आफैँले भोग गर्दछ, ऊ चोर नै हो ।

जीवनका विभिन्न आवश्यकताहरूलाई पुरा गर्ने विभिन्न देवताहरूले यज्ञ सकिएपछि प्रसन्न भएर तिम्रा सबै आवश्यकताहरू पुरा गरिरहने छन् । तर जस्ले यी उपहारहरूलाई देवतालाई अर्पण, पूजा, अर्घ्य नदिई वा नगरेरै आफुले भोग गर्दछ भने उस्मा चोरको स्वभाव आएकोले ऊ चोर हो भनी श्रीकृष्णले वर्णन गर्नु भएको छ । उस्मा बेइमानी आएको ठहर हुन्छ । वेदमा विभिन्न देवताहरूको लागि विभिन्न किसिमका यज्ञहरूको बारेमा उल्लेख गरिएका छन् तर ती सबै अन्ततः भगवान्लाई अर्पण गर्ने हो । यसरी देवताहरूको पूजा उहाँहरूको गुण, स्वभाव बमोजिम गरिने प्रावधान बमोजिम सत्व गुणीहरूको लागि यज्ञद्वारा विष्णुको दिव्य पूजाको व्यवस्था उल्लेखित छ । एउटा साधारण व्यक्तिले कमसेकम पाँचवटा यज्ञ गर्नु आवश्यक छ । हामीले देखेका, भोगेका, सबै प्राकृतिक तथा अप्राकृतिक वस्तुहरू उहाँ भगवान्द्वारा नै निर्मित हुन् । हामीले ती वस्तुहरूको सदुपयोग गरेर आत्म साक्षात्कारको लागि जीवनलाई स्वस्थ राख्नु पर्दछ । यसबाट हामीलाई जीवनको चरम् लक्ष्य प्राप्त गर्न सहज हुन्छ । हामीले मात्र आफ्नो इन्द्रियतृप्तिको लागि भौतिक विषयवस्तु भगवान्सँग लिएर उहाँमा अर्पण नगरी भोग गरेर भौतिक जालमा तल-तल भासिएर गइरहेमा भगवान्ले यस लोकको श्रृष्टि गर्नु पछाडिको उद्येश्य नै पुरा हुँदैन । तसर्थ यो मनुष्यको स्वार्थी र चोर स्वभाव हो भनी प्रमाणित हुनेछ ।

**यज्ञशिष्टाशिनः सन्तो मुच्यन्ते सर्वकिल्बिषैः ।**
**भुञ्जते ते त्वघं पापा ये पचन्त्यात्मकारणात् ॥ १३ ॥**

यज्ञ गरेर बाँकि रहेको अन्न खाने श्रेष्ठ मानिस सबै पापहरूबाट मुक्त हुन्छ र जुन पापी मनुष्यहरूले आफ्नो शरीर पोषण गर्नको लागि मात्र अन्न पकाउँदछ, उनीहरूले त पापलाई नै खान्छन् ।

भगवान्को भक्त सबै प्रकारको पापबाट मुक्त हुन्छ किनकि उस्ले यज्ञमा अर्पित गरिएको प्रसाद मात्र खान्छ । अरू व्यक्तिहरूले आफ्नो इन्द्रिय सुखको लागि मात्र भोजन पकाउँछन् र खान्छन् भने तिनीहरूले पाप संग्रहित गर्दछन् । हामी खाएर बाँच्न, जिउन तथा मर्नको लागि मात्र आएका होइनौं, हामीले हाम्रो जीवनको उद्देश्य मनन गर्नु पर्दछ । हामी यस ब्रह्माण्डमा किन आएका छौं, हामीले किन मोक्ष प्राप्त गर्नु पर्ने हुन्छ यी सबै तत्वहरूलाई हामीले बुझ्नु पर्दछ । भगवद्भक्तहरू जहिले पनि भगवत्प्रेममा मग्न रहन्छन् । उनीहरू अवसरदाता, आनन्ददाता र मुक्तिदाता मुकुन्द वा कृष्णसँगको प्रगाढ प्रेममा मग्न रहने हुदा उहाँहरूलाई भोग लगाएर मात्र प्रसाद ग्रहण गर्ने गर्दछन् । यस्ता भक्तहरूले बेग्ला-बेग्लै भक्तिका साधनको माध्यमहरू : यथा श्रवण, कीर्तन, स्मरण, अर्चनाव्दारा उहाँको यज्ञ गर्दछन् । यसरी भक्तहरूको समस्त पापमयी कल्मषहरू हट्दछन् । तर अन्य व्यक्तिहरू जस्ले आफ्नो इन्द्रिय तृप्तिको लागि मात्र भोजन बनाउँदछन् उनीहरूले सबै किसिमका पापहरू संग्रहित गर्दै जान्छन् ।

**अन्नाभ्दवन्ति भूतानि पर्जन्यादन्नसंभवः ।**
**यज्ञाभ्दवति पर्जन्यो यज्ञः कर्मसमुभ्दवः ॥ १४ ॥**
**कर्म ब्रह्योभ्दवं विद्धि ब्रह्याक्षरसमुभ्दवम् ।**
**तस्मात्सर्वगतं ब्रह्य नित्यं यज्ञे प्रतिष्ठितम् ॥ १५ ॥**

सबै प्राणीहरू अन्नबाट उत्पन्न हुन्छन, अन्नको उत्पत्ति वृष्टि (वर्षा) बाट हुन्छ, वृष्टि यज्ञबाट हुन्छ तथा यज्ञ विहित कर्महरू (निष्काम, लोकोपकार कर्म) बाट उत्पन्न हुन्छ । कर्म समुदायलाई तिमीले वेदबाट उत्पन्न भएको र वेदलाई अविनाशी परमात्माबाट उत्पन्न भएको बुझ । यसबाट यो सिद्ध हुन्छ कि सर्वव्यापी परम अक्षर (क्षय नहुने) परमात्मा सधैं नै यज्ञमा प्रतिष्ठित वा रहनु हुन्छ ।

अन्नबाट पोषण तथा बल प्राप्त हुने हुँदा मनुष्य लगायत संसारका सबै जीवहरू अन्नबाट उत्पन्न हुन्छन् । यसैबाट उनीहरूको उत्पत्ति, बृद्धि तथा पोषण हुन्छ । खाद्य पदार्थको उत्पत्तिको कारण जल हो तथा जलको प्रमुख श्रोत वृष्टि नै



हो । जलको वृष्टि इन्द्रदेव तथा उहाँका मातहतका वरूणदेव, अग्निदेव, वायुदेव आदिको पूजनबाट सम्भव हुन्छ । अनि वृष्टि भने मानिसहरूद्वारा गरिएका निष्काम कर्म, लोकको उपकारको लागि वेद लगायतका शास्त्रोक्त विधिहरूद्वारा गरिएका यज्ञहरूबाट हुन्छ । वेद कर्मादेशको संहिता पनि हो । वेदको विधि बमोजिम नगरिएका कुनै पनि कर्म सफल मानिदैनन् । वेद परब्रह्म परमात्माको स्वासबाट निस्केको दिव्य वाणी हो । यस्ता यज्ञहरूमा नै सर्वव्यापी परब्रह्म परमात्मा प्रतिष्ठित हुनुहुन्छ । वैदिक प्रावधान बमोजिम मानिसहरूले यस संसारमा आफ्ना इच्छाहरू पुरा गर्न सक्दछन् तर बृद्धावस्था त्याग गरेर, परमात्मासँगको सानिध्यता बढाएर, उहाँमा समर्पित भएर र लोकको हितको लागि उपकारका कार्यहरू गरेर मात्र यो सम्भव हुन्छ ।

**एवं प्रवर्तितं चक्रं नानुवर्तयतीह यः ।**
**अधायुरिन्द्रियारामो मोघं पार्थ स जीवति ॥ १६ ॥**

हे पार्थ ! जुन पुरुष यस लोकमा यस प्रकार परम्परादेखि प्रचलित सृष्टिचक्रको अनुकुल चल्दैन अर्थात आफ्नो कर्तव्यको पालन गर्दैन, ऊ इन्द्रियहरूद्वारा विभिन्न भोगहरूमा रमण गर्ने वा घुम्ने पापायु पुरूष व्यर्थ नै बाँच्दछ ।

यहाँ श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ कि जो मानिसले जीवनमा वेदद्वारा स्थापित यज्ञ—चक्रको पालना गर्दैन्, प्रकृतिको चक्र बमोजिम चल्दैन भने उस्ले निश्चय नै पापमय जीवन व्यतीत गर्दछ । यस्ता मानिसहरू मात्र इन्द्रियहरूको सन्तुष्टिको लागि व्यर्थमा जीवित रहन्छन् । प्रकृतिको नियमानुसार यो मानव जीवन विशेष रूपले आत्म-साक्षात्कारको लागि पाइएको छ । यसलाई कर्मयोग, ज्ञानयोग तथा भक्तियोगको माध्यमहरूमध्ये कुनै एक विधिले प्राप्त गर्न सकिन्छ । योगमा संलग्न यस्ता योगीहरूलाई कुनै पनि यज्ञ गरिरहनु पर्ने आवश्यकता हुन्न किनकि उनीहरू बृद्ध अवस्था पार गरी इन्द्रिय तृप्ति गर्ने कार्यभन्दा माथि उठिसकेका हुन्छन् । यसप्रकार उनीहरू पाप—पुण्यको चक्रभन्दा टाढा हुन्छन् । इन्द्रिय तृप्तिमा लागेकाहरूको लागि मात्र शुद्धि गर्नु पर्ने आवश्यकता हुन्छ । संसारको सम्पन्नता परमेश्वरको योजना बमोजिम चल्दछ । विषयमुख इन्द्रियहरूका भोगहरू प्रति आकर्षित व्यक्तिहरूले पापले भरिएको जीवन यापन गर्नु पर्दछ ।

**यस्त्वात्मरतिरेव स्यादात्मतृप्तश्र्च मानवः ।**
**आत्मन्येव च संतुष्टस्तस्य कार्य न विद्यते ॥ १७ ॥**

तर जो व्यक्ति आत्मामा नै रमण गर्नेवाला छ र आत्मा मै तृप्त हुन्छ तथा आत्मा मै सन्तुष्टि प्राप्त गर्दछ भने उस्को लागि कुनै कर्तव्य रहन्न ।

आत्मा भनेको सबैभन्दा ठूलो सत्य हो । जो व्यक्तिले आत्मामै आनन्द लिन्छ तथा जस्को जीवन आत्म–साक्षात्कारयुक्त छ र जो आफैमा पूर्णरूपले सन्तुष्ट रहन्छ त्यस्तोको लागि कुनै गर्न बाँकि कर्तव्य रहँदैन । जो व्यक्ति आत्म-साक्षात्कार भई आत्मा तथा परमात्मा बीचको अन्योनाश्रित सम्बन्धको बारेमा ज्ञान प्राप्त गरी सो कार्यमा संलग्न भइरहन्छ भने भगवत कृपाको कारणले उसका कार्यहरू स्वयं प्रकाशित हुने गर्दछन् । उस्लाई वैदिक विधि-विधानको पालना गर्नुपर्ने कुनै आवश्यकता रहन्न । किनकि यस्तो व्यक्तिले कुनै पनि भौतिक कामना र अभिरूचि राख्दैन । यस्तो व्यक्ति लाखौं, करोडौंमा एउटा पाइन्छ । तसर्थ हामीले आफ्ना निर्धारित कर्महरू, कर्तव्यहरू गर्दै आत्म उन्मुख हुनु पर्दछ ।

**नैव तस्य कृतेनार्थो नाकृतेनेह कश्र्चन ।**
**न चास्य सर्वभूतेषु कश्रि्चदर्थव्यपाश्रयः ॥ १८ ॥**

त्यस्तो महापुरूष जस्लाई आत्मज्ञान भइसकेको छ त्यस्ता महानुभावहरूले यस विश्वमा न त कुनै कर्म गर्ने प्रयोजन हुन्छ र न कर्महरू नगर्नुमा नै कुनै प्रयोजन हुन्छ । तथा सम्पूर्ण प्राणीहरूसँग पनि उहाँको अलिकति पनि स्वार्थको सम्बन्ध रहेको हुन्न ।

यसरी आत्मस्वरूपको ज्ञान भएको व्यक्तिले कृष्णभावनाभावित कर्म गर्नु बाहेक अन्य कर्म गर्नु आवश्यक छैन । उस्ले यस संसार तथा ईश्वर बीचको सम्बन्धलाई बुझिसकेको हुन्छ । श्रीकृष्णको सेवा भक्तिमा उस्ले जे-जे गर्दछ त्यही नै उस्को लागि पर्याप्त हुन्छ । ऊ सामान्य व्यक्तिहरूभन्दा बेग्लै हुन्छ । हामी जस्तो सांसारिक सुखमा रूमलिरहेका व्यक्तिहरूलाई लागु हुने नियम, विधि-विधानहरू उसलाई लागु हुँदैन । जस्ले ईश्वर नै प्राप्त गरिसकेको छ भने उस्लाई निष्काम कर्महरू गर्नु बाहेक अन्य कर्महरू गर्ने आवश्यकता नै रहेन भनी बुझ्दा बेस हुन्छ ।

**तस्मादसक्तः सततं कार्यं कर्म समाचर ।**
**असक्तो ह्याचरन्कर्म परमाप्नोति पूरूषः ॥ १९ ॥**

त्यस कारण तिमी सधैं आसक्तिबाट रहित भएर सधैं कर्तव्य कर्मलाई राम्रोगरी गरी राख । किनकि आसक्तिबाट रहित भएर कर्म गर्दा-गर्दै मनुष्यले परमात्मालाई प्राप्त गर्दछ ।



मानिसले कर्मफल प्रतिको आसक्तिलाई त्यागेर कर्म गर्नु आफ्नो कर्तव्य हो भन्ने ठानी सधैं कर्महरू गरिरहनु पर्दछ । यसरी अनासक्त भएर कर्म गर्दा परमात्मा प्राप्त हुनुहुन्छ । भक्तको लागि श्रीभगवान्को प्राप्ति नै परम महत्त्वपूर्ण उपलब्धी हो । तसर्थ जो व्यक्तिले समुचित पथ प्रदर्शन पाएर तथा आफूबाट गरिएका कर्महरूको फलको लागि आसक्ति नराखेर श्रीकृष्णको लागि कृष्णभावनामृतमा कर्महरू सम्पादन गर्दछ उस्ले निश्चित रूपमा उसले जीवनको लक्ष प्राप्ति गर्दछ । यहाँ अर्जुनलाई भनिरहिएको छ कि उनीले कृष्णको लागि कुरूक्षेत्रको युद्धभूमिमा युद्ध गरून् । गरिएका कर्महरूको फलको आशा नगरी युद्ध गर्नु उनको कर्तव्य तथा कर्म भएको अर्थमा अर्जुनलाई यसर्थ भनिएको छ । तसर्थ कृष्णभावनामृतमा रहेर गरिएका समस्त कर्महरू पाप तथा पुण्यको सीमाभन्दा टाढा हुन्छन् । श्रीकृष्णमा समर्पित व्यक्तिले मात्र उहाँकै लागि निष्काम कार्यहरू गर्नु पर्दछ ।

**कर्मणैव हि संसिद्धिमास्थिता जनकादयः ।**
**लोकसंग्रहमेवापि संपश्यन्कर्तुमर्हसि ॥ २० ॥**

जनक आदि ज्ञानीहरूले पनि आसक्ति रहित कर्महरू गरेरै परमसिद्धि प्राप्त गर्नु भएको थियो । तसर्थ तथा लोक संग्रहलाई हेरेर पनि तिमी कर्म गर्ने नै योग्य छौं अर्थात् तिमीले कर्म गर्नु नै उचित हुन्छ ।

जनक लगायतका ज्ञानीहरू, जस्लाई आत्मसाक्षात्कार भइसकेको थियो, ले नियत कर्महरू अर्थात आसक्ति रहित भई कर्महरू गरेरै परम सिद्धि प्राप्त गर्नु भएको थियो । जीवनलाई उस्को लक्ष्यमा पुर्याउन हामीले कर्तव्य तथा कर्महरू गर्नु पर्दछ । त्यस्तै सामान्य मानिसहरूलाई शिक्षा दिन पनि तिमीले कर्म गर्नु पर्दछ भनी श्रीकृष्णले सम्झाउँदै हुनुहुन्छ । राजा जनक स्वरूपसिद्ध राजर्षी थिए । यस्ता व्यक्तिले वेदनुमोदित यज्ञ वा अनुष्ठान गर्नु पर्ने आवश्यकता थिएन । तथापि उनीले सामान्यजनहरूको समक्ष समस्त नियमित कर्महरू गर्दथे । उनी सीताको पिता, रामको ससुरा थिए । उनी भगवान्को महान भक्त भएको कारणले उनीमा दिव्यता थियो । उनी मिथिलाको राजा भएकोले आफ्ना प्रजाहरूलाई शिक्षा दिन नियमित कर्महरू गर्दथे । त्यस्तै भगवान् श्रीकृष्ण तथा उनको परम सखा अर्जुनलाई कुरूक्षेत्रमा युद्ध गर्नु पर्ने आवश्यकता थिएन । उहाँले अन्य विधिहरूबाट पनि कौरवहरूलाई तह लाउन सक्नुहुन्थ्यो । तर कुनै समस्याको टुङ्गो सत्परामर्शव्दारा नभएको खण्डमा युद्ध

अनिवार्य हुन्छ भन्ने शिक्षा जनतालाई दिनु पर्ने थियो । यसबाट जनतालाई नियत कर्महरू गर्दै कसरी बस्नु पर्दछ, कार्यहरू वा कर्महरू गर्नु पर्दछ भन्ने पनि सँग-सँगै शिक्षा दिन खोजिएको छ ।

**यद्यदाचरति श्रेष्ठस्तत्तदेवेतरो जनः ।**
**स यत्पमाणं कुरूते लोकस्तदनुवर्तते ॥ २१ ॥**

श्रेष्ठ व्यक्तिले जे–जे आचरण गर्दछन्, अन्य व्यक्तिहरूले पनि त्यस्तै-त्यस्तै आचरण गर्दछन् । उनले जे कुरो प्रमाण गर्दछन् समस्त मानिसको समुदायले पनि त्यसै बमोजिम गर्ने अनुसरण गर्न थाल्दछन् ।

महान पुरूषहरूद्वारा आदर्शपूर्ण अनुसरणीय गरिएका कार्यहरूको सबैजसो लोकजनले सीको गर्दछन् । पथ प्रदर्शक एउटा हुन्छ त्यस्को अनुसरणकर्ता पछि-पछि लागेर त्यही संस्कार र व्यवहारहरूलाई पछ्याइरहेका हुन्छन् । मनु संहिता मानव समाजको लागि अनुसरणीय आदर्श ग्रन्थ हो । यस्का आदर्श नीति नियमहरूको पालनाले समाजलाई उन्नत बनाउँछ । आध्यात्ममा आस्था राख्नेहरूले यस्कै अनुसरण गर्ने गरेका छन् । सामान्यतया पुत्रले पिताको तथा आफ्ना गुरूहरूको, जनताले राजाको अनुसरण गरिरहेका हुन्छन् । एउटा बालकले आमा, परिवारका सदस्यहरू, साथीहरू आदिको सीको गरिरहेको हुन्छ ।

**न मे पार्थास्ति कर्तव्यं त्रिषु लोकेषु किंचन ।**
**नानवाप्तमवाप्तव्यं वर्त एव च कर्मणि ॥ २२ ॥**

हे अर्जुन ! यी तीनै लोकहरूमा मेरो न त केही कर्तव्य छ र नै कुनै प्राप्त गर्ने योग्य वस्तु मलाई अप्राप्त छ, तापनि म कर्म गर्न मै तत्पर रहन्छु ।

श्री कृष्ण परमात्मा हुनुहुन्छ । उहाँ जस्तो ठूलो नेता को छ र विश्वमा ! उहाँ सर्वशक्तिमान, सर्वव्यापी हुनुहुन्छ । उहाँको शरीर सामान्य जीव जस्तो छैन । उहाँको शरीर तथा आत्मामा भिन्नता हुँदैन । उहाँका सबै इन्द्रियहरू दिव्य छन् । उहाँको एक इन्द्रियले अरू इन्द्रियका कामहरू पनि सम्पादन गर्न सक्दछ । उहाँभन्दा उच्च कोही छैन् तथा उहाँ समान पनि कोही छैन । उहाँले योग शक्तिले बहूरूप धारण गर्नसक्नु हुन्छ । तसर्थ उहाँका सबै कार्यहरू प्राकृतिक क्रमानुसार हुने गर्दछन् । उहाँमा प्रत्येक वस्तु आफुमा ऐश्वर्यपूर्ण र पूर्ण सत्यले ओतप्रोत भएको हुन्छ । तसर्थ उहाँले कुनै कर्तव्य गर्नु पर्ने आवश्यकता छैन । तर जस्लाई तीनै लोकहरूमा केही



प्राप्त गर्ने इच्छा नै छैन त्यस्तो व्यक्तिको लागि यस संसारमा केही कर्तव्य नै हुँदैन । तथापि भगवान् श्रीकृष्णले शास्त्रोचित लोक कल्याणकारी कार्यहरू गर्दै आउनु भएको छ । तर हाम्रा त थुप्रै कर्तव्यहरू छन्, हामीले पनि ती कर्तव्यहरू त गर्नै पर्दछ भनी शिक्षा प्रदान यस श्लोकबाट गरिएको छ ।

**यदि ह्यहं न वर्तेयं जातु कर्मण्यतन्द्रितः ।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः ॥ २३ ॥**

किनकि हे पार्थ ! यदि कही म सावधानीपूर्वक कर्म गर्नमा तत्पर नहोऊ भने ठूलो क्षति वा हानी हुनेछ, किनकि मनुष्यहरूले सबै प्रकारले मेरै मार्ग पछ्याउँदछन् ।

समाजमा आध्यात्मिक जीवनको उन्नतिको लागि तथा शान्तिमय वातावरणको लागि केही परम्परागत रीति-थिति, परम्परा, आचरण, विधानहरू तथा कुलाचार हुने गर्दछन् । तिनीहरूलाई त्यस समाजमा बस्ने प्रत्येक सभ्य नेतृत्वदायी व्यक्तिले अनुसरण गरी निर्धारित कर्तव्यहरू पूरा गर्दछ । अनि त्यस्कै अनुसरण वा सीको अन्य सामान्य व्यक्तिहरूले गर्न थाल्दछन् । श्रीकृष्णमा दिव्यशक्ति रहेबाट उहाँलाई यस्ता परम्परा अनुरूप हिँडनु पर्ने बाध्यता थिएन । तर उहाँले मानिसहरूको कल्याणको लागि ज्ञान दिने काम गर्नु भयो, धर्मको स्थापना गर्ने अभिभारा बोक्नु भयो । उहाँले पनि यस्ता नीति-नियम तथा कुल परम्पराहरूको पालना गर्नु हुन्छ । उहाँ यस लोकमा ठूलो प्रमाण हुनुहुन्छ । उहाँले यसो नगरेको खण्डमा सामान्य व्यक्तिहरूले उहाँकै सीको गर्न खोज्दछन् र समाजमा मानिसहरूले पनि कर्महरू नगर्नाले अव्यवस्था सृजना भई अशान्तिको वातावरण फैलिई अधर्म बढन जान्छ तथा फलतः श्रृष्टिको क्रम बिथोलिन्छ ।

**उत्सीदेयुरिमे लोका न कुर्यां कर्म चेदहम् ।**
**संकरस्य च कर्ता स्यामुपहन्यामिमाः प्रजाः ॥ २४ ॥**

त्यसकारण यदि मैले कर्म गरिन भने यी सबै मनुष्यहरू नष्ट-भ्रष्ट हुन जालान र म अवाञ्छित जन समुदाय (वर्णसंकर) उत्पन्न गर्ने कारण बन्न पुग्नेछु तथा यी सबै प्रजाहरूलाई नष्ट गर्ने बन्न पुग्छु ।

आध्यात्मिक प्रगतिको पथमा हिँडिरहेको शान्त तथा सुव्यवस्थित समाजका विद्यमान प्रथा, कुल परम्परा तथा बिधानहरूको पालना गर्नु आवश्यक हुन्छ । यदि

तिनीहरूको पालना गरिएन भने उहाँले सृजना वा श्रृष्टि गर्नु भएको समाज तथा अन्ततः संसारले नै विनाशको बाटो लिन्छ। परिवारले वर्णसंकरको बाटो लिने प्रबल सम्भावना हुन्छ। श्रृष्टिकर्ताले नै कर्म गर्न छाडे भने अरू सामान्य मानिसले त्यस्को सीको गरी कर्म गर्न छाड्ने छन्। अनि यसको दोष उहाँमा पनि आइपुग्नेछ। त्यस्तो नहोस् भन्नको लागि लोकमा धर्मको विधि-विधान बिथोलिन थाल्यो भने उहाँले यस लोकमा अवतरण गरी धर्म स्थापना गर्नु भएको छ। तसर्थ हामीले उहाँबाट प्राप्त उपदेशहरू तथा ज्ञानहरूको सही सदुपयोग गर्नु पर्दछ।

**सक्ताः कर्मण्यविव्दांसो यथा कुर्वन्ति भारत।**
**कुर्याव्दिव्दांस्तथासक्तविश्रचिकीर्षुर्लोकसंग्रहम् ॥ २५ ॥**

हे भारत ! कर्ममा आसक्ति भएका अज्ञानीजनहरूले जसरी कर्म गर्दछन्, आसक्तिरहित विद्वान्ले पनि लोकसंग्रह गर्ने उद्देश्य बोकी त्यस्तै प्रकारले कर्म गरोस्।

जसरी अज्ञानीहरूले फलको आसक्तिले कार्य गर्दछन्, त्यस्तै विद्वान्हरूले आसक्ति रहित भएर अन्य मनुष्यहरूलाई सही मार्गमा लिएर जान कर्महरू गरून भनी श्रीकृष्णले भन्दै हुनुहुन्छ। यहाँ कृष्णभावनाभावित मानिसहरू तथा कृष्णभावनाहीन व्यक्तिहरू बीचको भावना एवं इच्छामा भिन्नता रहेको देखाइएको छ। कृष्णभावनाभावित व्यक्तिहरूले यस्तो कार्य गर्दैनन् जो कृष्णभावनाको विपरीत होस्। सन्यासी रूप धारण गरी निर्धारित कर्महरू नगर्नेहरूको लागि यो श्लोकको आसय उपयुक्त छ। उनीहरूले कर्मफल प्रति आसक्ति नराखी कर्महरू गर्नु पर्दछ भनी सन्देश दिइएको छ। बरू उनीहरूले कार्य नगर्ने प्रवृति त्याग गरी कृष्णभावनाको विकासमा सहायक सिद्ध हुने कार्यहरू गर्दछन्। उनीहरूले अज्ञानी मानिस जस्तो भौतिक कार्यहरूमा आसक्त हुने कार्यहरू गर्दैनन्। एउटाले श्रीकृष्णको तुष्टीको लागि कार्य गर्दछ भने अर्कोले आफ्नो इन्द्रियतृप्तिको लागि गर्दछ। कृष्णभावनाभावित व्यक्तिहरूले कृष्णद्वारा संरचित यस लोकको हितको लागि कार्यहरू सम्पादन गर्दछन् जो वर्तमान तथा भविष्यका पुस्ताहरूलाई अनुकरणीय होस्।

**नबुद्धिभेदं जनयेदज्ञानां कर्मसङ्गिनाम्।**
**जोषयेत्सर्वकर्माणि विद्वान्युक्तः समाचरन् ॥ २६ ॥**

परमात्माको स्वरूपमा अटल भई स्थित भएका ज्ञानी मानिसहरूले, शास्त्रविहित कर्महरूमा आसक्ति भएका अज्ञानीहरूको बुद्धिमा भ्रम वा कर्महरूमा अश्रद्धा उत्पन्न



गर्नु हुन्न। बरू आफैले पनि शास्त्रसम्मत वा निर्देशित सबै कर्महरू राम्ररी गर्दै उनीहरूबाट पनि त्यस्तै गराउन।

वेदहरूमा व्यवस्थित यज्ञ तथा अनुष्ठानहरूमा भौतिक कार्यहरूको लागि जे-जे निर्देशित गरिएका छन् ती सबै हाम्रो जीवनको परमलक्ष्य श्रीकृष्णलाई जान्नको लागि हो। तर बद्धजीव मानिसहरू मात्र आफ्नो इन्द्रियतृप्तिको लागि कर्म गर्दछन्। कर्मफल प्रति आसक्ति नराखी निष्काम कर्म गर्नेहरूले आफ्ना इन्द्रियतृप्तिहरूलाई कृष्णभावनामृतमा अटल रूपमा लगाई मोक्ष प्राप्त गर्दछन्। यसरी कृष्णभावनाभावित ज्ञानी व्यक्तिहरूले शास्त्र अनुरूपका कर्महरू नगर्ने अज्ञानीहरूको बुद्धिमा भ्रम वा कर्महरूमा विभिन्न कारणहरूले अश्रद्धा सृजना गर्ने दुष्कर्म गर्न हुन्न्। बरू तिनीहरूलाई इन्द्रियतृप्तिको आसक्तिलाई त्याग्ने, कर्मको फलप्रतिको आसक्तिलाई पन्छाई सत्कर्म गर्ने, सद्आचरण कायम राख्ने तथा कसरी सबै कर्मफल श्रीकृष्णको सेवामा अर्पित गर्नु पर्दछ भनी ज्ञान संचार गर्नु पर्दछ। ज्ञानीहरूले त्यस्ता व्यक्तिहरूलाई त्यस्तो कार्य तिमीहरूबाट हुन सक्दैन, तिमीहरूले गर्न सक्दैनौ, न गर भनी कदापि भ्रमित गर्न हुँदैन।

**प्रकृतेः क्रियमाणानि गुणैः कर्माणि सर्वशः।**
**अहङ्कारविमूढात्मा कर्ताहमिति मन्यते ॥ २७ ॥**

वास्तवमा सबै कर्महरू सबै प्रकारले प्रकृतिका गुणहरूद्वारा गरिन्छ तैपनि जस्को अन्तःकरण अहङ्कारले मोहित भइरहेको छ त्यस्तो अज्ञानीले 'मै नै कर्ता हुँ' यस्तो मान्दछ।

अज्ञानी मानिसहरू अहङ्कारको प्रभावले मोहग्रस्त भएर आफुलाई समस्त कर्महरूको कर्ता ठान्दछन्। उनीहरूलाई यो थाहा छैन वा थाहा भए पनि बिर्सिन्छन् कि भगवान्लाई ऋषिकेश भनिन्छ। उहाँ त शरीरका सम्पूर्ण इन्द्रियहरूको मालिक हुनुहुन्छ। तर वास्तवमा मानिसहरूद्वारा गरिने समस्त कर्महरू प्रकृतिका तीनै गुणहरूद्वारा सम्पन्न गरिन्छन्। कहिले-काही त मानिसले नचाहँदा न चाहँदै पनि प्रकृतिले त्यही मानिसद्वारा त्यो कर्म गराउँदछ। यस जगतमा भौतिक चेतनावाला व्यक्ति अहङ्कारयुक्त भई आफुलाई नै सबै कर्महरूको कर्ता हुँ भनी ठान्दछ। उस्ले यो बिर्सिन्छ कि उस्को शरीरको रचना समेत प्रकृतिद्वारा भएको हो र प्रकृतिले परमात्माको अध्यक्षतामा आफ्ना कार्यहरू सम्पादन गर्ने गर्दछ। आफ्नो इन्द्रियतृप्तिको क्रममा उस्ले आफ्ना इन्द्रियहरूलाई निरन्तर उपयोगमा ल्याइरहेको हुन्छ। यसरी ऊ मोहग्रस्त भएर श्रीकृष्णसँग रहेको आफ्नो सम्बन्ध नै भुल्दछ।

**तत्त्ववित्तु महाबाहो गुणकर्मविभागयोः ।**
**गुणा गुणेषु वर्तन्त इति मत्वा न सज्जते ॥ २८ ॥**

तर हे महाबाहो ! गुणविभाग र कर्मविभागको तत्वहरूलाई जान्ने ज्ञानयोगीले सम्पूर्ण जीवात्माहरू गुण नै गुणहरूमा कर्म वा व्यवहार गरिरहेका छन् भन्ने जानेर उनीहरू ती विषयवस्तुमा आसक्त हुन्नन् ।

ज्ञानयोगीहरूलाई यो ज्ञान हुन्छ कि उनीहरू सच्चितानन्द भगवान् कृष्णका अंश हुन् । उनीहरूलाई यो अवगत हुन्छ कि प्राकृतिक तत्वहरूद्वारा निर्मित यस शरीरद्वारा मानिसहरूले सात्विक, राजसी तथा तामसी गुणहरू बमोजिम नै सबै कर्महरू गरिरहेका हुन्छन् । तर हाल उनीहरू कुनै कारणले गर्दा मात्र देहात्मबुध्दिमा फसेका छन् । यस अवस्थाबाट उन्मुक्ति पाउन श्रीकृष्णमा सेवारत रहनु पर्दछ । यस प्रकार उनीहरूले आफ्ना समस्त कर्महरू भगवान्कै सेवामा अर्थात कृष्णभावनामृतका कार्यहरूमा समर्पित गर्दछन् । उनीहरूले परिस्थितिजन्य तथा अस्थायी भौतिक इन्द्रिय सम्बन्धी कार्यहरूमा अनाशक्ति कायम राख्दछन् । उनीहरूलाई यो पनि ज्ञान हुन्छ कि यी समस्त भौतिक दशाहरू भगवान्को नियन्त्रणमा छन् । तीबाट उनीहरू विचलित हुँदैनन्, बरू तिनीहरूलाई भगवत्कृपा ठान्दछन् ।

**प्रकृतेर्गुणसम्मूढाः सज्जन्ते गुणकर्मसु ।**
**तानकृत्स्नविदो मन्दान्कृत्स्नविन्न विचालयेत् ॥ २९ ॥**

प्रकृतिजन्य गुणहरूमा अन्यन्त धेरै मोहित भएका मनुष्यहरू गुणहरू तथा कर्महरूमा आसक्त रहन्छन्, ती पूर्णतया नसम्झिने मन्दबुद्धि अज्ञानीहरूलाई पूर्णतया जान्ने ज्ञानीहरूले विचलित गर्न हुन्न ।

मायाका गुणहरूले मोहग्रस्त भएर अज्ञानी पुरुषहरू पूर्णतया भौतिक कार्यहरूमा संलग्न रहेर तिनमै आसक्त हुन पुग्दछन् । तिनीहरूका त्यस्ता स्वभाव तथा कार्यहरू उनीहरूमा प्रकृतिका गुण तत्वहरूको कारणले हुने गर्दछ भन्ने ज्ञानको अभावको कारणले तिनीहरूका कर्महरू अधम वा नीच परिणामदायक हुन्छन् । तर ज्ञानीहरूलाई प्राकृतिक गुणहरू अनुरूप मानिसहरूले कर्महरू गर्ने गर्दछन् भन्ने व्यहोरा अवगत भएको हुन्छ तसर्थ उनीहरूले हठात् अज्ञानीहरूलाई विचलित पार्नु हुन्न । त्यस्ता व्यक्तिहरू तिनै भौतिक उपाधिहरूको लागि यदाकदा सामाजिक तथा परोपकारी



कार्यहरूमा समेत संलग्न हुन सक्दछन् । त्यस्ताका लागि अध्यात्मिक बोध मिथ्या हुन्छ । तसर्थ ज्ञानी महापुरूषहरूले त्यस्ता अज्ञानतामा रूमलिएकाहरूलाई विचलित नगरेरै शान्तभावले कृष्णभावनामृतको ज्ञान क्रमशः संचार गर्नु उपयुक्त हुन्छ ।

**मयि सर्वाणि कर्माणि संन्यस्याध्यात्मचेतसा ।**
**निराशीर्निर्ममो भूत्वा युध्यस्व विगतज्वरः ॥ ३० ॥**

म अन्तर्यामी परमात्मामा लागेको चित्तद्वारा सम्पूर्ण कर्महरूलाई ममा अर्पण गरेर आशारहित, ममतारहित र सन्ताप (दुःख) रहित भएर तिमी युद्ध गर ।

तिमीले म अन्तर्यामी परमात्मालाई आफ्नो मनमा राखेर आफ्ना सबै कर्महरूलाई मलाई अर्पण गर्दै लाभलाई परित्याग गरेर, सबै किसिमका स्वामित्वलाई छाडेर तथा सुख-दुःखलाई त्याग गरेर युद्ध गर । यहाँ श्रीकृष्णले जीवको स्वाभाविक स्थितिको बारेमा दर्शाउनु भएको छ । जीवहरूले उहाँमा आश्रित भएर स्वधर्मको पालना गर्नु पर्दछ । तर यस मार्गमा बाधा बिरोधहरू आउन सक्दछन् । यहाँ त भगवान् स्वयंले अर्जुनलाई युद्ध गर्ने आज्ञा दिइरहनु भएको छ । परमेश्वरको इच्छाको लागि मनुष्यले सर्वस्व नै बली चढाउनु पर्दछ तथा आफ्नो कुनै पनि स्वामित्व नजनाइकन स्वधर्मको पालना गर्नु पर्दछ ।

**ये मे मतमिदं नित्यमनुतिष्ठन्ति मानवाः ।**
**श्रद्धावन्तोऽनसूयन्तो मुच्यन्ते तेऽपि कर्मभिः ॥ ३१ ॥**

जुनसुकै मानिस दोषदृष्टिबाट रहित र श्रद्धायुक्त भएर मेरो यस मतलाई सधैँ अनुसरण गर्दछ, ती पनि सबै कर्महरूबाट मुक्त हुन्छन् ।

जीवनको अर्थ मोक्ष प्राप्ति नै हो अर्थात् जन्म-मरणको चक्करबाट मुक्ति पाउनु । निष्काम कर्मपछिको अघिल्लो पाइला त्यही हुन्छ । जस्ले आफ्नो सुख-दुःख प्रति उदासिन रहेर तथा सत्कर्महरू गर्दै कर्मफललाई म मा अर्पण गर्दछ उसले मोक्ष प्राप्त गर्दछ । जन्म-मृत्युको चक्करबाट छुटी कर्मबन्धनबाट मुक्ति पाउँछ । उहाँका उपदेशहरूमा वैदिक ज्ञान रहेका हुन्छन् । ती सबै अपवादरहित शाश्वत सत्य हुन् । मानिसहरूले कसै प्रति कुनै पनि किसिमको ईर्ष्या नगरी श्री कृष्णप्रति दृढ विश्वास राखी उहाँका आदेशहरूको पालना गर्नु पर्दछ । जुन मानिसले उहाँ माथि अपार श्रद्धा

राखी उहाँका उपदेशहरूलाई अनुसरण गर्दछ उस्ले सबै कर्मबन्धनहरूबाट मुक्ति पाउँछ ।

**ये त्वेतदभ्यसूयन्तो नानुतिष्ठन्ति मे मतम् ।**
**सर्वज्ञानविमूढांस्तान्विद्धि नष्टानचेतसः ॥ ३२ ॥**

तर जो मनुष्यले मलाई दोषारोपण गर्दै मेरो यस मत अनुसार चल्दैन, ती मूर्खहरूलाई तिमीले सम्पूर्ण ज्ञानहरूमा मोहित र नष्ट नै भएको ठान ।

केही घमण्डी व्यक्तिहरू यस्ता हुन्छन् कि सबै कार्यहरू उनीहरू आफैले गरेको भनी ठान्दछन् । तिनीहरू आफ्नो भूठो ज्ञानमा नै मस्त रहन्छन् । आफ्नो ज्ञान तथा धनको अगाडि अरूलाई केही ठान्दैनन् । उनीहरूलाई यो ज्ञान हुन्न कि श्रृष्टिकर्ता, पालनकर्ता तथा संहारक सबै श्रीकृष्ण हुनुहुन्छ । त्यस्ता घमण्डी व्यक्तिहरूले आफ्ना कर्महरू श्रीकृष्णलाई समर्पित गर्दैनन् । ती सबै भौतिकवादी दुनियाको उज्यालोमा मोहित भएर इन्द्रियतृप्तिमा अल्भिरहेका हुन्छन् । त्यस्ता घमण्डी व्यक्तिहरूलाई तिमीले मूर्ख ठानेर उनीहरूबाट टाढै बस्नु किनकि तिनीहरूको जीवन नष्ट हुने तर्फ अग्रसर भइरहेको हुन्छ ।

**सदृशं चेष्टते स्वस्याः प्रकृतेर्ज्ञानवानपि ।**
**प्रकृतिं यान्ति भूतानि निग्रहः किं करिष्यति ॥ ३३ ॥**

सबै प्राणीहरू प्रकृतिका गुणहरू अनुरूप चल्दछन्, अर्थात आफ्नो स्वभावको वशमा रही कर्म गर्दछन् । ज्ञानवान्हरूले पनि आफ्ना प्रकृति अनुसार नै चेष्टा वा कोशिस गर्दछन् । तसर्थ यस्तो अवस्थामा कसैको हठी स्वभावले के नै गर्छ र ।

संसारमा रहेका मानिसहरू सबैका आ-आफ्ना स्वभावहरू हुन्छन् । चाहे ऊ सतोगुण, रजोगुण वा तमोगुणको किन नहोस् । जो जुन गुणको हुन्छ उस्मा त्यस्तै स्वभाव रहेको हुन्छ । यहाँसम्म कि ज्ञानीजनहरू, जस्लाई तत्व ज्ञान प्राप्ति भइसकेको हुन्छ, ले पनि आफ्नै स्वभाव र प्रकृति बमोजिम नै काम गर्दछन् । यस्तो अवस्थामा कसैले कसैको स्वभावमा परिवर्तन ल्याउन खोज्नु वा उस्को प्राकृतिक स्वभावको विपरीत काम गराउनु खोजेमा त्यो निरर्थक हुन्छ ।

**इन्द्रियस्येन्द्रियस्यार्थे रागद्वेषौ व्यवस्थितौ ।**
**तयोर्न वशमागगच्छेत्तौ ह्यस्य परिपन्थिनौ ॥ ३४ ॥**



इन्द्रिय-इन्द्रियको अर्थमा अर्थात प्रत्येक इन्द्रियको विषयमा राग तथा द्वेष लुकेर बसेका हुन्छन् । मनुष्यहरू ती दुवै दोषहरूको वशमा हुनु हुन्न किनकि ती दुबै तिनीहरूको कल्याण मार्गमा बिघ्न तेर्स्याउने ठूला शत्रुहरू हुन् ।

प्रत्येक इन्द्रिय तथा तिनका विषय सम्बन्धित राग तथा द्वेषलाई वशमा राख्ने निश्चित नियम तथा प्रकृयाहरू हुन्छन् । इन्द्रियहरूको सुख तथा दुःखका विभिन्न भावहरूमा मानिस फस्न हुँदैन । तर सामान्यतया मनुष्यहरू राग तथा द्वेषबाट वशिभूत हुन्छन् । ती राग तथा द्वेष कल्याणकारी भगवान्सँगको आत्मसाक्षात्कारको मार्गका ठूला शत्रुहरू हुन् । हाम्रा शरीरहरूमा रहेका इन्द्रियहरू आ-आफ्ना इच्छाहरू पूर्ति गरी तृप्ति प्राप्त गर्न गराउन सधैँजसो सक्रिय रहेका हुन्छन् । काम, क्रोध, लोभ, मद आदिलाई हामीले आफ्नो शत्रु मान्नु पर्दछ । तिनीहरूलाई निश्चित सीमामा सीमित राख्नको लागि श्रीकृष्णभावनाभावित भई वैदिक व्यवस्था बमोजिमका आदर्श, नीति र नियमहरूको पालना गरी आचरणमा शुद्धता ल्याउनु आवश्यक हुन्छ । अनियन्त्रित इन्द्रिय भोगमा लाग्नाले भौतिक बन्धन सृजना हुने गर्दछ । जस्तैः शास्त्रीय आदेश बमोजिम आफ्नी श्रीमतीसँगको यौन सम्बन्धलाई स्वीकृति प्रदान गरिएता पनि अन्य स्त्रीसँगको यौन सम्बन्धलाई वर्जित गरिएको छ । अन्य स्त्रीहरूलाई आमाको दर्जामा राखेर हेर्नु पर्दछ । तर मानिसको स्वभाव आफ्नी श्रीमती हुँदा-हुँदै पनि अन्य स्त्रीसँग यौन सम्वन्ध कायम गर्दछ र ऊ परमात्मासँगको आत्मसाक्षात्कारको बाटोको बाधक बन्न पुग्दछ । सम्पूर्ण जीवनकालसम्म मानिसले त्यस्ता इन्द्रियहरूलाई वशमा राख्न साह्रै कठिन छ । मानिसको जीवनमा ती इन्द्रियहरूमध्ये कुनै न कुनै सल्बलाई रहेको हुन्छ । तर साधकले सचेत रही तिनीहरूलाई वशमा राख्नु पर्दछ । यसरी भौतिक सुख प्राप्तिमा राग तथा सो सुख नपाएमा द्वेष राख्न हुन्न् । यिनीहरूले आत्मसाक्षात्कार हुन दिन्नन् ।

**श्रेयान्स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात् ।**
**स्वधर्मे निधनं श्रेयः परधर्मो भयावहः ॥ ३५ ॥**

राम्ररी आचरणमा ल्याइएका अरूको धर्मका गुण पक्षहरूभन्दा गुण नभएता पनि आफ्नै धर्म अतिउत्तम हुन्छ । आफ्नो धर्ममा त मर्नु पनि कल्याणकारक हुन्छ र अरूको धर्मले हामीलाई भय वा डर दिने गर्दछ ।

अन्य धर्म अपनाई त्यस्को सबल गुण पक्षहरू हेरेर त्यस धर्मका नियतकर्महरू विधिपूर्वक गर्नुभन्दा आफ्नो धर्म अन्तर्गतका नियतकर्महरू दोषैपूर्ण भए पनि तिनमा रहेर सम्पन्न गर्नु श्रेयस्कर हुन्छ । हरेक व्यक्तिले आफ्नो कर्तव्य, कर्म तथा धर्म नै गर्नु पर्दछ । आफ्नै धर्म अन्तर्गतका नियतकर्महरू गर्दै मरेको साह्रै बेश हुन्छ, अरूको धर्ममा जानुभन्दा । त्यस मानिसको लागि अन्य धर्मको मार्ग अन्ततः साह्रै भयावह साबित हुन्छ । यस संसारमा चाहे भौतिक वा आध्यात्मिक कर्म किन न होस् ती कर्महरूलाई मनुष्यले आफ्नो धर्म अन्तर्गतका विधि-विधान बमोजिम मृत्युपर्यन्त गर्नु पर्दछ । अन्य धर्मका निर्धारित कर्महरू प्रति आकर्षित हुनु हुँदैन, तिनको अनुकरण गर्नु हुँदैन । जस्तै सतोगुणी ब्राह्मणले जो हिंसा गर्दैन उस्ले रजोगुणीको हिंसक धर्म प्रति आकर्षित नभई तिनको अनुसरण गर्न हुँदैन । तर परमेश्वरको सेवा, ध्यानमा समर्पित मानिसले भने जगतको आवश्यकतालाई पुरा गर्न धर्म परिवर्तन गर्न मिल्दछ । त्यस्ता व्यक्तिहरू ब्रह्मज्ञानी हुने गर्दछन् । जस्तै : विश्वामित्र मूलतया क्षत्रिय थिए तर पछि गएर उनी असल कर्महरू गर्नाले ब्राह्मण भए । त्यस्तै परशुराम मूलतया ब्राह्मण थिए तर पछि गएर जगत हितको लागि पृथ्वीबाट जनसङ्ख्याको बोझ हलुङ्गो गर्न उनीले क्षेत्रियहरूको नियतकर्ममा रही युद्ध गर्नाले उनी क्षेत्रिय भए ।

अर्जुन उवाच (भन्दछन्)

**अथ केन प्रयुक्तोऽयं पापं चरति पूरूषः ।**
**अनिच्छन्नपि वार्ष्णेय बलादिव नियोजितः ॥ ३६ ॥**

अर्जुनले भने : हे कृष्ण ! उसो भए यो मनुष्यले आफैले नचाहँदा-नचाहँदै पनि जबर्जस्ती लगाए झैँ कसबाट प्रेरित भएर पाप गर्ने आचरण गर्दछ ?

यहाँ अर्जुनले श्रीकृष्णलाई सोध्दैछन् कि मनुष्यले नचाहेर पनि किन पापकर्म गर्न प्रेरित हुन्छ ? यस्तो लागिरहेछ कि उस्लाई बलपूर्वक पापकर्ममा लगाइरहिएको छ । जिवात्मा परमेश्वरको अंश भएकोले मूलरूपमा ऊ आध्यात्मिक, शुद्ध तथा सम्पूर्ण भौतिक कल्मषहरूबाट मुक्त रहन्छ । यसर्थ स्वाभाविक रूपमा ऊ भौतिक जगतको पापकर्महरू प्रति उन्मुख हुँदैन । तर माया, मोह, मद, क्रोध तथा लोभको संसर्गमा आएर जीवले विभिन्न किसिमका पापकर्महरू इच्छा तथा अनिच्छाले गर्न थाल्दछ । तसर्थ अर्जुनले यहाँ सोध्नु कि किन र कसरी मानिसहरूले कसबाट प्रेरित भएर पापकर्महरू गर्दछन् ? साह्रै नै सापेक्ष तथा उपयुक्त देखिन्छ ।



श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**काम एष क्रोध एष रजोगुणसमुम्द्वः ।**
**महाशनो महापाप्मा विघ्येनमिह वैरिणम् ॥ ३७ ॥**

श्रीभगवान् भन्नुहुन्छ : रजोगुणबाट उत्पन्न भएको यो काम नै क्रोध हो, यो धेरै नै खाने अर्थात् भोगहरूबाट कहिल्यै नअघाउने र ठूलो पापी हुन्छ, यसैलाई नै तिमीले यस विषयमा वैरी वा शत्रु जान ।

भगवान्ले अर्जुनलाई सम्झाउदै भन्नु हुन्छ कि यसको कारण रजोगुण संसर्गबाट उत्पन्न काम, क्रोध, लोभ, मोहको भाव र व्यवहार हो । कामको अपेक्षा पुरा नहुँदा यस्ले क्रोधको रूप धारण गर्दछ । यही नै यस संसारको सर्वभक्षी पापी शत्रु हो । जब जीवात्मा भौतिक श्रृष्टिहरूको संसर्गमा आउँदछ, त्यसबेलामा त्यस प्रतिको आसक्तिलाई रोकेर श्रीकृष्ण प्रेम प्रतिको शाश्वत सत्यको संगति पाएमा उस्को काम सत्काममा परिवर्तन हुन्छ । तर त्यस्को विपरीत काम पुरा नभएमा त्यो क्रोधमा परिवर्तन भई सो बमोजिम कामहरू गर्दा ऊ यस संसारमा निरन्तर जन्म–मरणमा रहिरहन्छ । क्रोध तमोगुणको प्रदर्शित रूप हो । मानिसले भगवत भक्ति गरेर रजोगुणबाट सतोगुण तर्फ लाग्नु उचित हुन्छ न कि तमोगुण तर्फ ओह्रालो लाग्नु । क्रोधको जननी कामलाई हामीले भगवत प्रेम वा भक्तिमा लगाउन सक्यौं भने काम तथा क्रोध पनि आध्यात्मिक र कल्याणकारी भइदिन्छ । जसरी हनुमानले रामको आदेश बमोजिम क्रोध प्रकट गर्दै श्रीलङ्कामा आगो लगाए । तर त्यो क्रोध भगवत भक्तिको अनुकूल थियो । त्यसरी नै यहाँ भगवान्ले अर्जुनलाई युद्ध गर भन्दै हुनुहुन्छ ।

**धूमेनाव्रियते वन्हिर्यथादर्शो मलेन च ।**
**यथोल्बेनावृतो गर्भस्तथा तेनेदमावृतम् ॥ ३८ ॥**

जसरी धूँवाबाट आगो र मैलोबाट ऐना छोपिन्छ तथा गर्भाशयद्वारा भ्रुण ढाकिन्छ, त्यस्तै नै त्यस कामव्दारा यो ज्ञान ढाकिएको हुन्छ ।

यहाँ जीवात्मा माथि आवरणको तीन किसिमको वर्णन गरिएको छ । जस्ले शुद्ध चेतनालाई धमिलो बनाई दिन्छ । ती आवरणहरू विभिन्न स्वरूपमा हुने गर्दछन् । काम, क्रोध आदि विकारहरूले हामी भित्र रहेको ज्ञानलाई लुकाएर राख्दछन् ।

यसरी हामीमा उत्पन्न हुने कमीहरूले हामीलाई पापकर्म गर्न विवश तुल्याउँछ । तसर्थ श्रीकृष्णले तिनीहरूलाई शत्रु भन्नु हुन्छ । यसलाई आगो तथा त्यसबाट निस्कने धूँवासँग तुलना गरिएको छ । जहाँ धूँवा हुन्छ त्यहाँ पक्का नै आगो रहेको हुन्छ । तर आगो प्रारम्भमा ती धूँवाबाट छोपिएको हुन्छ । ऐनामा धूलोको उदाहरण भने मनरूपी ऐनामा भौतिक विषयवस्तुको आसक्ति रूपी धूलो हो । यसलाई आध्यात्मिक विधिद्वारा स्वच्छ गरिन्छ । तेश्रो गर्भाशयको आवरणले ढाकिएको भ्रूणको उदाहरण दिई असहाय अवस्थामा छोपिएर रहेको गर्भ भित्रको शिशुसँग तुलना गरिएको छ । इन्द्रियतृप्ति सम्बन्धी कामले ऐनालाई धूलो भई, आगोलाई धूँवा भई र भ्रुणलाई गर्भाशय भई ढाकेको छ । धूँवा हटेमा आगो प्रज्वलित हुन्छ र शक्तिमा रूपान्तरित हुन्छ । धूलो हटेमा ऐना मार्फत् समाजको सही वस्तुस्थिति ज्ञान भइरहन्छ तथा गर्भाशयबाट भ्रूण निस्केमा परिवारमा अनि समाजमा एक नयाँ शक्तिको उदय हुन्छ ।

**आवृतं ज्ञानमेतेन ज्ञानिनो नित्यवैरिणा ।**
**कामरूपेण कौन्तेय दुष्पूरेणानलेन च ॥ ३९ ॥**

र हे अर्जुन ! यो आगोको समान कहिल्यै पूर्ण नहुने कामरूप ज्ञानीहरूको नित्य वैरीहरूद्वारा मनुष्यहरूको ज्ञान छोपिएको हुन्छ ।

यस प्रकार ज्ञानमय जीवात्माको शुद्ध चेतना तथा ज्ञान कामभोगको बैरी आगोद्वारा ढाकिएको हुन्छ जो कहिल्यै सन्तुष्ट हुँदैन र आगो जस्तो बलिरहेको हुन्छ । मनुस्मृतिमा उल्लेख भए बमोजिम यस संसारमा जतिसुकै विषय भोग गरे पनि कामले कहिल्यै पनि पूर्ण सन्तुष्टी पाएको हुँदैन । संसारका जीवहरूमा ज-जस्ले भगवान्को आज्ञाहरूको उल्लङ्घन गरेका हुन्छन् तिनले मैथून वा काम वासनाको बन्दिगृहको जीवनयापन गर्नु पर्ने हुन्छ । भौतिक विषयवस्तु प्रतिको आसक्ति पनि यस्कै दोश्रो सन्दर्भ हो । इन्द्रियतृप्तिको आधारमा भौतिक सभ्यताको विकास भन्नुको तात्पर्य हो यस संसारमा जीवात्माको बन्धनको अवधिलाई बृद्धि गर्नु । तसर्थ यो काम अज्ञानताको मूल श्रोत हो जसव्दारा जीवात्मालाई यस संसारमा राखिन्छ । यसरी इन्द्रियतृप्ति इन्द्रियभोक्ताको लागि चरम् शत्रु साबित हुन्छ ।

**इन्द्रियाणि मनो बुद्धिरस्याधिष्ठानमुच्यते ।**
**एतैर्विमोहयत्येष ज्ञानमावृत्य देहिनम् ॥ ४० ॥**



इन्द्रियहरू, मन तथा बुद्धि–यी सबै यसको (कामको) बासस्थान हो भनिन्छ । यस कामले यी मन, बुद्धि र इन्द्रियहरूद्वारा नै ज्ञानलाई छोपेर जीवात्मालाई मोहित गर्दछ ।

यस कामले मानिसहरूको वास्तविक ज्ञानलाई ढाक्दछ । श्रीकृष्णले अर्जुनलाई काम रूपी शत्रु माथि आफ्नो आधिपत्य कायम गरी कहाँ–कहाँ बस्दछ भन्ने बारेमा जानकारी दिँदै हुनुहुन्छ । इन्द्रियहरू, मन तथा बुद्धिले शरीर रूपी घरमा बसेर घरलाई नै समाप्त पार्न लागेका हुन्छन् । काम पुरा नभएमा क्रोध तथा क्रमशः त्यस प्रतिको सशक्त लोभ उत्पन्न हुन्छ । ज्ञानको अभावमा रहेको बद्धजीवलाई यो शत्रुको बासस्थान अवगत भएमा उस्लाई तिनीहरूको नियन्त्रण गर्न सजिलो होस् भनेर ज्ञान दिइएको हो । यहाँ मनलाई समस्त इन्द्रियहरूको कार्यकलापको केन्द्रबिन्दुको रूपमा दर्शाइएको छ । यसैबाट इन्द्रियतृप्तिको इच्छा जागृत हुने गर्दछ । त्यसरी नै इन्द्रियहरू पनि कामको शरणस्थलहरू हुन् । यी दुबैमा तादात्म कायम गरी कृयाकलापहरू सञ्चालन गर्ने गराउने बुद्धि हो जो राजधानीको रूपमा रहेको हुन्छ ।

**तस्मात्त्वमिन्द्रियाण्यादौ नियम्य भरतर्षभ ।**
**पाप्मानं प्रजहि ह्येनं ज्ञानविज्ञाननाशनम् ॥ ४१ ॥**

त्यसकारण हे अर्जुन ! तिमीले पहिला इन्द्रियहरूलाई वशमा गरेर यी ज्ञान तथा विज्ञानलाई नाश गर्ने महान पापी कामलाई अवश्य नै बलपूर्वक मारी देऊ ।

ज्ञान तथा आत्म-साक्षात्कारको अबरोधक यस काम र क्रोध रूपी शत्रुलाई तिमीले इन्द्रियहरूलाई वशमा गरेर पहिला बध गर भनी अर्जुनलाई श्रीकृष्णले शिक्षित गर्दै हुनुहुन्छ । काम र क्रोधले हामी भित्रको ज्ञानमा शङ्का-उपशङ्का जन्माउँछ । ज्ञानको अर्थ हो आत्म तथा अनात्म बीचको भेदलाई छुट्याई शरीर आत्मा होइन भन्ने बुझ्नु हो । अनि विज्ञान भन्नाले आत्माको स्वाभाविक स्थिति तथा परमात्मासंग आत्माको सम्बन्धको बारेमा उल्लेखित बिशेष ज्ञान हो । प्रत्येक जीव भगवान्को भिन्न अंश हो र ऊ स्वयम्मा पूर्ण रहेता पनि भगवान्को सेवाको लागि हो । यस विषयलाई तिमीले अङ्गिकार गर ।

**इन्द्रियाणि पराण्याहुरिन्द्रियेभ्यः परं मनः ।**
**मनसस्तु परा बुद्धिर्यो बुद्धेः परतस्तु सः ॥ ४२ ॥**

इन्द्रियहरू स्थूल शरीरभन्दा श्रेष्ठ रहेका छन् जो बलवान र सूक्ष्म रूपमा रहेका छन् भनिन्छ, अनि इन्द्रियहरूभन्दा टाढा मन हुन्छ, मनभन्दा टाढा बुद्धि हुन्छ र जो बुद्धिभन्दा पनि धेरै नै टाढा रहेको छ त्यो आत्मा हो ।

श्रीकृष्ण भन्नुहुन्छ हाम्रो शरीरभन्दा श्रेष्ठ हाम्रा इन्द्रियहरू छन् । इन्द्रियहरू शरीरमा विद्यमान रहेर विभिन्न कर्महरू गर्ने गर्दछन् । तसर्थ यिनीहरूलाई कर्मेन्द्रिय भनिन्छ । शरीरमा रहेर विभिन्न कार्यहरू सम्पादन गर्ने गराउने हुँदा यिनीहरू शरीर भन्दा श्रेष्ठ मानिन्छन् । इन्द्रियहरूले शरीरलाई वशमा गर्ने भएकोले ती श्रेष्ठ भए । अनि मनले इन्द्रियहरूलाई नियन्त्रण गर्ने भएकोले मन इन्द्रियभन्दा श्रेष्ठ हुन्छ । मन शरीर स्थिर रहेको अवस्थामा, मौन रहेको अवस्थामा र यहाँसम्म कि सपनामा समेत सक्रिय रहन्छ । तसर्थ यो इन्द्रियभन्दा केही टाढा रहेको हुन्छ । तर मनभन्दा माथि बुद्धिको संकल्पशक्ति रहेको हुन्छ तथा बुद्धिभन्दा माथि वा बेग्लै आत्मा रहेको हुन्छ ।

**एवं बुद्धे परं बुद्ध्वा संस्तभ्यात्मानमात्मना ।**
**जहि शत्रुं महाबाहो कामरूपं दुरासदम् ॥ ४३ ॥**

यस प्रकार बुद्धिभन्दा श्रेष्ठ अर्थात सूक्ष्म, बलवान र अत्यन्त श्रेष्ठ आत्मालाई चिनेर र बुद्धिव्दारा मनलाई वशमा गरेर हे महाबाहो ! तिमी यस कामरूपी दुर्जय (जीत्न कठिन) शत्रुलाई मारी हाल ।

श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ कि तिमीले आफुलाई भौतिक इन्द्रियहरू, मन तथा बुद्धिभन्दा श्रेष्ठ ठान र अनि बुद्धिले मनलाई स्थिर गरी आध्यात्मिक शक्तिद्वारा यस जित्न गाह्रो रहेको काम रूपी शत्रुलाई जीत । भौतिक जीवनमा मानिस काम तथा प्रकृतिमा प्रभुत्व कायम गर्न प्रयासरत रहन्छ । यही प्रभुत्व तथा इन्द्रियतृप्ति मानिसको परम शत्रु हुन् । कसैले परमेश्वरसँगको तादात्म कायम गरेको छ भने उस्ले इन्द्रिय, मन तथा बुद्धिमा नियन्त्रण कायम गर्न सक्छ । यसको लागि आफ्ना नियतकर्महरू गर्दै श्रीकृष्णभावनामृत आफुमा क्रमशः विकसित गर्दै दिव्य स्थिति प्राप्त गर्न सकिन्छ । यस प्रकार हाम्रो बुद्धिले हामीलाई आत्माको नजिक पुर्याउन सक्दछ ।



अथ चतुऽर्थोध्यायः

## चतुर्थ अध्याय
## ज्ञानकर्मसन्यासयोग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**इमं विवस्वते योगं प्रोक्तवानहमव्ययम् ।**
**विवस्वान्मनवे प्राह मनुरिक्ष्वाकवऽब्रवीत् ॥ १ ॥**

श्रीभगवान्ले भन्नुभयो : मैले यस अविनाशी योगको बारेमा सूर्यलाई भनेथे, सूर्यले त्यस बारेमा आफ्नो छोरो वैवस्वत मनुलाई भने र मनुले आफ्नो छोरा राजा इक्ष्वाकुलाई भने ।

श्रीकृष्ण एक परम योगी हुनुहुन्छ । उहाँलाई श्रृष्टिको आदिदेखि अन्तसम्मका सबै विषयहरू अवगत रहेको हुन्छ । योग भनेको ज्ञानयोग तथा कर्मयोग हो, ती कहिल्यै नाश हुँदैनन् । उहाँले यस श्लोकमा योगको श्रोतको बारेमा जानकारी दिनु भएको छ । श्रीभगवान्ले भन्नुभयो कि मैले यस अविनाशी योग विद्याको उपदेशलाई सृष्टिको आरम्भमा विवस्वान (सूर्यदेव) लाई दिएको थिए, विवस्वानले यो उपदेश आफ्नो छोरा मनुष्यहरूलाई जन्मदिने वैवस्वत मनुलाई र मनुले यो उपदेश आफ्नो छोरा इक्ष्वाकुलाई दिए । यसबाट भगवद्गीताको इतिहास निक्कै नै प्राचीन रहेको प्रमाणित हुन्छ । प्रारम्भमा यसलाई सूर्यको मार्फत लोकका राज्यहरूका राजाहरूलाई दिइयो । राजाहरू आफ्ना प्रजाहरूको रक्षाको लागि भएकाले राजाहरूले यस्को ज्ञान प्राप्त गरी आफ्ना प्रजाहरूलाई सो ज्ञान दिएमा प्रजाहरूलाई कामरूपी बन्धनबाट मुक्त गर्न सकिन्छ भनी यसको पछाडिको उद्देश्य रहेको हो । मानव जीवनको उद्देश्य भगवान्सँगको आफ्नो शाश्वत सम्बन्धको ज्ञानलाई विकास गर्नु हो । तसर्थ समस्त लोकहरूका राजाहरूको यो दायित्व हो कि उनीहरूले आफ्ना प्रजाहरूलाई समुचित शिक्षा, संस्कार, संस्कृति तथा भक्तिका पाठहरू सिकाउन । सूर्यदेव सबै लोकहरूको राजा हुनुहुन्छ तथा सबै लोकहरूमा उहाँ कै शासन चल्दछ । उहाँले सबै लोकहरूमा प्रकास तथा ताप प्रदान गर्नुहुन्छ । उहाँको पहुँच तथा नियन्त्रण यसरी सबै लोकहरूमा रहेको छ । तसर्थ विवस्वान सूर्यदेवलाई भगवान्ले आफ्नो पहिलो शिष्यको रूपमा छनौट गर्नु भएको हो । त्रेतायुगको प्रारम्भमा परमेश्वर सम्बन्धी यस विज्ञानको उपदेश सूर्यदेवले वैवस्वत मनुलाई दिनुभयो तथा मनुष्यहरूको जनक मनुले यस

विज्ञानको ज्ञान आफ्नो छोरा इक्ष्वाकुलाई दिए । इक्ष्वाकु यस पृथ्वी लोकको शासक तथा रघुकुलका पूर्वज थिए, यसै कुलमा भगवान् रामले जन्म लिनु भएको हो ।

**एवं परम्पराप्राप्तमिमं राजर्षयो विदुः ।**
**स कालेनेह महता योगो नष्टः परंतप ॥ २ ॥**

हे परन्तप अर्जुन ! यस प्रकार गुरू-शिष्य परम्पराले प्राप्त यस योगलाई राजर्षिहरूले विधिपूर्वक बुझे, तर समयको प्रभावमा त्यो परम श्रेष्ठ विज्ञान सहितको ज्ञान यस संसारमा लुप्त रह्यो अर्थात प्रायः छिन्न-भिन्न भएर नष्ट हुन पुग्यो ।

राजर्षिहरूले बुझेका यो योग सम्बन्धी ज्ञान गुरू-शिष्य परम्परा बमोजिम प्रत्येक कालमा सञ्चारित हुन सकेन । समय-समयमा आसुरी प्रवृति हाबी भएर गुरू-शिष्य परम्परा कायम रहन सकेन । प्रारम्भमा यो योगशिक्षाको सञ्चारको क्रम चलिरहेको थियो । तर केही कालपछि यो सञ्चारित हुन सकेन । यो ज्ञान श्रीकृष्णबाट सूर्य र सूर्यबाट हुँदै गीताको माध्यमले हामीसम्म आयो । तर बीचमा यस्तो पनि समय आयो कि यो ज्ञानयोग पृथ्वीबाट हरायो । ज्ञान बढाउनाले बढदछ तथा घटाउनाले समाप्तितर्फ जान्छ । यसै प्रकारले यो गीताको सार आज हामी समक्ष पुगेको छ ।

**स एवायं मया तेऽद्य योगः प्रोक्तः पुरातनः ।**
**भक्तोऽसि मे सखा चेति रहस्यं ह्येतदुत्तमम् ॥ ३ ॥**

तिमी मेरो भक्त र प्रिय साथी हौ, त्यसैले यो पुरातन योगको बारेमा आज मैले तिमीलाई सुनाएको छु, किनकि यो बडो उत्तम रहस्य हो अर्थात गुप्त राख्ने योग्य विषय हो ।

श्रीकृष्ण भन्दै हुनुहुन्छ कि आज मद्वारा त्यही प्राचीन योग (आत्माको परमात्मासँग मिलनको विज्ञान) तिमीलाई भनिरहेको छुँ, किनकि तिमी मेरो भक्त तथा प्रिय मित्र पनि हौँ, त्यसकारण तिमीले नै यस उत्तम रहस्यलाई बुझ्न सक्छौ भन्ने मेरो विचार रहेको छ । भगवान्ले यो ज्ञान अर्जुनलाई दिनु पछाडिको कारण के छ भने अर्जुन उहाँको सखा तथा भक्त हुन् । उनमा सद्बुद्धि छ, असुर प्रवृतिको लेस मात्र पनि उनीमा छैन । यहाँ यस योगको ज्ञानलाई गुप्त राख्ने भनेको यस ज्ञानको सम्मान गर्दै यस्लाई सामान्य विद्या नसम्झियोस् भन्ने हो ।



अर्जुन उवाच (भन्दछन्)

**अपरं भवतो जन्म परं जन्म विवस्वतः ।**
**कथमेतद्विजानीयां त्वमादौ प्रोक्तवानिति ॥ ४ ॥**

अर्जुनले भनेः हजुरको जन्म त अर्वाचीन (यस आधुनिक समय)-अहिले हालको हो र सूर्यको जन्म त धेरै पुरानो हो अर्थात कल्पकै प्रारम्भमा भइसकेको थियो । त्यसकारण मैले यस कुरालाई कसरी बुझौँ कि हजुरले नै कल्पको प्रारम्भमा सूर्यलाई यो योगको बारेमा भन्नु भएको थियो ।

अर्जुनले स्पष्ट हुनको लागि भने कि सूर्यदेवको जन्म त श्रृष्टिको प्रारम्भमा भएको थियो र हजुरको जन्म त अहिले भएको हो, तब फेरि मैले कसरी सम्झौँ कि श्रृष्टिको आरम्भमा हजुरले यो उपदेश सूर्यलाई दिनु भएको थियो ? यहाँ अर्जुनले बुझ्न चाहँदैछन्, शंका गरिरहेको छैनन् । अर्जुन भगवान्को भक्त भएर पनि उहाँका कुरामा विश्वास नगरेको जस्तो बुझिन्छ । तर अर्जुनले यो स्पष्टता खोज्नु समस्त मानव जाती जस्ले उहाँ माथि विश्वास गर्दछन् तथा विश्वास गर्दैनन् हरूको लागि हो । देवकीको पुत्रको रूपमा जन्मनु भएको श्रीकृष्ण शाश्वत आदि पुरुष श्रीभगवान् हुनुहुन्छ भन्ने कुराको प्रमाणिकता अर्जुनले खोज्नु यस जगतमा श्रीकृष्णलाई भगवान्को रूपमा स्वीकार नगर्नेहरूको लागि उहाँबाट भनिए पछि स्पष्ट हुन्छ भनेर हो । श्री कृष्णद्वारा भनिए पछि यो मानव, दानव वा असुर सबैको लागि तथ्यगत प्रमाणको रूपमा रहनेछ जो सबै कालहरूमा उत्तिकै उपयुक्त ठहरिने छ । उहाँका भक्तजनले यो प्रमाणिकतालाई सदैव पूजा गर्ने छन् भने नास्तिकहरू जस्ले श्रीकृष्णलाई एउटा साधारण व्यक्ति ठान्दथे उनीहरूले पनि उहाँलाई अतिमानव, सच्चिदानन्द विग्रह, दिव्य, त्रिगुणातीत तथा दिक्काल (कुनै पनि आयाम) को प्रभावबाट मुक्त रहेको ठान्ने छन् ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**बहूनि मे व्यतीतानि जन्मानि तव चार्जुन ।**
**तान्यहं वेद सर्वाणि न त्वं वेत्थ परंतप ॥ ५ ॥**

श्री भगवान्ले भन्नुभयो : हे परंतप अर्जुन ! मेरो तथा तिम्रो अनेक जन्महरू भइसकेका छन् । ती सबैको बारेमा तिमी जान्दैनौ तर म ती सबै जन्महरूको बारेमा जान्दछु ।

प्राय:जसो श्रेष्ठ वैदिक विद्वान्हरूले श्री भगवान्को सच्चिदानन्द रूपलाई जान्दछन् । साथै उहाँका विशुद्ध अनन्य भक्तहरूलाई त उहाँको सधैँ दर्शन भइरहन्छ । वेदमा पनि भनिएको छ भगवान् अद्वैत (उहाँको शरीर तथा आत्मामा कुनै भिन्नता नभएको) भएता पनि उहाँ असङ्ख्य रूपमा प्रकट हुन सक्नुहुन्छ । शास्त्रहरू वा वेदको अध्ययनबाट मात्र उहाँको दर्शन मिल्दैन, उहाँको दर्शन पाउन विशुद्ध निष्काम कर्म गर्ने भक्त हुनु पर्दछ । भगवान् यस लोकमा जन्म लिँदा उहाँका पार्शद भक्तहरू पनि उहाँको सेवा गर्न तथा उहाँका कार्यहरूमा सघाऊ पुर्याउन सँग-सँगै जन्मलिई अवतरित भएका हुन्छन् । उहाँलाई हामीले साधारण मानिस भनी ठान्नु हुँदैन । यस श्लोकको आसयलाई बिश्लेषण गर्दा लाखौं वर्ष पहिले जब सूर्यदेव विवस्वान्लाई श्रीकृष्णले भगवद्‌गीताको प्रवचन दिनु भएको थियो त्यस समयमा अर्जुन पनि कुनै छुट्टै स्वरूपमा उपस्थित थिए । उहाँहरू दुई बीचको अन्तर हेर्ने हो भने भगवान्लाई सबै स्मरण छ अर्जुनलाई ती सबै विषयहरूमा केही पनि स्मरण छैन । परमेश्वर तथा अंशरूपी जीवात्मा बीचको यो पनि एउटा प्रमुख भिन्नता हो । ब्रह्मसंहितामा उहाँलाई अच्युत भनिएको छ । यसको अर्थ हो उहाँ यस जगतको भौतिक सम्पर्कमा रहेता पनि आफु तथा आफ्ना कृत्यहरूलाई कहिल्यै बिर्सिनु हुन्न् । अंशरूपी जीवात्माको शरीरको परिवर्तन सँगै उस्ले पूर्व जन्मका सबै कुराहरू बिर्सिनु पर्ने हुन्छ भने परमात्मालाई भने ती सबै स्मरण रहिरहन्छ । मनुष्यहरूको आत्मा तथा शरीरमा भिन्नता हुने गर्दछ । आत्मा एउटै रहिरहेता पनि शरीर भने परिवर्तन भइरहन्छ ।

**अजोऽपि सन्नव्ययात्मा भूतानामीश्र्वरोऽपि सन् ।**
**प्रकृतिं स्वामधिष्ठाय संभवाम्यात्ममायया ॥ ६ ॥**

म अजन्मा तथा मेरो अविनाशी स्वरूप हुँदा-हुँदै पनि तथा सबै जीवात्माहरूको ईश्वर (स्वामी) हुँदा-हुँदै पनि आफ्नो प्रकृति (अपरा, महा-माया) लाई अधीनमा राखेर आफ्नो योग-माया (पराशक्ति) ले म प्रकट हुन्छु ।

यस पृथ्वीमा जब-जब उहाँ अवतरित हुनुहुन्छ, उहाँ आफ्नो अन्तरंगा शक्तिले त्यही आदि शाश्वत शरीरमा आउनु हुन्छ । वास्तवमा उहाँ त नजन्मने तथा अविनाशी हुनुहुन्छ । यो कार्य उहाँको योगमाया शक्तिको प्रभावले हुने गर्दछ । उहाँको भौतिक शरीर क्षीण हुँदैन तर बालकबाट युवा, अनि युवाबाट तरूणावस्थामा पुगे पनि उहाँको बृद्ध अवस्था हुने गर्दैन । उहाँका शरीर तथा बुद्धि दुबै अक्षुण्ण रहन्छन् ।



यसरी उहाँ अजन्मा सच्चिदानन्द स्वरूपमा रहिरहनु हुन्छ । श्रीमद्‌भागवतमा पनि वर्णन गरिएको छ कि उहाँ आफ्नी आमा देवकीको सम्मुख नारायण रूपमा चार हातहरू तथा षड्‌ऐश्वर्यहरूले युक्त भएर प्रकट हुनु भएको थियो । उहाँ सबै जीवहरूको मालिक हुनुहुन्छ किनकि उहाँले यस संसारमा आउनु भई विभिन्न लीलाहरूमा अतिमानवीय तथा आश्चर्यजनक कार्यहरू सम्पादन गर्दै आउनु भएको छ । उहाँको निरन्तर त्यही परमसत्य रूप रहन्छ । उहाँको स्वरूप तथा आत्मामा वा उहाँका गुणहरू तथा शरीरमा कुनै भिन्नता छैन ।

**यदा यदा हि धर्मस्य ग्लानिर्भवति भारत ।**
**अभ्युत्थानमधर्मस्य तदात्मानं सृजाम्यहम् ॥ ७ ॥**

हे भारत ! जब-जब धर्मको हानि र अधर्मको बृद्धि हुन्छ, तब-तब नै म आफ्नो रूपको रचना गर्दछु अर्थात साकार रूपमा मानिसहरूको सामुन्ने प्रकट हुन्छु ।

यस लोकमा जब-जब धर्मको हानी वा लोप हुन थाल्दछ तथा अधर्मको प्रधानता कायम हुन थाल्दछ, त्यस अवस्थामा शाश्वत स्वरूप भगवान् स्वेच्छाले प्रकट हुनुहुन्छ । हरेक कालमा धर्मको नाश हुने गर्दछ । त्यस समयमा यो आवश्यक हुन्छ कि कोही आएर धर्मको रक्षा गरोस् । यसरी धर्म नाश हुन थालेपछि श्रीकृष्णले विभिन्न स्वरूप धारण गरेर यस लोकमा आउनु हुन्छ । धर्मका नियमहरू वेदमा उल्लेखित छन् । यदि ती नियमहरूको पालनामा कुनै त्रुटि देखापर्दछ भन्ने मानिसले अधर्म गर्न थाल्यो भन्ने स्पष्ट हुन्छ । वेद मूलतः ब्रह्माको हृदयबाट निसृत भई भगवान्द्वारा उच्चारित ग्रन्थ हो । तसर्थ धर्मका नियमहरू भगवान्का प्रत्यक्ष आदेशहरू हुन् । जीवात्माको सर्वोच्च धर्म भगवान्को शरणमा जानु हो । वैदिक नियमहरूको उद्देश्य जीवहरूलाई पूर्ण शरणागति तर्फ अग्रसर गराउनु हो । तर ती नियमहरू बमोजिमका कार्यहरू सम्पादन गर्दा जब-जब राक्षस वा असुरहरूद्वारा बिघ्न-बाधा सिर्जना गर्न थालिन्छ तब-तब भगवान् प्रकट हुनुहुन्छ । जस्तै द्वापर युगमा आसुरी प्रवृति अग्रगतिमा अधि बढिरहेको थियो र श्री कृष्ण पाल्नुभयो, वेदको समेत आड लिएर अहिंसाको बृद्धि तीब्र गतिमा भएकोले बुद्ध जन्मिनु भयो । त्यसरी नै रावण लगायत विभिन्न राक्षसहरूलाई बध गर्न त्रेतायुगमा श्रीरामको जन्म भएको थियो ।

**परित्राणाय साधुनां विनाशाय च दुष्कृताम् ।**
**धर्मसंस्थापनार्थाय संभवामि युगे युगे ॥ ८ ॥**

साधु पुरुषहरूको उद्धार गर्नको लागि, पापकर्म गर्नेहरूको विनाशको लागि र धर्मलाई राम्ररी स्थापना गर्नको लागि म युग-युगमा प्रकट हुने गर्दछु ।

सत्यको बाटो समाएर सत्कर्म गर्नु धर्म हो । यस्ता निष्काम कर्मीहरू साधु हुने गर्दछन् । अर्कोतर्फ दुष्कृत व्यक्तिहरू ती हुन जो असत्य बाटोमा रही दुष्कर्म, अपरोपकारी, उपद्रवी, मूर्ख तथा अधम कार्यहरू गर्ने गर्दछन् । ती व्यक्तिहरू जतिसुकै विद्वान् वा सुसंस्कृत किन न होउन वा सांसारिक शिक्षाबाट बिभूषित किन न होउन, यस्ता उपद्रवी एवं अधम व्यक्तिहरूले भगवान्को सेवा भक्तिमा लागेका निष्काम भक्तहरूलाई सत्कर्म गर्न नदिएर, धर्म तथा अनुशासन रक्षाका कार्यहरूमा बिघ्न-वाधा पुर्याउन थालेपछि त्यस्ता साधु व्यक्तिहरूलाई उद्धार गरी पुनः राम्रो गरी धर्मको स्थापना गर्न भगवान्ले आवश्यकता अनुसार विभिन्न युगहरूमा विभिन्न स्वरूपहरूमा जन्म लिनु हुन्छ । यसरी दुष्टहरूलाई भगवान्ले नाश गर्नु हुन्छ । दुष्टहरूमा आफ्नै सङ्गी सम्बन्धित वा नातागोतामा पर्ने पनि हुन सक्दछन् । जस्तैः भक्त प्रह्लादलाई उनकै पिता हिरण्यकशिपुबाट उद्धार गर्न भगवान्ले नरसिंहावतार लिनु पर्यो र माता देवकीलाई मामा कंसबाट जोगाई उद्धार गर्न श्रीकृष्ण भई उहाँ जन्मिनु भयो । आफ्ना निष्काम भक्तहरूको कष्ट, चिन्ता हरण गर्न उहाँले विभिन्न अवतारहरूः पुरुषावतार, गुणावतार, लीलावतार, शक्त्यावेश अवतार, मन्वन्तर अवतार तथा युगावतारमा जन्म लिनु भएको छ र भविष्यमा पनि आवश्यकता अनुसार लिन सक्नुहुन्छ । यसरी विभिन्न अवतारहरू लिनु भई आफ्ना निष्काम भक्तहरूको कष्ट हटाई उनीहरूलाई प्रसन्न तुल्याउने उहाँको लक्ष्य रहेको हुन्छ ।

**जन्म कर्म च मे दिव्यमेवं यो वेत्ति तत्त्वतः ।**
**त्यक्त्वा देहं पुनर्जन्म नैति मामेति सोऽर्जुन ॥ ९ ॥**

हे अर्जुन ! मेरो जन्म र कर्म दिव्य अर्थात निर्मल र अलौकिक छन्- यस प्रकार जुन मनुष्यले यसरी तत्वले मलाई जान्दछ, उस्ले शरीरलाई त्यागेपछि पुनर्जन्म प्राप्त गर्दैन, तर मलाई नै प्राप्त गर्दछ ।

यहाँ श्रीकृष्णले अर्जुनलाई कसरी परमेश्वरको सनातन धाम जाने भन्ने बारेमा मार्गदर्शन गर्दै हुनुहुन्छ । सो धाम जानको लागि उहाँको जन्म तथा उहाँबाट भए गरिएका कर्महरूको बारेमा जो कि दिव्य एवं साह्रै नै निर्मल र अलौकिक छन् जानकारी हासिल गरी उहाँप्रति समर्पित हुनुपर्दछ । उहाँको जन्म यस लोकको जन्म होइन अर्थात् यहाँको संस्कार, विधि, परम्परा बमोजिम भएको होइन, अलौकिक



हो । भगवान्को शरीरको दिव्य प्रकृति तथा उहाँका क्रियाकलापहरूलाई उहाँका भक्तहरूले सम्झे भने पनि भक्तको शरीरको अन्त भएपछि उस्ले भगवद्धाम प्राप्त गर्दछ । अनि उस्लाई यस संसारमा पुनः जन्म लिनु पर्ला भन्ने डरले पनि सताउँदैन । पुरुष बोधिनी उपनिषद्मा भनिएको छ कि ती एक भगवान् आफ्ना निष्काम भक्तहरूसँग अनेकानेक दिव्य रूपमा सधैँ सम्बन्धित हुनुहुन्छ । जस्ले भगवान् श्रीकृष्णलाई परब्रह्म ठान्दछ तथा सोही बमोजिम भक्तियुक्त कृत्यहरू गर्दछ उस्ले निश्चित रूपमा परमधाम प्राप्त गर्दछ । यस प्रकारले पनि उहाँको दिव्यसंगति भक्तले प्राप्त गर्दछ । श्वेताश्वतर उपनिषद्को ३.८ मा श्री भगवान्लाई पहिचान गर्नाले नै मनुष्यले जन्म तथा मृत्युबाट मुक्तिको पूर्ण अवस्था प्राप्त गर्दछ भनी उल्लेख गर्नु यहाँ सान्दर्भिक छ ।

**वीतरागभयक्रोधा मन्मया मामुपाश्रिताः ।**
**बहयो ज्ञानतपसा पूता मम्दावमागताः ॥ १० ॥**

पहिल्यै पनि ज-जस्को राग, भय र क्रोध सम्पूर्ण रूपले नष्ट भइसकेको थियो र जो म मा अनन्य प्रेमपूर्वक स्थित रहेका थिए, यसरी म मा आश्रित रहेका धेरैजसो भक्तहरूले उपर्युक्त ज्ञानरूप तपले पवित्र भएर मेरो स्वरूपलाई प्राप्त गरिसकेका छन् ।

प्राचीन कालमा पनि धेरैजसो भक्तहरू आसक्ति, भय तथा क्रोधलाई त्यागेर मेरो शरणमा आएर म मा तन्मय दिएर मेरो ज्ञानद्वारा पवित्र भइसकेका छन् । यसप्रकार ती सबैले मेरो दिव्यप्रेम प्राप्त गरेका थिए । विषय-वासनामा डुबेका बृद्ध मानिसहरूले श्री कृष्ण बारेको परम सत्यलाई जान्न सक्दैनन् । यस्ता भौतिकवादी व्यक्तिहरूले यो परम सत्यलाई परिकल्पना पनि गर्न सक्दैनन् कि यस्तो दिव्य शरीर पनि हुन्छ जो निर्मल, नित्य तथा सच्चिदानन्दमय रहेकोछ । मानिसहरूले ब्रह्मज्ञानी गुरूको निर्देशनमा भगवान्को शरण लिनु पर्दछ । मूलतया इन्द्रियहरूलाई संयमी बनाउनु पर्दछ । यसरी शरण लिएकाहरूले विगतमा परमधाम प्राप्त गरेका विभिन्न उदाहरणहरू छन् । जस्तैः भक्त प्रहलाद्, बालक ध्रुव तथा विभिन्न महर्षिहरू ।

**ये यथा मां प्रपद्यन्ते तांस्तथैव भजाम्यहम् ।**
**मम वर्त्मानुवर्तन्ते मनुष्याः पार्थ सर्वशः ॥ ११ ॥**

हे अर्जुन ! जुन भक्तले मलाई जसरी भज्दछन, म पनि उनीहरूलाई त्यसरी नै भज्दछु, किनकि सबै मनुष्यहरूले सबै प्रकारले मेरो नै मार्गको अनुसरण गर्दछन् ।

मनमा जुन भाव संगालेर मानिसहरूले मेरा उपदेशहरूको पालना गर्दछन्, त्यसै अनुसार मैले उनीहरूलाई फल दिन्छु । यस संसारका सबै मानिसहरूले मैले निर्देशित गरेको पथलाई पछ्याउँछन् । यस संसारमा विभिन्न भक्तहरूले श्रीकृष्णलाई विभिन्न स्वरूपमा खोजिरहेका हुन्छन् । कोहीले ब्रह्मज्योति तेजको रूपमा र कोहीले प्रत्येक अणुमा रही सर्वव्यापी परमात्माको रूपमा आदि । तर उहाँको पूर्ण साक्षात्कार त उहाँको पूर्ण भक्तले मात्र पाउँदछ । उहाँ त मूलतया अनुभूतिको विषय हुनुहुन्छ । श्रीकृष्णले आफ्ना भक्तहरूसँग उहाँहरूको चाहना बमोजिम नै जस्तै : परम स्वामीको रूपमा चाहना गर्नेलाई परम स्वामीकै रूपमा, साथीको रूपमा चाहना गर्नेलाई साथीको रूपमा, छोराको रूपमा चाहना गर्नेलाई छोराको रूपमा तथा प्रेमीको रूपमा चाहना गर्नेलाई प्रेमीको रूपमा व्यवहार गर्नु हुन्छ । ईश्वर भक्तिमा सकाम कर्मीहरूलाई उहाँले यज्ञेश्वरको रूपमा फल प्रदान गर्नु हुन्छ तथा योगशक्तिको खोजमा रहेका योगीहरूलाई उहाँले योगशक्ति प्रदान गर्नु हुन्छ ।

**काङ्क्षन्तः कर्मणां सिद्धिं यजन्त इह देवताः ।**
**क्षिप्रं हि मानुषे लोके सिद्धिर्भवति कर्मजा ॥ १२ ॥**

यस मनुष्य लोकमा कर्महरूको फल चाहने मानिसहरूले देवताहरूको पूजा गर्ने गर्दछन्, किनकि उनीहरूलाई कर्महरूबाट उत्पन्न हुने सिद्धि छिट्टै नै पाइन्छ ।

यस संसारमा मानिसहरू आफुले गरेका सकाम कर्महरूको सिद्धि चाहान्छन्, तसर्थ उनीहरूले विभिन्न देवताहरूको पूजा आराधना गर्दछन् । त्यस्ता व्यक्तिहरूले निस्सन्देह सकाम कर्महरूको फल शीघ्र प्राप्त गर्दछन् । ईश्वर एक छन् तर उहाँका अंशहरू अनेक छन् । श्रीकृष्ण नै एक मात्र परमेश्वर हुन र अन्य सबै देवताहरूले यस भौतिक जगतमा प्रबन्ध मिलाउन उनै ईश्वरबाट शक्ति प्राप्त गरेर अंशको रूपमा रहेका छन् । यी देवताहरू कहिल्यै पनि नारायण, विष्णु वा कृष्णको समान हुदैनन् । ईश्वर त भौतिक सृष्टि तथा कल्मषभन्दा टाढा हुनुहुन्छ । विभिन्न देवताहरूको पूजाले तुरुन्त फलहरूको प्राप्ति पनि हुने गर्दछ । यस संसारमा राम्रो कार्यहरू गर्ने मानिसलाई कस्तो देवता तुल्य रहेछ भनी सम्बोधन गर्ने गरिन्छ । देवताहरूद्वारा दिइएका वरदानहरू निर्धारित अवधिको लागि तथा भौतिक सुखहरू दिने हुने गर्दछन् । मानव समाजका बहुसंख्यक व्यक्तिहरू क्षणिक भौतिक सामग्रीहरू, शक्ति, सेवा पाउन लागिपरेका हुन्छन् । यसरी थोरै इन्द्रियसुख भोगको लागि र थोरै शक्ति प्राप्त गर्नको



लागि शक्तिप्रदत्त जीवहरूलाई देवता मानी उनीहरूले पूजा गरेको पाइन्छ । तर वास्तवमा राम्रो कर्म गरिएको छ भने फल पनि राम्रै प्राप्त हुन्छ ।

**चातुर्वर्ण्यं मया सृष्टं गुणकर्मविभागशः ।**
**तस्य कर्तारमपि मां विद्ध्यकर्तारमव्ययम् ॥ १३ ॥**

ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र-यी चार वर्णहरूका समूह, गुण तथा कर्महरू विभागपूर्वक मद्वारा रचिएका हुन् । यसप्रकार ती सृष्टि-रचनादि कर्महरूको कर्ता भएर पनि म अविनाशी परमेश्वरलाई तिमीले वास्तवमा अकर्ता नै ठान ।

यहाँ समाजमा रहेको परम सत्य तथ्यलाई श्रीकृष्णले बताउँदै हुनुहुन्छ । प्रकृतिका तीनै गुणहरू र ती गुणहरूसँग सम्बद्ध कर्महरूको आधारमा मैले मानव समाजमा चार विभागहरू रचना गरेको छु । यद्यपि म यस व्यवस्थाको स्रष्टा हुँ, तापनि म अव्यय अकर्ता हुँ भनी तिमी बुझ । संसारका प्रत्येक वस्तुको श्रष्टा, पालनकर्ता भगवान् हुन तथा संसारको प्रलयपछि पनि संसार उहाँमा नै समाविष्ट हुन्छ । तसर्थ वर्णाश्रम व्यवस्थाको श्रष्टा पनि उहाँ नै हो । मानिसहरूको विभाजन कर्म बमोजिम उहाँबाट गरिएको छ न कि जन्मको आधारमा । यस्मा पहिलो वर्णमा सतोगुणी, ज्ञानको विस्तार गर्नेहरू ब्राह्मण पर्दछन् । यिनीहरूलाई बुद्धिमान भनी स्थापित गरिएको छ । दोश्रो वर्णमा प्रशासक वर्ग, क्षेत्रको रक्षक जो रजोगुणी हुन्छन्, तिनीहरूलाई क्षत्रिय भनिन्छ । तेश्रो वर्गमा वैश्य वर्गकाहरूमा भने रजो तथा तमोगुणले मिश्रित हुन्छ । चौथो शुद्र वा श्रमिक वर्गका मानिसहरू तमोगुणी हुन्छन् । यी चारवटा विभागहरूको श्रष्टा उहाँ भएता पनि श्रीकृष्ण यी कुनै पनि वर्गमा पर्नु हुन्न् । मानव समाजलाई पशु समाजबाट माथि उठाउन यी वर्णाश्रमहरूको व्यवस्था गरिएको हो । सामान्यतया कुनै विशेष व्यक्तिको कुनै कार्य प्रतिको प्रवृतिको निर्धारण उस्ले आर्जन गरेको प्रकृतिको गुणद्वारा हुने गर्दछ । कृष्णभावनामृतमा श्रीकृष्णको बिभिन्न अंशहरू जस्तैः राम, नृसिंह, बराह अवतार आदिको ज्ञान सम्मिलित रहेको हुन्छ । यी सबै कार्यहरू सम्पादन गरे तापनि उहाँ परमेश्र्वरलाई अकर्ता नै ठान्नु भनेर उहाँले भन्नुको अर्थ मानिसहरूलाई स्वच्छन्दता प्रदान गर्न खोजिएको बुझिन्छ ।

**न मां कर्माणि लिम्पन्ति न मे कर्मफले स्पृहा ।**
**इति मां योऽभिजानाति कर्मभिर्न स बध्यते ॥ १४ ॥**

कर्महरूको फलमा मेरो स्पृहा (इच्छा) छैन, त्यसकारण मलाई कर्महरूले लिप्त गर्दैनन्-यसप्रकार जस्ले मलाई तत्वले चिन्दछ, ऊ पनि कर्महरूले बाँधिदैन ।

श्रीकृष्णलाई कर्मको प्रभाव नपर्ने र नै उहाँले कर्मफलकै आशा र कामना गर्नु हुन्छ । त्यसकारण उहाँको सम्बन्धमा जस्ले यस सत्यलाई जान्दछ, ऊ पनि कर्मफलको पाशोमा बाँधिदैन । भगवान् यस भौतिक जगतको श्रष्टा, पालक भएता पनि उहाँ यस जगतको कार्यहरूद्वारा प्रभावित हुनुहुन्न । हामीले हाम्रा कर्महरू पूर्ण लगनशील भई आफ्नो कर्तव्य ठानेर गर्नु पर्दछ । तर त्यस्मै आसक्तिपूर्ण भई बाँधिएर कर्मफलको आशामा बस्नु हुँदैन । हामीले हाम्रो कर्म राम्रो गर्नु पर्दछ तर त्यस्को फलको लागि भगवान्सँग प्रार्थना गरी राम्रो फल प्राप्ति होस् भनेर कामना गर्न हुँदैन । सँगैमा जीवात्माहरू भौतिक कृयाकलापमा सकाम कर्मफलहरूले बाँधिएका हुन्छन् । यो अवस्थाको सृजना प्राकृतिक साधनहरूमा प्रभुत्व देखाउन खोज्ने मानिसहरूको प्रवृतिबाट आएको हो । भगवान्व्दारा निर्धारित निर्दिष्ट कर्महरूमा मानिसहरूलाई इन्द्रियतृप्तिमा डुबिरहनु भनेर निर्देश गरिएको छैन ।

**एवं ज्ञात्वा कृतं कर्म पूर्वैरपि मुमुक्षुभिः ।**
**कुरू कर्मैव तस्मात्वं पूर्वैः पूर्वतरं कृतम् ॥ १५ ॥**

पूर्वकालमा मुमुक्षहरू (मुक्तात्माहरू) ले पनि यसप्रकार जानेरै कर्म गरेका थिए । त्यसकारण तिमी पनि पूर्वजहरूव्दारा सदा भैं गरिआएका कर्महरूलाई नै गर ।

प्राचीन कालमा समस्त मुक्तात्माहरूले मेरो दिव्य प्रकृतिलाई जानेर नै कर्म गरेर मोक्ष प्राप्ति गरे । तसर्थ तिमीले पनि उहाँहरूको पदचिन्हहरूलाई अनुसरण गर्दै आफ्नो कर्तव्यको पालना गरी मोक्ष प्राप्त गर्नु पर्दछ । संसारमा भौतिक परिवर्तनहरू भइरहे पनि संसारका नियमहरू अटल छन् । यिनीहरूमा परिवर्तन हुन्नन् । जस्तै : जन्मेपछि मरण हुनु, राम्रो कर्मको राम्रो फल पाउनु आदि । यहाँ श्रीकृष्णले अर्जुनलाई उहाँका प्राचीन कालका शिष्यहरू जस्तै सूर्यदेव विवस्वान्भैँको पद चिन्हलाई अनुसरण गरेर कर्म गर्न सल्लाह दिँदै हुनुहुन्छ । परापूर्व कालदेखि ज-जस्ले श्रीकृष्णले निर्धारित गर्नु भएका नियत कर्महरूलाई सम्पादन गर्दै उहाँको शिष्य भई उपदेशहरूको पालना गर्नु भएको थियो उहाँहरू सबैलाई यसमा समेटिएको छ ।

**किं कर्म किमकर्मेति कवयोऽप्यत्र मोहिताः ।**
**तत्ते कर्म प्रवक्ष्यामि यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात् ॥ १६ ॥**



कर्म के हो ? अकर्म के हो ?-यसप्रकार यस्को निर्णय गर्नमा बुद्धिमान् पुरूष पनि मोहित हुन पुग्दछन् । त्यसकारण त्यो कर्मतत्व म तिमीलाई राम्ररी सम्झाएर भन्छु, जस्लाई जानेर तिमीले अशुभबाट अर्थात् कर्मबन्धनबाट मुक्त हुनेछौ ।

कर्म तथा अकर्म के-के हुन् । के-के गरे भने कर्म हुन्छ तथा के-के गरे भने अकर्म हुन्छ भन्ने विषयको द्विविधालाई पन्छाउन श्रीकृष्णले अर्जुनलाई सम्झाउन जाँदै हुनुहुन्छ । यस बारेमा कहिले-काही बुद्धिमान पुरूष पनि मोहित भएर रूमलिएको पाइएको छ । के सधैँजसो गरिने कामहरूलाई कर्म भन्ने हो त ? यस बारेमा कृष्णभावनामृतमा जे कर्म गरिन्छ ती सबै पूर्ववर्ती प्रामाणिक गुरू, भक्तहरूले निर्धारित गर्नु भएको आदर्श, निर्देशन बमोजिम उहाँहरूको पद चिन्हलाई अनुसरण गरेर मात्र गर्नु पर्दछ । ती नै मानिसका कर्महरू हुन् । मनपरी कर्म कदापि गर्नु हुँदैन । यस पद्धतिको उपदेश सर्वप्रथम सूर्यदेवलाई दिइयो, सूर्यदेवले उनको छोरा मनुलाई दिनु भयो, मनुले इक्ष्वाकुलाई दिनु भयो । यसरी गुरू-शिष्य पद्धतिलाई अघि बढाइएको छ ।

**कर्मणो ह्यपि बोद्धव्यं बोद्धव्यं च विकर्मणः ।**
**अकर्मणश्र्च बोद्धव्यं गहना कर्मणो गतिः ॥ १७ ॥**

कर्मको स्वरूप पनि जान्नु पर्दछ र अकर्मको स्वरूप पनि जान्नु पर्दछ तथा विकर्मको स्वरूप पनि जान्नु पर्दछ, किनकि कर्मको गति गहन विषय हो ।

कर्म एक गहन विषय हो । यस्का प्रत्येक पक्षहरूलाई सम्पूर्ण रूपमा बिश्लेषण गर्दै बुझ्नु पर्ने हुन्छ । सांसारिक भवबन्धनबाट मुक्त हुन यस बारेमा जानकारी लिनु आवश्यक भएकोले ब्रह्मज्ञानी सद्‌गुरूको निर्देशनमा यस बारेमा बुझ्नु उपयुक्त हुनेछ । सामान्यतया कर्म भनेको केही गर्नु, अकर्म भनेको केही नगर्नु तथा विकर्म भनेको केही विशेष गर्नु । यस बारेमा हामीले जानकारी लियौ र बुझ्यौँ भने सांसारिक जीवनयापन गर्न वा व्यवहारादि गर्न सहज हुनेछ । तसर्थ श्रीकृष्णले अर्जुनलाई प्रत्यक्षतः यी तीनैको बिषयमा सम्झाउन खोज्नु भएको छ ।

**कर्मण्यकर्म यः पश्येदकर्मणि च कर्म यः ।**
**स बुद्धिमान्मनुष्येषु स युक्तः कृत्स्नकर्मकृत् ॥ १८ ॥**

जुन मानिसले कर्ममा अकर्म देख्दछ र अकर्ममा कर्म देख्दछ त्यो मानिसहरूमा बुद्धिमान मानिस हो र त्यो योगीले समस्त कर्महरूलाई गर्नेवाला हुन्छ ।

यसरी मानिसले कर्ममा अकर्म तथा अकर्ममा कर्म देख्न थाल्यो तथा बुझ्न थाल्यो भने त्यो बुद्धिमान मानिस सांसारिक सबै किसिमका कर्महरूमा संलग्न रहेता पनि ऊ दिव्य स्थितिमा रहन्छ । कर्ममा अकर्म देख्नु भनेको आफ्ना निर्धारित कार्यहरू गर्दा त्यस कामलाई मैले गरेको हुँ भनी धमण्ड नगर्नु, त्यो काम त परमेश्वरको आदेशले भएको हो भन्ने ठान्नु र कर्मलाई कर्तव्य ठानेर गर्नु हो । उहाँकै आदेशले विश्वका सबै कार्यहरू सञ्चालित भइरहेका छन्, म उहाँ कै हुँ, म त सेवकको रूपमा छु-यस्तो धारणा आफ्नो मनमा लिइराख्नु नै कर्ममा अकर्म देख्नु हो । कर्म फलको बारेमा उस्लाई चासो समेत हुँदैन । एउटा कर्मसकेपछि ऊ अर्को कर्म गर्नको लागि तैयार रहन्छ । अकर्ममा कर्मलाई देख्नु भनेको सबै कर्महरू ईश्वरव्दारा भइरहेका छन्, म उहाँको सेवक हुँ, निर्देशन उहाँको हो, संसार उहाँको हो भनी ठान्नु । यस्तो ठानेर उहाँले दिनु भएको इन्द्रिय र तिनीहरूको शक्ति बमोजिम म गर्दैछु भन्ने अकर्मको भावना सँगालेर सेवक भई निर्धारित कर्महरू गर्नु । यस्तो मानिस बुद्धिमान हुन्छ र सबै कर्महरू पनि गर्दछ ।

**यस्य सर्वे समारम्भाः कामसंकल्पवर्जिताः ।**
**ज्ञानाग्निग्धकर्माणं तमाहुः पण्डितं बुधाः ॥ १९ ॥**

जस्का सम्पूर्ण शास्त्र सम्मत कर्महरू बिना कामना र संकल्पको हुन्छ तथा जस्को सबै कर्महरू ज्ञान रूपी आगोव्दारा भष्म भएको छ, त्यस महापुरूषलाई ज्ञानीजनले पनि पंडित भन्दछन् ।

जुन व्यक्तिले आफ्ना कर्महरू शास्त्र सम्मत विधिले आफ्ना इन्द्रियहरू तृप्तिको कामना बिना, उस्को धर्म तथा कर्तव्य ठानेर गर्दछ, उस्को ज्ञान बमोजिम गरिएका कर्महरूको फलको आश उस्ले गरेकै हुन्न । उस्ले शास्त्रले गर्न हुने कर्महरू गर्दछ तर मैले कर्म गरेको हुँ भनी बिर्सिदिन्छ । उस्मा कर्म गरेको हुँ भनी घमण्ड पटक्कै रहन्न । शास्त्रले धर्मको पालना हुने, हाम्रा दायित्वहरू पुरा हुने र निस्वार्थ गरिएका कर्महरूलाई सत्कर्मको श्रेणीमा राखेको छ । यस्ता किसिमका भावना तथा व्यवहार गर्नेहरू नै वास्तविक पंडित हुन्छन् । उहाँहरूमा यस्तो धारणा विकसित भएको हुन्छ कि उहाँहरू स्वयं भगवान्को हो, संसारका सारा सृष्टिहरू पनि भगवान्कै हुन् । तसर्थ उहाँहरूले जुन कर्महरू गर्नु हुन्छ ती पनि भगवान्को आदेशले भगवान्कै लागि गरिएको हो । तसर्थ यहाँ म वा हामी कर्ता हौं र मेरो वा हाम्रा कर्मफल भन्ने



प्रश्न उठ्दैन । यस किसिमको ज्ञानले उनीहरू सञ्चित भएका हुन्छन्, अनि यस्ता महानुभावहरूलाई ज्ञानीहरू पंडित भनी सम्वोधन गर्दछन् ।

**त्यक्त्वा कर्मफलासङ्गं नित्यतृप्तो निराश्रयः ।**
**कर्मण्यभिप्रवृत्तोऽपि नैव किञ्चित्करोति सः ॥ २० ॥**

जुन पुरुष समस्त कर्महरूमा तथा तिनका फलहरूको आसक्तिलाई सदैव त्याग गरेर संसारको आश्रयबाट बिमुख भएको छ र परमात्मामा सधैं तृप्त रहन्छ, ऊ कर्महरूमा राम्ररी व्यस्त रहे पनि वास्तवमा उस्ले केही कर्म गरेकै हुन्न ।

जो मनुष्यले आफ्ना कर्महरू गर्दै त्यसको फलको आशा गर्दैन, सदैव परमात्माको चिन्तन एवं पूर्ण सेवामा तल्लिन रही तृप्त रहन्छ भने ऊ दुनियामा सबैभन्दा अगाडि जान सक्दछ र अन्ततः भगवान्लाई पनि उस्ले प्राप्त गर्न सक्दछ । उस्ले भगवान्को निर्देशानुसार प्रेमपूर्वक कर्महरू गर्दछ भने कर्मफल प्रति उसमा कुनै आसक्ति रहन्न । यहाँसम्म कि उसलाई आफ्नै शरीर निर्वाह प्रति पनि चासो रहदैन, उस्ले न कुनै वस्तुको चाहना गर्दछ । उस्ले आफ्नो सामर्थ्यले आफ्ना सबै कर्तव्यहरू श्रीकृष्णलाई अर्पण गर्दै पूर्ण उत्साहको साथमा कर्महरू गरेर कार्यहरू सम्पन्न गर्दछ । यसरी कर्मफल प्रति अनासक्त व्यक्ति त्यस्को फल शुभ होस् वा अशुभ होस् उस्ले कुनै मतलब राखेको हुँदैन । यही निष्काम कर्मको लक्षण हो । यो संसार सबै श्रीकृष्णको हो, म र मेरा कर्तव्यहरू, कर्महरू आदि सबै उहाँकै हुन भन्ने भावना उस्ले आफुमा कायम राखेको हुन्छ ।

**निराशीर्यतचित्तात्मा त्यक्तसर्वपरिग्रहः ।**
**शारीरं केवलं कर्म कुर्वन्नाप्नोति किल्बिषम् ॥ २१ ॥**

जस्को अन्तःकरण र इन्द्रियहरू सहित शरीरलाई जीतिएको छ र जस्ले सबै भोग गरिने सामग्रीहरूलाई परित्याग गरिदिएको छ, यस्तो आशारहित पुरूषले मात्र शरीर सम्बन्धी कर्महरू गर्दै पापहरू प्राप्त गर्दैन ।

यस श्लोकमा श्रीकृष्णले योगीको विकसित अवस्थाको बारेमा बर्णन गर्दै हुनुहुन्छ । यस्ता ज्ञानी पुरूषहरूले संयमित मन तथा बुद्धिले कार्यहरू गर्दै शरीरलाई जितिसकेका हुन्छन । मनले आशाहरू जागृत गर्ने गर्दछ । मनबाट जागृत आशाहरूले दुष्कर्मतर्फ डोर्याउने गर्दछ । तर योगी पुरूषहरूले त्यस मनलाई समेत जीतेका

हुन्छन् । तिनीहरूलाई कर्मफल शुभ भएर वा अशुभ भएर प्राप्त हुन्छ मा कुनै चासो रहेको हुन्न । उनीहरूले जान्दछन् कि उनीहरू परमात्माकै अंश हुन् । इन्द्रियतृप्तिका भौतिक विषय वस्तुहरूलाई उनीहरूले त्याग गरेका हुन्छन् । उनीहरूले परमात्माको माध्यमले परमात्माको लागि कर्महरू गर्दछन् । यस्ता आशारहित पुरुषहरूले आफ्नो लागि भनेर कर्म गर्दैनन् । यस्ता व्यक्तिहरूले जीवन निर्वाहको लागि अनुचित साधनहरूद्वारा धन संग्रह गर्ने आवश्यकता महशुस गर्दैनन् ।

**यदृच्छालाभसंतुष्टो द्वन्द्वातीतो विमत्सरः ।**
**समः सिद्धावसिद्धौ च कृत्वापि न निबध्यते ॥ २२ ॥**

जो बिना इच्छाले स्वतः प्राप्त भएका पदार्थहरू पाएर सदा सन्तुष्ट रहन्छ, जस्मा ईर्ष्याको पूर्ण अभाव भइसकेको हुन्छ, जो हर्ष-शोक आदि द्वन्दहरूबाट सदा अतित (छुटिसकेको) भइसकेको हुन्छ-यस्तो सिद्धि र असिद्धिमा सम (समान) भाव राख्ने कर्मयोगी कर्म गर्दा-गर्दै पनि त्यस्मा बाँधिएको हुदैन ।

त्यस्तो व्यक्ति कर्म गर्दा-गर्दै पनि कहिल्यै त्यस कर्ममा आसक्तियुक्त हुँदैन जो स्वतः हुने लाभबाट सन्तुष्ट रहन्छ, जो द्वन्दबाट मुक्त रहन्छ र ईर्ष्या गर्दैन, जो सफलता तथा असफलतामा स्थिर रहन्छ । उस्लाई यस्तै कुरा चाहिन्छ भनी इच्छा हुँदैन । मभन्दा ऊसँग बढी सम्पत्ति, इज्जत र नाम छ भनेर उसले कसैको इर्ष्या गर्दैन । जस्ले हार र जीत, सुख र दुःखमा एउटै भाव राख्दछ त्यही कर्ता योगी हो । ऊ भगवान्‌को सेवामूखी जस्तोसुकै सत्कर्म गर्न तैयार रहन्छ । यसरी ऊ कुनै पनि कर्ममा बाँधिएको हुँदैन । उस्ले अन्य काम कुरो गरेर कृष्णभावनामृतको कार्यमा व्यवधान सृजना हुन दिदैन ।

**गतसङ्गस्य मुक्तस्य ज्ञानावस्थितचेतसः ।**
**यज्ञायाचरतः कर्म समग्रं प्रविलीयते ॥ २३ ॥**

जस्को आसक्ति सर्वथा नष्ट भइसकेको छ, जो देहाभिमानरहित तथा ममतारहित भइसकेको छ, जस्को चित्त सदा परमात्माको ज्ञानमा स्थित रहन्छ-यस्तो मात्र यज्ञ सम्पादनको लागि कर्म गर्ने मनुष्यको सबै कर्महरू राम्ररी विलीन भइजान्छन् ।

त्यो कर्मयोगी, जो प्रकृतिका गुणहरू प्रति अनाशक्त छ, जस्लाई आफ्नो शारीरिक शक्ति, तागत तथा सुन्दरतामा अभिमान छैन, जो दिव्य परमात्माको ज्ञानमा



पूर्णतया स्थित छ, का सारा कर्महरू ब्रह्ममा लीन हुन्छन् । यस्तो व्यक्ति सांसारिक भौतिक गुणहरूको कल्मषबाट मुक्त रहन्छ । उस्ले आफ्ना कर्महरू यज्ञ झैँ गर्दछ । उस्का सबै कर्महरू परमात्मामा समर्पित हुन्छन् । यसरी कर्म गर्नु कठिन छ तर असम्भव भने छैन् । धेरै यस्ता मनुष्यहरूले यसरी कर्महरू गरेर कर्मयोगी भई सिद्धि प्राप्त गरिसकेका छन् अर्थात मुक्ति प्राप्त गरिसकेका छन ।

**ब्रह्मार्पणं ब्रह्म हविर्ब्रह्माग्नौ ब्रह्मणा हुतम् ।**
**ब्रह्मैव तेन गन्तव्यं ब्रह्मकर्मसमाधिना ॥ २४ ॥**

जुन यज्ञमा अर्पण अर्थात स्रुवा (सूरो, आहुति दिने वस्तु) आदि पनि ब्रह्म हुनुहुन्छ र हवन गरिने योग्य द्रव्य पनि ब्रह्म हुनुहुन्छ तथा ब्रह्म रूप कर्ताद्वारा ब्रह्मरूप अग्निमा आहुति दिने रूपकृया पनि ब्रह्म हुनुहुन्छ-त्यस ब्रह्मकर्ममा स्थित रहने योगीद्वारा प्राप्त गरिने-योग्य फल पनि ब्रह्मनै हुन्छ ।

यहाँ ब्रह्म भनेको सबैभन्दा ठूलो सत्य हो । जो व्यक्ति परमेश्वरमा पूर्णतया लीन रहन्छ, उस्लाई आफ्नो आध्यात्मिक कर्महरूको योगदानको फलस्वरूप भगवद्धाम निश्चित रूपमा प्राप्त हुन्छ किनकि त्यस्मा हवन तथा हवि दुबै आध्यात्मिक हुन्छन् । यस सांसारिक भौतिक विषयवस्तुमा लिप्त रहेका बद्धजीव व्यक्तिहरूको उपचारात्मक विधि भनेको विष्णु वा कृष्णलाई प्रसन्न गरिने यज्ञ नै हो । यो कार्य जति तल्लिनताले गरिन्छ उति नै वातावरण आध्यात्मिकताले परिपूर्ण हुन्छ । भगवान् स्वयं आध्यात्मिक हुनुहुन्छ र उहाँको दिव्य शरीरका किरणहरूलाई ब्रह्मज्योति वा आध्यात्मिक तेज भनिन्छ । तर जब ज्योति मायाद्वारा वा इन्द्रियतृप्तिद्वारा नचाहिने हुन्छ तब यसलाई भौतिक ज्योति भनिन्छ । यही भौतिक आवरणलाई यज्ञादि कर्मद्वारा कृष्णभावनामृत भएर पन्छाइन्छ । यस्मा यज्ञमा अर्पित हवि, ग्रहणकर्ता, हवन, सूरो तथा हवनको फल सबै ब्रह्मको स्वरूप परम सत्य हुने गर्दछ । यो परमेश्वर उन्मुख हुन गर्ने विधि हो । परमेश्वरमा पूर्णतया निमग्न भएको अवस्थालाई समाधि भनिन्छ । यस्तो दिव्य चेतनामा सम्पन्न कुनै पनि कार्यलाई यज्ञ भनिन्छ । यसमा सूरो, हवन, अग्नि, यज्ञकर्ता तथा त्यसबाट प्राप्त फल सबै परब्रह्ममा एकाकार हुन्छन् । यो परमसत्य कहिल्यै फेरिदैन ।

**दैवमेवापरे यज्ञं योगिनः पर्युपासते ।**
**ब्रह्माग्नावपरे यज्ञं यज्ञेनैवोपजुह्वति ॥ २५ ॥**

अर्काथरिका योगीजनहरू देवताहरूको पूजा गरिने यज्ञलाई नै राम्ररी अनुष्ठान गर्ने गर्दछन् र अन्य योगीजनहरू परब्रह्म परमात्मारूप अग्निमा अभेददर्शनरूप यज्ञद्वारा नै आत्मरूप यज्ञको हवन गर्ने गर्दछन् ।

यहाँ दुइ किसिमका योगीहरूको बारेमा बर्णन गरिएको छ । पहिलो केही योगीहरूले विभिन्न किसिमका यज्ञहरूद्वारा देवताहरूको बिधिपूर्वक पूजा गर्दछन् भने अर्का थरिकाले परब्रह्मरूपी अग्निमा आहुति दिएर यज्ञको कार्य सम्पन्न गर्दछन् । पहिलो किसिमका यज्ञहरू संसारका भौतिक सुख–सुविधा प्राप्त गर्ने उद्येश्यले गरिएका हुन्छन् जस्तैः इन्द्रदेव, वरूणदेव तथा सूर्यदेव आदि देवहरूको पूजन अभिलाषा र आकाङ्क्षा पूर्तिको लागि गरिएको पाइन्छ । दोश्रो किसिमको यज्ञ भनेको दिव्य ब्रह्मज्ञानको लागि गरिने यज्ञ हो । यो यज्ञमा कर्ताका सबै वस्तुहरू परमेश्वरलाई प्रसन्न गर्नका लागि समर्पण गरिएका हुन्छन् । देवतागणहरूको कार्य व्यवस्थापन त ब्रह्माणको स्थिति तथा लयलाई सुचारू तथा सुव्यवस्थित गर्न गराउन परमेश्वरद्वारा गरिएको हो । उहाँहरूमा भौतिक सुख सुविधायुक्त वर यज्ञ गरे वापत प्रदान गर्ने शक्ति रहन्छ र उहाँहरूलाई प्रसन्न तुल्याउन गरिएका यज्ञहरूव्दारा यज्ञकर्ताहरूले यस्ता किसिमका वरहरू पाउने गर्दछन् । तर जो मानिसहरू परम सत्यको निर्गुण स्वरूपको लागि यज्ञ गर्दछन् तिनीहरूले ब्रह्मको अस्तित्वमा आफ्नो अस्तित्वलाई समाप्त गरेका हुन्छन् । उनीहरूले सबै समयहरू उहाँकै चिन्तनमा खर्चिन्छन् । उहाँमा आत्मस्वरूपको विलय नै उनीहरूले आहुति ठान्दछन् । उनीहरूले सबै अनुष्ठान तथा कर्महरू उहाँ परमेश्वरमा नै समर्पित गर्दछन् । यसर्थ हामीले पनि हाम्रा कर्महरूलाई यज्ञ ठानेर गरिरहनु पर्दछ अनि कर्म तथा त्यस्को फल उहाँमै समर्पित गर्नु पर्दछ ।

**श्रोत्रादीनीन्द्रियाण्यन्ये संयमाग्निषु जुह्वति ।**
**शब्दादीन्विषयानन्य इन्द्रियाग्निषु जुह्वति ॥ २६ ॥**

अन्य योगीजनहरूले श्रोत आदि सबै इन्द्रियहरूलाई संयमरूप अग्निमा हवन गर्ने गर्दछन र दोश्रो योगीजनहरू शब्दादि सबै विषयहरूलाई इन्द्रियरूप अग्निहरूमा हवन गर्ने गर्दछन् ।

यहाँ संयमलाई श्री कृष्णले एक किसिमको अग्नि बताइरहनु भएको छ । हामीलाई थाहा छ कि आगोमा जे हाले पनि त्यस्ले भष्म गर्ने कार्य गर्दछ । जो योगी हुन्छन् उनीहरूले संयमको आगोमा आफ्ना इन्द्रियहरूका आकांक्षाहरूलाई हाल्दछन् ।



यसरी आफ्ना इच्छा तथा आकाङ्क्षालाई आगोले नष्ट गरे झैं उनीहरूले भष्म गर्दछन् । यस्मा सुन्ने कार्यहरू पनि पर्दछन् । कसैले राम्रो वा फलदायी कुरा भन्यो भने उनीहरू हर्षित भई हाल्दैनन् । कसैले नराम्रो वा दुःखपूर्ण कुरा गर्यो भने उनीहरू पिडित वा दुःखी भई हाल्दैनन् । यस प्रकार उनीहरूले सुन्ने तथा त्यसबाट मन रूपी इन्द्रियमा पर्ने प्रभावलाई संयमरूपी आगोमा हाली भष्म पार्दछन् । तर जो योगी हुन्नन् उनीहरूले आफ्ना इच्छा तथा आकाङ्क्षाहरूलाई उनका इन्द्रियहरूमा भष्म गर्दछन् । यसमा सुन्ने लगायता विषयवस्तुहरू पर्दछन् । अर्थात भौतिक सामग्री तथा विषयवस्तुमा लोभ र मोह गर्ने । पाएमा हर्षित हुने र अझै ठूलो विषयवस्तुको चाहना गर्नतर्फ लाग्ने, नपाएमा इर्ष्या तथा क्रोध गर्ने आदि । यस्तै विषयवस्तुमा अज्ञानी र सोझा मानिसहरूले उनीहरूको आकाङ्क्षाहरूलाई आफ्नै इन्द्रियहरू रूपी अग्निमा चढाई जलाइरहेका हुन्छन् ।

**सर्वाणीन्द्रियकर्माणि प्राणकर्माणि चापरे ।**
**आत्मसंयमयोगाग्नौ जुह्वति ज्ञानदीपिते ॥ २७ ॥**

अर्का योगीजनहरूले इन्द्रियहरूका सबै क्रियाहरूलाई र प्राणहरूका समस्त क्रियाहरूलाई ज्ञानद्वारा प्रकाशित आत्मसंयम योगरूप अग्निमा हवन गर्ने गर्दछन् ।

यस्ता योगीजनहरूको हवनमा सच्चिदानन्दको चिन्तन बाहेक अन्य कसैको पनि चिन्तन समावेश गरिएको हुन्न । उनीहरूलाई ज्ञानले दुष्कर्महरू गर्नबाट रोक्दछ । यस्ता योगीहरूले मन तथा इन्द्रियहरूलाई वशमा गरेर आत्म साक्षात्कार गर्न चाहान्छन्, सबै इन्द्रियहरू तथा प्राणवायुका कार्यहरूलाई संयमित मनरूपी अग्निमा आहुति गरिदिन्छन् । जीवात्माका कार्यहरू अनुरूप जबसम्म जीवात्मा इन्द्रियभोगमा संलग्न भइरहेको हुन्छ, त्यसलाई परागात्मा भनिन्छ तर जब ऊ इन्द्रिय सुखभोगबाट विरक्तिन्छ त्यस्लाई प्रत्यागात्मा भनिन्छ । यो ज्ञान नै हो जस्ले हामीलाई गलत तथा सही मार्गको पहिचान गराई सही मार्गमा लाग्न घच्घच्याइरहन्छ ।

**द्रव्ययज्ञास्तपोयज्ञा योगयज्ञास्तथापरे ।**
**स्वाध्यायज्ञानयज्ञाश्च यतयः संशितव्रताः ॥ २८ ॥**

धेरै पुरुषहरू द्रव्य सम्बन्धी यज्ञ गर्नेवाला हुन्छन् , कति त तपस्या रूप यज्ञ गर्नेवाला हुन्छन् र अर्का कति त योगरूप यज्ञ गर्नेवाला हुन्छन्, कति त अहिंसा आदि तीक्ष्ण ब्रतहरूले युक्त भएर यत्नशील मानिस स्वाध्यायरूप ज्ञानयज्ञ गर्नेवाला छन् ।

हरेक व्यक्तिको यज्ञ तथा कर्म पनि बेग्ला-बेग्लै हुन्छ । अफ्ठेरा ब्रत गरेर केही मानिस त आफ्नो सम्पत्तिलाई त्याग गरेर, कोही कठिन तपस्या गरेर, कोही अष्टाङ्ग योग पद्धतिको अभ्यास गरेर अथवा दिव्यज्ञानमा उन्नति गर्न वेदहरूको अध्ययन गरेर प्रबुद्ध बन्दछन् । कोही सम्पत्तिले धर्मशाला, बाटो, कुँवा आदि निर्माण गरेर दान कर्मको आधारमा द्रव्ययज्ञ गर्दछन, कोही जीवनमा उन्नति गर्न तथा बैकुण्ठलोक आदिमा जानको लागि चान्द्रायण तथा चतुर्मास लगायतका कठोर तपहरू गर्दछन् । यसरी मानिसहरूले विभिन्न योग पद्धतिहरू अनुसरण गरी योग गर्ने गर्दछन् । कोही अधिकतम तीर्थहरूको यात्रा गरेर योग गर्ने गर्दछन् । यी सबै अनुष्ठानहरूलाई योगयज्ञ भनिन्छ । यस्मा यज्ञकर्ताले कुनै सिद्धि बिशेष प्राप्त गर्न भनेर यज्ञ गर्दछ । कोही वेदान्तसूत्र, वैदिक साहित्य, उपनिषद् आदिको अध्ययनमा ध्यान लगाउँदछन् जस्लाई स्वाध्याय यज्ञ भनिन्छ । यी सबै योगीजनहरू विभिन्न किसिमका यज्ञहरूमा सहभागी हुने गर्दछन र उच्च जीवनको खोजमा रहने गर्दछन् ।

**अपाने जुह्वति प्राणं प्राणेऽपानं तथापरे ।**
**प्राणापानगती रूद्ध्वा प्राणायामपरायणाः ॥ २९ ॥**
**अपरे नियताहाराः प्राणान्प्राणेषु जुह्वति ।**
**सर्वेऽप्येते यज्ञविदो यज्ञक्षपितकल्मषाः ॥ ३० ॥**

अर्का कति योगीजनले अपानवायुमा प्राणवायुलाई हवन गर्दछन्, त्यस्तै अन्य योगीजनले प्राणवायुमा अपानवायुलाई हवन गर्दछन्, अन्य कति त नियमित आहार गर्ने प्राणायामपरायण पुरूषले प्राण र अपानको गतिलाई रोकेर प्राणहरूलाई प्राणहरू मै हवन गर्ने गर्दछन् । यी सबै साधकहरूले यज्ञहरूद्वारा पापहरूलाई नाश गर्ने तथा यज्ञहरूको बारेमा जान्ने हुन्छन् ।

यी श्लोकहरूमा कृष्णले प्राणायाम सम्बन्धी आयामहरू बताउँदै हुनुहुन्छ । प्राणवायुलाई हामीले भित्र तान्छौं र यस्ले हाम्रो शरीरलाई जीवित राखी पोषकयुक्त बनाउँछ । यस्को मुख्य स्थान हृदय हो । यस उर्ध्वमगामी (माथि जाने) वायुको आवागमनलाई राम्ररी बुझेर जस्ले यसलाई साध्न सक्छ उस्लाई दीर्घजीवी हुने र हस्य अवगत भएको हुन्छ । किनकि वायुले नै शरीर भित्रको पदार्थलाई अमृत वा विषमा बदलिने क्षमता राख्दछ । अर्को अपानवायु शरीरको रसमा हुन्छ । यो सदैव बाहिर निस्कने वायु भनी बुझ्नु पर्दछ । संसारमा यस्ता मानिसहरू पनि छन् कि जस्ले



समाधिमा रहनको लागि स्वाँसलाई रोक्ने गर्दछन् । यसलाई प्राणायाम भनिन्छ । उनीहरूले अपानमा प्राणलाई तथा प्राणमा अपानलाई रोक्ने प्रयास गर्दछन् । यसरी अन्ततः प्राण तथा अपानलाई रोकेर त्यस्ता व्यक्तिहरू समाधिमा रहन्छन् । यसबाट योगी संयमी हुन पुग्दछ । अन्य योगीहरू यस्ता पनि छन कि जो कम खाना खाएर प्राणलाई प्राण मै आहुति दिन्छन् । हठयोगका विभिन्न आसनहरू गरेर यसको अभ्यास गरिन्छ । यी योगहरू इन्द्रियहरूलाई वशमा राख्ने तथा आत्म साक्षात्कार गर्नको लागि गरिन्छ । अपानवायुलाई प्राणवायुमा अर्पित गरिने कृयालाई रेचक भनिन्छ । प्राणवायु तथा अपानवायु दुवैलाई पूर्णतया रोक्ने कृयालाई कुम्भक भनिन्छ । यही कुम्भकको योगाभ्यासद्वारा मानिसले आत्मसिद्धिको लागि जीवनको आयु लम्ब्याउन सक्छ । यस्ता साधकहरूलाई यज्ञको अर्थ थाहा भएको कारणले यिनीहरू पापकर्महरूबाट मुक्त हुन्छन् ।

**यज्ञशिष्टामृतभुजो यान्ति ब्रह्म सनातनम् ।**
**नायं लोकोऽस्त्ययज्ञस्य कुतोऽन्यः कुरूसत्तम ॥ ३१ ॥**

हे कुरूश्रेष्ठ अर्जुन ! यज्ञबाट बचेको अमृतको अनुभव गर्ने योगीजनहरू सनातन परब्रह्म परमात्मालाई प्राप्त हुन्छन् । र यज्ञ नगर्ने पुरूषको लागि त यो मनुष्यलोक पनि सुखदायक छैन, फेरि परलोक कसरी सुखदायक हुन्छ ?

यस श्लोकमा यज्ञको महत्त्वको बारेमा वर्णन गरिएको छ । यज्ञ गरेपछि जे जसो बाच्दछ त्यसलाई श्रीकृष्णले अमृत भन्दै हुनुहुन्छ । यो अमृतले मानिसहरूलाई सोझै भगवान्सम्म लिएर जान्छ । यज्ञलाई हामीले सत्कर्म पनि ठान्न सक्छौं । कर्म गरेपछि त्यस्को जे पनि फल होस् त्यसलाई भगवान्को आशिर्वाद सम्झेर त्यसमा सन्तुष्ट भएर आफ्नो अघिल्लो कर्ममा लाग्नु पर्दछ । मानिसको जीवन नै त्यो अवसर वा मार्ग हो जस्बाट भएर पापहरूबाट र बन्धनहरूबाट मुक्ति पाउन सकिन्छ । एकातिर धर्म बमोजिम गरिएका यज्ञहरूले हाम्रा सबै समस्यालाई समाधान गर्दछन् । यज्ञद्वारा विभिन्न भौतिक सुख सुविधाहरूको प्राप्ति हुने, त्यसपछि इन्द्रियतृप्तिको लागि वैदिक विधान बमोजिम पवित्र विवाहको व्यवस्थापन गरिएको छ । अर्कोतिर यज्ञद्वारा नै मानिसहरू भौतिक जीवनको तथा इन्द्रियतृप्तिको सुविधाबाट माथि उठी मुक्त जीवनको परिकल्पनामा परमेश्वरको सान्निध्यता प्राप्त गर्नेतर्फ लाग्दछन् । यी दुबै यज्ञहरूको कारणले मात्र सम्भव हुन्छ । श्री कृष्णले अर्जुनलाई सुझाए बमोजिम

यज्ञले मनुष्यहरूलाई अमृत प्रदान गर्दछ । यज्ञबाट वर्षा, वर्षाबाट बाली, बालीबाट अन्न, अन्नबाट पोषण प्राप्त भएपछि यस क्रमले अमृत प्राप्त भएको ठहर्छ । त्यो अन्नको भोग उहाँमा अर्पण गरेर बाँकि रहेको भक्तले वा योगीले लिएमा त्यस अमृतले मनुष्यहरूलाई सिधा भगवान् समिप पुर्याउँछ । यज्ञलाई अर्को अर्थमा सत्कर्म पनि ठान्नु पर्दछ । कसैले यस जन्ममा यज्ञ नगरी यस लोकमा सुखभोग गर्न पाएन भने उस्ले परलोकमा सुखभोग गर्न पाउने सम्भावना नै रहन्न ।

**एवं बहुविधा यज्ञा वितता ब्रह्मणो मुखे ।**
**कर्मजान्विद्धि तान्सर्वानेवं ज्ञात्वा विमोक्ष्यसे ॥ ३२ ॥**

यसै प्रकार र अरू पनि विभिन्न प्रकारका यज्ञहरूको बारेमा वेदका वाणीहरूमा विस्तारले बताइएका छन् । ती सबै तिमीले मन, इन्द्रियहरू तथा शरीरका क्रियाहरूद्वारा सम्पन्न हुन्छन भनी बुझ, यसरी तत्वको रूपमा यज्ञहरूलाई बुझेर तिनीहरूको अनुष्ठान गरेर तिमी कर्म बन्धनबाट सधैंको लागि मुक्त हुनेछौं ।

वेद सम्मत तथा श्रीकृष्ण स्वयंले पनि बताउनु भएका यज्ञहरू छन् । जो मन, इन्द्रिय तथा शरीरका विभिन्न प्रकारका कर्महरूद्वारा सम्पन्न हुने गर्दछन् । अर्जुनले ती विषयवस्तुहरूलाई यसरी बुझेमा ऊ मुक्त हुनेछ भनी श्रीकृष्णले अर्थ्याउँदै हुनुहुन्छ । मानिसहरू देहात्मबुद्धिमा लीन रहेको यस संसारमा ती यज्ञहरूको यस किसिमले व्यवस्था गरिएको छ कि मानिसले तिनलाई आफ्नो शरीर, मन अथवा बुद्धिद्वारा सम्पन्न गर्न सक्दछन् । यो शरीर तथा इन्द्रियतृप्तिको लालसाबाट मुक्त हुनको लागि यी सबै बिधानहरूको बारेमा भगवान्ले आफ्नो मुखबाट नै उल्लेख गर्नु भएको छ । जस्तै आफुमा संयम कायम गरेर इन्द्रियहरूलाई वशमा राख्नु, यज्ञमा देवताहरूलाई अर्पण गर्नु, स्वांसलाई नियममा राखेर प्राणायाम गर्नु यी सबै यज्ञ कै केही प्रकारहरू हुन् । हामीले यी यज्ञहरूलाई सांचो मनले गर्यौं भने जन्म तथा मृत्युको बन्धनबाट मुक्त हुनेछौं ।

**श्रेयान्द्रव्यमयाद्यज्ञाज्ज्ञानयज्ञः परंतप ।**
**सर्वं कर्माखिलं पार्थ ज्ञाने परिसमाप्यते ॥ ३३ ॥**

हे परंतप अर्जुन ! द्रव्यमय यज्ञभन्दा ज्ञानयज्ञ धेरै नै श्रेष्ठ हो, तथा जहाँसम्म सबै कर्महरू ज्ञानमा समाप्त हुन्छन् ।



सामान्यतया यज्ञहरूको प्रकृति अनुसार विषयवस्तुहरू चढाइन्छ । यस्ता द्रव्ययज्ञहरूमा घिऊ लगायतका अन्य विभिन्न वस्तुहरू चढाए पछि निश्चित उद्देश्य निश्चित देवताद्वारा मात्र पुरा हुने गर्दछ । तर ज्ञानयज्ञद्वारा जीवहरूले भौतिक कष्टहरूबाट छुटकारा पाएर अन्तमा परमेश्वरको दिव्य सेवा प्राप्त गर्न सक्दछन् । ज्ञानयज्ञमा इन्द्रियहरूलाई वशमा राखिन्छ, स्वाँसलाई नियन्त्रणमा राखिन्छ, आसक्तिरहित कर्म गरिन्छ, तिनको फलमा आशा गरिन्न । यी यज्ञहरू विभिन्न क्रियाहरू गर्नाले मात्र हुने गर्दछन् जस्को बारेमा मानिसहरूले जान्नु आवश्यक छ । यसरी गरिएका यज्ञहरूले हामीलाई ईश्वरसँग साक्षात्कार गराई उहाँसँग जोड्दछ । ज्ञानयुक्त गरिएको यज्ञले मानिसहरूलाई आध्यात्मिक लाभ पुर्याउँदछ । ज्ञान बिना गरिएको यज्ञ मात्र भौतिक कर्ममा सीमित रहन पुग्दछ । ज्ञानयुक्त यज्ञ ज्ञानप्रदायक हुन्छ, तसर्थ यो श्रेष्ठ हुन्छ भनी वर्णन गरिएको छ ।

**तद्विद्धि प्रणिपातेन परिप्रश्नेन सेवया ।**
**उपदेक्ष्यन्ति ते ज्ञानं ज्ञानिनस्तत्तवदर्शिनः ॥ ३४ ॥**

ती ज्ञानहरूलाई तिमी तत्वदर्शी ज्ञानीहरू कहाँ गएर बुझ, उनीहरूलाई राम्ररी दण्डवत्-प्रणाम गर्नाले, उनीहरूको सेवा गर्नाले र कपट बिना सरलापूर्वक प्रश्न गर्नाले ती परमात्म तत्वलाई राम्ररी जान्ने ज्ञानी महात्माहरूले तिमीलाई तत्वज्ञानको बारेमा उपदेश दिनु हुनेछ ।

तत्वज्ञानीहरूले परमात्माको दर्शन गरेका हुन्छन् । तिमीले त्यस्ता ज्ञानीहरूकोमा गएर उहाँहरूलाई विनम्रतापूर्वक जिज्ञासा गर्दै, उहाँहरूको सेवा गर्दै ज्ञान प्राप्त गर । यस संसारमा भगवान् नै आदि गुरू हुनुहुन्छ । उहाँव्दारा स्थापित गुरू-शिष्य परम्परालाई अनुसरण गर्दै प्रमाणित तत्त्वज्ञानी कहाँ गएर तिमीले ज्ञानको शिक्षा प्राप्त गर भनेर अर्जुनलाई भगवान्ले मार्गनिर्देश गर्दै हुनुहुन्छ । यो धर्म पथको निर्माण स्वयं भगवान्ले गर्नु भएको हो । गुरूप्रति पूर्ण समर्पित भएर, अहङ्काररहित भएर, विनम्रतापूर्वक सरल स्वभावले जिज्ञासा राख्दै आध्यात्मिक ज्ञानको आशिर्वाद गुरूबाट प्राप्त गर्न पाइन्छ । जीवनमा अन्धो भएर कसैको अनुगमन गर्नु वा अनावश्यक जिज्ञासा राखेर नचाहिँदो पाण्डित्य पुष्टी गर्न खोज्नु सबै अर्थहिन हुन्छ । प्रामाणिक गुरू स्वभावले नै दयालु हुनुहुन्छ । उहाँले शिष्यको पहिचान गरिसकेपछि स्वतः ज्ञान प्रदान गर्नु हुन्छ । यहाँ अर्जुन स्वयं भगवान्को सामुन्ने हुँदा उनीलाई यस बारेमा बिशेष ज्ञानको लागि तत्त्वज्ञानीको चरणमा जाऊ भनेर उहाँले भन्नुभयो ।

**यज्ज्ञात्वा न पुनर्मोहमेवं यास्यसि पाण्डव ।**
**येन भूतान्यशेषेण द्रक्ष्यस्यात्मन्यथो मयि ॥ ३५ ॥**

जस्लाई जानेर फेरि तिमी यस प्रकार मोहमा लाग्ने छैनौं तथा हे अर्जुन ! जुन ज्ञानद्वारा तिमीले सम्पूर्ण भूतहरूलाई निःशेषभावले पहिले आफुमा र पछि म सच्चिदानन्दघन परमात्मामा देख्नेछौं ।

हामी जीवात्माहरू यस संसारमा आई जीवन चक्रमा धेरै शताब्दीहरूदेखि घुमिरहेका छौं । हामी किन यस संसारमा आएका हौं, हाम्रो जीवन चक्रमा हामी बालकदेखि युवा हुँदै बृद्ध हुन्छौं र एक दिन मृत्यु प्राप्त गर्दछौं । यो क्रम चलिरहेको छ । यो किन हुन्छ ? यो सबै कस्ले, कुन उद्येश्य लिएर गरेको हो ? यस बारेमा अलिकति पनि ज्ञानी पुरूष छ भने उस्ले जान्न खोज्दछ । त्यसको लागि ऊ तत्ववेत्ताको संसर्गमा जानु पर्दछ, त्यहाँ आफुलाई पूर्ण अहङ्काररहित तुल्याई विनित भावले ज्ञान प्राप्त गर्नु पर्दछ । अनि मात्र हामीले मोहबाट छुटकारा पाउँदछौं । यसरी भगवान्को संसारलाई बुझ्ने प्रयास पनि गर्नेछौं । जीवात्मा तथा परमात्माको बारेको सम्बन्ध जान्नेछौं ।

**अपि चेदसि पापेभ्यः सर्वेभ्यः पापकृत्तमः ।**
**सर्वं ज्ञानप्लवेनैव वृजिनं संतरिष्यसि ॥ ३६ ॥**

यदि तिमी अन्य पापीहरूभन्दा पनि धेरै पापगर्नेवाला छौं, तापनि तिमी ज्ञानरूपी डुङ्गाद्वारा निःसन्देह सम्पूर्ण पाप-समुन्द्रबाट राम्ररी तर्नेछौ ।

यदि तिमी संसारका सबै पापीहरूभन्दा पनि बढी पाप गर्ने व्यक्ति छौं भने पनि यस दिव्यज्ञान रूपी नाऊँमा बसेर दुःखसागरलाई तर्न समर्थ हुनेछौ । यस भौतिक जगतलाई कहिले अज्ञान सागर त कहिले डढेलो लागेको जङ्गल भनी भनिन्छ । भौतिकता प्रतिको लोभ, मोह, क्रोध आदिलाई त्याग गरी इन्द्रियहरूलाई नियन्त्रण गरी परमेश्वरमा सेवा भक्ति गरी आफूलाई पूर्णरूपले उहाँमै समर्पण गरेमा मानिसहरू जीवन संघर्षबाट माथि उठद्छन् । भगवान्बाट प्राप्त पूर्णज्ञान नै मुक्तिको मार्ग हो । भगवान् तथा मनुष्य बीचको सम्बन्ध तथा भगवान् प्रतिको मानिसको स्नेह, सम्मान, भक्ति, एकाग्रता, प्राणायाम, समर्पण आदि बारेको दिव्यज्ञान मानिसले जीवनको जुन खण्डमा पायो सो समयदेखिनै ऊ परमेश्वरमा दत्तचित्त भई लाग्नु पर्ने हुन्छ ।



**यथैधांसि समिद्धोऽग्निर्भस्मसात्कुरूतेऽर्जुन ।**
**ज्ञानाग्निः सर्वकर्माणि भस्मसात्कुरूते तथा ॥ ३७ ॥**

किनकि हे अर्जुन ! जसरी दन्केको आगोले ईन्धनहरूलाई भष्म गर्दछ, त्यसरीनै ज्ञानरूपी आगोले सबै कर्महरूलाई भष्ममय गरिदिन्छ ।

ज्ञानरूपी आगोले सबै भौतिक कर्महरूको फलहरू प्रतिको आसक्ति र स्वआकाङ्क्षालाई डढाएर नष्ट पार्दछ । आत्मा तथा परमेश्वर सम्बन्धी दिव्यज्ञानरूपी अग्निले पापकर्म र पुण्यकर्म सम्बन्धी सबै पक्षहरूलाई भष्म गरिदिन्छ । कर्मफलका अवस्थाहरू : जस्तै शुभारम्भ, बीज र संचित आदि सबैलाई नष्ट गर्दछ, चाहे त्यो ज्ञान हुनुभन्दा अधिको अवस्थाको होस् चाहे पछिको । यसरी सबै कर्महरू भष्म हुन्छन् भनेर कर्म गर्दै नगर्ने भनिएको हैन, ज्ञानयज्ञ गरी ज्ञान प्राप्त भएपछि कर्मलाई कर्तव्य ठानी गरिरहनु पर्दछ, तर कर्मफलको आशाले होइन । यहाँ कर्मफल प्रतिको आसक्तिलाई डढाउनु भनिएको हो । यही नै दिव्यज्ञान हो ।

**न हि ज्ञानेन सदृशं पवित्रमिह विद्यते ।**
**तत्स्वयं योगसंसिद्धः कालेनात्मनि विन्दति ॥ ३८ ॥**

यस संसारमा ज्ञान जस्तो पवित्र गर्ने निःसन्देह अरू केही पनि छैनन । त्यस ज्ञानलाई कत्ति धेरै कालदेखि कर्मयोगद्वारा शुद्धान्तःकरण गरिएको मानिसले स्वतः आफ्नो आत्मामा पाउँदछ ।

आध्यात्मिक ज्ञानको रूपमा रहेको दिव्यज्ञान जस्तो यस संसारमा शुद्ध तथा उपयोगी अरू केही पनि छैनन् । यस्तो ज्ञान सबै योगहरूबाट खारिएर आएको फल हो । ज्ञान प्राप्त गर्ने अभिलाषा बोकेका कर्मयोगका अनुभवीहरूले ज्ञानको रसास्वादन गरेका हुन्छन् । अज्ञान हाम्रो बन्धनको कारण हो भने ज्ञान मुक्तिको । ज्ञान तथा भक्ति एक अर्कासँग राम्ररी गाँसिएका हुन्छन् । दिव्यज्ञान प्राप्त गरेको व्यक्तिले अन्यत्र शान्तिको खोजी गर्नु पर्ने आवश्यकता नै रहन्न किनकि ऊ आफ्नै मन भित्र शान्तिको अनुभूति गरी रमाइरहेको हुन्छ । कसैको मनमा ज्ञान जान्ने इच्छा छ, मन सफा पनि छ र कर्मयोगले निष्काम कर्म पनि गर्दछ भने उस्ले ज्ञान हाँसिल गर्न सक्छ भनी श्रीकृष्णले भन्नुहुन्छ ।

**श्रद्धावाँल्लभते ज्ञानं तत्परः संयतेन्द्रियः ।**
**ज्ञानं लब्ध्वा परां शान्तिमचिरेणाधिगच्छति ॥ ३९ ॥**

जीतेन्द्रिय, साधनापरायण र श्रद्धावान मानिसले ज्ञान प्राप्त गर्दछ तथा ज्ञानलाई प्राप्त गरेर उस्ले अबिलम्ब-तत्काले भगवत्प्राप्तिरूप परम शान्ति प्राप्त गर्दछ।

आफ्नो इन्द्रियहरूलाई वशमा राखेका साधनापरायण भगवान् प्रतिको श्रद्धालुहरू दिव्य ज्ञान प्राप्त गर्ने अधिकारी हुन्छन्। यस्तो ज्ञान प्राप्त गर्ने बित्तिक्कै उनीहरूले आध्यात्मिक शान्ति पाउँदछन्। आफ्नो हृदयको सारा भौतिक क्लेष हटाई, इन्द्रियहरूलाई संयमित राखी जो व्यक्ति श्रीकृष्ण प्रति यसरी श्रद्धावान् हुन्छ, उस्लाई यस संसारको सत्यता बुझ्न समय लाग्दैन। सत्यता बुझिसकेपछि उसले परम शान्ति प्राप्त गर्दछ।

**अज्ञश्र्चाश्रछधानश्र्च संशायात्मा विनश्यति ।**
**नायं लोकोऽस्ति न परो न सुखं संशयात्मनः ॥ ४० ॥**

विवेकहीन र श्रद्धारहित संशययुक्त मानिस परमार्थ प्राप्ती कार्यबाट अवश्य नै भ्रष्ट हुन पुग्दछ। त्यस्ता संशययुक्त व्यक्तिको लागि न यो लोक छ, न परलोक छ र सुख नै छ।

जो व्यक्ति अज्ञानी छ, जस्मा सोच्ने सम्झिने शक्ति छैन, सधैँ द्विविधायुक्त भएर रहन्छ, भगवान् प्रति श्रद्धा राख्दैन, सधैँ भगवान्को अस्तित्व माथि शङ्का गरिरहन्छ उस्ले सधैँ कष्ट भोग्नु पर्दछ, अनि उस्ले कदापि परमार्थ प्राप्त गर्न सक्दैन। जीवनको परम लक्ष्य जान्ने इच्छा नगरी ज्ञान प्राप्त नगरेकोले वा बाटो बिराएको ऊ भ्रष्ट भई बरू अझै तलतिर झर्दछ। शङ्का गर्ने व्यक्तिको लागि न यस लोकमा र नै परलोकमा सुख प्राप्त हुन्छ। संसारमा कति यस्ता मानिसहरू हुन्छन् जस्मा भगवान् सम्बन्धी लेस मात्र पनि ज्ञान हुन्न, कतिलाई भगवान् प्रति श्रद्धा हुन्न, कति भौतिकवादीहरूले भगवान्को अस्तित्वलाई नै स्वीकार गर्दैनन्। यस्ता व्यक्तिहरूले कतै सुखको भोग गर्न पाउँदैनन्।

**योगसंन्यस्तकर्माणं ज्ञानसंछिन्नसंशयम् ।**
**आत्मवन्तं न कर्माणि निबध्नन्ति धनंजय ॥ ४१ ॥**

हे धनन्जय ! जस्ले कर्मयोगको विधिले आफ्ना समस्त कर्महरूलाई परमात्मामा अर्पण गरिदिएको छ र जस्ले विवेकव्दारा सम्पूर्ण संशयहरूलाई वा



शंकाहरूलाई नाश गरेको छ, यसरी वशमा गरेको अन्तःकरणवाला मानिसहरूलाई कर्मले बाँध्दैन।

कर्मयोगी त्यो हो जस्ले आफ्ना कर्महरू गरी भगवान्लाई सुम्पिदिन्छ। एउटा असल कर्मयोगीले कर्मफल प्रति कत्ति पनि आसक्ति राख्दैन। उस्मा यो विषयवस्तु मेरो हो भनी रत्तिभर पनि घमण्ड हुँदैन। तर ऊ आफ्ना कर्महरू अनवरत रूपले गरिरहन्छ। यसरी आसक्ति नराखी कसैले कर्मयोगीहरूले अनुसरण गर्नु पर्ने विधिहरू अपनाई कर्महरू गर्दै ती सबै कर्महरूलाई परमात्मामा अर्पण गर्दछ, उस्मा परमेश्वरको अस्तित्व, शक्ति तथा अधिकार क्षेत्र प्रति कुनै किसिमको संशय वा शङ्का रहेको हुँदैन। यस्ता मानिसहरूलाई कुनै पनि कर्मले कहिल्यै बाँध्दैन।

**तस्मादज्ञानसंभूतं हृत्स्थं ज्ञानासिनात्मनः ।**
**छित्त्वैनं संशयं योगमातिष्ठोत्तिष्ठ भारत ॥ ४२ ॥**

त्यसैले हे भरतवंशी अर्जुन ! तिमीले तिम्रो हृदयमा स्थित यस अज्ञानजनित आफ्नो संशयलाई विवेकज्ञान रूपी तलवारले काटेर समत्वरूप कर्मयोगमा स्थित होऊ र युद्धको लागि तैयार होऊ।

तसर्थ तिम्रो हृदयमा अज्ञानको कारणले जे-जे संशयहरू वा शङ्काहरू छन् ती सबैलाई ज्ञानरूपी शस्त्रले काट। तिमीले आफुलाई योगमा एकत्रित तुल्याऊ र उभिएर युद्ध गर। उपर्युक्त आध्यात्मिक ज्ञान तथा विवेकरूपी विषयवस्तुलाई मनन गरेर आफ्नो मनमा रहेका सबै शङ्का-उपशङ्काहरूलाई पन्छाऊ। तिम्रो वर्णको हिसाबले, तिम्रो कर्तव्यको हिसाबले, म कृष्णका सुझावहरूलाई पालना गर्ने हिसाबले तथा धर्मको स्थापनाको हिसाबले तिमी कर्मयोग प्रति समर्पित भएर युद्धको लागि तैयार होऊ। यसको लागि आध्यात्मिक कर्म अनुरूप आत्मसाक्षात्कार गर्दै भगवान् विषयक सत्यको पहिचान गर।

अथ पञ्चमोऽध्यायः

# पाँचौ अध्याय
# कर्म सन्यास योग

अर्जनु उवाच (भन्दछन्)

**संन्यासं कर्मणां कृष्ण पुनर्योगं च शंससि ।**
**यच्छ्रेय एतयोरेकं तन्मे ब्रुहि सुनिश्र्चितम् ॥ १ ॥**

अर्जुन भन्छन् : हे कृष्ण ! हजुरले कर्महरूको सन्यासको तथा फेरि कर्मयोगको प्रशंसा गर्नु भयो । त्यसकारण यी दुइमध्ये कुनै एक जुन मेरोलागि राम्रोगरी निश्चित रूपमा कल्याणकारक साधन हो, त्यस बारेमा बताउनु होस् ।

यहाँ अर्जुनले श्रीकृष्णलाई सोध्नछन् कि पहिले हजुरले मलाई कर्म त्याग्ने सन्दर्भ भन्नु हुन्छ पछि हजुरले भक्तिपूर्वक कर्म गर भनी आदेश दिनु हुन्छ । त्यसकारण हजुरले कृपा गरेर मलाई बताउनुस् कि यी दुइमध्ये मेरोलागि कुन बढी लाभप्रद छ ? यसरी पहिलो अवस्थामा ज्ञानयुक्त अकर्मता अर्थात इन्द्रियहरूलाई नियन्त्रण गरी कर्मफल प्रति कुनै पनि आसक्ति नराख्ने र साथै कर्महरू भने गरिरहने भनिएको छ भने दोश्रो अवस्थामा भने भक्तिमय कर्म गरिरहन सुझाइएको छ । यी दुइमध्ये कुन अर्जुनको लागि कल्याणकारी, सरल तथा उपयुक्त छ त्यस बारेमा अर्जुनले श्रीकृष्णबाट जान्न खोज्दैछन् । अर्जुनले कुन बाटो उपयोगी तथा उपलब्धीमूलक छ त्यसको बारेमा जानकारी लिन खोज्दैछन् ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**संन्यासः कर्मयोगश्र्च निःश्रेयसकरावुभौ ।**
**तयोस्तु कर्मसंन्यासात्कर्मयोगो विशिष्यते ॥ २ ॥**

श्री भगवान्ले भन्नुभयोः कर्म सन्यास तथा कर्मयोग यी दुबैले नै परम् कल्याण गर्नेवाला छन्, तर ती दुबैमा पनि कर्म सन्यासभन्दा कर्मयोग साधनामा सुगम हुनाले श्रेष्ठ छ ।

श्रीभगवान्ले भन्नुभयो कि मुक्तिको लागि कर्मको परित्याग गर्नु तथा भक्तिमय कर्म गर्नु दुबै उत्तम छन् । तर यी दुइमध्ये कर्मको परित्यागभन्दा भक्तियुक्त कर्म नै श्रेष्ठ छ । शारीरिक सुख बढाउन जबसम्म मनुष्यले म र मेरो भन्दै लोभयुक्त भएर



सकाम कर्म गर्दछ ऊ इन्द्रियतृप्तिका कारणहरूमा अल्झिरहन्छ, जस्ले उस्लाई भवबन्धनमा बाँधिरहन्छ । पूर्ण ज्ञानयुक्त भएर मानिसले जिवात्माको स्तरमा कर्म गर्नु पर्दछ । यस संसारका सबै वस्तुहरू श्रीकृष्णको हो, उस्को केही पनि हैन, ऊ स्वयं पनि श्रीकृष्णकै हो भन्ने ज्ञान हुनु नै सन्यास हो । कर्म सन्यासको मार्गमा विभिन्न समस्याहरू, दु:ख-सुख झेल्नु पर्ने हुन्छ भने कर्मयोगको मार्ग सहज छ, यस्मा मात्र निष्ठावान तथा कर्तव्यपरायण भई आफ्ना निर्धारित कर्महरू गर्दै जानु पर्नेहुन्छ । कर्मयोगलाई हरेक समयमा हरेक व्यक्तिले गर्न सक्दछ । यस्को लागि खासै धेरै तैयारी पनि गर्नु पर्दैन । यसमा मात्र आफ्नो नियमित कर्महरू निष्ठावान र लगनशील भई गर्नु पर्दछ ।

**ज्ञेयः स नित्यसंन्यासी यो न व्देष्टि न काङ्क्षति ।**
**निर्द्वन्द्वो हि महाबाहो सुखं बन्धात्प्रमुच्यते ॥ ३ ॥**

हे अर्जुन ! जुन पुरूषले न कोहीसँग द्वेष नै गर्दछ र न केही आकाङ्क्षा राख्दछ, त्यो कर्मयोगी सधैँ सन्यासीको रूपमा सम्झिने योग्य हुन्छ, किनकि राग-द्वेषादि द्वन्दहरूबाट रहित पुरुष सुखपूर्वक संसार बन्धनबाट मुक्त हुन्छ ।

जो व्यक्तिले कर्मफलको आकाङ्क्षा नै राख्दैन, केही विषयवस्तु पाउनको लागि कसैसँग कलह, रिस राख्दैन अर्थात् इन्द्रियतृप्तिमा उस्को अभिरूचि नै हुन्न भने यस्तो व्यक्तिलाई हामीले सन्यासी ठान्नु पर्दछ । उस्मा लोभ, मोह तथा क्रोध हुन्न् । ऊ त भगवान्को दिव्यभक्तिमा लागिरहन्छ र पूर्णज्ञानी हुन्छ । उस्ले श्रीकृष्णलाई पूर्ण ठान्दछ र आफूलाई मात्र उहाँको एक अंश मात्र हो भनी बुझेको हुन्छ । यस्तो व्यक्ति यस भवसागरबाट सहजै मुक्त हुन सक्दछ । यस्ता व्यक्तिलाई कुनै भौतिक विषयवस्तुको न इच्छा हुन्छ र नै कसैको केही प्रति इर्ष्या नै हुन्छ, यस्तालाई सन्यासी भनिन्छ ।

**सांख्ययोगौ पृथग्बालाः प्रवदन्ति न पण्डिताः ।**
**एकमप्यास्थितः सम्यगुभयोर्विन्दते फलम् ॥ ४ ॥**

उपर्युक्त सन्यास तथा कर्मयोगलाई मूर्ख मानिसहरूले छुट्टा-छुट्टै फल दिने भन्दछन्, तर पण्डितहरूले हैन । किनकि सन्यास तथा कर्मयोग यी दुइमध्ये एउटामा पनि सम्यक् (उपयुक्त) प्रकारले स्थित पुरूषले दुबैको फलरूप परमात्मालाई प्राप्त गर्दछ ।

सन्यास तथा कर्मयोग दुबै परमात्मालाई प्राप्त गर्ने मार्गहरू हुन् । अन्ततः दुबैको लक्ष्य एउटै परमात्मा नै हो । जस्मा हामीलाई एकदिन गएर मिल्नु पर्ने हुन्छ । सन्यासीहरूले आफ्ना इच्छा-आकाङ्क्षाहरूलाई नियन्त्रणमा राखेका हुन्छन् र सही तथा गलत स्वभावलाई समान ठान्दछन् । मात्र गेरूवा लुगा लगाएर भीक्षा माँगेर जीवन निर्वाह गर्नु सन्यास होइन । सही सन्यासी त्यो हो जस्ले आफ्ना भावनाहरूमा विजय प्राप्त गरेको छ र सबैमा समभाव राख्दछ । भक्तजनले कुनै एक मार्गबाट गए पनि उही एक परमात्मालाई प्राप्त गर्ने हो भनी पण्डितजनलाई अवगत हुन्छ तर मूर्खहरूले बेग्ला-बेग्लै हो भन्ने धारणा पालेका हुन्छन् । स्मरण रहोस् जुनसुकै बाटोबाट गए पनि जाने उद्देश्य तथा तरिका विधि भने शास्त्रसम्मत हुनु पर्दछ ।

**यत्सांख्यैः प्राप्यते स्थानं तद्योगैरपि गम्यते ।**
**एकं सांख्यं च योगं च यः पश्यति स पश्यति ॥ ५ ॥**

ज्ञानयोगीहरूद्वारा जुन परमधाम वा सद्गति प्राप्त गरिन्छ, कर्मयोगीव्दारा पनि त्यही धाम तथा गति प्राप्त गरिन्छ । त्यसकारण जुन पुरूषले ज्ञानयोग तथा कर्मयोगलाई फलरूपमा एकनास देख्दछ, त्यसैले यथार्थ देख्दछ ।

जस्लाई यो ज्ञान छ कि बिश्लेषणात्मक अध्ययनव्दारा (सांख्ययोग) प्राप्त हुने स्थान भक्तियोगबाट पनि प्राप्त गर्न सकिन्छ र यसरी जस्ले सांख्ययोग तथा भक्तियोगलाई एकैरूपमा हेर्दछ त्यही व्यक्तिले यथार्थ रूप देख्दछ । सांख्य ज्ञान एक दार्शनिक सोध हो । जस्को वास्तविक उद्येश्य जीवनको परमलक्ष्य आत्म—साक्षात्कार को खोज गर्नु हो । सांख्ययोगमा जीवहरू भौतिक जगतका होइनन, यी परमात्माका अंश हुन भनी दार्शनिक खोजद्वारा निष्कर्षमा पुगिन्छ । जीवात्माको भौतिक जगतसँग सरोकार हुनु हुँदैन, उनीहरूका सबै कार्यहरू परमात्मासँग सम्बन्धित हुनु पर्दछ । यसप्रकार जीवात्माहरू आफ्ना स्वाभाविक स्थितिमा पुग्दछन् । साङ्ख्य विधिमा मनुष्यहरूलाई यस भौतिक जगतका पदार्थहरूबाट बिमुखता कायम गर्नु पर्दछ भने भक्तियोगमा उनीहरूलाई श्रीकृष्णभावनाभावित कर्महरूमा आसक्ति सृजना गर्नु पर्दछ भनी शास्त्रहरूमा मार्गहरू प्रशस्त गरिएका छन् । सारांशमा दुवैका विधिहरू एउटै हुन् । जस्ले पदार्थहरूबाट विरक्ति तथा श्रीकृष्णसँग आसक्तिलाई एकै किसिमले हेर्दछ उसैले वस्तुलाई यथार्थ रूपमा हेरिरहेको हुन्छ । तसर्थ ज्ञानयोगीहरूले ज्ञान दिनु वा ज्ञानमा मात्र लिप्त हुनुको साथ-साथै कर्मप्रति पनि आफ्नो संलग्नता कायम गर्नु



पर्दछ तथा कर्मयोगीहरूले पनि ज्ञानयोगलाई उचित महत्त्व दिई त्यसको अनुसरण गर्नु पर्दछ किनकि दुबैको लक्ष्य परमात्मा प्राप्ति नै हो ।

**संन्यासस्तु महाबाहो दुःखमाप्तुमयोगतः ।**
**योगयुक्तो मुनिर्ब्रह्म नचिरेणाधिगच्छति ॥ ६ ॥**

तर हे अर्जुन ! कर्मयोग नभईकनको सन्यास अर्थात् मन, इन्द्रिय तथा शरीरद्वारा गरिने सबै कर्महरूमा कर्तापनको त्याग गर्ने कार्य गाह्रो छ र भगवत स्वरूपलाई मनन गर्ने कर्मयोगीले परब्रह्म परमात्मालाई छिट्टै नै प्राप्त गर्दछ ।

यस श्लोकमा कर्मयोगको महत्त्वको बारेमा श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ । उहाँ भन्नु हुन्छ ज्ञानयोग सँगै कर्मयोगमा लागियो भने मात्र तिमी यस संसारको कल्मषताबाट माथि उठ्न सक्छौ र सत्यतालाई बुझ्नेछौ । ज्ञानयोगमा रहे पनि कर्मयोग गर्नै पर्ने हुन्छ । आफ्नो कर्तापनलाई, यो-त्यो कार्यहरू मैले गरेको हो भन्ने अहङ्कारलाई त्याग गर्नु पर्दछ । यो कसरी त्याग गर्ने भन्ने सन्दर्भमा उहाँले बताउनु हुन्छ कि अहङ्कारी भावना त्याग अन्तर्गत आफ्ना ज्ञानेन्द्रियहरूलाई वशमा राखेर र गरिएका कर्महरूको फलको इच्छालाई त्यागेर, सबै कर्मफलहरूलाई भगवान्मा अर्पित गर्नु पर्दछ । हामीले यदि ज्ञानयोगको सहारा लिएर गर्न थाल्यौँ भने पनि यो कर्मयोग त गर्नै पर्दछ । कर्मयोग नभईकन कर्तापनको त्याग गर्न कठिन छ ।

**योगयुक्तो विशुद्धात्मा विजितात्मा जितेन्द्रियः ।**
**सर्वभूतात्मभूतात्मा कुर्वन्नापि न लिप्यते ॥ ७ ॥**

जस्को मन आफ्नो वशमा छ, जो जीतेन्द्रिय एवं विशुद्ध अन्तःकरणवाला छ र सम्पूर्ण प्राणीहरूको आत्मरूप परमात्मा नै जस्को आत्मा छ, यस्तो कर्मयोगी कर्म गर्दै पनि लिप्त हुँदैन ।

समुन्द्रबाट गाग्रोमा पानी भर्यौ भने आखिर त्यो पानी नै हुन्छ । त्यस्तै परमात्मा रूपी समुन्द्रबाट झिकिएको पानी जस्तो हामी परमात्माबाट निसृत अंश आत्माहरू हौं । जस्को मन आफ्नो वशमा छ, जस्ले आफ्ना इन्द्रियहरूलाई जितेको छ, जस्को विशुद्ध आत्मा छ, जो भक्तिभावमा लागेको छ-यस्ता व्यक्तिहरू कर्म गर्दा-गर्दै पनि कहिल्यै कर्ममा बाँधिदैनन् । यस्ता व्यक्तिहरूले सबै जीवहरूमा परमात्माको बास रहेको छ भन्ने बुझि सबै प्रति सम्मानजनक व्यवहार गर्दछन् । उनीहरूले बिभेद नगरी सबैको लागि सहयोगी भूमिका निर्वाह गरिरहेका हुन्छन् । उनीहरूको चेतना

शुद्ध रहन्छ । उनीहरूले आफ्ना सबै इन्द्रियहरूलाई एकाग्र गरेर श्रीकृष्ण सेवामा, कार्यमा र ध्यानमा लगाउँदछन् । अन्य विषयवस्तुहरूमा उनीहरूको मन र इच्छा जाँदै-जाँदैन । यही संसारको पूर्ण सत्य हो र श्रीकृष्णले यही कुरालाई बेग्ला-बेग्लै किसिमले सम्झाइरहेको हुनुहुन्छ ।

**नैव किंचित्करोमीति युक्तो मन्येत तत्त्ववित् ।**
**पश्यञ्शृण्वन्स्पृशञ्जिघ्रन्नश्ननाच्छन्स्वपञ्श्वसन् ॥ ८ ॥**
**प्रलपन्विसृजन्गृह्णन्नुन्मिषन्निमिषन्नपि ।**
**इन्द्रियाणीन्द्रियार्थेषु वर्तन्त इति धारयन् ॥ ९ ॥**

तत्वलाई जान्ने साङ्ख्ययोगीका त हेर्दै, सुन्दै, स्पर्श गर्दै, सुँघ्दै, खाँदै, हिँड्दै, सुत्दै, स्वाँस लिँदै, बोल्दै, त्याग गर्दै, लिँदै तथा आँखा खोल्दै र बन्द गर्दै पनि सबै इन्द्रियहरूले आ-आफ्ना अर्थमा कार्य गरिरहेका हुन्छन्-यसरी बुझेर यो निःसन्देह ख्यालमा राखेका हुन्छन कि मैले केही पनि गरिरहेको छैन ।

दिव्य भावनामृत युक्त ज्ञानी पुरूषले आफ्ना इन्द्रियहरूले सबै काम गरिरहे पनि यो हेक्का राखिरहन्छन कि यी सबै कामहरूको कर्ता म होइन । उनीलाई थाहा हुन्छ कि भौतिक इन्द्रियहरू आ-आफ्ना विषयहरूमा संयमित भई कार्यरत रहेका छन् । उनी यिनीहरूभन्दा बेग्लै रहन्छन् । उन्का इन्द्रियहरूले गरेका कार्यहरू ईश्वरद्वारा भइरहेछन् भनेर उन्ले मान्दछ । यस्तो व्यक्ति यस्तो शुद्ध हुन्छ कि यिनीहरूलाई नजिकको वा टाढाका पाँच कारणहरू : कर्ता, कर्म, अधिष्ठान, प्रयास, भाग्यमा आधारित कुनै कार्यसँग कुनै चासो हुन्न् । यसर्थ उनीले सबै कार्यहरू सम्पादन गर्ने गराउने ईश्वरलाई मान्दछन तथा तिनको फल पनि उहाँमै समर्पण गर्दछन्, आफूले फलमा कुनै आसक्ति राख्दैनन् । आध्यात्मिक व्यस्ततामा यस्तो मानिस श्रीकृष्णको इन्द्रियतृप्तिमा रमाउँदछ न कि आफ्नो इन्द्रियतृप्तिमा । उनीहरू भगवान्को शाश्वत दास मात्र हो भन्ने व्यहोरा उनीहरूले मन मष्तिष्कमा गाँठो पारिसकेकोले अन्य कार्यमा अभिरूचि लिएको हुँदैनन् ।

**ब्रह्मण्याधाय कर्माणि सङ्गं त्यक्त्वा करोति यः ।**
**लिप्यते न स पापेन पद्मपत्रमिवाम्भसा ॥ १० ॥**

जुन पुरूषले सबै कर्महरूलाई परमात्मामा अर्पण गरेर र आसक्तिलाई त्याग गरेर कर्म गर्दछ, त्यो पुरूष पानीमा कमलको पात झै पापमा लिप्त हुँदैन ।



जो व्यक्तिले आसक्तिलाई त्यागेर आफ्ना समस्त कर्मफलहरू परमेश्वरमा समर्पित गर्दछ र सँग-सँगै कर्महरू पनि गरिनै रहन्छ भने ऊ पापकर्मबाट त्यसरी नै अप्रभावित हुन्छ जसरी कमलको पात पानीमा तथा हिलोमा रहेर पनि भिजेको हुँदैन । यो संसारको प्रत्येक वस्तु ब्रह्मको अभिव्यक्ति हो । तिनका कार्यहरू भिन्न-भिन्न रूपमा देखिएता पनि उहाँ ब्रह्म तिनीहरूको कारणहरूबाट बेग्लै हुनुहुन्न । यस संसारको प्रत्येक वस्तु उनै परमेश्वरको हो, तसर्थ यस्को स्वामित्व पनि उहाँमै रहनु स्वभाविकै हो । यस कारण ती सबैको उपयोगिता पनि उहाँ कै लागि गरिनु पर्दछ । हामी व्यक्तिहरूको तिनमा कुनै अधिकार रहेको हुन्न । ती वस्तुहरूबाट उत्पन्न हुने शुभ वा अशुभ परिणाम बारे हाम्रो चासो पनि रहनु हुन्न । जसरी कमलको पात पानी मै रहेर पनि भिजेको हुन्न । यो शरीर पनि उहाँद्वारा प्रदत्त हो, यसलाई उहाँकै सेवामा अर्पण गर्नु उचित हुन्छ भनी उहाँको धारणा रहेको छ । श्रीकृष्णले भन्नु भए बमोजिम कमलको पात पानी र हिलोमा रहेको हुन्छ तर त्यस्मा पानी र हिलो टाँसिएको हुँदैन । त्यस्तै मानिसहरूले पनि आफ्ना समस्त भौतिक कर्महरू गरेर जीवन निर्वाह गर्नु पर्दछ तर तिनमा आफ्नो हो भनी आधिपत्य, अभिमान र फल प्रतिको आसक्ति राख्न हुँदैन ।

**कायेन मनसा बुद्ध्या केवलैरिन्द्रियैरपि ।**
**योगिनः कर्म कुर्वन्ति सङ्गं त्यक्त्वात्मशुद्धये ॥ ११ ॥**

कर्मयोगीहरूले ममत्वबुद्धिरहित भएर मात्र इन्द्रिय, मन, बुद्धि र शरीरद्वारा पनि आसक्तिलाई त्यागेर अन्तःकरणको शुद्धिको लागि कर्म गर्दछन् ।

यहाँ कर्मयोगीहरू कस्ता हुन्छन् भने बारेमा वर्णन गरिएको छ । जब हामीले यो सृष्टिको संरचना, संचालन तथा संहार गर्ने उनै परमेश्वर हुन्, हामी मानिसहरू पनि उहाँको संरचना भित्र पर्दछौँ, यो सबै उहाँकै हो भन्ने ठानेर श्रीकृष्णका आदेशहरू पालनाको लागि मात्र हाम्रो शरीर, मन तथा बुद्धिले कर्म गर्दछ भन्ने ठानेर व्यवहार गर्दछौँ भने हामी समस्त भौतिक कल्मषहरूबाट मुक्त हुन्छौँ । यस प्रकार हामीमा यो वस्तु मेरो हो, यो शरीर मेरो हो भन्दै हाम्रा भौतिक शरीरहरू प्रति कुनै अभिमान रहन्न । हामीले मन, बुद्धि, वाणी, शरीर, जीवन तथा सम्पत्तिव्दारा कर्महरू गर्दै प्रत्येक वस्तुलाई श्रीकृष्णमा समर्पित गर्दछौँ, उहाँको सेवामा लगाउँदछौं, आफ्ना इन्द्रियतृप्तिको लागि लगाउदैनौं । यस प्रकार हामी श्रीकृष्णसँग एकरूप हुन पुग्दछौ । कर्मयोगीहरूले सबै कर्महरू यसरी गर्दै जान्छन । हाम्रा आत्माहरू तथा परमात्मा बीचको सम्बन्ध गाँसिसकेको हुनाले हामी भित्रबाट एकदम शुद्ध तथा शान्त रहन्छौ ।

**युक्तः कर्मफलं त्यक्त्वा शान्तिमाप्नोति नैष्ठिकीम् ।**
**अयुक्तः कामकारेण फले सक्तो निबध्यते ॥ १२ ॥**

कर्मयोगीले कर्महरूको फलहरूलाई त्याग गरेर भगवतप्राप्तिरूप शान्ति प्राप्त गर्दछ र सकाम पुरूष कामनाको प्रेरणाले फल प्रति आसक्त भएर बाँधिन्छ ।

निश्चल कर्मयोगी भक्तले सबै कर्महरूका फलहरू मलाई अर्पित गरेर शुद्ध शान्ति प्राप्त गर्दछ भने जो व्यक्ति भगवान् प्रति श्रद्धा भक्ति राख्दैन, उहाँको निष्काम सेवा गर्दैन तथा आफ्नो कर्मफल प्राप्तिमा आशारत रहन्छ ऊ कर्मबन्धनमा बाँधिन्छ । यहाँ दुइ किसिमका व्यक्तिहरूको वर्गिकरण गरिएको छ । पहिलो यस्ता कर्मयोगी जो श्रीकृष्ण प्रति आसक्ति राख्दछ, जस्ले आफ्नो इन्द्रियतृप्तिको लागि सांसारिक कुनै कार्य गर्दैन, जस्ले उहाँको लागि मात्र कार्य गर्दछ भने उस्ले शान्ति वा मुक्ति प्राप्त गर्दछ तथा दोश्रो जो कर्मयोगी हुँदैन, उस्ले पनि कर्महरू त गर्दछ तर ती कर्महरूको फलप्रति ऊ आसक्त रहन्छ । तसर्थ ऊ कर्मबन्धनमा बाधिन्छ । यसर्थ भगवान् प्रति समर्पित व्यक्तिले अन्ततः भगवत प्राप्ति गर्दछ ।

**सर्वकर्माणि मनसा संन्यस्यास्ते सुखं वशी ।**
**नवद्वारे पुरे देही नैव कुर्वन्न कारयन् ॥ १३ ॥**

अन्तःकरण जस्को वशमा छ यस्तो सांख्ययोगको आचरण गर्ने पुरूषले न गरेरै र न गराएरै नौंद्वार भएको शरीर रूपी घरमा सबै कर्महरूलाई मनले त्यागेर आनन्दपूर्वक सच्चिदानन्दनघन परमात्माको स्वरूपमा स्थित हुन्छ ।

जुन साङ्ख्ययोगी जीवात्माको वशमा अन्तःकरण छ अनि मनैबाट सबै कर्महरूलाई परित्याग गरेको छ त्यस अवस्थामा उस्ले नौवटा ढोकाहरूः दुइ आँखा, दुइ कान, दुइ नाकका प्वालहरू, मुख, दुइ मल मूत्र परित्याग गर्ने, भएको भौतिक शरीरमा केही नगरिकनै परमात्मालाई प्राप्त गरी ऊ सुखपूर्वक रहन्छ । मानिसको शरीर प्राकृतिक गुणहरूद्वारा स्वतः कार्यरत रहन्छ । शरीरले आफ्ना यी नौ इन्द्रियहरूद्वारा कर्म गर्दा-गर्दै पनि साङ्ख्ययोगमा रहेको जीव यसबाट बेग्लै भएर बस्न सक्छ । यसो त उस्ले सामान्य मानिस जस्तै समस्त कर्महरू गरिनै रहेको हुन्छ तर ती कामहरू प्रतिको आबद्धता तथा कर्मफल प्रतिको आसक्ति उस्मा हुँदैन । उस्ले सबै भगवान्मा अर्पण गरेको हुन्छ । ऊ भगवान्सँग तादात्म्य कायम गर्ने भइसकेको हुन्छ । उस्ले गरेका कर्महरूमा अकर्मता कायम गरेको हुन्छ । कर्महरूलाई सम्पादन गर्ने गराउने



त श्रीकृष्ण हुनुहुन्छ भन्ने उस्को धारणा रहेको हुन्छ । उस्ले आफुलाई मात्र माध्यम ठानेको हुन्छ ।

**न कर्तृत्वं न कर्माणि लोकस्य सृजति प्रभुः ।**
**न कर्मफलसंयोगं स्वभावस्तु प्रवर्तते ॥ १४ ॥**

परमेश्वरले मानिसहरूको न कर्तापनको, न कर्महरूको र न कर्मफलको संयोगको रचना गर्नु हुन्छ, यो त मानिसहरूको प्राकृतिक स्वभावले नै गर्दछ ।

परमेश्वरले मानिसहरूलाई अन्य जीवभन्दा भिन्दै ज्ञान तथा विवेक दिएर यस संसारमा अवसर दिदै पठाउनु भएको छ । उहाँले मानिसमा कर्म गर्ने वा नगर्ने अहम्को, न कुनै कर्मको र नै तीबाट प्राप्त हुने कर्मफलको सृष्टि गर्नु भएको छ । ती सबै प्राकृतिक तत्वहरू भएकाहरूको स्वभावले निर्मित हुने गर्दछन् । प्रकृतिले यस्तरी संरचना गरेकी छिन कि यी सबैको अस्तित्व कायम गर्ने, समयोजन बारेमा निर्णय गर्ने, व्यवहार गर्ने अधिकार स्वयं मानिसमा नै ज्ञान तथा विवेक दिएर व्यवस्थित गरेकी छन् । जीव पदार्थभन्दा भिन्दै छ । यो भगवान्को अपरा प्रकृति हो । यो परमेश्वरको शक्तिहरूमध्येको एक हो । तर जीव तथा अपरा प्रकृतिको बीचमा अनादिकालदेखि सम्बन्ध गाँसिदै आएको पाइन्छ । जीवको नाशवान शरीर उसका विभिन्न कर्महरूको तथा तिनका फलहरूको कारणले निर्मित भएको हुन्छ । मानिसको शरीरलाई प्रकृतिद्वारा संरचना गरिएपछि सोही अनुरूप त्यो मानिसको स्वभाव कायम हुन पुग्दछ । अनि त्यही स्वभाव बमोजिम उस्ले स्वयंलाई कर्ता ठानेर इच्छा बमोजिमका कर्महरू गर्दै तिनका कर्मफलहरूको भोग गर्दछ । अब उस्को स्वभाव विकृत छ वा विकसित छ सोही बमोजिम भएर जान्छ । यसमा परमेश्वरको भूमिका रहेको हुन्न ।

**नादत्ते कस्यचित्पापं न चैव सुकृतं विभुः ।**
**अज्ञानेनावृतं ज्ञानं तेन मुह्यन्ति जन्तवः ॥ १५ ॥**

सर्वव्यापी परमेश्वरले पनि न कसैको पापकर्मलाई र न कसैको शुभकर्मलाई नै ग्रहण गर्नु हुन्छ, तर अज्ञानले गर्दा ज्ञान ढाकिएको छ, त्यसै कारणले सबै अज्ञानी मानिसहरू मोहित भइरहेका छन् ।

परमेश्वर स्वयं असीम ज्ञान, धन, बल, यश, सौन्दर्य तथा त्यागको धनी हुनु हुन्छ । यस संसारका जीवहरू विभिन्न भौतिक वस्तुहरूमा इन्द्रियतृप्तिको लागि

मोहित भइरहेका छन् र यस्तो कामना गर्दछन कि उनीहरूले इन्द्रियतृप्ति गर्न अझै धेरै मात्रामा पाइरहुन् । यसैबाट उनीहरूको कर्महरू तथा तिनका फलहरूको श्रृङ्खला प्रारम्भ हुन्छ । परमात्मा त सदैव आत्मतृप्ति तथा पाप-पुण्यबाट अविचलित रहनु हुन्छ । उहाँले कुनै पनि जीवको लागि आफ्नो तर्फबाट कुनै पनि बिशेष परिस्थिति सृजना गर्नु हुन्न् । मानिसका इच्छाहरू र कर्महरूले नै उस्लाई बद्ध अवस्थामा पुर्याउँछन् । अज्ञानताले ज्ञान ढाकिएको छ । इन्द्रियतृप्तिको कामनाले उस्लाई पाप कर्मतर्फ उन्मुख गराउंदछ । ऊ मोहबन्धनमा फस्दै जान्छ । भगवान् त सर्वज्ञ हुनुहुन्छ, जीव त एक अणु हो । तर जीवात्मामा इच्छा गर्ने शक्ति रहेको हुन्छ । हामी भित्र यी सबै विषयहरूलाई पहिल्याउन सक्ने ज्ञान भएता पनि त्यो अज्ञानताले ढाकिएको छ । तसर्थ हामीले आफ्नो ज्ञानशक्तिको सदुपयोग गरी आत्मा र परमात्मा बीचको सम्बन्ध, यस भवसागरमा आउनु पछाडिको रहस्य वा उद्येश्य बुझ्यौं र अज्ञानताको जालो हटायौं भने सबै राम्रो नै राम्रो हुन्छ ।

**ज्ञानेन तु तदज्ञानं येषां नाशितमात्मनः ।**
**तेषामादित्यवज्ज्ञानं प्रकाशयति तत्परम् ॥ १६ ॥**

तर जस्को त्यो अज्ञान परमात्माको तत्वज्ञानद्वारा नष्ट गरिएको छ, उहाँको त्यो ज्ञानले सूर्यकोझैं त्यस सच्चिदानन्दघन परमात्मालाई प्रकाशित गर्दछ ।

ज्ञान सदैव सम्मानीय हुन्छ । मानिसले विभिन्न जन्म प्राप्त गरिसकेपछि पूर्ण ज्ञान प्राप्त गर्दछ र श्रीकृष्णको शरणमा जान्छ । यसरी उस्ले श्रीकृष्णभावनामृत पाएपछि उस्लाई सांसारिक, आत्मा, परमात्मा आदिका रहस्यहरू सबै सूर्यको प्रकाशले उज्यालो पारेपछि देखिएझैं देखिन्छ, अनि उस्ले बुझ्दछ । अज्ञानको अँध्यारो जस्तैः मै कर्ता हु, शरीर नै सबैथोक हो, मैले गरेका कर्महरूको फल मैले भोग गर्न पाउनु पर्छ, लाई जब ज्ञान रूपी सूर्यको प्रकास जस्तैः म परमात्माको अंश हुँ, यो म लगायतका श्रृष्टिहरू परमात्माका देनहरू हुन, म लगायत यी सबै उहाँको भएकोले मैले उहाँमा सेवा भक्तिसाथ सबै समर्पण गर्नु पर्दछ भन्ने धारणा र कृत्यले उस्को जीवनलाई उज्यालो बनाई दिन्छ । आफुमा केही छैन भनी कर्महरू गर्नु पर्दछ र यो मेरो हो भन्ने अहङ्कारलाई त्याग गर्नु पर्दछ ।

**तद्‌बुद्धयस्तदात्मानस्तन्निष्ठास्तत्परायणाः ।**
**गच्छन्त्यपुनरावृत्तिं ज्ञाननिर्धूतकल्मषाः ॥ १७ ॥**



जस्को मन पनि उस्तै भइरहेको छ, जस्को बुद्धि पनि उस्तै भइरहेको छ र जस्को श्रद्धा तथा शरण सबै कुराहरू निरन्तर सच्चिदानन्दघन परमात्मामा एकिकृत छ, यस्ता तत्परायण पुरूषले ज्ञानव्दारा पापरहित भएर अपुनरावृत्ति (परमगति) प्राप्त गर्दछ ।

वेद एवं गीतामा उल्लेख भए बमोजिम परम दिव्य सत्य भनेको भगवान् नै हुनुहुन्छ । जस्को मन भगवान्‌ले निर्देशित गरेको बाटोमा हिँडदछ, जस्को बुद्धि र ध्यान सधैं परमात्मामा लागिरहन्छ, त्यस्तो व्यक्ति जन्म-मरणको बन्धनबाट मुक्ति पाई उनै परमात्मामा मिल्न पुग्दछ । यसैलाई परम गति भनिन्छ । यस विषयवस्तुको ज्ञान हुने मानिस मन, बुद्धि, श्रद्धाले उहाँको सेवा तथा भक्तिमा एकिकृत हुन पुग्दछ भने उस्का सबै कल्मषहरू पखालिन्छन्, उस्लाई पनि ब्रह्म सम्बन्धी पूर्ण ज्ञान हुन्छ । श्रीकृष्ण जस्तो एकताको धनी जो एकैपटक एकिकृत तथा भिन्न हुनसक्ने शक्तिवान हुनुहुन्छ भन्ने बारेको दिव्यज्ञान पाएर ऊ मुक्तिको पथमा हिँडदछ । जस्को मन श्रीकृष्णमा लागिरहन्छ, बुद्धिले उहाँको हित कसरी हुन्छ, सेवा कसरी राम्ररी गर्न सकिन्छ भनी सोचिरहन्छ तथा आफ्ना सबै कुराहरू उहाँमा नै अर्पण गर्दछ भने यस्तो ज्ञान तथा व्यवहारले पापमुक्त भएर जन्म-मरणको श्रृङ्खलाबाट मुक्ति पाई उस्ले परम गति प्राप्त गर्दछ ।

**विद्याविनयसंपन्ने ब्राह्मणे गवि हस्तिनि ।**
**शुनि चैव श्र्वपाके च पण्डिताः समदर्शिनः ॥ १८ ॥**

त्यस्तो ज्ञानीजन विद्या र विनययुक्त ब्राह्मणमा तथा गाइ, हाथी, कुकुर र चाण्डालमा पनि समदर्शी (सबैमा समभावले व्यवहार गर्ने) नै हुन्छ ।

यसरी सेवा तथा भक्तिमा लाग्ने ज्ञानी महापुरूषमा जीवनको उद्देश्यको बारेमा वास्तविक ज्ञान भएको कारणले उहाँहरूले विद्या तथा विनयशील ब्राह्मण र अन्य जीवजन्तुको बीच कुनै भेद देख्नु हुन्न र गर्नु हुन्न । विद्वान् तथा ज्ञानी योगीको दृष्टिमा जीवहरूमा शरीरगत, लिङ्गगत, स्तरगत तथा जातिगत आदि कुनै भेद हुन्नन् । किनकि परमेश्वर परमात्माको रूपमा प्रत्येक प्राणीमा बास गर्नु हुन्छ । यही नै परम सत्यको वास्तविक ज्ञान हो । शरीरको स्वरूप, रंगमा एकरूपता नरहे पनि परमात्माको रूपमा भगवान् सबैमा बास गर्नु हुन्छ । शरीर त प्रकृतिको गुण बमोजिम निर्माण भएको हुन्छ तर सबैको परमात्माको रूपमा भगवान् त एउटै आध्यात्मिक

गुणवाला हुनुहुन्छ । आत्मा तथा परमात्माको लक्षण समान हुन्छन् किनकि दुबैमा चेतना समान छन्, दुबै शाश्वत, आनन्दमय रहन्छन तर भिन्नता के छ भने आत्मा शरीरको सीमा भित्र सचेत रहन्छ भने परमात्मा सबै शरीरहरूमा सचेत रहनु हुन्छ ।

**इहैव तैर्जितः सर्गो येषां साम्ये स्थितं मनः ।**
**निर्दोषं हि समं ब्रह्म तस्माद् ब्रह्मणि ते स्थिताः ॥ १९ ॥**

जस्को मन समभावमा स्थित छ, उहाँद्वारा यस जीवित अवस्थामा नै सम्पूर्ण संसारलाई विजय प्राप्त गरिसकिएको हुन्छ, किनकि सच्चिदानन्दघन परमात्मा निर्दोष तथा सम हुनुहुन्छ, त्यसकारणले उहाँ सच्चिदानन्दघन परमात्मामा नै स्थित हुनुहुन्छ ।

धन तथा अस्त्रशस्त्रले संसारलाई जितिदैन, मनलाई जीते भने मात्र संसारमा विजय प्राप्त भएको भनी ठानिन्छ भनेर श्रीकृष्णले यहाँ वर्णन गर्दै हुनुहुन्छ । मनमा समभाव तथा भगवान् प्रतिको एकत्व रहेको सतपुरूषले जन्म तथा मृत्युको बन्धनलाई जितेर सम्पूर्ण संसारमा विजय प्राप्त गरिसक्नु भएको हुन्छ । स्वभावगत कारणले उहाँ ब्रह्मको समान निर्दोष हुनुहुन्छ तथा सधैं ब्रह्ममै स्थित हुनुहुन्छ । मानसिक समता आत्मसाक्षात्कारको लक्षण हो । यस्तो अवस्था प्राप्त गरेको व्यक्तिले जन्म तथा मृत्युको बन्धनलाई उछिनिसकेको हुन्छ । आत्मसाक्षात्कार हुनु भनेको समचित्तताको अवस्था प्राप्त गर्नु हो । सबैमा समभाव राख्नेले भेदभाव गर्नु हुन्न, उहाँमा आसक्ति तथा धृणा दुबै हुँदैन ।

**न प्रहृष्येत्प्रियं प्राप्य नोद्विजेत्प्राप्य चाप्रियम् ।**
**स्थिरबुद्धिरसंमूढो ब्रह्मविद् ब्रह्मणि स्थितः ॥ २० ॥**

जुन पुरूष प्रियलाई प्राप्त भएर हर्षित हुँदैन तथा अप्रियलाई प्राप्त गरेर उद्विग्न (बिचलित) हुँदैन, त्यस्तो स्थिरबुद्धि, संशयरहित, ब्रह्मवेत्ता पुरूष सच्चिदानन्दघन परब्रह्म परमात्मामा दृढ भावले नित्य स्थित रहन्छ ।

जुन व्यक्ति कुनै प्रिय वस्तु पाएर खुशी हुँदैन र न कुनै अप्रिय वस्तु पाएर बिचलित नै हुन्छ, यस्तो स्थिरबुद्धि तथा मोहरहित तथा व्दिविधारहित ब्रह्मवेत्ता सधैँभरी ब्रह्ममानै स्थित रहन्छ । यहाँ स्वरूपसिद्ध व्यक्तिका लक्षणहरूको बारेमा



श्रीकृष्णले बताउनु भएको छ । पहिलो उस्मा शरीर तथा आत्मतत्वको तादात्म्यको बारेमा भ्रम हुँदैन, उस्लाई राम्ररी थाहा हुन्छ कि ऊ शरीर होइन, ऊ त भगवान्को एक अंश हो । तसर्थ केही प्राप्त हुँदा न उस्लाई हर्ष नै हुन्छ र नै केही गुमाउँदा बिचलन वा शोक नै । यसैलाई मनको स्थिरता वा स्थिरबुद्धि वा आत्मबुद्धि भनिन्छ । उस्ले शरीरलाई आत्मा ठान्दैन । यसरी उस्ले परम सत्य वा परम ब्रह्मको ज्ञानलाई राम्ररी जानेको हुन्छ । स्थिर बुद्धिको कारणले मानिस संशयरहित हुन्छ जस्ले उस्लाई निर्णय लिनमा सहज हुन्छ, अनि परमात्मासँग विभिन्न विषयहरूमा उस्ले साक्षात्कार गर्न खोज्दछ ।

**बाह्यस्पर्शेष्वसक्तात्मा विन्दत्यात्मनि यत्सुखम् ।**
**स ब्रह्मयोगयुक्तात्मा सुखमक्षयमश्नुते ॥ २१ ॥**

बाहिरका विषयहरूबाट आसक्तिरहित अन्तःकरणवाला साधकको आत्मामा स्थित जुन ध्यानजनित सात्विक आनन्द छ त्यसलाई उस्ले प्राप्त गर्दछ, त्यसपछि सच्चिदानन्दघन परब्रह्म परमात्माको ध्यानरूप योगमा अभिन्न भावले स्थित त्यस पुरूषले अक्षय आनन्दको अनुभूति गर्दछ ।

बाहिरी विषयहरूको आसक्तिबाट मुक्त पुरूष कहिल्यै पनि इन्द्रियसुखतर्फ आकर्षित हुँदैन । ऊ सदैव समाधिमा रहेर आफुभित्र आनन्दको अनुभूति गर्दछ । यसरी स्वरूपसिद्ध पुरूषले परमब्रह्ममा एकाग्र भएर अनन्त सुखको भोग गर्दछ । उस्लाई ब्रह्मज्ञानमा यति धेरै आनन्दको अनुभूति हुन्छ कि अन्य विषयवस्तुको चाहना उस्मा स्वतः समाप्त हुन्छ । उसलाई काम सुखमा पनि कुनै इच्छा हुँदैन । यसरी उस्ले आत्मसाक्षात्कारलाई प्राप्त गर्दछ । साच्चै भन्ने हो भने वास्तविक ज्ञानी उही हुन्छ जो बाह्य विषयवस्तुभन्दा अन्तस्करणबाट परब्रह्म परमेश्वरमा स्थित रहेर समाधिमा लिन रहन्छ ।

**ये हि संस्पर्शजा भोगा दुःखयोनय एव ते ।**
**आद्यन्तवन्तः कौन्तेय न तेषु रमते बुधः ॥ २२ ॥**

जे-जसो यी इन्द्रियहरू तथा विषयहरूको संयोगले उत्पन्न हुने सबै भोगहरू छन्, यद्यपि ती सबै विषयी पुरूषहरूको लागि सुखरूप बुझिन्छ, तापनि ती दुःखको लागि नै हुन् । तसर्थ हे अर्जुन ! बुद्धिमान विवेकी पुरूष तिनमा रमाउँदैन ।

भौतिक इन्द्रियहरू तथा विषयहरूको संयोगले बनेका भोगहरूलाई दुःखको कारण ठानी बुद्धिमान मनुष्य ती सबैमा भाग लिदैन् । यस्ता भोगहरूको आदि वा प्रारम्भ तथा अन्त हुने गर्दछन् । तसर्थ बाठो व्यक्ति त्यस्ता विषयवस्तुमा इच्छा नराख्ने भई सहभागी हुँदैन भनी श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ । हाम्रो शरीर नाशवान छ, यसर्थ इन्द्रियहरू पनि स्वतः नाशवान छन् । अनि यिनीहरूले भोग गर्ने विषयवस्तुहरू पनि नाशवान छन् । मुक्तात्माले कुनै नाशवान विषयमा अभिरूचि राख्दैन । उस्ले त परमात्माको दिव्य आनन्द सुख अछुण्यरूपले भोग गरिरहेको हुन्छ । स्थायी तथा निर्मल आनन्दको, परम सत्यको सुख पाइरहेको भगवान्को भक्तले नाशवान क्षणिक सुखको संग–संगै दुःख, भवबन्धन तथा रोगको लागि आफ्नो सहभागिता जनाउँदैन ।

**शन्कोतीहैव यः सोढुं प्राक्शरीरविमोक्षणात् ।**
**कामक्रोधोम्दव वेगं स युक्तः स सुखी नरः ॥ २३ ॥**

जुन साधकले यस मानव शरीरमा, शरीर नाश हुनुभन्दा अगावै नै काम, क्रोधबाट उत्पन्न हुने वेगहरूलाई सहन गर्न समर्थ हुन्छ, त्यही पुरूष योगी हो र त्यही सुखी हुन्छ ।

यस नाशवान शरीरलाई त्याग गर्नु अघि नै यदि कुनै साधक पुरूषले आफ्ना इन्द्रियहरूका इच्छा तथा क्रोधका वेगहरूलाई सहन गर्ने क्षमता विकसित गर्दछ भने ऊ यस संसारमा सुखी रहन्छ । वेगहरू विभिन्न किसिमका हुन्छन्, जस्तैः मनोवेग, उदरवेग, वाणीवेग, क्रोधवेग, उपस्थ (जनेन्द्रिय) वेग तथा जिह्वावेग । परमात्मासँगको आत्मसाक्षात्कारको लागि साधकले यी वेगहरूलाई रोक्न सक्नु पर्दछ । यस्ता व्यक्तिहरूले इन्द्रियका वेगहरूलाई रोकी नितान्त संयमित जीवन बिताउनु पर्दछ । सामान्यतया हाम्रा भौतिक इच्छाहरू पुरा नभएको खण्डमा हामीमा क्रोध उत्पन्न हुने गर्दछ । यस क्रोधले हाम्रो मन, आँखा तथा हृदयमा प्रत्यक्षतः असर पार्दछ । तसर्थ मनुष्यहरूले यस नाशवान शरीरलाई त्याग गर्नु अघि त्यस्ता किसिमका इच्छाहरूलाई तिरस्कार गर्नुपर्दछ । इन्द्रियहरूलाई वशमा गर्ने व्यक्ति स्वरूपसिद्ध हुन्छ र ऊ आत्मसाक्षात्कारको अवस्थामा सुखी रहन्छ । हाम्रो जीवन यात्राको समयावधि छोटो छ । हामीले यस्को सदुपयोग गरी मर्नुभन्दा अगावै इन्द्रियहरूका इच्छा–आकाङ्क्षाहरूलाई नियन्त्रित गरी परमेश्वरसँग साक्षात्कार गर्नुपर्दछ । अन्यथा यस



पछिका जन्महरूमा फेरि कुन योनीमा जानु परोस भन्ने अर्थमा श्रीकृष्णले सम्झाउँदै हुनुहुन्छ ।

**योऽन्तः सुखोऽन्तरारामस्तथान्तर्ज्योतिरेव यः ।**
**स योगी ब्रह्मनिर्वाणं ब्रह्मभूतोऽधिगच्छति ॥ २४ ॥**

जुन पुरूष अन्तरात्मामा नै सुखवाला छ, आत्मामै रमण गर्ने गर्दछ तथा जो आत्मामा नै ज्ञानी छ भने त्यस सच्चिादानन्दघन परब्रह्म परमात्मासंग एकिकृतभाव प्राप्त साङ्ख्ययोगीले शान्त ब्रह्मलाई प्राप्त गर्दछ ।

जो व्यक्ति कर्मठ छ, आफ्नो आत्मालाई पहिचान गरी त्यही रहेर ज्ञानको खोजी गर्दछ, आफ्नो अन्तःकरणमा जस्ले सुखको अनुभूति गर्दछ, अन्तःकरणमा नै रमेर घुम्दछ, अर्थात यी विषयहरूको लागि जो अन्तर्मूखि छ ऊ साच्चैको पूर्ण योगी हो । उस्ले परब्रह्म प्राप्त गरी मुक्ति पाउँदछ । सुख तथा दुःख मनका अनुभूति हुन् भन्ने विषयलाई बुझेको, परमात्माको अधिकार क्षेत्र बुझेको, आफ्नो जीवनको उद्देश्य जानेको, इन्द्रिय सुखभोगहरू नश्वर तथा अस्थायी हुन भनी जानकार रहेको व्यक्तिले अन्तर्मूखि हुने स्वभाव विकसित गर्दछ । यस्ता मुक्त पुरूषले कहिल्यै बाह्य वस्तुको अभिलाषा राख्दैन । ऊ ब्रह्मभूतको शान्त अवस्थामा रहन रूचाउँछ । तर यी सबै आफ्ना कर्महरू गर्दै गर्ने कार्यहरू हुन भनी जानेर उस्ले तिनको अबलम्बन पनि गर्दछ ।

**लभन्ते ब्रह्मनिर्वाणमृषयः क्षीणकल्मषाः ।**
**छिन्नद्वैधा यतात्मानः सर्वभूतहिते रताः ॥ २५ ॥**

जस्का सबै पापहरू नष्ट भइसकेका छन, जस्का सबै शङ्काहरू ज्ञानद्वारा निवृत वा हटिसकेका छन्, जो सबै प्राणिहरूको हित गर्नमा लागेको छ र जस्को जीतिएको मन कर्म गर्दा-गर्दै निश्चलभावले परमात्मामा स्थित छ, उहाँ ब्रह्मवेत्ता पुरूष शान्त ब्रह्मलाई प्राप्त हुनु हुनेछ ।

जो व्यक्तिमा कुनै किसिमको द्विविधा छैन, जस्को मन आत्मसाक्षात्कारमा लिन छ, जो सबै जीवहरूको हितमा सधैँ कार्यरत रहन्छ, यसरी जो समस्त पापहरूबाट टाढा बस्दछ, त्यस्तो व्यक्तिले ब्रह्मनिर्वाण वा मुक्ति प्राप्त गर्दछ । सही अर्थमा आनन्द त्यसैमा छ किनकि उस्मा बाह्य विषयवस्तुहरूको भोगमा कुनै आसक्ति

नै हुदैन् । उस्ले मनमा सन्तोष पालेको हुन्छ । मानिसले यस संसारमा कष्ट पाउनुको मुख्य कारण आफ्नो तथा परमात्मा बीचको सम्बन्ध बिर्सनाले हो । ज्ञानको प्रयोगले जब मानिसले यो सम्बन्धको पहिचान गर्दछ, ऊ परमात्माको यस संसारमा उहाँको सेवा भक्तिमा लिन हुन पुग्दछ । यस कार्यमा उस्ले कुनै पनि किसिमको द्विविधा महशुस गर्दैन । उस्का यस सम्बन्धी रहेका सबै शङ्का-उपशङ्काहरू बादल फाटे भैँ फाटिसकेको हुन्छन् । उस्ले बिना बिभेद सबैको हितमा कार्यहरू गर्दछ । उस्को मन निश्चलभावले परमात्मामा स्थित रहेर उहाँकै सेवाभावमा समर्पित रहन्छ ।

**कामक्रोधवियुक्तानां यतीनां यतचेतसाम् ।**
**अभितो ब्रह्मनिर्वाणं वर्तते विदितात्मनाम् ॥ २६ ॥**

काम-क्रोधबाट रहित, चित्तलाई जीतेको, परब्रह्म परमात्मासँग साक्षात्कार गरिसकेको ज्ञानी पुरुषहरूको लागि सबै तिरबाट शान्त परब्रह्म परमात्मा नै परिपूर्ण हुनुहुन्छ ।

मानिसहरूमा ज्ञानको आरम्भ मनलाई नियन्त्रण गरेर हुन्छ । तर मनलाई जीत्न आफ्नो भावनालाई नियन्त्रण गरेर मात्र सम्भव हुन्छ । यस्तै नियन्त्रण गरेर जो व्यक्ति काम क्रोध रहित हुन्छ, जस्ले आफ्ना इन्द्रियहरूलाई मनमा जीत्ने प्रढ गरेको हुन्छ तथा जुन दिन यो कार्य गर्न ऊ सफल हुन्छ त्यो दिनबाट उस्को अज्ञानताबाट पर्दा हटेको ठान्नु पर्दछ । यस प्रकार उस्ले परमात्मासँग साक्षात्कार गर्ने अवसर पाइरहेको हुन्छ, त्यस्तो ज्ञानी मानिसले परमात्माप्रति पूर्ण समर्पित भएर शान्त चित्तले परमात्मालाई परिपूर्ण ठान्दछ । उस्लाई भौतिक विषयवस्तुहरू तथा इन्द्रियतृप्तिका अन्य साधनहरूले कत्ति पनि आकर्षित गर्न सक्दैनन् ।

**स्पर्शान्कृत्वा बहिर्बाह्यांश्चक्षुश्चैवान्तरे भ्रुवोः ।**
**प्राणापानौ समौ कृत्वा नासाभ्यन्तरचारिणौ ॥ २७ ॥**
**यतेन्द्रियमनोबुद्धिर्मुनिर्मोक्षपरायणः ।**
**विगतेच्छाभयक्रोधो यः सदा मुक्त एव सः ॥ २८ ॥**

बाहिरी विषय भोगको बारेमा चिन्तन नगरेर तिनीहरूलाई बाहिर नै निकालेर र आँखाहरूको दृष्टिलाई भृकुटीको माझमा राखेर तथा नाक भित्र चल्ने प्राण तथा अपानवायुहरूमा समता राखेर, जस्को इन्द्रियहरू, मन तथा बुद्धि जीतिएको छ,



यस्तो मोक्ष परायण मुनि जो इच्छा, भय र क्रोधरहित भैसकेको छ, त्यो सधैँ मुक्त नै छ ।

आफ्नो इन्द्रियका चाहनाहरूलाई नियन्त्रित वा संयमित गरेर, भौतिक भोग्य सामग्रीहरूबाट टाढिएर, आफ्नो दृष्टिलाई दुइ आखाका आँखीभौँहरूको बीचमा स्थित गरेर, प्राण तथा अपानवायुहरूलाई भित्रै रोकेर जस्ले मोक्षको लक्ष्य पछ्याउँदछ त्यो मुनि अवश्यनै मुक्त हुन्छ । मुनिहरूले निरन्तर परमेश्वरको स्वरूपलाई मनन गर्दछन् । यस विधिलाई प्राणायाम भनिन्छ । यो ध्यानमा जाने माध्यम हो । स्वाँस त सबैले फेर्दछन तर आफुलाई भिन्दै सही बाटोमा लैजान आउने तथा जाने स्वासहरूमा समता कायम गरी मुनिले नियन्त्रणमा राख्दछ । तब मात्र उस्का इन्द्रियहरू : मन तथा बुद्धि आदिलाई उस्ले जीत्न सक्दछ । यस योग विधिबाट ऊ समस्त इच्छा क्रोध तथा भयबाट छुट्न पुग्दछ । यसैबाट उस्ले मुक्ति पाउँदछ ।

**भोक्तारं यज्ञतपसां सर्वलोकमहेश्र्वरम् ।**
**सुहृदं सर्वभूतानां ज्ञात्वा मां शान्तिमृच्छति ॥ २९ ॥**

मेरो भक्तले मलाई सबै यज्ञ तथा तपहरूलाई भोग्ने, सम्पूर्ण लोकहरूको ईश्वरहरूको पनि ईश्वर तथा सबै भूत प्राणिहरूको सुहृद अर्थात् स्वार्थरहित दयालु र प्रेमी, यस्ता तत्वहरूले जानेर, शान्ति प्राप्त गर्दछ ।

यहाँ श्रीकृष्णले भक्तहरूले भौतिक सुखबाट कसरी शान्ति प्राप्त गर्दछन् भन्ने बारेमा बर्णन गर्दै हुनुहुन्छ । उनीहरूले मलाई सबै यज्ञहरूको तथा तपस्याहरूको भोक्ता, सबै लोकहरूमा रहेका ईश्वरहरूको पनि म ईश्वर हुँ ठानेर तथा सबै जीवहरूको लागि उपकारी तथा हितैषी भनी जानेर शान्तिको अनुभव गर्दछन् । आफुले निर्देशन दिए बमोजिम गर्नेलाई श्रीकृष्णले आफ्नो भक्त ठान्नु हुन्छ । भक्तहरू उहाँलाई धेरै नै प्रिय छन् । उहाँ भन्नु हुन्छ कि जस्ले यज्ञ गर्दछ, जस्ले त्याग गरेर मैले भने बमोजिम गर्दछ, आफ्ना कर्तव्यहरूलाई साँचो मनले पालना गर्दछ, उस्ले एकदिन मलाई नै प्राप्त गर्दछ र म उस्लाई प्राप्त हुन्छु । श्रीकृष्णलाई हामीले शान्ति वा भगवान् मान्न सक्दछौँ । उहाँले भने बमोजिम गर्नाले हामीलाई शान्ति प्राप्ति हुन्छ वा भगवान् प्राप्त हुन्छ । जुन दिन भगवान्को सच्चा ज्ञान प्राप्त हुन्छ त्योभन्दा ठूलो शान्ति हाम्रो लागि केही हुँदैन ।

अथ षष्ठोध्यायः

## छैठौं अध्याय

## आत्मसंयमयोग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**अनाश्रितः कर्मफलं कार्यं कर्म करोति यः ।**
**स संन्यासी च योगी च न निरग्निर्न चाक्रियः ॥ १ ॥**

श्रीभगवान्ले भन्नुभयो : जुन पुरूषले कर्मफलको आश्रय नलिइकन गरिनेयोग्य कर्महरू गर्दछ, ऊ सन्यासी तथा योगी हो तर मात्र अग्निलाई त्याग गर्ने व्यक्ति सन्यासी होइन तथा मात्र क्रियाहरूलाई त्याग गर्ने व्यक्ति पनि योगी होइन ।

जुन व्यक्तिलाई आफुले गरिएका कर्महरूको कर्मफलप्रति आसक्ति रहँदैन तथा जस्ले आफ्ना कर्तव्यहरू तथा कर्महरू गरिनै रहन्छ त्यस्तो व्यक्ति सहीमा सन्यासी तथा योगी हो । त्यस्तै जुन जीवले आफ्नो तुष्टिको लागि काम नगरी परब्रह्मको तुष्टिको लागि काम गर्दछ ऊ नै असलमा सन्यासी हुन्छ तथा पूर्ण योगी हुन्छ । मानिसहरूले फलमा अधिकार देखाउनु हुन्न, फलको इच्छा गरे भने त्यो स्वार्थ हुन्छ, मात्र कर्ममा अधिकार देखाउनु पर्दछ, कर्महरू गर्दै जानु पर्दछ । स्वार्थी भई आफुलाई सबै कार्यहरूबाट मुक्ति पाइयो, अब अग्निहोत्र यज्ञ म गर्दिन भनी कुनै सन्यासीले भन्दछ भने ऊ स्वार्थी हुन्छ किनकि उस्को लक्ष्य त निराकार भगवान्सँग तादात्म्य स्थापित गर्ने हुन्छ, ऊ त्यस्मा मात्र लाग्दछ भने । गरिने कर्महरूको सम्बन्ध त भगवान्ले श्रृष्टि गर्नु भएको संसारको सुसञ्चालन र सबैको कल्याणसँग गाँसिएको हुन्छ । त्यस्तै जुन योगीले आफूले गर्नु पर्ने सबै कर्महरूलाई बन्द गरेर आधा खोलिएको र आधा बन्द गरिएका आँखाहरूद्धारा योगाभ्यास गर्दछ, उस्ले पनि स्वार्थपूर्ण आत्मतुष्टिको इच्छा राखेको हुन्छ, यसरी ऊ पनि पूर्ण योगी हुन सक्दैन । तसर्थ गरिनु पर्नेहरू कर्महरूलाई कदापि त्याग गरेर सन्यासी तथा योगी हुँदैन ।

**यं संन्यासमिति प्राहुर्योगं तं विद्धि पाण्डव ।**
**न ह्यसंन्यस्तसंकल्पो योगी भवति कश्र्चन ॥ २ ॥**

हे अर्जुन ! जस्लाई सन्यास यस्तो भनिन्छ, त्यसैलाई तिमी योग भनेर बुझ, किनकि सकल्पहरूलाई त्याग नगर्ने कुनै पनि पुरूष योगी हुँदैन ।



श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि जस्लाई सन्यास भनिन्छ त्यसैलाई तिमी योग अर्थात परब्रह्मले युक्त भएको बुझ किनकि इन्द्रियतृप्तिको लागि इच्छाहरूलाई नत्यागीकन कुनै मानिस कहिल्यै योगी हुँदैन । सन्यास भनेको कामना तथा इच्छाहरूको त्याग हो । जीवात्माको आफ्नो स्वतन्त्र अस्तित्व छैन, ऊ त परमेश्वरको तटस्थ शक्ति हो । ऊ जब मायाको बशमा बशिभूत हुन्छ अनि ऊ यस भव सागरमा रूमलिन्छ । तर जब उस्ले आफ्ना समस्त इन्द्रियहरूको इच्छा तथा आकाङ्क्षाहरू माथि नियन्त्रण कायम गरी आकाङ्क्षाहरूको त्याग गरिदिन्छ, तर आफ्ना सत्कर्महरू भने गरिरहन्छ तथा परमेश्वरमा योगाभ्यासको माध्यमले लिन हुन पुग्दछ भने ऊ सही मानेमा योगी हुन्छ । कर्महरूलाई कहिल्यै त्याग गर्न हुन्न, ती त गरिरहनु पर्दछ । योगीको कर्मफल प्रति कुनै आसक्ति हुनुहुन्न । अन्यथा भगवान्को सृष्टिको उद्देश्यमा र जीव कल्याणमा अबरूद्धता आउँछ ।

**आरूरूक्षोर्मुनेर्योगं कर्म कारणमुच्यते ।**
**योगारूढस्य तस्यैव शमः कारणमुच्यते ॥ ३ ॥**

योगमा साधना गर्ने इच्छा भएको मननशील पुरूषको लागि योगको प्राप्तिमा निष्कामभावले कर्म गर्नु नै उस्को उद्देश्य भनिन्छ र योगसाधक भइसकेपछि ऊ योगसाधक पुरूषमा जुन सर्व संकल्पको अभाव (कामनाहरूको अभाव) हुन्छ त्यसैलाई नै कल्याणको उद्देश्य भनिन्छ ।

आत्मा तथा परमात्माको बीचमा जोडने कार्य अर्थात योगको कार्य गर्नु योगको उद्देश्य हो । यसबाट सर्वोच्च आध्यात्मिक सिद्धि प्राप्त हुन्छ । यसो गर्दा योगकर्ता पूर्ण आत्मसाक्षात्कार हुन्छ । यो जोडने भऱ्याङ्ग वा सिढीलाई तीन भागमा विभाजन गरिन्छ : ज्ञानयोग, ध्यानयोग तथा भक्तियोग । सिँढीको प्रारम्भिक अवस्थालाई योगारूरूक्षु तथा अन्तिम भागलाई योगारूढ अवस्था भनिन्छ । योगमा लाग्ने साधकले आफ्ना इन्द्रियहरूलाई वशमा राखेको हुन्छ तथा नियमित कर्महरू गरिरहेको हुन्छ । उस्का कर्महरू स्वार्थप्रेरक हुँदैनन । ऊ ध्यानमा सीपयुक्त भइसकेपछि उसलाई ध्यानमा बिचलित गर्ने सबै मानसिक कार्यहरू बन्द हुने गर्दछन् । यस्ता व्यक्तिले योगको बारेमा मनन गरिसकेपछि वा ज्ञान प्राप्त गरिसकेपछि उस्ले निष्काम भावले कर्महरू सम्पादन गर्नुपर्ने हुन्छ । र साथै जब ऊ योगको बाटोमा हिडदछ अनि उस्मा सर्वसङ्कल्पको अभाव अर्थात कामनाहरूको त्याग भएको हुनु पर्दछ । यसैबाट कल्याणको उद्देश्य पुरा हुन्छ ।

**यदा हि नेन्द्रियार्थेषु न कर्मस्वनुषज्जते ।**
**सर्वसंकल्पसंन्यासी योगारूढस्तदोच्यते ॥ ४ ॥**

जुन समयमा योगी न त इन्द्रियहरूको भोगहरूमा र न कर्महरूमा नै आसक्त हुन्छ, त्यस समयमा सर्वसङ्कल्पहरूको अर्थात् कामनाहरूको त्यागी पुरूषलाई योगारूढ भएको भनिन्छ ।

जब कुनै योगीले समस्त भौतिक इच्छाहरूलाई त्याग गरेर आफ्ना इन्द्रियतृप्तिहरूको लागि कुनै पनि कार्य गर्दैन र नै सकाम कर्ममा नै लाग्दछ अर्थात् कामनाहरूलाई त्याग गर्दछ भने त्यसलाई योगारूढ भएको योगी भनिन्छ । यसको लागि निरन्तर प्रयासको खाँचो पर्दछ । सबैभन्दा पहिला उस्ले यस्तो किसिमको धारणा बनाउँदछ, तत्पश्चात् ऊ त्यस धारणा बमोजिमको मार्गमा हिँड्दछ, उसले हिँडिरहेको बाटो र लक्ष प्राप्ति गर्ने बाटो बिराउँदैन । यसरी पूर्ण योगी बनाउने तरिका श्रीकृष्णले अर्जुनलाई सम्झाउनु भयो । यसरी भगवान्को दिव्य प्रेमाभक्तिमा लागेको व्यक्ति आफैंमा प्रसन्न रहन्छ, ऊ इन्द्रियतृप्ति तर्फ जाँदैन । उस्लाई इन्द्रियतृप्ति भनेको तुच्छ काम लाग्दछ तथा उस्ले योगसाधनामा परम् सुखको अनुभूति गरिरहेको हुन्छ ।

**उद्धरेदात्मनाऽत्मानं नात्मानमवसादयेत् ।**
**आत्मैव ह्यात्मनो बन्धुरात्मैव रिपुरात्मनः ॥ ५ ॥**

आफुद्वारा आफुलाई संसार समुन्द्रबाट उद्धार गर्ने र आफुलाई अधोगतितर्फ नलाने, किनकि यो मनुष्य आफैं त आफ्नो मित्र हो र आफैं नै आफ्नो शत्रु हो ।

मानिसहरूले आफ्नो मनको सहायताले आफ्नो उद्धार गर्नु पर्दछ तथा आफुलाई तल झर्न दिन हुन्न । यो मन नै उसको मित्र एवं शत्रु हो । योग पद्धतिको केन्द्रबिन्दु मननै हो । योगपद्धतिको उद्देश्य मनलाई नियन्त्रित गर्ने हो । इन्द्रिय विषयहरूको आसत्तिबाट मुक्त हुने हो । इन्द्रियहरूको प्रणेता मनलाई यस्तरी प्रशिक्षित गरेर ज्ञानी बनाउनु पर्दछ कि ऊ इन्द्रियतृप्तितर्फ लागेर अधोगतितर्फ नजावोस् । मन त झूठो अहङ्कारमा लागेर प्रकृति माथि विजय प्राप्त गर्नेतर्फ लाग्न खोज्दछ । मन नै मनुष्यको लागि बन्धन तथा मोक्षको कारण हो । हामीले आफुलाई यस दुनियाभन्दा माथि उठाएर ज्ञान हाँसिल गर्न सक्छौं । तसर्थ हामीले स्वयं कर्महरूको बन्धनबाट छुटने कोशिस गर्नु पर्दछ ।



**बन्धुरात्मात्मनस्तस्य येनात्मैवात्मना जितः ।**
**अनात्मनस्तु शत्रुत्वे वर्ततात्मैव शत्रुवत् ॥ ६ ॥**

जुन जीवात्माद्वारा मन तथा इन्द्रियसहित शरीर जीतिएको छ, त्यस जीवात्माको त ऊ आफैं मित्र हो र जुन जीवात्माद्वारा मन तथा इन्द्रियसहित शरीर जितिएको छैन, त्यस्को लागि ऊ आफैं शत्रुको जस्तै शत्रुतापूर्ण कार्य गर्दछ ।

यहाँ श्रीकृष्णले अर्जुनलाई बताइरहनु भएको छ कि हामीमा को हाम्रो मित्र हो तथा को हाम्रो शत्रु हो । जुन व्यक्तिले आफ्नो शरीरका मन तथा इन्द्रियहरूलाई जीतिसकेको छ, त्यो व्यक्तिका मन तथा इन्द्रियहरूले भगवान्को सेवा तथा भक्तिमा कर्म गर्ने हुँदा मन उस्को लागि परम मित्र हो । तर जस्ले यस्तो गर्दैन वा गर्न सक्दैन उसको लागि त्यही मन परम शत्रु भइरहन्छ । जस्ले आफ्ना मन तथा इन्द्रियहरूलाई वशमा राख्न सक्दैन भने उनै उसको लागि शत्रु सिद्ध भई उस्का जीवन तथा जीवनको लक्ष्य सबै नाश हुने गर्दछन् । मनुष्यको मन अविजित शत्रु हुँदा मनुष्यको मनमा काम, क्रोध, लोभ, आदिले दिएका आज्ञाहरूको पालना गर्दछ । तर उसले मनमा विजय प्राप्त गरेको छ भने ती शत्रुहरूलाई पराजीत गरी उस्ले भगवान्को आज्ञालाई पालन गर्दछ तथा सबैमा आफू सरह नै भगवान्को स्वरूप देख्दछ । वास्तविक योगाभ्यास भनेको हृदयभित्र परमात्मासँग तादात्म्य कायम गर्नु तथा उहाँको आज्ञालाई पालन गर्नु हो ।

**जितात्मनः प्रशान्तस्य परमात्मा समाहितः ।**
**शीतोष्णसुखदःखेषु तथा मानापमानयोः ॥ ७ ॥**

सर्दी-गर्मी तथा सुख-दुःख आदिमा तथा मान र अपमानमा जस्को अन्तः करणका वृतिहरू पूर्णतया शान्त रहन्छन्, यस्तो स्वाधीन आत्मा भएको पुरूषको ज्ञानमा सच्चिदानन्दघन परमात्मा सम्यक (शान्त) तथा समुचित प्रकारले स्थित हुनुहुन्छ अर्थात उस्को ज्ञानमा परमात्माको बाहेक अरू केही रहँदै रहन्न् ।

जस्को मन जीवनको समस्त आरोह तथा अवरोहमा शान्त तथा एकभावले रहन्छ सबै उहाँ परमेश्वर कै निर्देशन बमोजिम सञ्चालित भएको हो भन्ने उस्ले जान्दछ भने उस्ले परमात्मालाई प्राप्त गरिसकेको हुन्छ । उस्का चिन्तन, कर्म सबै उहाँ कै लागि हुन्छन् भने त्यस्तो मानिसलाई सुख–दुःख, मान-अपमानले कुनै प्रभाव पार्न सक्दैन, उस्मा एकभाव नै रहन्छ, ऊ स्वाधिन रहेको हुन्छ । यस प्रकार मनलाई

वशमा ल्याउनु भनेको योग पद्धत्तिद्वारा सम्भव हुन्छ। अनि मात्र मानिसको जीवनले लक्ष प्राप्ति गर्दछ। जब मानिसको मन परा प्रकृतिमा स्थिर हुन्छ त्यो व्यक्तिको मनले भगवान्को आज्ञा बाहेक अन्य कुनै बिकल्प नै देख्दैन्। यदि बाह्‍य विषयवस्तुले हाम्रो मनलाई प्रभाव पार्ने हो भने हाम्रो मन स्वाधिन रहँदैन, पराधिन हुन्छ। उस्मा साँचो अर्थमा ज्ञान आएको हुँदैन। ऊ वाह्‍य प्रवृतिको दास बन्न पुग्दछ।

**ज्ञानविज्ञानतृप्तात्मा कूटस्थो विजितेन्द्रियः।**
**४ युक्त इत्युच्यते योगी समलोष्टाश्मकाञ्चनः॥ ८॥**

जस्को अन्तःकरण ज्ञान-विज्ञानले तृप्त छ, जस्को स्थिति विकाररहित छ, जस्का इन्द्रियहरू राम्ररी जीतिएका छन् र जस्को लागि माटो, ढुङ्गा र सुन समान छन्-त्यो व्यक्ति योगीयुक्त हो तथा उस्लाई भगवान् प्राप्त हुनुहुन्छ, यस्तो भनिन्छ।

जो व्यक्तिले आत्मसाक्षात्कार गरिसकेको छ, त्यसलाई योगी भनिन्छ। ऊ आफूद्वारा अर्जित ज्ञान तथा अनुभूतिबाट पूर्ण सन्तुष्ट रहने गर्दछ। यस्तो व्यक्तिले आध्यात्मको ज्ञान तथा व्यवहार प्राप्त गरिसकेको हुन्छ तथा यस्तोलाई जीतेन्द्रिय भनिन्छ। यस्तो व्यक्तिमा अन्य व्यक्ति-व्यक्तिहरू प्रति तथा वस्तु-वस्तुहरू प्रति समभाव रहने गर्दछ। चाहे त्यो माटो होस्, ढुङ्गा होस् वा सुन नै किन नहोस्। योगी पुरूषलाई यो ज्ञान हुन्छ कि सुन त सांसारिक दुःखको कारण हो। तसर्थ यो अझै कष्टकारक हुन्छ। श्रीकृष्ण भगवान्को दिव्य सेवामा समर्पित यस्तो व्यक्तिले मात्र उहाँको नाम, गुण, लीलाहरूको बारेमा बुझ्न सक्दछ। मात्र सांसारिक ज्ञानले मानिस कृष्णभावनाभावित हुन सक्दैन्। आध्यात्मिक ज्ञानले ऊ आफ्नो सङ्कल्पमा दृढ र हन्छ। अनुभवी व्यक्ति यसप्रकार आत्म संयमी हुन सक्दछ। योगी पुरूषलाई यो कुरा अवगत हुन्छ कि सुन जतिसुकै बहुमूल्य भए पनि भगवत प्राप्तिको सुखको अगाडि त्यो मूल्यहीन छ, अर्थात माटो वा ढुङ्गा सरह नै छ।

**सुहृन्मित्रार्युदासीनमध्यस्थव्देष्यबन्धुषु।**
**साधुष्वपि च पापेषु समबुद्धिर्विशिष्यते॥ ९॥**

सुहृद (सबैको हित गर्ने) वा सबैको हितमा कामहरू गर्ने, मित्र, वैरी, उदासीन, मध्यस्थ (पक्षपात रहित), द्वेष्य तथा बन्धुगणहरूमा, धर्मात्माहरूमा र पापिहरूमा पनि समभाव राख्ने व्यक्ति अत्यन्तै श्रेष्ठ हुन्छ।



जब मानिसले निष्कपटहरूलाई, हितैषीहरूलाई, तटस्थ रहेकाहरूलाई, मध्यस्थ वा पक्षपात रहितहरूलाई, अरूको ईर्ष्या गर्नेहरूलाई, शत्रुहरू तथा मित्रहरूलाई, पापीहरू तथा पुण्यात्माहरू सबैलाई समभावले, उही ईश्वरको बास भएका आत्मा हुन् भनी देख्दछ भने ऊ अझै श्रेष्ठ हुन्छ। यी नै योगीका परिभाषाहरू हुन्। उस्ले के ठान्दछ भने परमेश्वरले बनाएको राम्रो-नराम्रोलाई उस्ले कसरी न्यायपूर्वक किसिमले छुट्याउने ? त्यो क्षमता तथा अधिकार उस्मा निहित छैन। तसर्थ सबै समान हुन, परमात्माका अंशहरू हुन भन्ने धारणा बमोजिम उस्ले ती सबै प्रति समभाव राखी समान व्यवहार गर्दछ।

**योगी युञ्जीत सततमात्मानं रहसि स्थितः।**
**एकाकी यतचित्तात्मा निराशीरपरिग्रहः॥ १०॥**

मन र इन्द्रियहरूसहित शरीरलाई वशमा राख्ने, आशारहित र सङ्ग्रहरहित योगीले एक्लै नै एकान्त स्थानमा स्थित भएर आत्मालाई निरन्तर परमात्मा लगावोस्।

योगीले सधैँ आफ्नो शरीर, मन तथा आत्मालाई विषय भोग आदिमा नलगाई परमेश्वरमा लगाउनु पर्दछ, ऊ एकान्त स्थानमा बस्ने गर्नु पर्दछ तथा बडो सावधानीको साथ आफ्नो मनलाई सधैँ वशमा राख्नु पर्दछ। उस्ले आफ्ना भन्ने स्वार्थप्रेरक सबै आकाङ्क्षाहरू तथा वस्तुहरू, क्लेष, ईर्ष्या आदिको सङ्ग्रह गर्नु हुन्न भनी श्रीकृष्णले योगीमा हुनु पर्ने गुणहरूका बारेमा यस श्लोकमा वर्णन गर्नु भएको छ। ऊ परमेश्वरको दिव्य प्रेमाभक्तिमा एकाग्र भएर प्रवृत हुनु पर्दछ। संसारका सबै वस्तुहरूको श्रृष्टि भगवान्ले गर्नु भएको हो भन्ने मान्यतालाई सँगालेर उसले कुनै पनि वस्तु प्रति लोभ-लालसा राख्नु हुँदैन। तसर्थ हामीले सांसारिक वस्तु वा सम्पत्ति जति जम्मा गर्दछौ त्यतिकै अज्ञानता तथा पाप पनि जम्मा गर्दछौँ। एकदिन ती सबैको हिसाब त दिनै पर्दछ। तर योगी समझदार हुन्छ। ऊ संसारबाट टाढा रहेर उस्ले भगवान्लाई एकाग्र भई सम्झिरहनु पर्दछ भनेर श्रीकृष्णले अर्जुनलाई योगीका गुणहरू धारण गर भन्दै हुनुहुन्छ।

**शुचौ देशे प्रतिष्ठाप्य स्थिरमासनमात्मनः।**
**नात्युच्छ्रितं नातिनीचं चैलाजिनकुशोत्तरम्॥ ११॥**

शुद्ध भूमिमा जसमाथि क्रमशः कुशासन, मृगछाला र वस्त्र ओछ्याइएको

होस्, जुन न धेरै अग्लो होस् र नै धेरै होचो होस्, यसरी आफ्नो आसनलाई स्थिर गरी स्थापना गर्नु पर्दछ ।

योग साधना गर्दा कसरी बस्नु पर्दछ भन्ने बारेमा श्रीकृष्णले अर्जुनलाई बताउँदै हुनुहुन्छ । योगाभ्यासको लागि योगीले एकान्त स्थानमा गएर भुईमा कुशासन ओछ्याएर, त्यसलाई मृगको छालाले छोपेर त्यस माथि नरम कपडा ओछ्याउनु पर्दछ । त्यो धेरै अग्लो पनि हुनु हुँदैन तथा धेरै होचो पनि हुनु हुँदैन । त्यो पवित्र स्थानमा हुनु पर्दछ । त्यो हल्लिने हुनु हुदैन किनकि हल्लिनाले मन अस्थिर हुन सक्दछ अर्थात् आसन स्थिर हुनुपर्दछ ।

**तत्रैकाग्रं मनः कृत्वा यतचित्तेन्द्रियक्रियः ।**
**उपविश्यासने युञ्ज्याद्योगमात्मविशुद्धये ॥ १२ ॥**

त्यस आसनमा बसेर चित्त तथा इन्द्रियहरूका क्रियाहरूलाई वशमा राख्दै मनलाई एकाग्र गरेर अन्तःकरणको शुद्धिको लागि योगको अभ्यास गरौँ ।

योगासनमा कसरी बस्ने क्रम मै श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि त्यस्तो नरम आसनमा बसेर यताउति कुदिरहने मन तथा इन्द्रियहरूलाई वशमा राख्दै आत्मसंयमी हुँदै एकाग्रतापूर्वक हृदयले परमेश्वरको सम्झना गर्दै योगाभ्यासद्वारा अन्तःकरणको शुद्धि गर्ने अभ्यास गरिरहनु पर्दछ ।

**समं कायशिरोग्रीवं धारयन्नचलं स्थिरः ।**
**संप्रेक्ष्य नासिकाग्रं स्वं दिशश्चानवलोकयन् ॥ १३ ॥**

काया (शरीर), टाउको र घाँटीलाई समान एवं अचल स्थितिमा राखेर र स्थिर भएर आफ्नो नाकको अगाडि भागमा दृष्टि स्थिर गरेर, अन्य दिशाहरूपट्टी नहेरी बस्नु पर्दछ ।

श्रीकृष्णले योगगर्दा शरीरको ढाँचा कस्तो हुनुपर्दछ भन्ने बारेमा प्रकास पार्दै योगाभ्यास गर्नेले आफ्नो शरीर, घाँटी तथा टाउकोलाई सिधा राख्नुपर्दछ तथा मनलाई स्थिर गर्न नाकको टुप्पोमा दृष्टिलाई स्थिर गर्नुपर्दछ, जस्लेगर्दा अरू केही नदेखियोस् । दृष्टि यताउता दौडाउनु हुन्न । स्थिर भएर बस्नु पर्दछ । यसप्रकार एकाग्रतापूर्वक ध्यान गर्न सकिन्छ ।



**प्रशान्तात्मा विगतभीर्ब्रह्मचारिव्रते स्थितः ।**
**मनः संयम्य मच्चित्तो युक्त आसीत मत्परः ॥ १४ ॥**

ब्रह्मचारीको ब्रतमा स्थित भएर, भयरहित भएर तथा राम्ररी शान्त अन्तःकरणवाला सावधान योगीले मनलाई रोकेर ममा चित्त लगाएर र मलाई नै आफ्नो परम् लक्ष्य बनाएर रहनु पर्दछ ।

श्रीकृष्णले ध्यानको अवस्थाको बारेमा अगाडि बताउँदै भन्नुहुन्छ साधकले ब्रह्मचारीको ब्रतमा स्थित रहनु पर्दछ । मनुष्यले ब्रह्मचर्य भन्नाले ब्रह्ममा आचार गर्ने, नियमले यज्ञ गर्ने, योगाभ्यास गर्दा मन तथा इन्द्रियहरूलाई अबिचलित बनाई, निडर भएर शान्त अन्तःकरणले आफ्नो हृदयमा मेरो चिन्तन गर्ने तथा मलाई नै आफ्नो परम् वा अन्तिम लक्ष्य बनाउनु पर्दछ । योगाभ्यास गर्नेले सात्विक हुनुपर्दछ । योगाभ्यासमा परमात्माको अन्तर्यामी रूपलाई खोज गर्ने, उहाँलाई देख्ने तथा उहाँसँग विनयतापूर्वक अन्तर्क्रिया गरी रमाउने हो । यस्तो भगवान्को रूप प्राप्त गर्नको लागि इन्द्रियविषयक सन्दर्भहरूमा नअल्झिई पूर्णरूपले ब्रह्मचर्यमा रहनुपर्दछ । एकान्त स्थानमा योगाभ्यास गर्दा परमेश्वरलाई आफ्नो मन मस्तिष्कमा आसिन गराउनु पर्दछ ।

**युञ्जन्नेवं सदात्मानं योगी नियतमानसः ।**
**शान्तिं निर्वाणपरमां मत्संस्थामधिगच्छति ॥ १५ ॥**

आफ्नो मनलाई वशमा राखेको योगीले यस प्रकार आत्मालाई निरन्तर म परमेश्वर स्वरूपमा लगाउँदै ममा रहने परमानन्दको पराकाष्टा रूप शान्ति प्राप्त गर्दछ ।

योगीको ध्यानको अवस्थालाई सम्झाउँदै श्रीकृष्णले अर्जुनलाई भन्नुहुन्छ कि यस प्रकार शरीर, मन तथा कर्महरूलाई सधैँ संयममा राख्ने अभ्यास गरिरहेको संयमी योगीले आफ्नो आत्मामा मेरो स्वरूपलाई खोज्नु पर्दछ । यसरी त्यस योगीले ममा रहने परमानन्दको पराकाष्टामा प्राप्त हुने शान्ति प्राप्त गर्दछ । हाम्रो आत्मा उहाँ परमात्माकै एउटा अंश हो । आत्मा परमात्माको अंश हो भन्ने विषयलाई हाम्रो मनले हामीबाटै लुकाउन खोज्दछ । योगाभ्यासमा भौतिक संसारका लौकिक सामग्रीहरूलाई आफ्नो लागि उपयोग नगर्ने चाहना राखी परमेश्वरमा लिन भएर योग गर्दा

परमानन्दको पराकाष्टा स्वरूप शान्ति उस्ले प्राप्त गर्दछ । अनि मात्र उस्को योग साधना सफल हुन्छ ।

**नात्यश्नतस्तु योगोऽस्ति न चैकान्तमनश्नतः ।**
**न चाति स्वप्नशीलस्य जाग्रतो नैव चार्जुन ॥ १६ ॥**

हे अर्जुन ! यो योग न त धेरै खानेवालाको लागि, न खाँदै नखानेवालाको लागि, न धेरै सुत्ने स्वभाववालाको लागि र नै सधैँ ब्युँभिरहनेवालाको लागि सिद्ध हुन्छ ।

श्रीकृष्णले अर्जुनलाई कस्ता स्वभावका व्यक्तिहरूले योगाभ्यास गर्न सक्दैनन् त्यस्को बारेमा बर्णन गर्दै भन्नु हुन्छ कि जो मानिस धेरै खान्छ, जो खाँदै खाँदैन, जो धेरै सुत्दछ वा जो ब्युँभिरहन्छ त्यसले योगाभ्यास गर्न सक्दैन । यी सबै क्रियाहरू शारीरिक सन्तुष्टीको लागि वा इन्द्रियतृप्तिको लागि गरिने क्रियाहरू हुन् । अति भोको बस्नु, अति नै सुत्नु, सुत्दै नसुत्नु यी योग गर्ने साधकको लागि वर्जित कार्यहरू हुन् । योगाभ्यासमा लाग्ने मानिसले त अभ्यासमा लाग्नु पहिले नै आफ्नो इन्द्रियहरूलाई संयमित वा नियन्त्रणमा राख्नु पर्दछ भन्ने पूर्व शर्त रहेको हुन्छ । हामीले जीवन निर्वाहको लागि गर्ने सात्विक शाकाहारी भोजन पनि श्रीकृष्णलाई भोग लगाएर मात्र उच्छिष्ट प्रसादको रूपमा आवश्यक भए जति मात्र ग्रहण गर्नु पर्दछ । योग गर्न इच्छुक साधकले यसरी शास्त्रद्वारा अनुमोदित विधिहरूको पालना गर्नु पर्दछ । श्रीकृष्णलाई प्रसाद नचढाइकन खानु भनेको उहाँले गरेको सृष्टि उहाँलाईनै अर्पण नगरी खानु हो अर्थात पापको भागी हुन खोज्नु हो । धेरै खानु लगायतका शारीरिक सन्तुष्टि दिने कार्यहरू तमोगुणी स्वभावको लक्षण हो र तमोगुणी स्वभाव भएको व्यक्तिले योगाभ्यास गर्न सक्दैन । योगका लागि चाहिने उपयुक्त आचरणहरू कायम गरेर साधना गर्ने मानिसको लागि योग गर्नु सम्भव छ । तर जस्ले अनुशासनलाई भङ्ग गरेर हिँडदछ उस्को लागि योग गर्न मुश्किल हुन्छ ।

**युक्ताहारविहारस्य युक्तचेष्टस्य कर्मसु ।**
**युक्तस्वप्नावबोधस्य योगो भवति दुःखहा ॥ १७ ॥**

दुःखहरूलाई नाश गर्ने योग त यथायोग्य आहार विहार गर्ने, कर्महरूमा यथायोग्य चेष्टागर्ने तथा यथायोग्य सुत्ने तथा यथायोग्य ब्युंभिरहनेहरूको मात्र सिद्ध हुन्छ ।



जो व्यक्तिले खाने, सुत्ने, आमोद-प्रमोद तथा अन्य कामहरू गर्ने बानीहरूलाई नियमित सीमाभित्र रहेर पालना गर्दछ, त्यो व्यक्तिले नै सबै भौतिक क्लेषहरूलाई हटाउन सक्दछ । योग अनुशासनमा कायम रहनेहरूको लागि तथा नियमहरूको पालना गर्नेहरूको लागि उपयुक्त हुने गर्दछ । यस्ता स्वभाव भएकाहरूका कार्यहरू सदैव नियमित हुने गर्दछन्, यसर्थ इन्द्रियतृप्तिबाट ऊ अदूषित रहन्छ । उस्ले आफ्ना कर्महरू निष्ठापूर्वक सम्पादन गर्ने गर्दछ । तर जस्ले अनुशासनलाई भङ्ग गरेर हिँड्दछ, उस्को लागि योगाभ्यास निरर्थक छ । तसर्थ अनुशासनयुक्त, आफ्ना कर्महरूप्रति निष्ठावान भएर कर्म गर्ने अभ्यासीहरूको लागि मात्र योगसिद्ध भई उनीहरूका सबै दुःखहरू नाश हुने गर्दछ । अनुशासनबिहिन व्यक्तिहरूबाट योगाभ्यास हुन सक्दैन भनी श्रीकृष्णले अर्जुनलाई सम्झाउनु भएको छ ।

**यदा विनियतं चित्तमात्मन्येवावतिष्ठते ।**
**निःस्पृहः सर्वकामेभ्यो युक्त इत्युच्यते तदा ॥ १८ ॥**

साधकले धेरैनै वशमा राखेको चित्त जुन समयमा परमात्मामा पूर्णतया स्थित हुन्छ, त्यसैकालमा सबै भोगहरूबाट स्पृहा (कामना वा इच्छा) रहित पुरुष योगयुक्त हुन्छ यस्तो भनिन्छ ।

यहाँ अर्जुनलाई श्रीकृष्णले कस्ता योगीलाई योग साधनामा सुस्थिर योगी भनिन्छ भन्ने बारेमा बताउँदै हुनुहुन्छ । जो योगी योगाभ्यासद्वारा आफ्ना समस्त इन्द्रियहरू लगायत मानसिक कृयाकलापहरूलाई वशमा गरेर आध्यात्ममा स्थित हुन्छ, अर्को शब्दमा सबै भौतिक इच्छाहरूबाट रहित हुन्छ भने त्यो अवस्थामा योगी योग साधनामा स्थिर रहेको छ भनी भनिन्छ । एउटा वास्तविक योगी सबैभन्दा पहिला मानसिक अनुशासनमा सक्षम भई समस्त भौतिक इच्छाहरूबाट मुक्त हुन्छ । यो कार्य भगवान्को निरन्तर स्मरणबाट आफ्नो मनलाई भगवान्को चरण कमलमा लगाई राख्नाले सम्भव हुन्छ । अझै शरीरका सबै इन्द्रियहरूलाई उहाँ भगवान्को कार्यमा लगाउनु पर्दछ । जस्तै : मन भगवान्मा स्थिर गर्ने, हातले भगवान्को मन्दिर सफा गर्ने, बोलीले उहाँको गुणगान गर्ने, कानले भगवान्बाट गरिएका कार्यहरू सुन्ने, आँखाले भगवान्को दिव्यरूपको दर्शन गर्ने, नाकले उहाँलाई चढाएको कमलको फूल सुघ्ने, जिब्रोलाई भगवान्लाई चढाइएको तुलसी पात रसास्वादन गर्ने, खुट्टाले भगवान्को मन्दिरमा जाने, टाउकोले भगवान्को दर्शन गर्ने तथा आफ्ना इच्छाहरूलाई

भगवान्‌का इच्छाहरू पुरा गर्न लगाउने आदि । यस्तो हुनुलाई पूर्ण योगको स्थिति भनिन्छ ।

**यथा दीपो निवातस्थो नेङ्गते सोपमा स्मृता ।**
**योगिनो यतचित्तस्य युञ्जतो योगमात्मनः ॥ १९ ॥**

जसरी वायुरहित स्थानमा रहेको बत्ति चलायमान हुँदैन, त्यस्तै उपमा परमात्माको ध्यानमा लागेको योगीको जितिएको चित्तको हुन्छ भनी दिइएको छ ।

योगीको चित्त कस्तो हुन्छ भन्ने बारेमा यहाँ वर्णन गरिएको छ । जसरी हावा नचलेको स्थानको बत्ति यता-उता हल्लिदैन, हावा नचलेको बेलामा बत्तिको नहल्लिकन सिधा माथितिर भएर बलिरहेको हुन्छ, त्यस्तै योगीको पनि चित्त हुन्छ । आफ्नो साधनामा ऊ यस्तरी एकाग्र हुन्छ कि उस्को ध्यान कहिल्यै अन्यत्र बिचलित हुँदैन । ऊ पूर्णतया परमात्मामा केन्द्रीभूत हुन्छ । जुन योगीको वशमा यस प्रकार मन रहेको हुन्छ उस्को आत्मतत्व ध्यानमा सधैं स्थिर वा अविचलित रहन्छ ।

**यत्रोपरमते चित्तं निरूद्धं योगसेवया ।**
**यत्र चैवात्मनात्मानं पश्यन्नात्मनि तुष्यति ॥ २० ॥**

योगको अभ्यासले निरूद्ध (निरोध गरिएको, रोकिएको) चित्त जुन अवस्थामा उपराम (विरक्त) हुन्छ र जुन अवस्थामा परमात्माको ध्यानले शुद्ध भएको सूक्ष्म बुद्धिद्वारा परमात्मासँग साक्षात्कार गर्दै सच्चिदानन्दघन परमात्मामा नै सन्तुष्ट रहन्छ ।

साधकले सिद्धिको अवस्थामा, जस्लाई समाधि पनि भनिन्छ आफ्नो मनलाई योगाभ्यासद्वारा भौतिक मानसिक कियाहरू र प्राप्तिबाट मनलाई पूर्णतया संयमित राख्दछ । त्यसतर्फ आसक्ति बढाएर मन विचलित हुन दिँदैन । यस सिद्धिको बिशेषता यो छ कि यस्मा साधक शुद्ध मनले परमात्मासँग आत्मसाक्षात्कार गर्दै रमाउँछ । यसैमा योगीले साँचो आत्मसन्तुष्टी पाउँदछ । ऊ यो मात्र चाहान्छ कि उस्को मन सधैं परमात्मामा नै लागिरहोस् । योगाभ्यास गर्दा सुरू-सुरूमा मन संयमित नभए पनि निरन्तर अभ्यास गर्नाले मन नियन्त्रणमा आई संयमित हुन्छ र अन्ततः परमात्मामा सन्तुष्ट रहन थाल्दछ ।

**सुखमात्यन्तिकं यत्तद्‌बुद्धिग्राह्यमतीन्द्रियम् ।**
**वेत्ति यत्र न चैवायं स्थितश्र्चलति तत्त्वतः ॥ २१ ॥**



इन्द्रियहरूबाट अतीत रहेर मात्र शुद्ध गरिएको सूक्ष्म बुद्धिद्वारा अतितका विषयवस्तुहरूमध्ये लिने योग्य विषयवस्तु लिँदा अनन्त-आनन्द प्राप्त हुन्छ, त्यो आनन्दलाई जुन अवस्थामा अनुभव गरिन्छ र त्यस अवस्थामा स्थित त्यो योगी परमात्माको स्वरूपबाट विचलित हुँदै हुँदैन ।

केही सुखहरू इन्द्रियहरूको भोगबाट प्राप्त हुन्छन् । तर ती सुखहरू अस्थायी सांसारिक भौतिक सुख मात्र हुन्छन् । तर केही सुखहरू यस्ता हुन्छन् जस्को बारेमा हामीलाई अवगत हुँदैन । त्यही सुखको बारेमा श्रीकृष्णले बताउँदै हुनुहुन्छ कि यो सुख परमात्माको साक्षात्कारबाट मात्र सम्भव छ । जब हामी योगीको अवस्थामा आउँदछौं तब मात्र यसलाई हामीले सूक्ष्म बुद्धिद्वारा ग्रहण गर्न सक्दछौं । जुन सामान्य सुखको बारेमा हामी जान्दछौं ती थोरै समयको लागि मात्र हुने गर्दछन् । यस्तो शुद्ध सुखको बारेमा हामीमध्ये यस संसारका केही व्यक्तिहरूलाई मात्र थाहा हुन्छ । तसर्थ योग मात्र एक सिढी हो जस्बाट उहाँ परमात्मासँग साक्षात्कार हुन सक्दछ र स्थायी सुख अर्थात अनन्त आनन्दको अनुभूति गर्न पाइन्छ । अनन्त आनन्द पाइसकेपछि त्यस्मै रमाएर यस्तो योगी त्यसबाट कहिल्यै विचलित हुँदैन ।

**यं लब्ध्वा चापरं लाभं मन्यते नाधिकं ततः ।**
**यस्मिन् स्थितो न दुःखेन गुरूणापि विचाल्यते ॥ २२ ॥**

योगीले परमात्माको प्राप्तिरूप जस्तो लाभ प्राप्त गरिसकेपछि त्योभन्दा बढी दोश्रो कुनै पनि लाभ हुन्छ भनी मान्दैन र परमात्मा प्राप्तिरूपको अवस्थामा स्थित योगी बडो भारी दुःखले पनि चलायमान हुँदैन ।

त्यस्तो योगीको अन्तिम लक्ष्य परमात्माको प्राप्ति हो, उहाँसँगको साक्षात्कार हो । त्यो प्राप्ति भइसकेपछि उस्ले अर्को कुनै पनि किसिमको लाभलाई नगण्य ठान्दछ । अनि उस्लाई जीवनमा जस्तोसुकै दुःख आइपरे पनि योगबाट प्राप्त भइरहेको अवस्थाबाट ऊ विचलित हुँदैन । यहाँ श्रीकृष्णले योगीको लक्ष्य, उस्को जीवन शैली आदिको बारेमा सम्झाउँदै हुनुहुन्छ । हामीले लाभलाई भौतिक विषयवस्तु, सुख सुविधासँग गाँसेर मूल्याङ्कन गर्छौं । तर त्यो हाम्रो अज्ञानता हो । संसारमा सबैभन्दा ठूलो लाभ हो परमात्माको प्राप्ति । जस्लाई यो लाभ प्राप्त भएको हुन्छ उस्लाई अरू कुनै विषयको लाभको महत्त्व तथा आवश्यकता हुँदैन ।

**तं विद्याद् दुःखसंयोगवियोगं योगसंज्ञितम् ।**
**स निश्चयेन योक्तव्यो योगोऽनिर्विण्णचेतसा ॥ २३ ॥**

जो दुःखरूपी संसारको संयोगबाट रहित छ तथा जस्को नाम योग हो, त्यसलाई बुझ्नुपर्दछ । त्यस योगलाई दिक्क नमानीकन अर्थात धैर्य र उत्साहपूर्वक चित्तले निश्चयपूर्वक भई गर्नु कर्तव्य हो ।

यस संसारलाई भव सागर यस कारणले भनिन्छ किनकि यस संसारमा मात्र दुःख छ । यस संसारका दुःखहरूबाट कसरी बच्ने भन्ने बारेमा श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ । जो यस संसारको दुःखबाट बेग्लै छ त्यही योगमा रहेको योगी हो । हामीले त्यस सत्य विधिलाई बुझ्नुपर्दछ । त्यसका विधि तथा लक्ष्य जानिसकेपछि हामीले त्यस्लाई साँचो मनले अभ्यास गर्ने गर्नु पर्दछ । त्यो गर्नमा कुनै किसिमको आलस्य मान्नु हुन्न । योगलाई उत्साहित भएर धैर्यतापूर्वक नआत्तिकन गर्नु पर्दछ । संसारमा योग मात्र त्यो एउटा साँचो बाटो हो जस्ले हामीलाई भगवान्को परमसत्यको बारेमा बताउँदछ ।

**संकल्पप्रभवान्कामांस्त्यक्त्वा सर्वानशेषतः ।**
**मनसैवेन्द्रियग्रामं विनियम्य समन्ततः ॥ २४ ॥**

संकल्पबाट उत्पन्न हुने सबै कामनाहरूलाई निःशेष रूपबाट त्याग गरेर तथा मनद्वारा इन्द्रियहरूको समुदायलाई सबै तिरबाट राम्ररी रोकेर-योग साधनामा संलग्न हुनु पर्दछ ।

योगाभ्यासमा संलग्न हुँदा हुनु पर्ने अवस्थाहरूको बारेमा श्रीकृष्णले यहाँ वर्णन गर्दै हुनुहुन्छ । कुनै वस्तु वा विषयसँग मिल्नुलाई संयोग भनिन्छ तथा कुनै वस्तु वा विषयसँग टाढिनुलाई वियोग भनिन्छ । तर संयोग तथा वियोगभन्दा जुन टाढा रहन्छ त्यस्लाई योग भनिन्छ । सबैभन्दा ठूलो सुखको प्राप्ति नै योग हो । हामीले सांसारिक रूपमा व्यवहार गर्दा गरिएका समस्त मानसिक तथा शारीरिक सङ्कल्पहरूबाट उत्पन्न भएका कामनाहरू वा इच्छाहरूलाई पूर्ण रूपले आफ्नो मनद्वारा त्याग गर्नु पर्दछ । यसको साथै मनद्वारा सबै इन्द्रियहरूको चाहनाहरूः लोभ, मोह, स्वार्थ, आफन्तजनलाई सबै तिरबाट त्याग गर्नु पर्दछ । अन्यथा परमेश्वर प्राप्तिको लागि गरिएको योग साधनामा बाधा पुग्दछ, साधना असफल हुन्छ र सबैभन्दा ठूलो सुख गुम्दछ ।



**शनैः शनैरूपरमेदबुद्धया धृतिगृहीतया ।**
**आत्मसंस्थं मनः कृत्वा न किंचिदपि चिन्तयेत् ॥ २५ ॥**

हामीले योगाभ्यास क्रमशः गर्दै सांसारिक तथा इन्द्रिय सुखभोगबाट विरक्ति लिनु पर्दछ तथा धैर्यतापूर्वक बुद्धिद्वारा मनलाई परमात्मामा स्थित गरेर परमात्मा बाहेक अन्य केही चिन्तन गर्न हुँदैन ।

योग साधकले योग साधनाको कार्य विस्तारै-विस्तारै धैर्यता तथा बुद्धिपूर्वक तरिकाले समाधीमा स्थित भएर गर्ने गर्नुपर्दछ । आफ्नो मनलाई आत्मामा स्थित गर्नु पर्दछ । अन्य विषयवस्तुमा कुनै चाँसो दिन हुन्न । शरीरका सबै इन्द्रियहरूको तृप्तिको लागि गरिने चाहनाहरूलाई रोक्नुपर्दछ यस रोक्ने विधिलाई प्रत्याहार भनिन्छ । मनलाई परमात्मा प्रतिको विश्वासमा, इन्द्रियहरूलाई निवृति गराएर वशमा राख्दै साधकले उहाँको ध्यानमा समाधि स्थिर गर्नु पर्दछ । परमात्माको आनन्दको बारेमा मात्र चिन्तन गर्नु पर्दछ । हाम्रो मन पानी समान छ । यस्लाई जस्तो भाँडोमा राख्यो यस्ले उस्तै स्वरूप धारण गर्दछ । तर त्यही पानी कुनै साह्रो चट्टानमा नियमित झरिरह्यो भने त्यसले चट्टानमा आफ्नो असर छोड्दछ । यही विषयलाई श्रीकृष्णले अर्जुनलाई सम्झाउादै भन्नुहुन्छ कि योगाभ्यास पनि क्रमशः गरिरहनु पर्दछ । योगको स्थितिलाई पाउनको लागि प्रत्येक दिन ध्यान गर्ने गर्नु पर्दछ । योगको अभ्यास नियमित रूपमा गरिरह्यो भने त्यस्को असर वा फल केही दिनमा देखिन थाल्दछ । यो क्रम योग मात्र हैन जीवनका प्रत्येक पक्षहरूमा लागु हुन्छ ।

**यतो यतो निश्र्चरति मनश्र्चलमस्थिरम् ।**
**ततस्ततो नियम्यैतदात्मन्येव वशं नयेत् ॥ २६ ॥**

यो स्थिर नरहने र चञ्चल मन जुन-जुन शब्दादि विषयहरूको लागि संसारमा विचरण गर्दछ, त्यो-त्यो विषयबाट यसलाई रोकेर अर्थात त्यसबाट हटाएर त्यसलाई पटक-पटक परमात्मामा नै स्थिर गर्नु पर्दछ ।

मानिसको मन अस्थायी सुखभोगको लागि चञ्चल तथा अस्थिर स्वभावको हुन्छ । यो चञ्चलता तथा अस्थिरताको कारणले जुन-जुन विषय भोगमा सक्रिय हुन्छ वा विचरण गर्दछ, असल साधकले मनलाई त्यहाँबाट तान्दछ र पुनः वशमा राख्दछ । परमात्मामा एकाग्रता कायम गर्न योगीले मन लगायतका आफ्ना सबै

इन्द्रियहरूलाई वशमा राख्दछ । योगीले परमेश्वर प्रतिको आफ्नो इच्छा शक्तिलाई दृढ गरेर मनलाई उहाँमा स्थिर बनाई राख्दछ । यो प्रकृया अनवरत रूपमा जारिरहेमा योगीले दिव्य इन्द्रिय सुखको प्राप्ति कृष्णभावनामृतमा मात्र पाउने गर्दछ ।

**प्रशान्तमनसं ह्येनं योगिनं सुखमुत्तमम् ।**
**उपैति शान्तरजसं ब्रह्मभूतमकल्मषम् ॥ २७ ॥**

किनकि निरन्तरको योगाभ्यासले जस्को मन राम्ररी शान्त हुन्छ, जो पापरहित हुन्छ र जस्को रजोगुण शान्त भइसक्या छ, यसरी सच्चिदानन्दघन ब्रह्मसँग एकिभाव भएको यस्तो योगीलाई उत्तम आनन्द प्राप्त हुन्छ ।

श्रीकृष्ण भन्दै हुनुहुन्छ कि जुन योगीको मन ममा स्थिर रहन्छ, उस्ले निश्चय नै दिव्य सुखको सर्वोच्चता प्राप्त गर्दछ । यस्को लागि त्यस योगीले निरन्तर एकाग्र चित्तले योगाभ्यास गरिरहनु पर्दछ । यस प्रकारले रजोगुणबाट टाढा भई परमात्मासँगको आफ्नो गुणात्मक एकतालाई उस्ले सम्फिएको हुन्छ । अनि ऊ आफ्ना सबै विगतका कर्महरूको फलबाट निवृत्त हुन्छ । संसारका सबै भौतिक कल्मषहरूबाट मुक्त भएर भगवान्को दिव्यसेवामा लाग्नुलाई ब्रह्मभूत अवस्था भनिन्छ । जबसम्म मानिसको मन भगवान्को चरण कमलमा उहाँको प्राप्तिको लागि स्थिर हुँदैन तबसम्म कोही पनि ब्रह्मरूपमा पुग्न सक्दैन । योगाभ्यास निरन्तर गर्दै भगवान्को दिव्य प्रेमाभक्तिमा लागिरहनाले उस्ले उत्तम आनन्दको प्राप्ति गर्दछ ।

**युञ्जन्नेवं सदात्मानं योगी विगतकल्मषः ।**
**सुखेन ब्रह्मसंस्पर्शमत्यन्तं सुखमश्नुते ॥ २८ ॥**

त्यो पापरहित योगीले यस प्रकार निरन्तर आत्मालाई परमात्मामा लगाउँदै सुखपूर्वक परब्रह्म परमात्माको प्राप्ति रूप अनन्त-आनन्दको अनुभव गर्दछ ।

यस प्रकार योगाभ्यासमा सदा लागिरहने आत्मसंयमी योगीले, सबै भौतिक कल्मषबाट मुक्त भई, भगवान्को दिव्य प्रेमाभक्तिमा परम सुख प्राप्त गर्दछ । यही नै सबैभन्दा ठूलो आनन्द हो । परब्रह्मको स्वरूपलाई पहिचान गर्ने, उहाँसँग तादात्म्य कायम गरिराख्ने नै स्थायी सुख तथा परम आनन्दको अवस्था हो । यसको अगाडि समस्त भौतिक आनन्दहरूः खाने, सुत्ने, राम्रो लुगा लाउने, सम्पत्ति आर्जन सबै क्षणिक तथा अस्थायी आनन्ददायक सुखहरू हुन पुग्दछन् । मूलतः आत्मालाई



परमात्मामा लिन गराइरहनाले योगीले सुखपूर्वक परब्रह्म परमात्मा प्राप्त गरी अनन्त आनन्दको अनुभूति गर्दछ । भगवान्को सम्बन्धमा आफ्नो स्वभाविक स्थितिलाई जान्नु नै आत्मसाक्षात्कार हो । जीवात्मा भगवान्को अंश हो र उस्को स्थिति तथा सत्मार्ग भगवान्को दिव्य सेवा गरिरहनु नै हो भनी उसले बुझेको हुनु पर्दछ ।

**सर्वभूतस्थमात्मानं सर्वभूतानि चात्मनि ।**
**ईक्षते योगयुक्तात्मा सर्वत्र समदर्शनः ॥ २९ ॥**

सर्वव्यापी अनन्त चेतनमा एकाग्रभावले स्थितिरूप योगले युक्त आत्मावाला तथा सबैलाई समभावले देख्ने योगीले आत्मालाई सबै भूतहरू (सर्वत्रः क्षिति वा पृथ्वी, जल वा द्रव, पावक वा अग्नि, गगन वा शुन्य, समीर वा वायु) मा स्थित रहेको तथा सबै भूतहरूलाई आत्मामा कल्पित रहेको देख्दछ ।

वास्तविक योगीले सबै जीवहरूमा मलाई तथा ममा सबै जीवहरूलाई सर्वत्र देख्दछ । ऊ पूर्णद्रष्टा हुन्छ । भगवान् नित्यरूपमा दिव्य हुनुहुन्छ भन्ने ज्ञान एउटा पूर्णयोगीमा रहेको हुन्छ । जीवात्मा प्रत्येकको हृदयमा रहेको हुन्छ तर परमात्मा सबैको हृदयमा हुनुहुन्छ । यही जीवात्मा तथा परमात्मा बीचको भेद हो । यस्को ज्ञान योगाभ्यासबाट हुने गर्दछ । हाम्रो आत्मामा सबै कुराहरू हुन्छन् त्यसलाई जान्नको लागि हामीमा ज्ञान चाहिन्छ । ज्ञान मात्र योगबाट प्राप्त हुन्छ । जसरी एउटी आमाले आफ्ना सबै सन्तानहरूप्रति समभावले व्यवहार गर्दछिन त्यस्तै परमात्माले पनि सबै आत्माप्रति समान भाव राखी व्यवहार गर्नु हुन्छ । यो सबै त्यस एकाग्रचित्त गरी परमात्मामा लागेको योगीले महशुस गर्दछ ।

**यो मां पश्यति सर्वत्र सर्वं च मयि पश्यति ।**
**तस्याहं न प्रणश्यामि स च मे न प्रणश्यति ॥ ३० ॥**

जुन पुरुषले सबै भूतहरूमा वा जीवात्माहरूमा सबैको आत्मरूप म वासुदेवलाई नै व्यापक रूपमा देख्दछ र सबै भूतहरूलाई म वासुदेव अन्तर्गत देख्दछ त्यसको लागि म अदृश्य हुन्न र ऊ मेरोलागि अदृश्य हुँदैन ।

भगवान् हुनुहुन्छ भने किन देखिनु हुन्न भन्ने सामान्यतया गरिने प्रश्नको उत्तर दिँदै यसको लागि उहाँले योगको साधन अपनाउनु पर्दछ भनी ज्ञान दिँदै हुनुहुन्छ । जुन व्यक्तिले मलाई सबैतिर देख्दछ र सबै कुरा म मा देख्दछ त्यस

व्यक्तिको लागि म न कहिल्यै अदृश्य हुन्छु र न ऊ मेरो लागि अदृश्य हुन्छ । यस्ता मानिसहरूलाई यो अवगत हुन्छ कि प्रत्येक वस्तु श्रीकृष्णको शक्तिको परिणाम हो । यहाँ श्रीकृष्णको बिना कसैको अस्तित्व समेत हुँदैन । भौतिक विषयवस्तु प्रति संयमित भई मनमा श्रीकृष्ण प्रेमको विकास गर्नु र हुनु नै कृष्णभावनामृतको अवस्था हो । यो आत्मसाक्षात्कार पछिको उच्च अवस्था हो । यस अवस्थामा भक्तलाई श्रीकृष्ण नै सबै कुरा हुन भन्ने लागेर ऊ उहाँसँग एकरूप भई प्रेममय श्रीकृष्णबाट पूरित हुन पुग्दछ । यसप्रकार योगको स्थितिमा भक्त श्रीकृष्णको लागि तथा श्रीकृष्ण भक्तको लागि अदृश्य रहन्नन् ।

**सर्वभूतस्थितं यो मां भजत्येकत्वमास्थितः ।**
**सर्वथा वर्तमानोऽपि स योगी मयि वर्तते ॥ ३१ ॥**

जुन पुरुष एकाग्र भावमा स्थित भएर सम्पूर्ण जीवात्माहरूमा आत्माको रूपमा स्थित रहेको म सच्चिदानन्दन वासुदेवलाई भज्दछ, त्यो योगीले सबै प्रकारका व्यवहारहरू गरे तापनि मेरै लागि व्यवहारहरू गरिरहेको हुन्छ ।

जो योगीले म तथा परमात्मालाई अभिन्न जानेर मेरो भक्तिपूर्वक सेवा गर्दछ, सदैव ममा स्थित रहन्छ, जुन योगीले परमात्माको ध्यान गर्दछ, आफ्नो अन्तःकरणमा उहाँलाई बसाइ राख्दछ, श्रीकृष्ण तथा श्रीविष्णु एकै हुन् भनी ठान्दछ, प्रत्येक प्राणीमा उहाँ श्रीकृष्णलाई नै देख्दछ भने त्यो योगी सधैँ उहाँ श्रीकृष्णमा स्थित हुन पुग्दछ । श्रीकृष्णको प्रेमाभक्तिमा रहेको व्यक्ति तथा एक पूर्ण योगी बीच कुनै भिन्नता हुदैन् । यस प्रकार भक्तिमा रहेको भक्त भौतिक जगतमा विभिन्न कार्यहरूमा सङ्लग्न भए तापनि ऊ सधैँ श्रीकृष्णमा नै स्थित रहेको हुन्छ । सबैभन्दा पहिलो आफ्ना सबै शक्तिलाई एकाग्रित गरेर उहाँ भगवान्को ध्यान गर्नु पर्दछ । जस्ले आफ्ना मनका चाहनाहरूलाई वशमा गरेर एकाग्र चित्तले ध्यानमा मन लगाउँछ उही योगी बन्दछ । निश्चय गरेर मनलाई नियन्त्रणमा राख्नु पर्दछ तब मात्र बुद्धिलाई एकाग्र गर्न सकिन्छ, अन्यथा मन भौँतारिरहन्छ । श्रीकृष्ण भन्नुहुन्छ कि जस्ले यसरी मलाई भज्दछ म उसैलाई प्राप्त हुन्छु ।

**आत्मौपम्येन सर्वत्र समं पश्यति योऽर्जुन ।**
**सुखं वा यदि वा दुःखं स योगी परमो मतः ॥ ३२ ॥**



हे अर्जुन ! जुन योगीले आफु जस्तै सबै जीवात्माहरूलाई समभावले हेर्दछ र सुख तथा दुःखहरूलाई पनि सबैमा समभावले देख्दछ, त्यो योगी परमश्रेष्ठ मानिन्छ ।

जस्ले आफु तथा अन्य जीवात्माहरूमा, तिनका सुख तथा दुःखहरूमा समभावले देखी समतापूर्ण व्यवहार गर्दछ त्यो व्यक्ति पूर्णयोगी हुन्छ भनी श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ । जुन व्यक्तिले योगाभ्यासले यस किसिमले विचार विकसित गर्दछ कि अन्य जीवात्माहरू तथा ऊ एक समान हुन् । हामी बीच कुनै पनि किसिमको विभेद छैन् । श्रीकृष्णप्रति भक्ति तथा सेवा भएको व्यक्तिमा यस किसिमको भाव विकसित हुन्छ, अनि उस्ले अरूको सुख तथा दुःखको सहज पहिचान गर्न सक्दछ । आफु तथा अन्य जीवात्माहरूमा समभाव भएपछि उस्ले आफु लगायत सबै जीवहरूको सुख चाहान्छ, आफ्ना मित्र जीवहरूसँग द्वेष गर्दैन, सबैको हितको लागि श्रीकृष्ण भावनामृतको आशय तथा ज्ञान फिँजाउँन खोज्दछ । त्यस्तो योगीलाई हरेक वस्तु र जीवमा भगवान् देखिन्छ । यसरी ऊ परम श्रेष्ठ बन्न पुग्दछ ।

अर्जुन उवाच (भन्दछन्)

**योऽयं योगस्त्वया प्रोक्तः साम्येन मधुसूदन ।**
**एतस्याहं न पश्यामि चञ्चलत्वात्स्थितिं स्थिराम् ॥ ३३ ॥**

अर्जुनले भने : हे मधुसूदन ! जुन यो योग तपाईले समभावले भन्नुभयो, मन चञ्चल भएकोले म यस्को नित्य स्थितिलाई देखिरहेको छैन ।

अर्जुनले मधुसूदनलाई स्वभाविक प्रश्न गरे कि तपाइले जुन योगपद्धतिको संक्षेपमा वर्णन गर्नु भएको छ, मन चञ्चल अनि अस्थिर भएको कारणले त्यो मेरो लागि अव्यवहारिक रहेको म देखिरहेको छु । यो चञ्चल मनलाई कसरी समभावमा ल्याउने ? भगवान् श्रीकृष्णले अर्जुनलाई 'शुचौ देशेदेखि योगी परमो मतः' सम्मको जुन योग पद्धतिको बारेमा वर्णन गर्नु भयो, त्यसलाई अर्जुनले मनको चञ्चलताको कारणले अस्वीकार गरिरहेका छन् । सुख तथा दुःखमा समभाव कायम राख्नु पर्दछ भनी भन्नु त सजिलो छ तर यसलाई व्यवहारमा ल्याउन गाह्रो भएकोले कसरी ल्याउने भनी प्रश्न गर्दैछन् । फेरि आजको यस युगको संघर्षशील जीवनमा कसैले आफ्ना घर छोडी एकान्तमा गएर बसी योग साधना गरोस् यो सम्भव हुन सक्दैन ।

आजको संस्कारमा मानिसहरू अल्पकालिन जीवनको लागि साह्रै सङ्घर्षशील रहनु विशेषता नै भइसकेको छ । आजको मानिस सरल, व्यवहारिक साधनहरूसँग पनि आत्मसाक्षात्कार गर्न तैयार हुँदैनन् भने यो गाह्रो योग पद्धतिको बारेमा के भन्नु ? योग पद्धतिमा उल्लेखित संयमित जीवन शैली, आसन विधि, स्थानको छनौट तथा भौतिक विषयवस्तुहरूबाट विरक्ति प्राप्त गर्नु यी सबै कुरालाई यथार्थ रूप दिनु व्यवहारिक जीवनमा असम्भव छ । तर अर्जुनले यसमध्ये केही विषयहरूलाई आफ्नो जीवनमा पालना गरिरहेको छन् । उनी राजवंशी हुन्, उनमा विभिन्न सद्‌गुणहरू छन्, उनी महान योद्धा हुन, दीर्घजीवी छन्, तथा सबैभन्दा ठूलो उनी श्रीकृष्णको घनिष्ठ मित्र हुन् । तापनि उनीले यस योग पद्धतिलाई पालना गर्नु अव्यवहारिक भएकोले कसरी व्यवहारिक बनाउने भनी सोद्धैछन् ।

**चञ्चलं हि मनः कृष्ण प्रमाथि बलवद्दृढम् ।**
**तस्याहं निग्रहं मन्ये वायोरिव सुदुष्करम् ॥ ३४ ॥**

किनकि हे श्रीकृष्ण ! यो मन बडो चञ्चल, प्रमथन (अरूलाई थिचोमिचो गर्न खोज्ने) उच्श्रृङ्खल स्वभाव भएको, बडो दृढ तथा बलियो छ । त्यसैले त्यसलाई वशमा गर्नु हावालाई रोके जस्तै म अफ्ठेरो ठान्दछु ।

मन बुद्धिको अधिनस्थ भए तापनि कहिलेकाहिँ यस्को बलियो दृढ स्वभावको कारणले यसले बुद्धिलाई उछिनिरहेको हुन्छ । यो संघर्षमय जीवनमा विभिन्न किसिमका व्यवहारहरू गर्दा अरूलाई दबाउन खोज्ने यस मनलाई संयमित बनाउनु सम्भव छैन । नाटकीय रूपले केही समयको लागि मानिसले आफ्नो मनलाई नियन्त्रणमा राखी शत्रु तथा मित्रसँग मानसिक सन्तुलन बनाई राख्न सक्दछ तर संधैको लागि सांसारिक व्यक्तिलाई मनलाई वशमा राख्नु सम्भव छैन । यसप्रकार अप्रत्यक्षरूपले अर्जुनले यस्तो जिद्दी मनलाई कसरी रोक्ने भनी जान्न खोज्दैछन् ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**असंशयं महाबाहो मनो दुर्निग्रहं चलम् ।**
**अभ्यासेन तु कौन्तेय वैराग्येण च गृह्यते ॥ ३५ ॥**

श्री भगवान्‌ले भन्नुभयो : हे महाबाहो ! मन निःसन्देह चञ्चल तथा गाह्रोगरी वशमा हुने हो, तर हे कुन्तीपुत्र अर्जुन ! यो अभ्यास तथा वैराग्यले वशमा हुने गर्दछ ।



यस जिद्दी मनलाई वशमा ल्याउन गाह्रो छ भनी अर्जुनले भनेको कुरालाई श्रीकृष्णले पनि स्वीकार गर्नुभयो । तर अभ्यास गरिरहनाले तथा सांसारिक विषयभोग प्रतिको वैराग्यताले यो सम्भव छ भनी सुझाव पनि दिनु भयो । योगाभ्यासमा गरिने गाह्रा विधिहरूः परमात्माको ध्यान, मन तथा इन्द्रियहरूलाई संयमी तुल्याउनु, ब्रह्मचर्य पालन, एकान्तवास आदि निश्चय पनि पालना गर्न सजिलो छैनन् । तर श्रीकृष्ण प्रति सेवा, भक्ति गरिरह्यो भने मन सबै किसिमका दुष्चिन्ताहरूबाट शुद्ध हुने गर्दछ । यसरी श्रीकृष्णको बारेमा सुन्ने तथा भजन गरिरहियो भने जे-जस्ता विषयहरूले श्रीकृष्णबाट टाढा लग्दछन् ती सबै विषयहरूबाट ऊ विरक्तिन्छ । उस्मा क्रमशः वैराग्यता आउन थाल्दछ । वैराग्यता भन्नाले विषयवस्तु प्रतिको आसक्ति नहुनु तथा मनलाई आत्मामा प्रवृत गराउनु हो ।

**असंयतात्मना योगो दुष्प्राप इति मे मतिः ।**
**वश्यात्मना तु यतता शक्योऽवाप्तुमुपायतः ॥ ३६ ॥**

जस्को मन वशमा गरिएको छैन यस्तो पुरूषलाई योग दुष्प्राप्य हुन्छ र मनलाई वशमा गरिएको प्रयत्नशील पुरूषलाई भने साधनाबाट योग प्राप्त हुन सहज हुन्छ-यो मेरो धारणा हो ।

जस्को मन संयमी हुँदैन, भौँतारिरहन्छ, त्यस्तो व्यक्तिले गरेको साधना सफल हुन सक्दैन । उस्ले आत्म-साक्षात्कार गर्न सक्दैन । तर जस्को मन नियन्त्रित वा संयमित छ र उस्ले आवश्यक विधि बमोजिम साधना गर्दछ भने ऊ अवश्य पनि सफल हुन्छ र आत्म-साक्षात्कार गर्न सक्दछ भन्ने धारणा श्रीकृष्णको रहेको छ भनी उहाँले प्रकास पार्दै हुनुहुन्छ । यस संसारको भौतिक विषयवस्तुहरूमा रूमलिरहने व्यक्तिले भगवान्‌सँगको आत्म-साक्षात्कार गर्न पाउँदैन । जस्ले भौतिक विषयवस्तुलाई त्याग्न सकेको छैन र योग साधनामा पनि लाग्न चाहन्छ भने उस्ले आगोमा पानी हालेर आगोलाई प्रज्वलित गर्न खोजेको जस्तो हुनेछ । यो नाटकीय कार्य मात्र हुनेछ । तसर्थ मानिसहरूले मनलाई वशमा गर्ने अभ्यास सशक्त रूपमा गरिरहेर योगसाधनामा पनि लगनशील भएर लागेमा एकदिन सफलता कसो प्राप्त नहोला ।

अर्जुन उवाच (भन्दछन्)

**अयतिः श्रद्धयोपेतो योगाच्चलितमानसः ।**
**अप्राप्य योगसंसिद्धिं कां गतिं कृष्ण गच्छति ॥ ३७ ॥**

अर्जुनले भन्दछन् : हे श्रीकृष्ण ! जो योगमा श्रद्धा राख्ने गर्दछ, तर संयमी छैन, वा यसकारण जस्को मन अन्त समयमा योगबाट बिचलित भएको छ, यस्तो साधकले योगको सिद्धिलाई अर्थात् भगवत साक्षात्कारलाई प्राप्त नगरेर कुन गति प्राप्त गर्दछ ?

यहाँ अर्जुनले श्रीकृष्णसँग बडो समसामयिक प्रश्न गरेका छन् । उनी सोद्धछन् कि त्यो असफल योगीको गति के हुनेछ जो संयमी हुन सकेन, मनलाई वशमा वा नियन्त्रणमा राख्न सकेन र जस्ले सुरुमा श्रद्धापूर्वक आत्म-साक्षात्कारको विधिलाई अपनाएर साधना गर्यो तर पछि गएर भौतिकतामा रूमलिएर साधनाबाट विचलित भयो, अनि योगसिद्धि प्राप्त गर्न सकेन । आत्म-साक्षात्कारको मूलभूत नियम यो हो कि हाम्रो भौतिक शरीर जीवात्मा होइन । आत्मा त यो भौतिक शरीर तथा हाम्रो मनभन्दा बेग्लै छ जस्को सुख शाश्वत जीवन, आनन्द तथा ज्ञानमा निहित छ । आत्म-साक्षात्कारको खोज ज्ञानद्वारा गरिन्छ । आजको युगमा भक्तियोगलाई उच्च प्राथमिकता दिइएको छ । परमेश्वरसँगको साक्षात्कारको लागि यो श्रेष्ठतम प्रत्यक्ष विधि हो । योग साधनामा लागेको साधकलाई माया तथा लोभरूपी जालले सदैव बाँध्न खोज्दछ, फेरि उस्को शारीरिक संरचनामा प्राकृतिका तत्वहरूको स्वभावले पनि प्रबल भूमिका निर्वाह गर्ने हुँदा ऊ विचलित हुने ठूलो डर रहिरहन्छ । यसरी कुनै व्यक्ति योगसाधनाको दिव्य उद्देश्य तथा त्यस्का विधिहरूबाट चुक्यो भने उस्ले कुन मार्ग प्राप्त गर्दछ भनी अर्जुनले यहाँ समसामयिक जिज्ञासा राखेका छन् ।

**कच्चिन्नोभयविभ्रष्टश्छिन्नाभ्रमिव नश्यति ।**
**अप्रतिष्ठो महाबाहो विमूढो ब्रह्मणः पथि ॥ ३८ ॥**

हे महाबाहो ! के ऊ भगवत प्राप्तिको मार्गमा मोहित र आश्रय रहित पुरूष टुक्रिएका बादलहरू जस्तै दुबै तिरबाट भ्रष्ट भएर नष्ट त हुँदैन ?

ब्रह्म प्राप्तिको बाटोमा यसरी साधना गर्दा-गर्दै मनलाई वशमा गर्न नसकेर भ्रष्ट भई हिँडेको व्यक्ति आध्यात्मिक तथा भौतिक दुबै सफलताहरूबाट तलतिर त झर्दैन ? आकाशमा छरिएर रहेका बादलहरूले पानी पार्न नसक्ने भई उपयोगहिन भएजस्तै ऊ हुन्छ कि ? जस्लेगर्दा उस्ले कुनै लोकमा पनि आश्रय पाउन सक्दैन भनी श्रीकृष्णलाई अर्जुनले जिज्ञासा राखेका छन् । मानिसको जीवनमा उन्नत्ति गर्ने दुइवटा मार्गहरू छन् । पहिलो भौतिकवादी जस्मा मानिसहरू आर्थिक विकास गरेर



आध्यात्म तर्फ अभिरूचि नराखेर उच्च लोक, सुख सुविधा भोग गर्ने तर्फ लागेका हुन्छन् । दोश्रो आध्यात्मिक मार्ग । यसमा भौतिक सुखलाई त्याग गरेर मानिस महत्त्वाकाङ्क्षी ब्रह्मवादी हुन चाहान्छ । तर ऊ असफल भएको खण्डमा ऊ त दुबैतिरबाट जान्छ जस्तैः भौतिक सुख पनि भोग गर्न पाउँदैन र आध्यात्मिक सफलता पनि पाउँदैन । यो अवस्थामा ऊ टुक्रिएको बादल जस्तो नष्ट त हुँदैन ? भनी अर्जुनले जिज्ञासा गर्दै छन् ।

**एतन्मे संशयं कृष्ण छेत्तुमर्हस्यशेषतः ।**
**त्वदन्यः संशयस्यास्य छेत्ता न ह्युपपद्यते ॥ ३९ ॥**

हे श्रीकृष्ण ! मेरो यस संशय वा द्विविधालाई सम्पूर्ण रूपले निराकरण गर्ने योग्य हजुर नै हुनुहुन्छ, किनकि हजुर बाहेक दोश्रो यस संशयलाई निराकरण गर्नसक्ने अरू कोही पाउनु सम्भव छैन ।

हे श्रीकृष्ण ! यही मेरो शङ्का हो । म हजुरलाई यस संशयलाई पूर्णरूपले हटाउन अनुरोध गर्दछु । हजुर बाहेक यस संसारमा कोही यस्तो व्यक्ति छैन जस्ले यस संशयलाई हटाउन सकोस भनी अर्जुनले प्रार्थना गरिरहेका छन् । किनकि अर्जुनलाई यो अवगत छ कि श्रीकृष्ण ईश्वर हुन जस्ले मानिसको रूपमा मानिसहरू बीचमा रही धर्म स्थापना गर्न युद्ध गर भनी सल्लाह दिइरहनु भएको छ । श्रीकृष्ण भूत, भविष्य तथा वर्तमानको बारेमा सबै जान्नु हुन्छ । उहाँ जत्तिको ज्ञानी कोही छैनन किनकि उहाँ नै अन्तिम सत्य हुनुहुन्छ । सोही आधारमा अर्जुनले उहाँसँग असफल योगीहरूको के गति हुन्छ भनी भविष्यको बारेमा जान्न खोज्दैछन् । संसारमा न कोही श्रीकृष्ण समान छ र न उहाँभन्दा ठूलो । उहाँ सबैका सबै विषयहरूमा जान्नु हुन्छ तर कोही सक्षम तथा योगसाधनामा सफल योगीहरूले मात्र उहाँलाई जान्दछन् ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**पार्थ नैवेह नामुत्र विनाशस्तस्य विद्यते ।**
**न हि कल्याणकृत्काश्चिदद्दुर्गतिं तात गच्छति ॥ ४० ॥**

श्री भगवान्ले भन्नुभयोः हे पार्थ ! त्यस पुरूषको न त यस लोकमा नाश हुन्छ र न परलोकमा नै । किनकि हे प्रिय ! आत्मा उद्धारको लागि अर्थात् भगवत

प्राप्तिको लागि कर्म गर्ने कुनै पनि मानिसले दुर्गति पाउँदैनन् । कल्याणयुक्त कार्यहरूमा संलग्न योगीहरूको न त यस लोकमा र नै परलोकमा विनाश हुन्छ । भलो गर्नेहरू कुभलो गर्नेहरूबाट कहिल्यै पराजित हुँदैनन् । भागवत पुराणले आस्वश्त तुल्याउँछ कि असफल योगीले चिन्ता गर्नुपर्ने आवश्यकता छैन । हुनसक्छ उस्ले ठीक तरिकाले आफ्नो धर्मको आचरण नगर्नाको फल भोग्नु परोस् तर जस्ले आत्माको भलाईको बाटो रोजेको छ, जस्ले भगवानलाई जान्न चाहन्छ उस्को कहिल्यै नाश हुँदैन, दुबै लोकहरूमा उसको लागि नराम्रो हुँदैन । हुन पनि हो जो भगवान्‌लाई प्राप्ति गर्ने बाटोमा हिँड्दछ उस्को नराम्रो कसरी हुन्छ र ?

**प्राप्य पुण्यकृतां लोकानुषित्वा शाश्र्वतीः समाः ।**
**शुचीनां श्रीमतां गेहे योगभ्रष्टोऽभिजायते ॥ ४१ ॥**

योगभ्रष्ट पुरूषले पुण्यवानहरूले प्राप्त गर्ने लोकहरू अर्थात स्वर्गादि उत्तम लोकहरू प्राप्त गरेर, त्यस लोकमा धेरै वर्षहरूसम्म बसी फेरि शुद्ध आचरणवाला श्रीमान् पुरूषहरूको घरमा जन्म लिन्छ ।

योगभ्रष्ट पुरूषहरूले गरेका अपूर्ण योगाभ्यासको फल नष्ट हुँदैन । बरू असफल योगीले पवित्र आत्माहरूको स्वर्ग लोक प्राप्त गरी धेरैभन्दा धेरै वर्षहरूसम्म बसेर त्यहाँको सुख-सुविधाहरू भोग गरी उस्को शुद्ध सदाचारी पुरूषहरूको घरमा जन्म हुन्छ । सामान्यतया हामीले जहाँ जन्म लिन्छौँ त्यसै परिवेशसँग हाम्रो भाग्य र जीवन गाँसिन पुग्छ । राम्रो कर्म गरिएको छ भने त्यस्को राम्रै फल प्राप्ति हुन्छ । जो योगी छोटो समयको लागि योगाभ्यास गरी भ्रष्ट भएको हुन्छ उस्ले स्वर्गको वास पाउँछ जहाँ पुण्यात्माहरूलाई प्रवेश गर्न दिइएको हुन्छ । उस्ले राम्रो कर्म गरेकोले त्यहाँ ऊ धेरै समयसम्म बसिसकेपछि पुनः उस्लाई यस लोकमा पठाइन्छ । यस लोकमा उस्ले सदाचारी ब्राह्मणको कूल प्राप्त गर्दछ ।

**अथवा योगिनामेव कुले भवति धीमताम् ।**
**एतद्धि दुर्लभतरं लोके जन्म यदीदृशम् ॥ ४२ ॥**

अथवा वैराग्यवान पुरुष ती लोकहरूमा नगएर ज्ञानवान योगिहरूको कुलमा जन्म लिन्छ । तर यसप्रकारको जुन यो जन्म छ, यस संसारमा निःसन्देह असाध्यै दुर्लभ हुन्छ ।



तर यदि दीर्घकालसम्म योग गरेपछि असफल भइएको खण्डमा त्यस्ता व्यक्तिहरूले यस्ता योगीहरूको कुलमा जन्म लिन्छन् जो असाध्यै बुद्धिमान र ज्ञानी हुन्छन् । यस्तो जन्म यस संसारमा निश्चय पनि दुर्लभ हुन्छ । यस्ता बुद्धिमानको कुलमा जन्म लिनाले त्यो बालक वा बालिकाले आध्यात्मिक परिवेश तथा प्रोत्साहन पाउँदछ । विशेषतः आचार्य गुरूहरूको कुलमा वा गोस्वामीहरूको कुलमा यो जन्म सम्भव देखिन्छ । यस्ता कुलका सदस्यहरू साह्रैनै ज्ञानवान तथा श्रद्धावान हुने गर्दछन् । यस्ता कुलहरूमा जन्म पाउनु पनि असाध्यै सौभाग्यको कुरो हो । किनकि केटाकेटीहरूको जस्तो पारिवारिक परिवेश हुन्छ उनीहरूको अवधारणा पनि उस्तै विकसित हुने गर्दछ । योगको पथमा हिडेर बीचमा भ्रष्ट भएकाहरूद्वारा गरिएका कर्महरू खेर जादैनन् । हाम्रो यो ज्ञानवान जीवन एउटा ठूलो अवसर हो, यस्लाई खेर फाल्न हुँदैन । त्यसकारण श्रीकृष्णले दिनु भएको मार्ग चित्र सर्वथा उपयोगी छ ।

**तत्र तं बुद्धिसंयोगं लभते पौर्वदेहिकम् ।**
**यतते च ततो भूयः संसिद्धौ कुरूनन्दन ॥ ४३ ॥**

त्यहाँ त्यस पहिलो शरीरमा सङ्ग्रह गरिएका बुद्धि संयोगहरूलाई अर्थात् समबुद्धि रूप योगका संस्कारहरू अनायास नै प्राप्त हुन्छन् हे कुरूनन्दन ! त्यस्को प्रभावले उस्ले फेरि परमात्माको प्राप्तिरूप सिद्धिको लागि अधिभन्दा बढी मात्रामा प्रयत्न गर्दछ ।

हे कुरूनन्दन ! यस्तो कुलमा जन्म पाएर उस्ले आफ्नो पूर्वजन्मको दैविक चेतना तथा संस्कारहरू पुनः प्राप्त गर्दछ । यसरी पूर्ण सफलता पाउने उद्येश्यले उस्ले अगाडि उन्नति गर्ने प्रयास गर्दछ । दिव्य प्रयास तथा योगाभ्यास कहिल्यै खेर जाँदैन । उदाहरणस्वरूप भारतको पहिलाको नाम इलावृतवर्ष थियो । राजा भरतले बाल्यकालमा नै सन्यास लिएको थिए तर उनी सफल भएको थिएनन् । उनीलाई तेश्रो जन्ममा ब्राह्मण कुलमा जन्म प्राप्त भयो । पूर्वजन्मको आध्यात्मिक सिद्धिको कारणले ब्राह्मण कुलमा दिव्य चेतना प्राप्त भयो र उनी महानतम योगी हुन पुगे । यिनै भरतले राजा हुँदा इलावृतवर्षबाट त्यस क्षेत्रलाई विशाल भारतवर्षमा परिवर्तन गरेको थिए । तसर्थ योगाभ्यासमा लागेर कुनै कारणवश त्यस्मा सफल भैएन भने पनि आत्तिनु पर्ने कुरा छैन । पूर्वजन्मका गरिएका सेवा तथा भक्तिका कर्महरूको अनायास

नै यस वर्तमान जन्ममा आएर गाँसिन्छन् र तिनले परमात्मा प्राप्तिमा अग्रगति दिन सघाऊ पुर्याउँदछन् ।

**पूर्वाभ्यासेन तेनैव ह्रियते ह्यवशोऽपि सः ।**
**जिज्ञासुरपि योगस्य शब्दब्रह्मातिवर्तते ॥ ४४ ॥**

त्यो योगभ्रष्टले राम्रो बुद्धिमानको कुलमा जन्म लिएपछि पनि ती पहिले गरिएका अभ्यासहरूले उस्लाई भगवान्तर्फ आकर्षित गर्दछ तथा समबुद्धिरूप योगका जिज्ञासुले पनि वेदमा वर्णित सकाम कर्महरूको फललाई उल्लङ्घन गर्दछ ।

आफ्नो पूर्वजन्मको दैवी चेतनाको कारणले ऊ स्वतः यस जन्ममा पुनः योगका नियमहरू प्रति आकर्षित हुन्छ । यसैलाई पछिल्लो जन्मको संस्कार भनिन्छ । उस्को जन्म कुनै ज्ञानीको घरमा भएको हुन्छ । यस जन्ममा ऊ पुनः योगप्रति आकृष्ट हुन्छ । पछिल्लो जन्ममा अधुरो रहेको योगलाई उस्ले निरन्तरता दिन खोज्छ । सही उद्देश्य बोकेर सत्कर्म गरेमा त्यस्को फल बेकार जाँदैन । यस्ता जिज्ञासु योगीहरू शास्त्रहरूमा वर्णित अनुष्णानहरूभन्दा माथि रहन्छन् । पूर्वजन्मको अपूरो योगाभ्यासले गर्दा यस जन्ममा ऊ पुनः मोक्षतर्फ आकृष्ट हुन्छ । यसबाहेक समबुद्धिरूप बुझ्ने योगका जिज्ञासुहरूले पनि वेदमा वर्णित सकाम कर्महरूको फलको जानकारी उनीहरूलाई भएता पनि उनीहरूले उल्लङ्घन गर्दछन् । अर्थात् उनीहरू फलप्रति आकर्षित नभई योग प्रति नै उन्मुख हुन्छन् ।

**प्रयत्नाद्यतमानस्तु योगी संशुद्धकिल्विषः ।**
**अनेकजन्मसंसिद्धस्ततो याति परां गतिम् ॥ ४५ ॥**

तर प्रयत्नपूर्वक अभ्यास गर्ने योगीले त पछिल्ला अनेकौ जन्महरूको संस्कार बलले यस जन्ममा संसिद्ध भई सबै पापहरूबाट मुक्त भएर तत्कालै परम गति प्राप्त गर्दछ ।

तर जब योगीले सबै कल्मष वा दोषहरूबाट शुद्ध भएर निष्ठाले योगमा अघि प्रगति गर्ने प्रयास गर्दछ, तब विभिन्न जन्महरूको अभ्यास पछि सिद्धि लाभ गरेर अन्तमा उस्ले परम गन्तव्य प्राप्त गर्दछ । जस्ले आफ्नो हरेक जन्ममा योग गर्ने कोशिस गरिरहन्छ उस्ले एकदिन परम गति अवश्य प्राप्त गर्दछ । हाम्रा कर्महरूको



खातामा राम्रा कर्महरू जम्मा हुँदै जान्छन् तथा खराव कर्महरू घटदै जान्छन् । हरेक जन्मका संस्कारहरू यस खातामा क्रमिक रूपमा जम्मा भइरहेका हुन्छन् । श्रीकृष्णले भन्दै हुनुहुन्छ कि नियमित रूपमा कोशिस गर्नेलाई उस्ले गरेका परिश्रमहरूको फल एकदिन न एकदिन अवश्य पाइन्छ । योगमा बिऊँको कहिल्यै नाश हुँदैन । हामीले अलिकति पनि योग सम्बन्धी कोशिस गरेका छौँ भने त्यस्को फल अवश्य पाईन्छ ।

**तपस्विभ्योऽधिको योगी ज्ञानिभ्योऽपि मतोऽधिकः ।**
**कर्मिभ्यश्र्चाधिको योगी तस्माद्योगी भवार्जुन ॥ ४६ ॥**

योगी तपश्वीहरूभन्दा श्रेष्ठ हुन्छ, शास्त्रज्ञानीहरू भन्दा पनि श्रेष्ठ मानिएको छ र सकाम कर्म गर्नेहरूभन्दा पनि योगी श्रेष्ठ हुन्छ । त्यसैले हे अर्जुन ! तिमी योगी बन ।

योगी तपश्वीहरू शास्त्रज्ञानीहरू, तथा सकामकर्मीहरू भन्दा उच्च हुन्छ । योगी सबैभन्दा ठूलो हुन्छ । कसैले कत्तिकै तपस्या किन नगरेको होस्, कसैले कत्ति कै शास्त्रको ज्ञान किन नपाएको होस्, कत्ति कै सकाम कर्म किन नगरेको होस्-उनीहरू योगीको समान महान हुँदैनन् । तसर्थ तिमी पनि सबै प्रकारले योगी बन भनी श्रीकृष्णले अर्जुनलाई उपदेश दिँदै हुनुहुन्छ । योगमा हामीले हाम्रो चेतनालाई परम सत्यसँग तादात्म्य कायम गर्न खोज्छौं । जब यो योग पद्धत्ति सकाम कर्महरूसंग मुख्यतया सम्बन्धित हुन्छ तब यसलाई कर्मयोग भनिन्छ । जब यो चिन्तनसँग सम्बन्धित हुन्छ तब यस्लाई ज्ञानयोग भनिन्छ तर जब यो भगवान्को भक्तिसँग सम्बन्धित हुन्छ तब यस्लाई भक्तियोग भनिन्छ । तसर्थ ज्ञानीहरू भन्दा, सकाम कर्मीहरू भन्दा तथा तपश्वीहरू भन्दा योगी श्रेष्ठ हुन्छ ।

**योगिनामपि सर्वेषां मद्गतेनान्तरात्मना ।**
**श्रद्धावान्भजते यो मां स मे युक्ततमो मतः ॥ ४७ ॥**

सबै योगीहरूमध्ये पनि जुन श्रद्धावान योगीले म मा पूर्ण समर्पित भएर अन्तरआत्माले मलाई निरन्तर भज्दछ, त्यो योगी मलाई परम श्रेष्ठ रूपमा मान्य छ ।

यस संसारका विभिन्न योगीहरूमध्ये जुन योगीले पूर्ण श्रद्धापूर्वक समर्पित भएर आफ्नो अन्तरआत्माले श्रीकृष्णको भजन कीर्तन गर्दछ, उहाँमा दिव्य प्रेमाभक्ति

राख्दछ, ऊ योगको माध्यमले उहाँ परमेश्वरसँग टाँसिएको हुन्छ तथा ऊ सबैमा सर्वोच्च पनि हुन्छ । यहाँ भज धातुबाट लिइएको भजते शब्दको अर्थ सेवा गर्नु हो । प्रेम तथा श्रद्धापूर्वक सेवा त भगवान्लाई गरिन्छ । संसारको प्रत्येक जीव भगवान्को अंश स्वरूप हो । तसर्थ प्रत्येक जीवप्रति प्रेमको भाव राख्नु, श्रद्धाभाव राख्नु तथा जीवको स्वभाव बमोजिम उस्को सेवा गर्नु पर्दछ । ज्ञानयोग तथा कर्मयोगको बाटो अपनाई आत्मीय रूपले भगवान् प्रति पूर्ण समर्पित भएर सेवा, भक्तिमा लिन हुने योगी नै मेरो परमभक्त हो । तडक-भडक, हल्लि–खल्लि गरेर र ढाड्स गरेर कुनै पनि भक्ति वा सेवा हुँदैन् । भगवान्सँगको योगलाई त अन्तर्आत्माले सेवा भक्ति गर्दै साधना गर्नु पर्दछ, तबमात्र उहाँको प्रिय होइन्छ र अन्ततः उहाँलाई पाइन्छ ।



अथ सप्तोमोऽध्यायः

# साँतौ अध्याय

# ज्ञानविज्ञान योग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**मय्यासक्तमनाः पार्थ योगं युञ्जन्मदाश्रयः ।**
**असंशयं समग्रं मां यथा ज्ञास्यसि तच्छृणु ॥ १ ॥**

श्री भगवान् भन्नुहुन्छः हे पार्थ ! म मा अनन्य प्रेमले आसक्तचित्त भएर तथा अनन्य भावले मेरो परायण वा मप्रति पूर्ण आसक्त भएर योगमा लागेको तिमीले जसरी सम्पूर्ण विभूति, बल, ऐश्वर्यादि गुणहरूले युक्त सबैको आत्मरूप मलाई संशयरहित भई चिन्नेछौ, त्यसको बारेमा सुन ।

श्रीकृष्णले स्पष्ट पार्न अर्जुनलाई भन्दै हुनुहुन्छ कि मेरो भावनाले पूर्ण भएर तथा मनलाई ममा आसक्त पारेर योगाभ्यास गर्दै पूर्णतया बिना कुनै शङ्काले तिमीले सबैको आत्मरूपमा मलाई चिन्नेछौ । भगवान् सबै विभूति, बल र ऐश्वर्य आदि गुणहरूले सम्पन्न हुनुहुन्छ । उहाँको बास सबैको आत्मामा रहेको छ । तिमीले अनन्त प्रेम देखाएर मलाई आफ्नो मनमा राख, साँचो भावले योग साधनामा लागी राख, अब म तिमीलाई विभूति, बल तथा ऐश्वर्यादि गुणहरूले युक्त आफ्नै आत्मरूपको बारेमा बताउँछु जस्ले गर्दा तिमीले मेरो बारेमा कुनै संशय राख्ने छैनौ । श्रीकृष्णले अर्जुनलाई ती सबै कुरा बताउन चाहनु हुन्छ जस्ले अर्जुनले श्रीकृष्ण माथि कहिल्यै शङ्का गर्ने छैनन् । भगवान्ले आफ्ना भक्तहरूको भलो चाहने हुँदा उनीहरू आ–आफ्ना जीवनमा सफल होउन भनेर उहाँका सबै कुराहरू भक्तलाई बताउन चाहँदै हुनुहुन्छ ।

**ज्ञानं तेऽहं सविज्ञानमिदं वक्ष्याम्यशेषतः ।**
**यज्ज्ञात्वा नेह भूयोऽन्यज्ज्ञातव्यमवशिष्यते ॥ २ ॥**

म तिम्रोलागि यस विज्ञान सहितको तत्वज्ञानलाई सम्पूर्णतया भन्छु, जस्लाई बुझेर संसारमा पुनः थप अरू जान्नेयोग्य फेरि केही पनि विषयवस्तु रहँदैन ।

अब म तिमीलाई पूर्णतया तत्वज्ञान र त्यस्मा रहेको विज्ञान रूपी दिव्यज्ञान दिन्छु । यी तत्त्वज्ञानहरू बुझिसकेपछि संसारमा अरू केही बुझिराख्न बाँकी रहँदैन ।

यहाँ पूर्ण ज्ञान भन्नाले प्रत्यक्ष जगत, यस्कोपछि काम गर्ने आत्मा तथा यी दुबैको उद्‌गम परमात्माको बारेमा हो । यो दिव्य ज्ञान पनि हो । अर्जुन श्रीकृष्णको परमभक्त, मित्र तथा शिष्य पनि भएकोले संस्कारयुक्त गुरू परम्परालाई यहाँ कायम गर्न खोजिएको देखिन्छ । यो जानी सकेपछि अर्जुनको मनमा कुनै पनि शङ्का रहन्न । तसर्थ मानिसले ती सबै ज्ञानहरूको उद्‌गमको बारेमा जान्न सक्नु पर्दछ जो सबै कारणहरूको पनि कारण हुन तथा समस्त योगहरूमा ध्यानको एकमात्र लक्ष पनि हो । हुन पनि भगवान्‌को बारेमा जानी सकेपछि अरू के नै जान्न बाँकि रहन्छ र ?

**मनुष्याणां सहस्रेषु कश्चिद्यतति सिद्धये ।**
**यततामपि सिद्धानां कश्चिन्मां वेत्ति तत्वतः ॥ ३ ॥**

हजारौँ मानिसहरूमध्ये कुनै एउटाले मेरो प्राप्तिको लागि यत्न गर्दछ र ती कोशिस गर्ने योगीहरूमा पनि कुनै एउटाले ममा समर्पित भएर मलाई तत्वको रूपमा अर्थात यथार्थ रूपमा जान्दछ ।

धेरै हजार मानिसहरूमध्ये कुनै एकले सिद्धिको लागि प्रयत्न गर्दछ र यसरी सिद्धि प्राप्त गर्नेहरूमध्ये बिरलै कुनै एकले मलाई जान्दछ । यस संसारमा जन्मेर हुर्केका मानिसहरूमध्ये बिरलै कुनै एक मानिसले आत्मा, शरीर र परमात्मा बारेमा जान्न खोज्दछ । धेरैजसो मानिसहरू त सम्पत्ति, आहार, निन्द्रा, मैथुन जस्ता कार्यहरूको पछि कुदिरहेका देखिन्छन् । दिव्यज्ञानमा कस्ले रूचि राख्ने ? यहाँ श्रीकृष्ण के हुनु हुन्छ भन्ने बारेमा अर्जुनलाई बताइरहनु भएको छ । श्री कृष्णलाई देवकी नन्दन, यशोदा नन्दन, वंशी बजैया आदिको रूपमा मात्र हामी नहेरौँ । श्रीकृष्ण भगवान् समस्त कारणहरूको कारण आदि परम पुरूष हुनुहुन्छ । यी लोकहरू, जीवहरू सबै उहाँकै योगदानबाट उत्पन्न तथा विकसित भएका हुन् भनी बुझ्नु नै शाश्वत ज्ञान हो ।

**भूमिरापोऽनलो वायुः खं मनो बुद्धिरेव च ।**
**अहंकार इतीयं मे भिन्ना प्रकृतिरष्टधा ॥ ४ ॥**
**अपरेयमितस्त्वन्यां प्रकृतिं विद्धि मे पराम् ।**
**जीवभूतां महाबाहो ययेदं धार्यते जगत् ॥ ५ ॥**

पृथ्वी, जल, अग्नि, वायु, आकाश, मन, बुद्धि र अहङ्कार पनि-यसरी यी आठ प्रकारले विभाजित मेरा प्रकृतिहरू हुन् । यी आठ प्रकारका भेदहरू भएका



अपरा अर्थात मेरा जड प्रकृति हुन र हे महाबाहो ! यसभन्दा अर्को, जस्लाई यस समस्त जगतले धारण गर्ने गर्दछ, मेरो जीवरूप परा वा चेतन प्रकृति हो भनी बुझ ।

श्रीकृष्णले यहाँ स्वयम्‌को प्रकृतिको बारेमा बताउँदै हुनुहुन्छ । श्रीकृष्णले सम्पूर्ण प्राणीहरूको उत्पत्तिको ज्ञान विज्ञानको बारेमा अर्जुनलाई सम्झाउँदा प्रकृतिलाई अपरा तथा परा प्रकृति भनेर दुइ भागहरूमा विभाजन गर्नु भएको छ । यी दुबै उहाँ नै हुनुहुन्छ भन्दै हुनुहुन्छ । यसमध्ये पञ्च महाभूत : पृथ्वी, जल, अग्नि, वायु र आकाशहरू तथा मन, बुद्धि, तथा अहङ्कार अपरा प्रकृतिमा पर्दछन् । अपरामा जड, स्थूल, सूक्ष्म तथा अदृश्य तत्वहरू समेत पर्दछन् । यसलाई जड प्रकृति पनि भनिन्छ । जस्लाई हामी चारैतिर देख्दछौँ । तर परा प्रकृति भन्नाले जसबाट सम्पूर्ण जगत धारण गरिन्छ त्यो जीवरूपा परा वा चेतन प्रकृति हो । सामान्यरूपमा अपरा प्रकृति जड र परा प्रकृति ज्ञाता चेतन जीवरूपा भएकोले भिन्न छ । यही नै संसारको रूप हो । जगत, जीवरूपलाई परा प्रकृतिले धारण गरेको हुन्छ । परा तथा अपरा दुबैको मिलनबाट शरीरको स्वरूप बन्दछ । ईश्वर परा तथा अपरा दुबै प्रकृतिहरूको योग हुन् । परा प्रकृति जीवमा रहेको चेतनरूप हो जस्बाट यो सम्पूर्ण जगत धारण गरिन्छ । परा प्रकृतिमा आत्मा पर्दछ जो हामी सबैमा रहेको हुन्छ । यिनीहरूको प्राकृतिक समायोजनको कारणले शरीर, मन, बुद्धिले आ-आफ्ना कार्यहरू गरिरहन्छन् । काम गर्दा यस्तो बुझिन्छ कि उनीहरू स्वयम्‌मा चेतन छन् ।

**एतद्योनीनि भूतानि सर्वाणीत्युपधारय ।**
**अहं कृत्स्नस्य जगतः प्रभवः प्रलयस्तथा ॥ ६ ॥**

हे अर्जुन ! तिमीले यस्तो बुझ कि सबै भूतहरू (क्षिति वा पृथ्वी, जल, पावक वा अग्नि, गगन वा आकाश, समीर वा वायु) दुबै परा तथा अपरा प्रकृतिहरूबाट उत्पन्न हुनेवाला छन् र म सम्पूर्ण जगतको प्रभव वा उत्पत्ति तथा प्रलय हुँ अर्थात् सम्पूर्ण जगतको मूल कारण हुँ ।

जे सबै जो छन् ती श्री कृष्णबाट आएका हुन तथा एकदिन उहाँमै ती सबै विलय पनि हुन्छन् । सबै प्राणिहरूको उद्‌गम यिनै दुई परा तथा अपरा प्रकृतिका शक्तिहरूबाट हुन्छ । यस संसारमा जे पनि भौतिक तथा आध्यात्मिक विषयवस्तुहरू छन् ती सबैको उत्पत्ति तथा विनाशको कारण मै नै हुँ भनी बुझ भनी श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ । परा तथा अपरा अर्थात् पदार्थ तथा आत्माको प्रतिफल नै संसारका वस्तुहरू हुन् । आत्मा सृष्टिको मूल कारण हो, आत्मा भएबाटै

पदार्थको उत्पत्ति तथा विकास हुने गर्दछ । सही अर्थमा श्रीकृष्ण पृथ्वी, जल, अग्नि, आकाश तथा वायुमा रहेका छन् । शरीरमा आत्मा भएर श्री कृष्ण रहनु भएकोले नै जीवहरूको शरीरको विकास भएको हो । हामीले जुन नाम वा स्वरूपमा श्रीकृष्णलाई चिन्दछौं त्यो सही होइन, वास्तविक कृष्णको बारेमा यहाँ बताइएको छ ।

**मत्तः परतरं नान्यत्किंचिदस्ति धनंजय ।**
**मयि सर्वमिदं प्रोतं सूत्रे मणिगणा इव ॥ ७ ॥**

हे धनन्जय ! मभन्दा भिन्न अरू कुनै पनि परम कारण छैन । यी सबै संसार सूत्रमा सूत्रको मणिहरू झैं ममा गाँसिएका छन् ।

श्रीकृष्णले भन्नु भएको थियो कि मानिसहरूले योगमा लागेर मनमा श्रीकृष्णलाई राख्नु पर्दछ । अनि मात्र योग साधना पुरा हुन्छ । यसै क्रममा उहाँ भन्दै हुनुहुन्छ कि हे धनन्जय ! मभन्दा श्रेष्ठ अरू कुनै सत्य वा कारण छैन । जसरी मोतिको मालामा मोतिहरू धागोमा गाँसिएका हुन्छन, त्यसैगरी सबै विषयवस्तुहरू म मा आश्रित छन् । परम सत्य साकार वा निराकार वा दुवै भए पनि उहाँ भगवान् श्रीकृष्ण नै हुनुहुन्छ । उहाँ त समस्त मोतिहरूलाई थेगेर राख्ने, मालाको अस्तित्व कायम राख्ने धागो हुनुहुन्छ । उहाँ आफ्ना परा तथा अपरा प्रकृतिको कारण सर्वव्यापी हुनुहुन्छ । अर्थात यस जगतमा जे छ त्यो कृष्णबाट छ, कृष्णमा छ, उहाँ बाहेक अरू केही छैन ।

**रसोऽहमप्सु कौन्तेय प्रभास्मि शशिसूर्ययोः ।**
**प्रणवः सर्ववेदेषु शब्दः खे पौरुषं नृषु ॥ ८ ॥**

हे अर्जुन ! म जलमा रस हुँ, चन्द्रमा र सूर्यमा प्रकाश हुँ, सम्पूर्ण वेदहरूमा ओंकार हुँ, आकाशमा शब्द र पुरुषहरूमा पुरुषत्व हुँ । श्रीकृष्णले आफ्नो असली रूपको बारेमा बयान गर्ने क्रममा उहाँ जलमा रस, सूर्य तथा चन्द्रमामा प्रकाश, वैदिक मन्त्रहरूमा ओंकार, आकाशमा ध्वनी तथा मनुष्यमा सामर्थ्य हुनुहुन्छ । यसप्रकार भगवान् आफ्नो परा तथा अपरा शक्तिहरूद्वारा व्यापक हुनुहुन्छ । उहाँ जल लगायतका विषयहरूमा तिनीहरूको रस वा सारांश हुनुहुन्छ । त्यही रसबाट ती विषयको पहिचान कायम रहेको हुन्छ । जलको मुख्य गुण त्यस्को रसिलोपन हो, जस्को कारणले जीवात्माहरू आकर्षित भएर पानी पिउने गर्दछन् । अनि सूर्य तथा चन्द्रमाको प्रकाश मूलतया ब्रह्मज्योतिबाट निस्कन्छ । यी दुवैको पहिचान तिनीहरूको प्रकाशको कारण भएकोले उहाँ प्रकाश हुनुहुन्छ । ओंकार प्रत्येक वैदिक मन्त्रको प्रारम्भमा



भगवान्लाई सम्बोधित गर्ने दिव्य ध्वनी हो, ओंकार श्रीकृष्णको शब्द स्वरूप हो । त्यस्तै आकाशमा वायु तरङ्गित भइरहेको हुन्छ । वायुले विभिन्न शब्द ध्वनी संगालेको हुन्छ । सबै शब्दहरूमा उहाँको वास छ । पुरूषको पहिचान नै पुरूषत्व हो । यो सामर्थ्यको द्योतक हो । यस्मा पनि श्रीकृष्णको वास हुन्छ । यसप्रकार सम्पूर्णमा श्रीकृष्ण हुनुहुन्छ ।

**पुण्यो गन्धः पृथिव्यां च तेजश्र्चास्मि विभावसौ ।**
**जीवनं सर्वभूतेषु तपश्र्चास्मि तवस्विषु ॥ ९ ॥**

म पृथ्वीमा पवित्र गन्ध र अग्निमा तेज हुँ तथा सम्पूर्ण भूतहरूमा उनीहरूको जीवन हुँ र तपस्विहरूमा तप हुँ ।

श्रीकृष्णले अर्जुनलाई आफ्नो स्वरूपको बारेमा थप बताउनु हुँदै उहाँ पृथ्वीमा सुगन्ध र अग्निमा उष्मा वा तेज, समस्त जीवहरूमा उनीहरूको जीवन तथा तपस्वीहरूमा तप हुनुहुन्छ भनि भन्दै हुनुहुन्छ । उहाँ प्रत्येक वस्तुको विशेषता तथा गुणतत्त्व हुनुहुन्छ । यस जगतमा गरिने विकाररहितका प्रत्येक वस्तुमा कुनै-कुनै किसिमको सुगन्ध रहेको हुन्छ । पानी, वायु, पृथ्वी सबैको आफ्नै किसिमका सुगन्धहरू हुन्छन् । ती सबै श्रीकृष्ण हुनुहुन्छ । अग्नि एक किसिमको शक्ति हो । यसबाट विभिन्न चिजहरू सञ्चालित हुन्छन् । उद्योग, पाचन शक्ति, रसायन शक्ति आदि सबैको तेज श्रीकृष्ण नै हुनुहुन्छ । संसारका सबै जीव तत्वहरूः मानिस, जनावर, रूख बिरूवा, ब्याक्टेरिया आदि सबैको चेतन, आत्मा जस्ले उनीहरूलाई सञ्चालित गर्दछन् ती सबै श्रीकृष्ण हुनुहुन्छ । साथै तपस्वीहरूको सबैभन्दा ठूलो शक्ति तपनै हुन्छ र त्यो तप श्रीकृष्णनै हुनुहुन्छ ।

**बीजं मां सर्वभूतानां विद्धि पार्थ सनातनम् ।**
**बुद्धिर्बुद्धिमतामस्मि तेजस्तेजस्विनामहम् ॥ १० ॥**

हे अर्जुन ! तिमीले सबै भूतहरूको सनातन बीज भनेर मलाई नै जान । म बुद्धिमानहरूको बुद्धि र तेजस्विहरूको तेज हुँ ।

श्रीकृष्णले आफ्नो सही रूपको एक-एक पत्र खोल्दै हुनुहुन्छ । मनै सबै जीवहरू जो पहिले थिए, जो आज छन् तथा जो भोलि हुनेछन ती सबैको आदि बीऊ अर्थात् उत्पत्तिको कारण हुँ । बुद्धिमानहरूको बुद्धि तथा तेजस्विहरूको तेज हुँ भनी मलाई बुझ भनी श्रीकृष्णले भन्दै हुनुहुन्छ । सबै पदार्थहरूको सुरूको तथा बीचको

अवस्था श्रीकृष्ण हुनुहुन्छ । अर्थात् उत्पत्तिको मूल कारक हुनुहुन्छ । वैदिक साहित्यमा वर्णन गरिएको छ कि ब्रह्म वा परम सत्य त्यो हो जस्बाट प्रत्येक वस्तु जन्मिन्छ । श्रीकृष्ण सबै चर वा चलायमान तथा अचर अचलायमान वा स्थिर सबैको बीज तत्व हुनुहुन्छ । उहाँ मूल हुनुहुन्छ । उहाँ मूल भएकोले सबै जीव तत्वहरूको उहाँले पालना पनि गरिरहनु भएको छ ।

**बलं बलवतां चाहं कामरागविवर्जितम् ।**
**धर्माविरूद्धो भूतेषु कामोऽस्मि भरतर्षभ ॥ ११ ॥**

हे भरतश्रेष्ठ ! म बलवानहरूको आसक्ति र कामनारहित बल अर्थात् सामर्थ्य हुँ र सबै भूतहरूमा धर्मको अनुकुल वा शास्त्रको अनुकुल काम हुँ ।

कुनै पनि चिजको गुण श्रीकृष्ण हुनुहुन्छ । उहाँको अनुसार आफ्नो बारेमा अर्जुनलाई भन्दै उहाँ बलवानहरूका कामनाहरू, इच्छाहरू तथा काम र क्रोधरहित बल हुनुहुन्छ । उहाँ यस्तो काम हुनुहुन्छ जो स्वधर्मको तथा शास्त्र बमोजिम हुन्छ । यस प्रकार श्रीकृष्णको परिचयात्मक पत्रहरू क्रमशः खुल्दै छन् । बलवान व्यक्तिहरूको सत्कर्म के हुन्छ भने उनीहरूले दुर्बल व्यक्तिहरूलाई विकासको मार्गमा सुरक्षा दिने, प्रोत्साहित गर्ने न कि तिनीहरूलाई आक्रमण एवं दुःख दिने । यस्ता सत्कर्म गर्ने बलवान व्यक्तिहरूको उहाँ बल हुनुहुन्छ । धर्म सम्मत मैथुन सन्तानोत्पतिको लागि हुनुपर्दछ, अन्य गलत कार्यको लागि होइन । लोकको विकासको लागि गरिएका कामहरू, संस्कार तथा सभ्यताको विकासको लागि गरिएका कामहरू, पर उपकार सम्बन्धि गरिएका कामहरू जो धर्मशास्त्र अनुकुल गरिएका छन भने ती सबै कामहरू पनि उहाँ नै हुनुहुन्छ । मानिसले केही गरौं भन्दा यदि ऊ कुनै विषयमा के गरौं वा के नगरौं भनी द्विविधामा पर्दछ भने त्यस अवस्थामा शास्त्रअनुरूप गरिने काम पनि श्रीकृष्ण हुनुहुन्छ ।

**ये चैव सात्विका भावा राजसास्तामसाश्च ये ।**
**मत्त एवेति तान्विद्धि न त्वहं तेषु ते मयि ॥ १२ ॥**

र जे पनि सत्वगुणबाट उत्पन्न हुने भाव छ र जे रजोगुण तथा तमोगुणबाट उत्पन्न हुने भाव छ ती सबै मैबाट उत्पत्ति भइरहेका छन, यस्तरी बुझ, तर वास्तवमा तिनीहरूमा म र उनीहरू ममा छैनन् ।

श्रीकृष्ण भन्दै हुनुहुन्छः मेरो शक्तिबाट सबै गुणहरू प्रकट भइरहेका छन् भनी तिमी बुझ । त्यो गुण चाहे सतोगुण होस्, वा रजोगुण होस् वा तमोगुण होस् ।



एक किसिमले म सबै थोक हुँ तर पनि म स्वतन्त्र छुँ । जसरी जस्मा आत्मा हुन्छ उस्लाई भोक तथा प्यास दुबै लाग्दछ तर भोक तथा प्यासमा आत्मा हुँदैन । प्रकृतिका गुणहरूको अधिन श्रीकृष्ण हुनुहुन्न । तर ती उहाँका अधिनमा छन् । प्रकृतिका गुणहरू भगवान् श्रीकृष्णबाट उत्पन्न भएका हुन् । संसारका सबै भौतिक क्रियाकलापहरू प्रकृतिका गुणहरूद्वारा नै सञ्चालित हुने गर्दछन् । भगवान् तिनीहरूको अधिनमा हुनुहुन्न । प्रकृतिका सबै गुणहरूः रजो, सतो तथा तमो श्रीकृष्णबाट उत्पन्न भएका हुन् । ती सबै उहाँकै अधिनस्थ छन् । तर प्रकृतिको अधिनस्थ उहाँ हुनुहुन्न । तसर्थ उहाँ निर्गुण हुनु हुन्छ । उहाँलाई कुनै प्रकृतिको गुणले प्रभावित गर्दैन । यी तीनवटै भावहरूमा श्रीकृष्ण फसेको हुनुहुन्न । यहीनै सबैभन्दा ठूलो योगीको राज हो । अनि उहाँलाई त्यसैले योगीराज भनिन्छ ।

**त्रिभिर्गुणमयैर्भावैरेभिः सर्वमिदं जगत् ।**
**मोहितं नाभिजानाति मामेभ्यः परमव्ययम् ॥ १३ ॥**

गुणहरूको कार्य रूपः सात्त्विक, राजसी र तामसी यी तीनै प्रकारका भावहरूबाट यो संसारका प्राणिसमुदाय मोहित भईरहेका छन्, त्यसैले यी तीनैवटा गुणहरूभन्दा टाढा रहेको म अविनाशीलाई चिन्दैनन् ।

मेरै शक्तिबाट उत्पन्न भएका सतो, रजो, तमो गुणहरूले मोहग्रस्त यस सारा संसारले म गुणातीत, तथा अविनाशीलाई चिन्दैन । यो संसारका जीव तत्वहरू यिनै तीन गुणहरूबाट मोहित भएर रहेका छन् । यी गुणहरूमध्ये कुनै एकको अंश पनि मनुष्यमा रहेमा उस्ले श्रीकृष्णलाई जान्दैन । यही तीन गुणहरूबाट हामीमा आसक्ति तथा कामनाहरू जागृत हुन्छन् । यिनीहरूबाट मोहित भएकाहरूलाई यो अवगत हुँदैन कि श्रीकृष्णलाई यी गुणहरूले प्रभावित पार्न सक्दैनन्, उहाँ तीबाट टाढा हुनुहुन्छ । प्रकृतिका विभिन्न तत्वहरूको समिश्रणले जीवको उत्पत्ति भएको हुन्छ । प्रकृतिका तत्वहरूको कारणले नै मानिसहरूको स्वभाव तथा मनोदशा निर्धारित भई शारीरिक कार्यहरू सञ्चालित हुने गर्दछन् । प्रकृतिको तीन गुणहरू अन्तर्गत रही कार्य गर्ने मानिसहरूलाई चार श्रेणीहरूमा विभाजित गरिएका छन् । ती हुन ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र । हामी यी तीन गुणहरूद्वारा ग्रसित हुँदा हामीले यी गुणहरू निसृत गर्ने मूल श्रोतलाई बिर्सिन्छौं । तर वास्तवमा जहाँ यी तीन गुणहरू समाप्त हुन्छन त्यहीबाट श्री कृष्ण सुरू हुनुहुन्छ ।

**दैवी ह्येषा गुणमयी मम माया दुरत्यया ।**
**मामेव ये प्रपद्यन्ते मायामेतां तरन्ति ते ॥ १४ ॥**

किनकि यो अलौकिक अर्थात अति अद्भूत त्रिगुणमयी माया बडो कठिन छ, तर जुन पुरूषले निरन्तर मलाई मात्र भज्दछ उस्ले यस मायालाई उल्लङ्घन गर्दछ अर्थात संसारबाट पार पाउँछ ।

प्रकृतिका तीन गुणहरूवालालाई मेरो दैवी शक्ति मायाबाट पार पाउन कठिन छ । तर जो मेरो शरणागत हुन्छ, उस्ले सहजताले त्यस मायाको बन्धनलाई तोड्न सफल भई यस सांसारिक भवसागरलाई पार पाउन सक्दछ । भगवान्को दैवी शक्ति विशाल छ । जीवात्मा पनि उहाँकै दैवी शक्तिको अंश हो । तर जीवात्माले भौतिक शक्तिहरूको संसर्गमा आई त्यस परा शक्तिलाई भुल्दछ । जीव भगवान्को पूरा शक्तिसँग आबद्ध छ तर अपरा वा भौतिक शक्तिद्वारा दूषित भएर त्यस्कै मोहमा भ्रमित भइरहेको हुन्छ । यसरी मायामा रूमलिई जीवनयापन गरिरहेको व्यक्तिलाई बुद्धिजीवि भनिन्छ । धेरैजसो बुद्धिजीवि भएपछि एकको मायाले बाँधिएको हात खुट्टालाई अर्को त्यस्तै बाधिएकोले खोल्न सक्दैन । खोलिदिनको लागि त मायाबाट नबाँधिएको जीव चाहियो । श्रीकृष्ण मायाको पनि सृजक भएकोले उहाँले बद्धजीवबाट मुक्ति पाउन खोजेकाहरूमध्ये असल भक्तलाई माया मुक्त गर्नु भनी आदेश दिनसक्नु हुन्छ । तसर्थ तिमीले पनि यी तथ्यहरू बुझ र माया मुक्त होऊ भनी श्रीकृष्णले अर्जुन तथा हामी सबैलाई भन्दै हुनुहुन्छ ।

**न मां दुष्कृतिनो मूढाः प्रपद्यन्ते नराधमाः ।**
**माययापहृतज्ञाना आसुरं भावमाश्रिताः ॥ १५ ॥**

मायाद्वारा जस्को ज्ञान हरण गरिसकिएको छ, यस्तो आसुरी स्वभावलाई धारण गरेका मानिसहरूमध्ये नीच, दूषित कर्म गर्ने मूढ मानिसहरूले मलाई भज्दैनन् ।

श्रीकृष्णलाई क-कस्ले भज्दैनन् भन्ने बारेमा उहाँ स्वयम्ले भन्दै हुनुहुन्छ : जो मानिस महामूर्ख छ, जो मानिसहरूमा अधम छ, जस्को ज्ञानलाई मायाद्वारा हरण गरिएको छ र जस्ले असुरहरूको नास्तिक स्वभावलाई धारण गरेको छ यस्ता दुष्टहरूले मेरो शरण ग्रहण गर्दैनन् । घमण्ड गर्ने, स्वयम्लाई कर्ता ठान्नेहरूले, जस्मा साँगुरो साँच छ र साँगुरो कर्महरू गर्दछन्, जसमा असुर स्वभाव छ र जस्ले दूषित कर्महरू गर्दछन् त्यस्ता मानिसहरूले श्रीकृष्णलाई भज्दैनन् ।



**चतुर्विधा भजन्ते मां जनाः सुकृतिनोऽर्जुन ।**
**आर्तो जिज्ञासुरर्थार्थी ज्ञानी च भरतर्षभ ॥ १६ ॥**

हे भरतवंशीहरूमा श्रेष्ठ अर्जुन ! उत्तम कर्म गर्ने अर्थार्थी (सांसारिक पदार्थहरूको लागि भगवान्को भजन गर्ने), आर्त (संकट निवारणको लागि भगवान्को भजन गर्ने), जिज्ञासु (भगवान्लाई यथार्थ रूपले जान्ने इच्छा भई भजन गर्ने) र ज्ञानी यी चार प्रकारका भक्तजनहरूले मलाई भज्ने गर्दछन् ।

क-कस्ले श्रीकृष्णलाई भज्नुहुन्छ त्यस्को बारेमा श्रीकृष्णले वर्णन गर्दै हुनुहुन्छ । यस समाजमा दुष्कृत्यकारीहरूको सदा विपक्षमा उभिएका यस्ता मानिसहरूः जस्ले शास्त्रीय विधि विधानहरूको दृढताले पालन गर्दछन्, सामाजिक तथा नैतिक नियमहरूलाई मान्दछन्, परमेश्वरको न्यूनाधिक (अलिक कम वा अलिक बढी) भक्ति गर्दछनलाई भगवान्ले चार श्रेणीहरूमा विभाजन गर्नु भएको छ । यसमध्ये पहिलो अर्थार्थी : यस्ता पिडित जो सांसारिक पदार्थहरूको लागि भगवान्को भजन गर्दछन्, दोश्रो आर्त : दुनियाका विषयवस्तुसँग लगाव रहेको र धनादि जस्लाई चाहिन्छ पर्दछन, तेश्रो जिज्ञासु : आफ्ना दुःखहरूबाट बच्न खोज्ने भगवान्को शरणमा आई भगवान् के-कस्तो तथा कति शक्तिमान हुनुहुन्छ भनी जिज्ञासा राख्ने पर्दछन् तथा चौथौ ज्ञानी : यस्ता भक्तजनहरू जो भगवान्लाई परमसत्यको रूपमा भजन गर्ने पर्दछन ले उहाँको भजन गर्दछन् । यी चारै प्रकारका भक्तहरू परमेश्वरको समिपमा भक्ति सेवाको लागि जान्छन् । अर्थार्थी अन्तर्गत दुष्ट मनुष्यहरूको जीवन स्वार्थपूर्ण, अनियमित तथा निरूद्येश्य हुने गर्दछ । यिनीहरूको लागि ईश्वर भक्ति सेवा निक्कै दुर्लभ हुने गर्दछ । तर तीमध्ये पनि केही शुद्ध भक्तहरूको सङ्गतमा आई शुद्ध भक्त बन्दछन् । आर्त अन्तर्गत सकाम कर्महरूमा सधैं संलग्न रहेका व्यक्तिहरू संकटको समयमा भगवान्को नजिक आउँदछन् तथा शुद्ध भक्तको सङ्गतिले भक्त बन्न पुग्दछन् । जिज्ञासु अन्तर्गत केही मानिसहरू आफ्नो जीवनमा पूर्णतया हतासको अवस्थामा पुगेको बेलामा शुद्ध भक्तहरूको सङ्गत गर्न थाल्दछन् । उनीहरूले ईश्वरको विषयमा जानकारी लिन खोज्दछन् वा जिज्ञासा राख्दछन् । चौथो ज्ञानी अन्तर्गत चिन्तनमा व्यस्त रहेका मानिसहरू कहिले काहिँ शुष्क चिन्तनमा पुग्दछन् तथा ज्ञानका प्रत्येक क्षेत्रहरूबाट उनीहरू हतास हुन पुग्दछन् । उनीहरूले पनि ईश्वरलाई जान्न चाहान्छन् र भगवान्को भक्ति सेवा गर्न आउँछन् । यसरी उनीहरूले निराकार ब्रह्म तथा अन्तर्यामी परमात्मालाई प्राप्त गर्दछन् । यी चारै किसिमका भगवान्को

सेवा भक्तिमा आउनेहरू भक्तिमा संलग्न भएपछि यिनीहरूले भौतिक आसक्तिलाई क्रमशः त्याग गर्दै जान्छन् र आध्यात्मिक उन्नतिमा लाग्दछन् ।

**तेषां ज्ञानी नित्ययुक्त एकभक्तिर्विशिष्यते ।**
**प्रियो हि ज्ञानिनोऽत्यर्थमहं स च मम प्रियः ॥ १७ ॥**

तीमध्ये सधैँ ममा एकाग्र भावले स्थित रहेको अनन्य प्रेमभक्तिवाला ज्ञानी भक्त अति उत्तम हुन्छ, किनकि मलाई तत्वले जान्ने ज्ञानीहरूको लागि म अत्यन्तै प्रिय छुँ र त्यो ज्ञानी पनि मेरो लागि अत्यन्त प्रिय छ ।

उपर्युक्तमध्ये जो परम ज्ञानीको श्रेणीमा पर्दछ तथा जो शुद्धभक्तिले ममा लागिरहन्छ ऊ सर्वश्रेष्ठ छ, किनकि म उसलाई अत्यन्तै प्रिय छुँ र ऊ मलाई अत्यन्तै प्रिय छ । मूलतया भौतिक इच्छाहरूका सबै कल्मषहरूलाई त्याग गरेका अर्थार्थी, आर्त, जिज्ञासु तथा ज्ञानी सबै शुद्धभक्त बन्न सक्दछन् । तर तीमध्ये पनि जो परम सत्य ज्ञानी छ तथा भौतिक इच्छाहरूबाट मुक्त छ र भक्तिमा लागिरहन्छ भने ऊ सर्वश्रेष्ठ बन्न पुग्दछ । ज्ञानको खोजीमा लागेकोलाई आत्मा शरीरभन्दा बेग्लै हो भन्ने ज्ञान भएको हुन्छ । त्यस्ता व्यक्तिले योगको क्षेत्रमा विकास गर्दै गयो भने उस्लाई परमात्माको ज्ञान हुन्छ । यस प्रकार पूर्ण शुद्ध भएपछि ऊ ईश्वरको दास हो भनी उस्लाई अनुभूति हुन्छ । अनि शुद्ध भक्तजनको सङ्गतले अन्य अर्थार्थी, आर्त, जिज्ञासु तथा ज्ञानीहरू पनि ऊसँगै शुद्ध हुन पुग्दछन् ।

**उदाराः सर्व एवैते ज्ञानी त्वात्मैव मे मतम् ।**
**आस्थितः स हि युक्तात्मा मामेवानुत्तमां गतिम् ॥ १८ ॥**

यी सबै उदार छन्, तर ज्ञानी त साक्षात् मेरो स्वरूप नै हो-भन्ने मेरो मत छ, किनकि त्यो मद्गत (म स्वयम्मा रहेको) मन बुद्धिवाला ज्ञानी भक्त अति उत्तम गतिस्वरूप ममा नै राम्ररी स्थित छ ।

यस्मा कुनै शङ्का छैन कि मेरो भक्तिमा आउने यी चारै श्रेणीका मानिसहरू उदार स्वभावका हुन्छन् । उनीहरूले स्वयम्लाई गुन लाउँदैछन् किनकि उनीहरूले श्रीकृष्णसम्म पुग्ने कोशिस गरिरहेका हुन्छन् । तर जस्ले मेरो ज्ञानलाई प्राप्त गरेको छ, ऊ म आफैँ समान हुन्छ । उस्ले मेरो दिव्य सेवा गर्न तत्पर रहेर म परम उद्देश्यलाई निश्चय नै प्राप्त गर्दछ । भगवान् नजिक जो-जो केही प्राप्त गर्न आउँदछन् ती सबै महात्मा हुन् । भक्तको भगवान् प्रतिको स्नेहको कारणले उनीहरूले भगवान्सँग



केही माँग वा याचना गर्दछन् । भगवान्ले पनि तिनीहरूलाई स्वीकार गर्नु हुन्छ । यसरी दुबै बीच स्नेहको विनिमय हुन्छ । तर ज्ञानीभक्तहरू यस कारणले बढी प्रिय हुन्छन् कि उनीहरूको उद्देश्य प्रेम तथा भक्तिले परमेश्वरको सेवामा लागिरहनु हुन्छ । ज्ञानीहरूले मन तथा बुद्धिले श्रीकृष्णलाई आफु भित्र बसाई राखेका हुन्छन् । ज्ञानीहरूले कुनै स्वार्थवस श्रीकृष्णलाई भजेका हुँदैनन् । यस्ता भक्तहरूले भगवान्को सेवा प्रति-क्षण गरिरहेका हुन्छन् । त्यसैले परमेश्वरले पनि उनीहरूलाई बढी मात्रामा स्नेह गर्नु हुन्छ । उनीहरूले श्रीकृष्णको तत्वलाई जान्न खोज्दछन्, अनि जानिसके पछि त्यस्मै रमाएर उहाँलाई भजिरहन्छन् ।

**बहूनां जन्मनामन्ते ज्ञानवान्मां प्रपद्यते ।**
**वासुदेवः सर्वमिति स महात्मा सुदुर्लभः ॥ १९ ॥**

धेरै जन्महरूको अन्तको जन्ममा तत्वज्ञान प्राप्त गरेको पुरूषले सबै कुराहरू वासुदेव नै हुन्-यस प्रकार मलाई भज्दछ । त्यस्तो महात्मा निक्कै नै दुर्लभ हुन्छ ।

श्रीकृष्णको बारेको तत्वज्ञान एउटै जन्ममा पाउन सम्भव छैन । यो ज्ञान पाउन त मानिसहरूले धेरै जन्महरूमा घुम्नु परेको पाइन्छ । धेरै-धेरै जन्महरूको अन्तमा जस्ले साच्चैको तत्वज्ञान प्राप्त गर्दछ, त्यो मानिस मलाई सबै कारणहरूको कारण ठानेर मेरो शरणमा आउँछ । यस्ता व्यक्तिहरू महात्मा हुन तथा यिनीहरू अत्यन्तै दुर्लभ हुन्छन् । एउटा जन्ममा श्रीकृष्णलाई सम्झिने प्रयास गर्दा सम्झिएन भने यो सम्झिने क्रम यसरी नै विभिन्न जन्महरूसम्म चलिरहन्छ । तर भक्ति तथा दिव्य ज्ञानका विभिन्न अनुष्ठानहरू हरेक जन्ममा निरन्तर गरेर एउटा जीवले धेरै जन्महरू पश्चात यो दिव्य ज्ञान प्राप्त गर्न सक्छ कि आत्म साक्षात्कारको चरम लक्ष्य भगवान् श्रीकृष्ण हुनुहुन्छ । श्रीकृष्णको कृपा नै सबै कुरो हो, उहाँनै सबै कारणहरूको कारण हुनुहुन्छ, यो जगत उहाँको पराधिन छ । संसारका प्रत्येक जीव तथा वस्तुको श्री कृष्णसँग सम्बन्ध छ भनी उसमा धारणा विकसित हुन जान्छ ।

**कामैस्तैस्तैर्हृतज्ञानाः प्रपद्यन्तेऽन्यदेवताः ।**
**तं तं नियममास्थाय प्रकृया नियताः स्वया ॥ २० ॥**

ती-ती भोगहरूको कामनाद्वारा जस्को ज्ञान हरिसकिएको छ, ती व्यक्तिहरू आफ्ना स्वभावले प्रेरित भएर ती-ती नियमहरूलाई धारण गरी अरू देवताहरूलाई भज्दछन् अर्थात पूजा गर्दछन् ।

आ-आफ्ना भोगहरू तथा कामनाहरू बमोजिम हरेक जन्ममा मानिसहरूको संस्कार जम्मा हुने गर्दछ । यिनै जम्मा भएका संस्कारहरू बमोजिम उनीहरूको स्वभाव बन्न पुग्दछ । यिनै स्वभावहरूको कारणले उनीहरूले देवताहरू छनौट गरेर पूजा गर्ने गर्दछन् । उनीहरूको प्रकृति वा स्वभाव एउटै जन्ममा सकिँदैन । यो त अनेक जन्मसम्म सर्दै आएको हुन्छ । यसरी जस्तो-जस्तो बुद्धि वा स्वभाव बनेको हुन्छ त्यस्तै-त्यस्तै उनीहरूको भौतिक इच्छाहरू प्रति आसक्ति कायम हुन्छ । यसको लागि उनीहरूले आ-आफ्ना स्वभावको आधारमा पूजाका विशेष विधि-विधानहरूको पालना गर्दछन् । तर जो भौतिक विषयवस्तुहरूको आसक्तिबाट मुक्त भइसकेका छन् उनीहरू भगवान्को शरणमा गई उहाँको भक्तिमा तत्पर भइरहन्छन् ।

**यो यो यां यां तनुं भक्तः श्रद्धयार्चितुमिच्छति ।**
**तस्य तस्याचलां श्रद्धां तामेव विदधाम्यहम् ॥ २१ ॥**

जो-जो सकाम भक्तले जुन-जुन देवताहरूको स्वरूपलाई श्रद्धाले पूजा गर्न चाहान्छन, त्यस-त्यस भक्तको श्रद्धालाई म त्यसै देवता प्रति स्थिर गर्दछु । जस्तो जसको भक्ति उस्तै उसको पूजा । कसैले मूर्तिमा भगवान् देख्दछ, कसैले रूखमा, कसैले नदीमा, कसैले खामोमा इच्छाएको ईश्वर देख्दछ । श्रीकृष्णले कसैमा भेदभाव गर्नु हुन्न । सकाम भक्तले जुन देवता प्रति श्रद्धा राखी पूजा गर्दछ श्रीकृष्णले त्यसैमा ती देवी-देवतालाई स्थिर गर्नु हुन्छ । म प्रत्येक जीवको हृदयमा परमात्माको स्वरूप भई स्थित छु । जसरी कसैले कुनै देवताको पूजा गर्ने इच्छा गर्दछ, म त्यस्को श्रद्धालाई स्थिर गर्दछु, जस्ले गर्दा उस्ले त्यसै देवताको भक्ति गर्न सकोस् । भगवान्ले हरेक व्यक्तिलाई स्वतन्त्रता दिनु भएको छ । कसैले कुनै भौतिक विषयको चाहना राखी कुनै देवताको पूजा आराधना गर्न चाहान्छ भने उस्को शरीरमा स्थित परमात्मा स्वरूप भगवान्ले उस्को मनोभाव जानेर उस्को स्वतन्त्रताको रक्षा गरी पूजा गर्ने सुविधा प्रदान गर्नु हुन्छ । यसरी उस्का भौतिक इच्छाहरू पुरा हुन्छन् ।

**स तया श्रद्धया युक्तस्तस्याराधनमीहते ।**
**लभते च ततः कामान्मयैव विहितान्हि तान् ॥ २२ ॥**

त्यस पुरूषले सोही श्रद्धाले युक्त भएर सम्बध्द देवताको पूजा गर्दछ र त्यस देवताबाट मैद्वारा व्यवस्थित गरिएका ती इच्छित भोगहरूलाई निःसन्देह प्राप्त गर्दछ ।



यसप्रकार भक्तले आफ्नो देवी वा देवता रोज्दछ । भक्तको श्रद्धालाई श्रीकृष्णले स्थिर गर्नु हुन्छ । अनि जब श्रीकृष्णद्वारा स्थिर गरिएको श्रद्धाले सम्बन्धित देवी वा देवताको पूजा गरिन्छ, त्यसको फल भक्तलाई अवश्य पाइन्छ । हरेक देवी तथा देवताको पूजा गर्ने बेग्ला-बेग्लै बिधान र नियमहरू हुन्छन् । भक्तले पाउने त्यो फल भने उहाँ सम्बन्धित देवी वा देवताको नियम बमोजिम नै पाइन्छ । त्यो पाइने विधि-विधानको व्यवस्था र निश्चितता गर्ने कार्य श्री कृष्णले गर्नु हुन्छ । यी सबै मात्र श्री कृष्णद्वारा व्यवस्थित गरिएका हुन् । मानिसले सकाम भक्ति गर्दै आफ्ना कामहरू तथा कर्तव्यहरू राम्ररी गर्नु पर्दछ । मानिस जस्तो देवताहरूले यस सृष्टिको संरचना, सञ्चालन तथा सम्हार सबै उनै परमेश्वरबाट भएको हो तथा भइरहेको छ भनी कहिल्यै विर्सिदैनन् । उनीहरूले प्राप्त गरेका वर दिने शक्ति उहाँ परमेश्वरबाट नै प्राप्त गरेका हुन्छन् । देवी तथा देवताहरू यसरी मात्र माध्यमको रूपमा कार्यरत रहेका हुन्छन् ।

**अन्तवत्तु फलं तेषां तम्दवत्यल्पमेधसाम् ।**
**देवान्देवयजो यान्ति मम्दक्ता यान्ति मामपि ॥ २३ ॥**

तर ती अल्पबुद्धिवालाहरूका ती फलहरू नाशवान हुन्छन तथा ती देवताहरूलाई पूजा गर्नेहरू तिनै देवताहरूलाई प्राप्त हुन्छन् र मेरा भक्तहरूले मलाई जसरी पनि भजुन, अन्तमा उनीहरू मलाई नै प्राप्त हुन्छन् ।

यस संसारमा अल्पबुद्धि भएकाहरूले जुन-जुन देवी वा देवताहरूको पूजा आराधना गरेका हुन्छन् त्यसबाट प्राप्त फलहरू क्षणिक तथा नाशवान हुने गरी उनीहरूले पाउने गर्दछन् । जुन-जुन देवी वा देवताहरूको पूजा गरिएका हुन्छन्, तिनका ती-ती भक्तहरू अन्तमा त्यही-त्यही लोकमा जाने गर्दछन् । जसरी सूर्यको पूजा गर्ने सूर्यलोकमा र इन्द्रको पूजा गर्ने इन्द्रलोकमा । यहाँ भगवान्ले भक्तहरूलाई पूजा गर्ने स्वतन्त्रता दिनु भएको छ । यसरी यो स्पष्ट हुन्छ कि भौतिक इच्छा पूरा गर्न जुन देवी वा देवताको उपासना तथा पूजा गरिएको हुन्छ उही देवी वा देवताको प्राप्ति हुन्छ । उहाँ परमेश्वरको प्राप्ति होइन । तर श्रीकृष्ण परमेश्वरको पूजा जसरी गरे पनि ती भक्तहरू भने उहाँकै परमधाममा जान्छन् ।

**अव्यक्तं व्यक्तिमापन्नं मन्यन्ते मामबुद्धयः ।**
**परं भावमजानन्तो ममाव्ययमनुत्तमम् ॥ २४ ॥**

बुद्धिहिन पुरूषले मेरो अनुत्तम (उत्कृष्ट) अविनाशी परम भावलाई नजानेर मन तथा इन्द्रियहरू भन्दा टाढा म सच्चिदानन्दघन परमात्मालाई मानिसहरू जस्तै जन्मेर व्यक्तिभाव प्राप्त गरेको मनुष्यको रूपमा ठान्दछ ।

यस संसारमा केही मानिसहरू अज्ञानी तथा बुद्धिहिन हुन्छन् । तिनीहरूले मेरो अविनाशी तथा उत्कृष्ट परम भावलाई बुझेका हुँदैनन् । तिनीहरूले आ-आफ्ना मन तथा इन्द्रियहरू भन्दा टाढा रहनु हुने श्रीकृष्ण सच्चिदानन्दघन परमात्मालाई मानिस जस्तै ठान्दछन् । तर श्रीकृष्ण त योगेश्वर हुनुहुन्छ । महाभारत कालमा उहाँ शरीरधारी योगीको रूपमा हुनु हुन्छ । समझदार मानिसले श्रीकृष्णको अव्यक्त रूपलाई चिन्न खोज्दछन् । तर बुद्धिहिन मानिसहरूले उहाँलाई मानिस ठान्दछन् । यहाँ श्रीकृष्णले बुद्धिमान तथा निर्बुद्धि मानिसहरूले उहाँलाई कुन रूपमा हेर्दछन् त्यसको भिन्नताको बारेमा बताउँदै हुनुहुन्छ । तर उहाँ सर्वशक्तिमान, योगेश्वर परमेश्वर भएको यथार्थ हामीले बुझ्नु पर्दछ । उहाँ त यस संसारको कण-कणमा हुनुहुन्छ, प्रत्येक जीवमा उहाँको अंश विद्यमान छ । श्रीकृष्णलाई सम्झिन त योगको बाटो अपनाउनु पर्दछ, निष्काम कर्महरू गर्नु पर्दछ । मनमा श्रीकृष्णलाई धारण गर्नु पर्दछ । उहाँलाई हामीले व्यक्तिको रूपमा ठान्यौं भने हामीले हाम्रो समय तथा जीवन व्यर्थमा खर्च गरेको ठहर्छ ।

**नाहं प्रकाशः सर्वस्य योगमायासमावृतः ।**
**मूढोऽयं नाभिजानाति लोको मामजमव्ययम् ॥ २५ ॥**

आफ्नो योगमायाले लुकेको म सबैको सामुन्ने प्रत्यक्ष हुन्न, त्यसैले यी अज्ञानी जन समुदायले म जन्मरहित अविनाशी परमेश्र्वरलाई चिन्दैनन् अर्थात् मलाई जन्मिने र मर्नेवाला व्यक्ति ठान्दछन् ।

मूर्खहरू तथा अल्पज्ञको लागि म कहिल्यै प्रकट हुन्न । अज्ञानीहरूको सोच्ने ढङ्ग नै गलत हुने गर्दछ । अज्ञानीहरू आफुले पनि गलत बाटो चयन गर्दछन् तथा अरूलाई पनि गलत बाटो नै दर्शाउँछन् । उनीहरूको लागि त म आफ्नो योगमायाले नदेखिने हुन्छु । तसर्थ म अजन्मा हुँ तथा म अविनाशी हुँ भन्ने उनीहरूले थाहा पाउँदैनन् । श्रीकृष्ण भगवान् योगमायाको आवरणमा आवृत हुनुहुन्छ । सामान्य जनले उहाँलाई देख्न तथा सम्झिन सक्दैनन् । द्वापर युगमा पनि उहाँलाई भगवान्को रूपमा देख्ने थोरै छन् । दुर्योधनले उहाँलाई बध गर्न आफ्ना सैनिकहरूलाई आदेश दिँदा



उहाँले आफ्नो विराटरूप धारण गर्नु भो र त्यस समयमा उहाँ माथि आस्था राख्ने उहाँका भक्तजन भीष्म, द्रोणाचार्य जस्ता भक्तहरूले उहाँको दर्शन पाए । उहाँ ईन्धन समान हुनुहुन्छ जस्मा अलिकति पनि निष्काम कर्मको आगोको झिल्का पर्यो भने बल्नु हुन्छ । तर अन्यको अगाडि उहाँ योगमायाको शक्तिले लुप्त हुनुहुन्छ ।

**वेदाहं समतीतानि वर्तमानानि चार्जुन ।**
**भविष्याणि च भूतानि मां तु वेद न कश्र्चन ॥ २६ ॥**

हे अर्जुन ! पूर्वमा व्यतित भएका तथा वर्तमानमा स्थित रहेका तथा भविष्यमा हुने सबै भूतहरूलाई म जान्दछु, तर मलाई कुनै पनि श्रद्धा भक्तिरहित पुरूषले जान्दैनन् ।

जुन संसारमा हामी छौँ ती हाम्रा धेरै जन्महरूको परिणाम हो । ब्रह्मज्ञानी परमेश्वर भएकोले श्रीकृष्णले भूतकालमा भएका विषयवस्तुहरू, जीवात्माहरू, वर्तमानमा स्थित रहेका सन्दर्भहरू तथा जीवात्माहरू तथा भविष्यमा घटित हुने विषयवस्तुहरू र जीवात्माहरूको बारेमा सबै जान्नु हुन्छ । उहाँ प्रति निष्काम कर्मले लाग्नु नै उहाँ प्रतिको भक्ति हो । तर मलाई चिन्ने ती हुन्छन् जस्ले म प्रति श्रद्धा भक्ति राखी निष्काम कर्महरू गर्दछन् भन्ने धारणा उहाँले व्यक्त गर्नु भएको छ । भक्तिको अर्थ उहाँ प्रति आसक्तियुक्त भई निष्काम कर्महरू गर्नु नै हो । श्री कृष्णलाई भूतकालमा के-के घटेका थिए, वर्तमानमा के-के भइरहेका छन् तथा भविष्यमा के-के हुनेवाला छन् ती सबै ज्ञात रहेको हुन्छ । तर एउटा सामान्य मानिसलाई ती सन्दर्भहरू थाहा हुँदैन । उहाँ प्रत्येक जीवमा परमात्माको अंशको रूपमा रहेकोले उहाँलाई ती सबैको बारेमा जानकारी रहेको हुन्छ ।

**इच्छाद्वेषसमुत्थेन द्वन्द्वमोहेन भारत ।**
**सर्वभुतानि संमोहं सर्गे यान्ति परंतप ॥ २७ ॥**

हे भरतवंशी अर्जुन ! संसारमा इच्छा र द्वेषबाट उत्पन्न भएका सुख-दुःख आदि द्वन्द्वरूप मोहबाट सबै प्राणीहरूले अत्यन्त अज्ञात प्राप्त गरिरहेका छन् ।

यस संसारमा सबैजसो जीवहरू जन्म लिएर इच्छा तथा द्वेषबाट उत्पन्न हुने द्वन्दद्वारा मोहग्रस्त भइरहेका छन् । यसै कारण उनीहरूले श्रीकृष्णलाई जान्न सकिरहेका छैनन् । जीवको स्वाभाविक स्थिति शुद्ध ज्ञान रूप परमेश्वरको अधीनता

हो । तर मोह तथा मायाले गर्दा जब मानिस शुद्ध ज्ञानबाट टाढा पुग्दछ, ऊ मायाबाट वशीभूत हुन्छ र भगवान्लाई उस्ले बुझ्न सक्दैन । यो मायाको उत्पत्तिको श्रोत इच्छा तथा घृणाको द्वन्द रूप हो । तर यिनीहरूमध्येकै केही शुद्ध भक्तहरू इच्छा तथा घृणाबाट मोहग्रस्त हुँदैनन । उनीहरू जीवन चक्रबाट मुक्त भई श्रीकृष्णको परम धाम पुग्दछन् । मोहग्रस्त व्यक्ति भने मूर्ख नै हुन्छन् । हामीले इच्छा तथा व्देषबाट उत्पन्न हुने मोहबाट अलग हुन सक्यौं भने मात्र श्रीकृष्णको स्वरूपलाई जान्न सक्दछौं ।

**येषां त्वन्तगतं पापं जनानां पुण्यकर्मणाम् ।**
**ते व्दन्द्वमोहनिर्मुक्ता भजन्ते मां दृढव्रताः ॥ २८ ॥**

तर निष्काम भावले श्रेष्ठ कर्महरूका आचरणहरू गर्ने जुन पुरूषहरूको पाप नष्ट भइसकेको छ, ती राग-द्वेषयुक्त द्वन्द रूप मोहबाट मुक्त भएको दृढनिश्चय भएको भक्तहरूले मलाई सबै किसिमले भज्दछन् ।

तर पूर्वजन्म तथा यस जन्ममा पुण्य कर्महरू गरेकाहरू जस्का पाप कर्महरू पूर्ण रूपले समाप्त भइसकेका छन्, मोहको द्वन्दबाट मुक्त भएर संकल्प सहित मेरो भजनमा लाग्दछन् । धर्मका विधि-विधानहरूलाई अनुसरण गरेर जस्ले पूण्य आर्जन गरेका हुन्छन्, पापकर्महरूमाथि विजय प्राप्त गरेका हुन्छन् यस्ता स्वभाव भएका व्यक्तिहरूले भक्तिको मार्ग समाती भगवान् सम्बन्धी शुद्ध ज्ञान प्राप्त गर्दछन् । तर अज्ञान तथा द्वन्दको कारण मोहग्रस्त भएका व्यक्तिहरूले प्रभुको सेवामा तन्मयता दर्शाउन सक्दैनन् । श्रीकृष्णले अज्ञानताको चक्करबाट निक्लने व्यक्तिहरूको बारेमा यहाँ भन्नु भएको छ । यस्ता व्यक्तिहरू संसारको माया, जाल, लोभका चक्करहरूबाट माथि उठेर आफु तथा परमात्मा बीचको सम्वन्धको सच्चाई के हो भन्ने बारेमा जान्न खोज्दछन् । यस्तो गर्नुको सिधा बाटो निष्काम कर्म हो । यसबाट पापहरू कट्दछन् । पाप कटनाले इच्छा तथा द्वेषको भावहरू मनमा आउँदैनन् । यी भावहरू नआउँनाले वा यिनीहरूलाई जीतेको हुनाले मनमा श्रीकृष्णको भाव क्रमशः आउन थाल्दछ । तब त्यो भक्त श्रीकृष्णको स्वरूप जान्न धेरै नजिक पुगिसकेको हुन्छ तथा उहाँको भजनमा तल्लिन रहन्छ ।

**जरामरणमोक्षाय मामाश्रित्य यतन्ति ये ।**
**ते ब्रह्म तद्विदुः कृत्स्नमध्यात्मं कर्म चाखिलम् ॥ २९ ॥**



ज–जस्ले मेरो शरणमा परेर जरा (बृद्धावस्था) तथा मरणबाट छुटकारा पाउन प्रयत्न गर्दछन्, ती पुरूषहरूले त्यस ब्रह्मलाई, सबै अध्यात्मलाई तथा सम्पूर्ण कर्मलाई जान्दछन् ।

जुन बुद्धिमान भक्तहरूले परमेश्वरको शरण परेर बृद्धावस्था तथा मृत्युबाट छुटकारा पाउन प्रयत्न गर्दछन ती व्यक्तिहरूले दिव्य कर्महरूको बारेमा पूर्ण रूपले जान्दछन् । मानिसहरूलाई जन्म, मृत्यु, बृद्धावस्था, रोग आदिले शरीरलाई सताउँदछ, आत्मालाई होइन । आध्यात्मिक शरीरको लागि जन्म, मृत्यु, बृद्धावस्था तथा रोगहरू हुँदैनन् । जस्ले निष्काम कर्म गरेर योग गर्दछ, भगवान्को सेवा-भक्ति गर्दछ ऊ भगवान्को शुद्ध भक्त बन्दछ । उस्ले सबै कर्महरूलाई र सम्पूर्ण आध्यात्मलाई जानेको तथा बुझेकोले उस्को मुक्ति पनि हुन्छ । जन्मिने तथा मर्ने साङ्लोमा त धेरैजसो बाँधिएका छन् । हामी त्यसबाट माथि उठौं । हामीले आफुलाई आत्मा ठान्नुपर्दछ, अनि आत्मा तथा परमात्मा बीचको सम्बन्धलाई कायम राख्नु पर्दछ ।

**साधिभूताधिदैवं मां साधियज्ञं च ये विदुः ।**
**प्रयाणकालेऽपि च मां ते विदुर्युक्तचेतसः ॥ ३० ॥**

जुन पुरूषले अधिभूत (भौतिक जगतलाई चलाउने) र अधिदैव (सबै देवताहरूलाई नियन्त्रण गर्ने) सहित तथा अधियज्ञ (सबैको आत्मरूप, यज्ञहरू नियन्त्रण गर्ने) श्रीकृष्णलाई जीवनको अन्तकालमा पनि जान्दछ, त्यो युक्तचित्तवाला पुरूषले मलाई जान्दछ अर्थात ऊ म मा प्राप्त हुन्छ ।

जो व्यक्तिले म परमेश्वरलाई मेरो पूर्ण चेतनामा रहेर मलाई जगतको, देवताहरूको तथा समस्त यज्ञ बिधिहरूको नियन्त्रक तथा व्यवस्थापक ठान्दछ, उस्ले आफ्नो मृत्युको समयमा भए पनि म भगवान्लाई जान्न वा बुझ्न सक्दछ । तर जो व्यक्ति मोहग्रस्त छ, जस्मा इच्छा तथा व्देष छ त्यस्ले श्री कृष्णलाई जान्दैन । जुन व्यक्तिले श्रीकृष्णलाई मनुष्यको शरीरको रूपमा रहेको विश्वास गर्दछ उस्ले श्रीकृष्णलाई जान्न सक्दैन । श्रीकृष्णलाई त्यसले जान्दछ जस्ले सबै जीवहरूमा, निर्जीव वस्तुहरूमा, सबैको आत्मामा श्रीकृष्णलाई देख्दछ, जस्ले यो जान्दछ कि श्रीकृष्ण सधैं थिए, सधैं छन तथा सधैं रहने छन् । यस्तो युक्त चित्तवाला पुरूषले मात्र श्री कृष्णलाई जान्दछ । यस्ता योगीहरू श्रीकृष्णमै प्राप्त पनि हुन्छन् ।

अथाष्टमोऽध्यायः

## आठ अध्याय

## अक्षरब्रह्मयोग

अर्जुन (भन्दछन्)

**किं तद्ब्रह्म किमध्यात्मं किं कर्म पुरूषोत्तम ।**
**अधिभूतं च किं प्रोक्तमधिदैवं किमुच्यते ॥ १ ॥**

अर्जुनले भने : हे पुरूषोत्तम ! त्यो ब्रह्म के हो ? अध्यात्म के हो ? कर्म के हो ? अधिभूत नामबाट के भनिएको छ र अधिदैव कस्लाई भनिन्छ ?

यहाँ अर्जुनले समस्त मानव जातिको ज्ञानको लागि समेत आवश्यक हुने विषयहरू श्री कृष्णलाईः ब्रह्म के हो ? अध्यात्म के हो ? कर्म के हो ? अधिभूत के हुन् ? कृपा गरेर यी सबै मलाई बताउनुस् भनी सोधेका छन् । यस श्लोकमा भगवान्लाई पुरुषोत्तम भनी सम्वोधन गरिएको छ । जस्को अर्थ भगवान्ले उनलाई यी सबै प्रश्नहरूको उत्तर आफ्नो मित्र ठानेर मात्र होइन कि परम पुरुष तथा परम प्रमाण मानेर जस्ले निश्चित रूपमा सही उत्तर दिन सक्नुहुन्छ भन्ने विश्वासमा अर्जुनले सोधेका छन् । यहाँ अर्जुनले श्रीकृष्णलाई ब्रह्म, कर्म तथा अध्यात्मको बारेमा प्रश्न गर्दैछन् । यी विषयवस्तुहरूलाई अर्जुनले सम्भिरहेका छैनन् । हुन पनि कसरी सम्भिउन् । यिनै कुराहरूलाई सम्भिन योगीहरूलाई कत्ति धेरै वर्षहरू तथा अभै धेरै जन्महरू खर्चिनु पर्दछ । अनि सँगैमा सबै ज्ञानहरूलाई सम्भेर मात्र पुग्दैन, ती सबैलाई लागू पनि गर्नु पर्ने हुन्छ ।

**अधियज्ञः कथं कोऽत्र देहेऽस्मिन्मधुसूदन ।**
**प्रयाणकाले च कथं ज्ञेयोऽसि नियतात्मभिः ॥ २ ॥**

हे मधुसूदन ! यहाँ अधियज्ञ (यज्ञहरू नियन्त्रण गर्न सक्ने) को छ ? र ऊ यस शरीरमा कसरी छ ? तथा युक्तचित्तवाला पुरुषको अन्त समयमा हजुर कसरी स्मरणमा आउनु हुन्छ ?

यहाँ मधुसूदन भनी श्रीकृष्णलाई सम्वोधन गरिएको छ किनकि उहाँले एकपटक मधु नाम गरेको दैत्यको बध गर्नु भएको थियो । साथै अधियज्ञको तात्पर्य इन्द्र वा विष्णु हुनसक्छ किनकि यी दुबै देवताहरूको पूजा यज्ञव्दारा गरिन्छ । तथापि



अर्जुनले श्रीकृष्णलाई प्रश्न गरेका छन कि वस्तुतः यज्ञको स्वामी को हो ? तथा भगवान् कसरी जीवको शरीर भित्र बस्नु हुन्छ ? जीवनको अन्त समयमा अर्थात मृत्यु वरण गर्ने समयमा शारीरिक कष्ट पाइरहेको बेलामा मानिसले कसरी हजुरलाई सम्भी हजुरको नजिक पुग्न सक्दछ ? जो पुरूष युक्तचित्तवाला हुन्छ अर्थात् जस्ले शरीरलाई संयमी बनाएको हुन्छ उस्ले कसरी श्रीकृष्णलाई अन्त समयमा पहिचान गर्न सक्दछ भनी अर्जुनले जान्न खोजिरहेको छन् । त्यस्तो के हुन्छ र अन्तिम समयमा श्रीकृष्णको स्मरण प्राप्त हुन्छ ?

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**अक्षरं ब्रह्म परमं स्वभावोऽध्यात्ममुच्यते ।**
**भूतभावोम्दवकरो विसर्गः कर्मसंज्ञितः ॥ ३ ॥**

श्री भगवान्ले भन्नुभयो : परम अक्षर ब्रह्म हो, आफ्नो स्वरूप अर्थात् जीवात्मा अध्यात्म नामबाट भनिन्छ तथा भूतहरूको भावलाई उत्पन्न गर्ने जुन त्याग छ, त्यसलाई कर्म नामबाट भनिएको छ ।

भगवान्ले भन्दै हुनुहुन्छ कि अविनाशी तथा दिव्य जीवलाई ब्रह्म भनिन्छ र त्यस्को आत्माको नित्य स्वभावलाई अध्यात्म वा आत्म भनिन्छ । जीवहरूको भौतिक शरीर सम्बन्धी गतिविधिहरूमध्ये आफ्ना इच्छाहरूको र इर्ष्याहरूको त्याग गर्नुलाई कर्म भनिन्छ । ब्रह्म परम अक्षर हो अर्थात् यो अविनाशी छ, क्षय हुँदैन । दोश्रो आफ्नो आत्माको स्वरूपलाई जान्नु नै आध्यात्म हो, तेश्रो भूतहरूको भाववाट उत्पन्न गर्ने त्यागलाई कर्म भनिएको छ । हामी भित्र बेग्ला-बेग्लै स्वभावको कारणले बेग्ला-बेग्लै इच्छाहरू जन्मिन्छन् । यी इच्छाहरूको त्याग नै कर्म हो । यो कर्मको दार्शनिक पक्ष हो ।

**अधिभूतं क्षरो भावः पुरूषश्र्चाधिदैवतम् ।**
**अधियज्ञोऽहमेवात्र देहे देहभृतां वर ॥ ४ ॥**

उत्पत्ति-विनाशको धर्म वा स्वभाव बोकेका सबै पदार्थहरू अधिभूत हुन्, हिरण्यमय पुरुष अधिदैव हो, हे देवधारीहरूमा श्रेष्ठ अर्जुन ! यस शरीरमा म वासुदेव नै अन्तर्यामी रूपमा अधियज्ञ हुँ ।

जो निरन्तर परिवर्तनशील छन्, जस्को उत्पत्ति तथा विनाश भइरहन्छ यस्ता स्वभाव बोकेकाहरूलाई अधिभूतको श्रेणीमा श्रीकृष्णले राख्नुभयो । यस अन्तर्गत यो

सारा भौतिकताले भरिपूर्ण संसार पर्दछ । जो नाशवान छ । जो अक्षर छ, कहिल्यै नाश हुँदैन त्यो अधिदैव हो । प्रत्येक देहधारीको हृदयमा परमात्मा स्वरूप स्थित म अन्तर्यामी परमेश्वरलाई अधियज्ञ वा यज्ञको स्वामी भनेर भनिन्छ । यहाँ यज्ञको स्वामी वा अधिष्ठाता श्रीकृष्ण हुनुहुन्छ । सामान्यतया भौतिक शरीरलाई छ किसिमका अवस्थाहरूबाट जानु पर्ने हुन्छ । पहिलो उत्पन्न हुनु, दोश्रो बढ्नु, तेश्रो केही समयसम्म रहनु, चौथो केही गौण पदार्थ उत्पादन गर्नु, पाँचौ क्षीण हुनु तथा छैठौ विलुप्त हुनु । यही भौतिक संरचना, प्रकृतिलाई अधिभूत भनिन्छ । त्यस्तै अधिदैव भन्नाले परमात्माको विशाल स्वरूपको धारणा, जसभित्र सबै देवगण तथा उहाँहरूका लोकहरू समेत पर्दछन्, तिनीहरूको संरचना तथा सञ्चालन प्रकृयालाई भनिन्छ । अनि प्रत्येक शरीरमा परमात्माको अंश आत्माको वास हुन्छ, जो भगवान् श्रीकृष्णको अंश स्वरूप हो लाई अधियज्ञ भनिन्छ ।

**अन्तकाले च मामेव स्मरन्मुक्त्वा कलेवरम् ।**
**यः प्रयाति स मद्‌भावं याति नास्त्यत्र संशयः ॥ ५ ॥**

जुन पुरूषले अन्तकालमा पनि मलाई नै स्मरण गर्दै शरीर त्याग गर्दछ, उस्ले मेरो साक्षात् स्वरूप प्राप्त गर्दछ–यस्मा केही पनि संशय छैन ।

यस संसारका जो सुकै व्यक्तिले आफ्नो जीवनको अन्तकालमा श्रीकृष्णलाई सम्भिन्छ भने त्यस व्यक्तिले परमेश्वरको दिव्य स्वभाव प्राप्त गर्दछ । मनमा श्रीकृष्णलाई सम्भेर आफ्नो कर्तव्य गर्दै जानु पर्दछ, निष्काम कर्महरू गर्दै गर्नु पर्दछ । जस्ले यस्तो गर्दछ उस्लाई श्रीकृष्ण प्राप्त हुनुहुन्छ । अर्जुनले जुन प्रश्न गरेका थिए कि मनुष्यले जीवनको अन्त समयमा हजुरलाई स्मरण गर्नाले कसरी हजुरलाई प्राप्त गर्दछ । यसैको उत्तरमा उहाँले यो जवाफ दिनु भएको हो । जुन पुरूषले अन्तकालमा समेत मेरो स्वरूपलाई सम्भिन्छ उस्ले मेरो साक्षात स्वरूप प्राप्त गर्दछ र मैले उस्लाई प्राप्त गर्दछु ।

**यं यं वापि स्मरन्भावं त्यजत्यन्ते कलेवरम् ।**
**तं तमेवैति कौन्तेय सदा तम्दावभावितः ॥ ६ ॥**

हे कुन्तिपुत्र अर्जुन ! यो मानिसले जीवनको अन्तकालमा जे–जस्तो भावलाई स्मरण गर्दै शरीरको त्याग गर्दछ, त्यै–त्यै स्वरूप उस्ले प्राप्त गर्दछ किनकि ऊ सधैँ त्यसै भावमा भावित रहन्छ ।



यहाँ मृत्यु समयमा मनुष्यले लिने भाव तथा त्यसको परिणामको बारेमा बर्णन गरिएको छ । मानिसले मृत्यु समयमा श्रीकृष्णको भाव लिएमा उस्ले श्रीकृष्णलाई अवश्य प्राप्त गर्दछ । मानिसले आफ्नो जीवन अवधिमा जस्तो भाव लिने अभ्यास गरेको हुन्छ स्वभावतः उस्लाई मृत्युको समयमा पनि त्यस्तै भाव आउँछ । तर सबै ठाउँमा यही हुन्छ नै भनी निश्चित गर्न सकिन्न । महाराज भरत महापुरूष भएता पनि मृत्युको समयमा उहाँले हरिनको भावलाई धारणामा लिनु भएकोले अर्को जन्ममा उहाँले हरिण भई जन्म लिनु पर्यो । तर त्यस हरिनलाई अघिल्लो जन्मको सबै विषयवस्तुहरू सम्भना थियो । कुनै व्यक्तिले सतोगुणीको आचरण कायम राखी श्रीकृष्णको सेवा भक्ति जीवनपर्यन्त गरिरह्यो भने हुनसक्छ कि उस्ले मृत्युको समयमा पनि श्रीकृष्णकै सम्भना गरोस् । यसबाट उस्लाई उहाँको दिव्य स्वरूप प्राप्त हुन्छ ।

**तस्मात्सर्वेषु कालेषु मामनुस्मर युध्य च ।**
**मय्यर्पितमनोबुद्धिर्मामेवैष्यस्यसंशयम् ॥ ७ ॥**

त्यसकारण हे अर्जुन ! तिमी सबै समयमा निरन्तर मेरो स्मरण गर र युद्ध गर । यसरी म मा अर्पण गरिएको मन-बुद्धिले युक्त भएर तिमी निःसन्देह मलाई नै प्राप्त हुनेछौ ।

तिमीले सधैँ कृष्ण भावले मेरो चिन्तन गर्नु पर्दछ र सँगैमा युद्ध गर्ने कर्तव्य पनि पुरा गर्नु पर्दछ । आफ्ना कर्महरू मलाई समर्पित गरेर तथा आफ्ना मन तथा बुद्धिलाई ममा स्थिर गरेर तिमीले निश्चित रूपले मलाई प्राप्त गर्नेछौ । यो श्रीकृष्णले अर्जुनलाई दिएको उपदेश हामी सबै मानिसहरूलाई धेरै नै उपयोगी छ । भगवान्ले भन्दै हुनुहुन्छ कि तिमीले आफ्नो कर्तव्यहरू पुरा गर तर आफ्नो मनमा र बुद्धिमा मलाई स्थिर राख । यसप्रकार मानिस भौतिक कल्मषहरूबाट मुक्त भई मन एवं बुद्धिमा श्रीकृष्णको भाव र प्रवृत कायम राख्दछ । अनि उस्का आगामि जन्महरू पनि सुध्रिदै जान्छन् तथा यसरी एक दिन अवश्य उस्ले श्रीकृष्णलाई प्राप्त गर्नेछ ।

**अभ्यासयोगयुक्तेन चेतसा नान्यगामिना ।**
**परमं पुरूषं दिव्यं याति पार्थानुचिन्तयन् ॥ ८ ॥**

हे पार्थ ! यो नियम छ कि परमेश्वरको ध्यानको अभ्यासरूप योगद्वारायुक्त भएर अन्य विषयतर्फ नजाने चित्तले निरन्तर उहाँको चिन्तन गर्दै मानिसले परम प्रकाशरूप दिव्य पुरूष अर्थात् परमेश्वरलाई प्राप्त गर्दछ ।

श्रीकृष्णले उपदेश दिँदै हुनुहुन्छ कि जो व्यक्तिले मेरो स्मरण गर्नमा आफ्नो मनलाई निरन्तर लगाई अविचलित भावले भगवान्को रूपमा मेरो ध्यान गर्दछ भने त्यो व्यक्तिले मलाई अवश्य नै प्राप्त गर्दछ। भगवान्को नामको शब्द उच्चारण गर्दा मन, जिब्रो, कान व्यस्त रहन्छन्। परमेश्वरको भजन, कीर्तन, ध्यानको अभ्यास गर्नु धेरै नै सुगम छ। यसरी उहाँको निरन्तर जप गर्नाले भक्त शुद्ध हुन्छ तथा जीवनको अन्तमा उस्ले भगवद्धाम प्राप्त गर्दछ। उहाँको प्राप्तिको लागि अन्तःकरणले परमात्माको ध्यान योग गरिरहनु पर्दछ। यस्को लागि निरन्तर श्रीकृष्ण चिन्तन र अभ्यासको खाँचो पर्दछ। योग गर्दा यो कुरामा विशेष ध्यान दिनु पर्दछ कि हाम्रो चित्त श्रीकृष्णबाट हटेर अन्यत्र नजावोस्। योग गर्दा काम, क्रोधको भाव यदि मनमा आउँछ भने हाम्रो योग त्यही नै समाप्त भएको ठान्नु पर्दछ। फलस्वरूप हामीले हाम्रा कर्महरू तथा कर्तव्यहरू गर्न सक्दैनौं। उहाँलाई प्राप्त गर्न त चित्तलाई संयमित गर्न समर्थ हुनु पर्दछ।

**कविं पुराणमनुशासितारमणोरणीयांसमनुस्मरेद्यः।**
**सर्वस्य धातारमचिन्त्यरूप–मादित्यवर्णं तमसः परस्तात् ॥ ९ ॥**

जुन पुरुष सर्वज्ञ, अनादि, सबैको नियन्ता (अन्तर्यामी रूपले सबै प्राणिहरूका शुभ तथा अशुभ कर्महरूको अनुसार शासन गर्ने), सूक्ष्मभन्दा पनि अति सूक्ष्म, सबैको धारण-पोषण गर्ने अचिन्त्यस्वरूप, सूर्य जस्तै नित्य चेतन प्रकाशरूप र अविद्याभन्दा धेरै टाढा, शुद्ध सच्चिदानन्दघन परमेश्वरको स्मरण गर्दछ।

मानिसहरूले परम पुरुषको ध्यान तथा स्मरण गर्दाको मनोभाव कायम गर्दा उहाँ सर्वज्ञ, पुरातन, नियन्ता, सूक्ष्म भन्दा पनि सूक्ष्म, हरेकको पालनकर्ता, सबै भौतिक बुद्धि भन्दा पर, अचिन्त्य तथा नित्यपुरुषको रूपमा गरून्। उहाँ दिव्यरूप सूर्य जस्तो तेजवान हुनुहुन्छ र यस भौतिक प्रकृति भन्दा टाढा हुनुहुन्छ। उहाँमा भूत, भविष्य तथा वर्तमानका सबै विषयहरूको ज्ञान रहेको छ। उहाँ सबै वस्तु तथा कारणहरूको उद्गम भएकोले पुरातन हुनुहुन्छ। उहाँ सबैको पालनहारा हुनुहुन्छ र ज्ञानको मार्ग देखाउने शिक्षक हुनुहुन्छ अर्थात् नियन्ता हुनुहुन्छ। उहाँ अणुको हृदय समेतमा प्रवेश गर्न सक्ने सूक्ष्माति सूक्ष्म हुनुहुन्छ। धेरै सूक्ष्म भएकोले उहाँ जहाँ पनि पुग्नु हुन्छ परमात्माको रूपमा उहाँ परमाणुमा पनि प्रवेश गर्न सक्नु हुन्छ, सूक्ष्म भएकोले हृदयमा पनि बसोबास गर्नु भई नियन्त्रण पनि गर्नु हुन्छ। उहाँ यसरी



सर्वव्यापी भई सबैको पालनहारा हुनुहुन्छ। परमात्माले आफ्नो अचिन्त्य शक्तिद्वारा यो विशाल लोक तथा आकाश गङ्गालाई धारण गर्नु भएको छ। अचिन्त्य शक्ति अर्थात हामीले कल्पना गरेको भन्दा बढी शक्ति उहाँमा निहित छ। उहाँ यस भौतिक जगतमा सर्वव्यापी हुनुहुन्छ तापनि उहाँ यसभन्दा टाढा हुनुहुन्छ। सूर्य जस्तो तेजिलो प्रकाशमय, तथा अविद्याभन्दा धैरै टाढा हुनुहुन्छ। सच्चिदानन्द परमात्माका योगीहरूले यस रूपमा उहाँलाई स्मरण गर्दै सत्कर्म पनि गरिरहन्छन्।

**प्रयाणकाले मनसाचलेन भक्त्या युक्तो योगबलेन चैव।**
**भ्रुवोर्मध्ये प्राणमावेश्य सम्यक् स तं परं पुरूषमुपैति दिव्यम् ॥ १० ॥**

त्यो भक्तियुक्त पुरुषले अन्तकालमा पनि योगबलले भृकुटीको मध्यमा प्राणलाई राम्ररी स्थापित गरेर फेरि निश्र्चल मनले स्मरण गर्दै त्यस दिव्यरूप परम पुरुष परमात्मालाई नै प्राप्त गर्दछ।

जुन व्यक्तिले मृत्युको समयमा पनि आफ्नो प्राणलाई दुइ आँखिभौं बीचमा स्थिर गर्दछ र योगशक्तिले अविचलित मनमा पूर्णभक्तिका साथ परमेश्वरको स्मरणमा आफुलाई लगाउँदछ, उस्ले निश्चित रूपले भगवान्लाई प्राप्त गर्दछ। मानिसले मृत्युको समयमा मनलाई भगवान्को सम्फनामा तथा भक्तिमा स्थिर गर्नु पर्दछ। योगाभ्यास गर्नेहरूलाई यो उपदेश दिइएको छ कि आफ्नो प्राणलाई दुबै आँखिभौंको बीच आज्ञाचक्र रहेको स्थानमा स्थिर गर्नुहोस्। निरन्तर योगाभ्यास गर्ने व्यक्तिले मृत्युको समयमा भगवान्को कृपाले योगाभ्यास गर्न नसके पनि उहाँलाई सम्फिन भने सक्दछ। योगको अभावमा मनुष्यले कहिल्यै पनि यो अवस्था प्राप्त गर्न नसक्ने हुँदा दिव्यरूप परम पुरुष परमात्मालाई प्राप्त गर्न सक्दैन। किनकि मृत्युको समयमा मानिसको मन अत्यधिक विचलित हुने गर्दछ। तसर्थ मानिसहरूले योगको माध्यमले आध्यात्मको अभ्यास गरिरहनु पर्दछ।

**यदक्षरं वेदविदो वदन्ति विशन्ति यद्यतयो वीतरागाः।**
**यदिच्छन्तो ब्रह्मचर्यं चरन्ति तत्ते पदं संग्रहेण प्रवक्ष्ये ॥ ११ ॥**

वेद जान्ने विद्वानले जुन सच्चिदानन्दघनरूप परम पदलाई अविनाशी भन्दछ, आसक्तिरहित यत्नशील सन्यासीहरू महात्माजन जस्मा प्रवेश गर्दछन् र जुन परम पदलाई चाहना गर्ने ब्रह्मचारीहरू ब्रह्मचर्यका आचरण गर्दछन्, त्यस परम पदको बारेमा म तिम्रो लागि सङ्क्षेप भन्दछुँ।

जो वेदहरूका ज्ञाताहरूले ॐकारको उच्चारण गर्दै सच्चिदानन्दघनलाई अविनाशी मान्दै उहाँमा प्रवेश गर्दछन्, जो सन्यास आश्रमका ठूल-ठूला मुनिहरू छन्, जो सबै ब्रह्ममा प्रवेश गर्दछन् तथा यस्तो सिद्धिको इच्छा गर्ने ब्रह्मचारीहरूले ब्रह्मचर्य ब्रतको अभ्यास गर्दछन् । अब म तिमीलाई ती प्रवेशका बिधिहरूको बारेमा बताउँछु, जस्बाट कुनै पनि व्यक्तिले लाभ लिन सक्दछ । यहाँ श्रीकृष्णले भगवान्कोमा पुग्ने बाटोको बारेमा सङ्क्षेपमा सम्झाउन खोज्दै हुनुहुन्छ ।

**सर्वद्वाराणि संयम्य मनो हृदि निरूध्य च ।**
**मूर्ध्न्याधायात्मनः प्राणमास्थितो योगाधारणाम् ॥ १२ ॥**
**ओमित्येकाक्षरं ब्रह्म व्याहरन्मामनुस्मरन् ।**
**यः प्रयाति त्यजन्देहं स याति परमां गतिम् ॥ १३ ॥**

सबै इन्द्रियहरूका ढोकाहरूलाई छेकेर तथा मनलाई हृद्देशमा स्थिर गरेर, फेरि त्यस जीतिएको मनद्वारा प्राणलाई मस्तिष्कको बीचमा स्थापित गरेर, परमात्मा सम्वन्धि योगधारणामा स्थित भएर जुन पुरूषले यो ओम नामक एक अक्षररूप ब्रह्मको उच्चारण गर्दै र त्यसको अर्थ स्वरूप म निर्गुण ब्रह्मको चिन्तन गर्दै शरीर लाई त्याग गर्दछ, त्यो पुरूषले परम गति प्राप्त गर्दछ ।

हामीलाई आखिरी समयमा भगवान्सँग मिलाउने प्रणालीको बारेमा श्रीकृष्णले बताउँदै हुनुहुन्छ । हाम्रा सबै इन्द्रियहरू कृयाहरूबाट विरक्तिनुनै योगको पूर्व शर्त हो । इन्द्रियका सबै ढोकाहरूलाई बन्द गरेर, मनलाई हृदयको बीचमा तथा त्यस जीतिएको हृदय भित्रको प्राणवायुलाई मस्तिष्कमा केन्द्रित गरेर मानिसले आफुलाई योगमा स्थापित गर्न सक्दछ । योगाभ्यासमा स्थित भएर तथा अक्षरहरूको परमसंयोग वा ओमकारको उच्चारण गरेर यदि कुनै मानिसले म निर्गुण भगवान्को चिन्तन गर्दछ तथा आफ्नो शरीरलाई त्याग गर्दछ भने उस्ले निश्चित रूपले परम गति प्राप्त गर्दछ भनेर श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ । यसरी योगाभ्यासमा लाग्न सबैभन्दा पहिला हामीले हाम्रा सबै इन्द्रियभोगका सम्पूर्ण ढोकाहरू बन्द गर्नु पर्दछ । हाम्रा पाँच ज्ञानेन्द्रियहरू : आँखा, नाक, कान, जिब्रो तथा स्पर्शलाई पूर्णतया वशमा राखेर यिनीहरूलाई इन्द्रियतृप्तिबाट बन्चित गर्नु पर्दछ । मनलाई हृदयमा स्थित गराउनु, प्राणवायुलाई तानेर मस्तिष्कमा स्थित गर्ने भनेको परमात्मामा केन्द्रित गराउनु हो । यहाँ यो पनि स्पष्ट गरिएको छ कि ओम, ब्रह्म तथा श्रीकृष्ण एउटै हुन् । यिनीहरूमा भिन्नता छैन । यी शब्दहरूको जप गर्दै कसैको मृत्यु हुन्छ भने ऊ परम गति पाई आध्यात्मिक लोकमा जान्छ ।



**अनन्यचेताः सततं यो मां स्मरति नित्यशः ।**
**तस्याहं सुलभः पार्थ नित्ययुक्तस्य योगिनः ॥ १४ ॥**

हे अर्जुन ! जुन पुरूषले म मा अनन्य-चित्तले सधैं नै निरन्तर म पुरूषोत्तमको स्मरण गर्दछ, त्यस नित्य-निरन्तर ममा युक्त योगीको लागि म सुलभ छुँ, अर्थात् म उसलाई सहज नै प्राप्त हुन्छु ।

जुन व्यक्तिले अनन्य भावले निरन्तर मेरो स्मरण गर्दछ त्यो व्यक्ति मेरो भक्तिमा प्रवृत भएको कारणले उस्लाई म सजिलै प्राप्त हुन्छु भनी श्रीकृष्णले अर्जुनको माध्यमले सबैलाई सम्झाउँदै हुनुहुन्छ । यस श्लोकमा भक्तियोगको वर्णन गरिएको छ । यस्मा भक्तियोगद्वारा भगवान्को सेवा गर्ने तरिकाको बारेमा वर्णन गरिएको छ । भक्तियोगमा भक्तले श्रीकृष्ण बाहेक अरू कसैको स्मरण गर्दैन । ज्ञानयोगी, कर्मयोगी, हठयोगीहरूको आ-आफ्नै स्वार्थहरू तथा भगवत् प्राप्तिका विधिहरू रहेका हुन्छन् तर शुद्ध भक्तको भने भगवान्लाई खुशी पार्ने बाहेक अन्य कुनै इच्छा हुँदैन । भक्तियोग अत्यन्तै सरल, शुद्ध तथा सुगम छ । जस्ले अनन्य भावले उहाँको स्मरण गर्दछ त्यस माथि भगवान् विशेष कृपालु हुनुहुन्छ र सहजै दर्शन पनि दिनु हुन्छ । श्रीकृष्णसँग भक्तले मात्र प्रेम गर्नु पर्दछ । जस्को चित्तमा श्रीकृष्ण मात्र हुनुहुन्छ, श्रीकृष्ण उसैलाई प्राप्त हुनुहुन्छ । यहाँ श्रीकृष्णको मतलब त्यस परमात्मासँग छ जस्को आत्मा हामी सबैमा छ ।

**मामुपेत्य पुनर्जन्म दुःखालयमशाश्र्वतम् ।**
**नाप्नुवन्ति महात्मानः संसिद्धिं परमां गताः ॥ १५ ॥**

परम सिद्धि पाएका महात्माजनले मलाई प्राप्त गरेर दुःखहरूको घर तथा क्षणभङ्गुर पुनर्जन्म प्राप्त गर्दैनन् ।

मलाई प्राप्त गरेको भक्तियोगी महापुरूष कहिल्यै पनि दुःखले भरिएको यस अनित्य जगतमा फर्किंदैन, किनकि उस्ले परम सिद्धि प्राप्त गरिसकेको हुन्छ । भक्तियोगमा परम सिद्धि प्राप्त गरिसकेका महात्माहरूले यस जन्म, जरा तथा मृत्यु एवं क्लेषले भरिएको संसारमा पुनः जन्म लिनु पर्दैन । उनीहरूले परम लोक प्राप्त गर्दछन् । परम लोकमा पुग्नु महात्माहरूको लागि चरम लक्ष्य हुने गर्दछ । यस्लाई वेदमा विभिन्न नामहरू : अव्यक्त, अक्षर तथा परमा गति जस्ता नामहरूले सुसज्जित गरिएका छन् । त्यो लोकलाई हाम्रो भौतिक आँखाले देख्न सकिन्न । ब्रह्मदेवको

एकक्षण हाम्रो कैयौँ वर्षहरूको बराबर हुन्छ । त्यसैले हाम्रो जीवनलाई क्षणभङ्गुर र दुःखको सागर भनिएको हो । जो भक्तहरूले श्रीकृष्णलाई स्मरण गरेर आफ्ना निष्काम कर्महरू गर्दछन्, आफ्ना दायित्वहरू निर्वाह गरेर कर्महरू गर्दछन् उनीहरूले परम सिद्धि प्राप्त गर्दछन् । यस्ता परम सिद्धि प्राप्त गर्नेहरूलाई श्रीकृष्णले महात्माजन भनी सम्बोधन गर्नु भएको छ । यस प्रकार ज-जस्लाई जीवनरूपी सत्यको वा तत्वज्ञानको यथार्थ ज्ञान हुन्छ उहाँहरू फेरि क्षणभङ्गुर जीवनयापन गर्न यस लोकमा आउनु हुन्न ।

**आब्रह्मभुवनाल्लोकाः पुनरावर्तिनोऽर्जुन ।**
**मामुपेत्य तु कौन्तेय पुनर्जन्म न विद्यते ॥ १६ ॥**

हे अर्जुन ! ब्रह्मलोक लगायत सबै लोकहरूमा पुनरावर्ति हुने गर्दछन्, तर हे कुन्तिपुत्र ! मलाई प्राप्त गरेपछि पुनर्जन्म हुँदैन, किनकि म कालातीत छुँ तर यी सबै ब्रह्मादिका लोकहरू कालद्वारा सीमित गरिएकाले अनित्य छन् ।

यस जगतका सर्वोच्च लोकहरू लगायत सबै लोकहरूः चाहे त्यो ब्रह्माको ब्रह्मलोक होस् वा यो पृथ्वीलोक यी सबै क्षणभङ्गुर तथा दुःखका घरहरू हुन् । त्यसैले पृथ्वीलोकलाई मृत्युलोक पनि भनिन्छ । जहाँ जीवहरूलाई जन्म तथा मरणको चक्करमा घुमिरहनु पर्दछ । यहाँ जन्म भएपछि मरण निश्चित छ । तर जस्ले मेरो धाम प्राप्त गर्दछ त्यसले पुनः जन्म लिइरहनु पर्दैन । जगतमा विभिन्न लोकहरू छन् । जस्ले जुन देवताको भक्ति, सेवा, आराधना गरेको हुन्छ ऊ त्यही लोकमा जान्छ । ती सबै लोकहरूमा गई भोग गर्ने एउटा निश्चित समयावधि निर्धारण गरिएको हुन्छ । त्यो अवधिको समाप्ति पश्चात् मानिसले फेरि उक्त लोकमा पुनः जन्म लिई आउनु पर्दछ । तर जस्ले श्रीकृष्णलाई प्राप्त गरेको हुन्छ त्यो उसको लागि सबैभन्दा ठूलो समाधी, योग तथा सिद्धि हुन्छ । परमात्मा श्रीकृष्णको भक्ति गर्नेहरूले परम पद पाएको खण्डमा पुनः कुनै लोकमा जन्म लिन आइरहनु पर्दैन ।

**सहस्रयुगपर्यन्तमहर्यद्ब्रह्मणो विदुः ।**
**रात्रिं युगसहस्रान्तां तेऽहोरात्रविदो जनाः ॥ १७ ॥**

ब्रह्माको जुन एक दिन हुन्छ, त्यसलाई एक हजार चतुर्युगी सम्मको अवधि भएको र रातीको पनि एक हजार चतुर्युगी सम्मको अवधि भएको हुन्छ भन्ने कुरो जुन पुरुषले तत्वले जान्दछ, त्यो योगीजनले कालको तत्वलाई जान्दछ ।



मानवीय गणना बमोजिम एक हजार युग मिलेर ब्रह्माको एक दिन हुन्छ । यत्तिकै लामो अवधि ब्रह्माको रात्रि पनि हुन्छ । यो तथ्य जुन पुरुषले जान्दछ, त्यस योगीले कालको तत्वलाई पनि जान्दछ । विस्तारित रूपमा केलाउँदा यस भौतिक ब्रह्माण्डको अवधि कल्पहरूको चक्रको रूपमा सञ्चालित भइरहेको हुन्छ । जस्मा हामी सबै फसेका छौँ र यो मिथ्या रहेको छ । तर जुन ज्ञान हामीले हाँसिल गर्नु पर्नेछ त्यो चाहिँ सत्य हो भनी श्रीकृष्ण भन्नुहुन्छ । यो कल्प ब्रह्माको एक दिन हुन्छ । जस भित्र चार वटा युगहरू : सत्य, त्रेता, द्वापर तथा कलि रहेका हुन्छन् । सत्ययुगमा सदाचार, ज्ञान तथा धर्मको बाहुल्यता रहने हुँदा यसमा अज्ञानता तथा पाप कर्महरूको अभाव हुन्छ । यो युग १७,२८,००० वर्षहरू सम्म रहन्छ । त्रेतायुगमा पाप कर्महरूको थालनी हुन्छ । यो युग १२,९६,००० वर्षहरूको हुन्छ । द्वापरयुगमा सदाचार तथा धर्मको नाश हुन्छ र पाप कर्महरूको बृद्धि हुन्छ । यो युग ८,६४,००० वर्षहरूको हुन्छ । सबैभन्दा अन्तमा कलियुग आउँछ । यसमा कलह, अज्ञान, अधर्म तथा पाप कर्महरूको बाहुल्यता हुन्छ । सदाचार भने विलयनै हुन्छ । यो ४,३२, ००० अर्ब वर्षहरूको हुन्छ । यसमा पाप कर्महरू यति धेरै मात्रामा बृद्धि हुन्छन् कि भगवान् स्वयंले कल्कि अवतार लिएर असुर तत्वहरूको सर्वनाश गरी भक्तहरूलाई संरक्षण दिनु हुन्छ । यी चारै युगहरू एकपछि अर्को गरी आउने-जाने प्रकृया चलिरहन्छ । यो चारैवटै युगहरूले सहस्र (एक हजार वर्ष) चक्र काटिसकेपछि ब्रह्माजीको एक दिन हुन्छ । त्यतिकै वर्षहरूको उहाँको राती हुन्छ । ब्रह्मा यस्तो एक सय वर्ष जीवित रहनु हुन्छ, अनि उहाँको मृत्यु हुन्छ । ब्रह्माको यो सय वर्षको हिसाब गर्दा यो अवधि ३१,१०,४०,००,००,००,००० वर्षको हुन्छ । हामीलाई यो गणना बमोजिम ब्रह्माजीको आयु कहिल्यै नसकिने जस्तो लाग्दछ । तर परमात्माको हिसाबमा यो एक क्षणको मात्र हुन्छ । यस अटलाँटिकमा धेरै ब्रह्माहरू रहेका छन् । यिनीहरू पानीमा हुने बुलबुला जस्तै हुन जो आउँछन् र समाप्त हुन्छन् । यी सबै भौतिक तथा परिवर्तनशील छन् । हाम्रो तथा ब्रह्माजीको कालचक्रको अवधि फरक-फरक रहेको हुन्छ । यो कालचक्रको तत्वलाई जुन योगीले जान्यो त्यसले कालको तत्वलाई बुझेको छ भन्ने ठान्नु पर्दछ ।

**अव्यक्ताद्व्यक्तयः सर्वाः प्रभवन्त्यहरागमे ।**
**रात्र्यागमे प्रलीयन्ते तत्रैवाव्यक्तसंज्ञके ॥ १८ ॥**

सबै चराचर भूतगण ब्रह्माको दिउँसोको प्रवेशकालमा अव्यक्त भएर अर्थात् ब्रह्माको सूक्ष्म शरीरबाट उत्पन्न हुन्छन र ब्रह्माको रात्रीको प्रवेशकालमा त्यस अव्यक्त नामक ब्रह्माको सूक्ष्म शरीरमा नै लीन हुन्छन् ।

ब्रह्माको दिउँसोको शुभारम्भमा सबै जीवहरू (मनुष्य, पशु र चराचरहरू आदि) उहाँको सूक्ष्म शरीरबाट प्रकट हुन्छन् तथा ब्रह्माजीको राती सुरू हुने बित्तिकै ती सबै उहाँको सूक्ष्म शरीरमा विलिन हुन्छन् । यो भन्नुको तात्पर्य के हो भने जब ब्रह्माजीको दिन सुरू हुन्छ तब सारा संसार अस्तित्वमा आउँछ र जब रात सुरू हुन थाल्दछ तब सारा संसार उहाँमै समाविष्ट हुन्छ । उहाँको दिनको समयमा हामी सबै अव्यक्त बुद्धिको साथमा यस संसारमा आउँछौं । अव्यक्त भनेको ज्ञान हामीमा लुकेको छ तर त्यसलाई ब्यूँझाउनु पर्नेछ, त्यसलाई जान्नु पर्नेछ । ब्रह्माको दिनको अवधि भित्र हामीमा यदि ज्ञान, विद्या हाँसिल हुन्छ भने हामीले जन्म-मृत्युको चक्करबाट मुक्ति पाउँछौं । अन्यथा ब्रह्माको राती हुने बित्तिकै संसार समाप्त हुन्छ र हामी ब्रह्माजीमै लीन हुन पुग्दछौं ।

**भूतग्रामः स एवायं भूत्वा भूत्वा प्रलीयते ।**
**रात्र्यागमेऽवशः पार्थ प्रभवत्यहरागमे ॥ १९ ॥**

हे पार्थ ! त्यही त्यो भूतसमुदाय उत्पन्न भइरहेर प्रकृतिको वशमा रहेको रात्रीको प्रवेशकालमा लीन हुन्छ र दिनको प्रवेशकालमा फेरि उत्पन्न हुन्छ ।

ब्रह्माको एक दिनको अर्थ हुन्छ एक हजार युग । यो ४.३२ अर्ब साल हुन्छ । यहाँ सूर्यले पनि आफ्नो आधा समय बिताइसकेको छन् भनी सुनिन्छ । जब-जब ब्रह्माजीको दिन आउँछ तब-तब सबै जीवहरू प्रकट हुन्छन् अर्थात् एउटा नयाँ ब्रह्माण्डले जन्म लिन्छ । अनि अर्बौ सालहरू पछि यो संसार समाप्त हुन्छ । अनि फेरि ब्रह्माण्ड विष्फोटकले यो संसारको सुरूवात हुन्छ । यो क्रम चलिरहन्छ ।

**परस्तास्मात्तु भावोऽन्योऽव्यक्तोऽव्यक्तात्सनातनः ।**
**यः स सर्वेषु भूतेषु नश्यत्सु न विनश्यति ॥ २० ॥**

त्यस अव्यक्तभन्दा पनि धेरै टाढा अर्को अर्थात् बिलक्षण जुन सनातन अव्यक्त भाव छ, त्यो परम दिव्य पुरूष सबै भूतहरू नष्टभएपछि पनि नष्ट हुँदैन ।

यस बाहेक एउटा अर्को अव्यक्त प्रकृति छ जुन शाश्वत छ र ऊ यस अव्यक्त तथा व्यक्त पदार्थभन्दा टाढा छ । यसलाई सनातन अव्यक्त भाव भनिन्छ । त्यो परा वा दिव्य पुरूष कहिल्यै नाश नहुने हो । यस संसारको सबै वस्तुहरू नाश भए पनि ऊ कहिल्यै नाश हुँदैन । श्रीकृष्णको पराशक्ति दिव्य तथा शाश्वत छ । त्यो प्रकृति सबै परिवर्तनभन्दा टाढा छ । भौतिक नाशवान वस्तुहरू ब्रह्माको दिनको समयमा आउँछन्



तथा रात्रीको समयमा विलय हुने गर्दछन् । तर त्यो पराशक्ति कहिल्यै नाश हुँदैन । सनातन अव्यक्त भाव नै श्रीकृष्णको धाम हो । यो भाव हामी भित्रै लुकेको हुन्छ । यो भाव अविद्यामा अचेत रहन्छ तर विद्या आएपछि चेतन हुन पुग्दछ ।

**अव्यक्तोऽक्षर इत्युक्तस्तमाहुः परमां गतिम् ।**
**यं प्राप्य न निवर्तन्ते तद्धाम परमं मम ॥ २१ ॥**

जुन अव्यक्त 'अक्षर' यस नामबाट भनिएको छ, त्यही अक्षर नामक अव्यक्त भावलाई परम गति भनिन्छ तथा जुन सनातन अव्यक्त भाव प्राप्त गरेर मानिस फर्केर आउँदैन, त्यो मेरो परम धाम हो ।

जस्लाई वेदान्तीहरूले अप्रकट तथा अविनाशी भन्दछन्, जुन परम गन्तव्य हो, जस्लाई प्राप्त गरिसकेपछि कोही पनि त्यहाँबाट फर्कँदैन, त्यही मेरो परम धाम हो भनी श्रीकृष्ण भन्दै हुनुहुन्छ । ब्रह्मसंहितामा भगवान् श्रीकृष्णको धामलाई चिन्तामणि धाम भनी त्यसको बारेमा बर्णन गरिएको छ । यो यस्तो स्थान हो जहाँ सबै इच्छाहरू पुरा हुने गर्दछन् । यो पारसमणिले बनेको छ । यहाँका रूखहरूलाई कल्पबृक्ष भनिन्छ तथा तिनीहरूले इच्छाएको खाद्य पदार्थहरू दिन सक्दछन् । त्यहाँको सुरभि गाइहरूले धेरै दुध दिन सक्दछन् । यस लोकमा भगवान्‌को सेवाको लागि लाखौंको सङ्ख्यामा लक्ष्मीहरू रहेका हुन्छन् । यसमा उहाँका शरीरका अङ्गहरूको, वस्त्रहरूको, स्वरूपको प्रशंसा गर्दै अति उत्तम भनी वर्णन गरिएको छ । उहाँको यो सर्वश्रेष्ठ परम धाम हो । श्रीकृष्णको परम धाम र उहाँ अभिन्न हुनुहुन्छ । एकपटक त्यहाँ पुगिसकेपछि त्यहाँबाट फर्किन पाइदैन । जब हामीले जन्म लिन्छौं हाम्रो मनमा सनातन अव्यक्त भावहरू स्वभाविक रूपले उत्पन्न हुन्छन् । यही अव्यक्तलाई अक्षर भनी सम्वोधन गरिएको छ । मानिसहरूले योग गर्दाखेर तथा निष्काम कर्महरू गर्दा यही आफूभित्र लुकेर बसेको भावलाई चिन्नु पर्दछ । सरल शब्दमा भन्दा हामीले हामी भित्र रहनु भएको श्रीकृष्णलाई चिन्नु पर्दछ ।

**पुरुषः स परः पार्थ भक्त्या लभ्यस्त्वनन्यया ।**
**यस्यान्तः स्थानि भूतानि येन सर्वमिदं ततम् ॥ २२ ॥**

हे पार्थ ! जुन परमात्माको अन्तर्गत सर्वभूत रहेको छ र जुन सच्चिदानन्दघन परमात्माबाट यो समस्त जगत परिपूर्ण रहेको छ, उहाँ सनातन अव्यक्त परम पुरूष त अनन्य भक्तिले नै प्राप्त हुने योग्य हुनुहुन्छ ।

सबैभन्दा महान परमात्मालाई अनन्य भक्तिद्वारा नै प्राप्त गर्न सकिन्छ । उहाँमा जीवात्मा लगायत सबै कुराहरू रहेका छन् । यस जगतमा रहेका समस्त जीवात्मा, निर्जीव वस्तुहरू सबै उहाँबाटै आएका हुन् । उहाँ आफ्नो धाममा विराजमान रहनु हुन्छ तापनि उहाँ सर्वव्यापी हुनुहुन्छ तथा उहाँमा सबै कुराहरू स्थित रहेका छन् । यस परम धामका सबै वस्तुहरू परम सुखदायक हुन्छन् । जति पनि विविधता त्यहाँ देखिन्छन ती सबै उहाँकै गुणबाट सृजित भएका हुन्छन् । उहाँको सर्वव्यापकता उहाँबाट सृजित मायाबाट सम्भव हुने गर्दछ । यस प्रकार आफ्नो परा तथा अपरा शक्तिले उहाँ सर्वत्र अर्थात् भौतिक तथा आध्यात्मिक ब्रह्माण्डहरूमा उपस्थित हुनुहुन्छ । संसारका प्रत्येक वस्तु उहाँमा अर्थात् उहाँका परा तथा अपरा शक्तिमा निहित रहन्छ । उहाँको लोकमा प्रवेश पाउन उहाँको अनन्य भक्ति गर्नु पर्दछ, जस्मा उहाँ श्रद्धेय बाहेक हाम्रो मन वा चित्तमा अन्य कोही र केही रहनु हुन्न । यो भक्ति लगातार र साँचो हुनु पर्दछ । वेदमा भगवान्को उपमा त्यस शान्त बृक्षको रूपमा वर्णन गरिएको छ कि जस्मा विभिन्न किसिमका फूलहरू तथा फलहरू फूलेका तथा फलेका हुन्छन तर जस्का पातहरू निरन्तर फेरिरहन्छन् ।

**यत्र  काले त्वनावृत्तिमावृत्तिं चैव योगिनः ।**
**प्रयाता यान्ति तं कालं वक्ष्यामि भरतर्षभ ॥ २३ ॥**

हे अर्जुन ! जुन कालमा शरीर त्याग गरेका योगीजन त फर्केर नआउने गतिलाई र जुन कालमा गएकाहरू फर्केर आउने गतिलाई नै प्राप्त गर्दछन्, त्यस काललाई अर्थात् दुबै मार्गहरूको बारेमा म भन्दछुँ ।

अब म तिमीलाई विभिन्न मार्गहरूको बारेमा भन्दछुँ जस्बाट यस संसारबाट मृत्यु पश्चात योगी पुनः फर्कन्छ वा फर्किँदैन । परमात्मा श्रीकृष्णको अनन्य भक्तले सबै कुराहरू भगवान् माथि नै छोडेर भक्ति गर्दै मृत्यु पश्चात भगवद्धाम प्राप्त गर्दछ । सिद्ध योगीले यस जगतबाट शरीर छोडने समय तथा स्थान रोज्न सक्छ । जस्लाई यस जन्ममा ज्ञान हाँसिल हुन्छ, जस्ले आफु भित्रको परमात्मालाई चिन्दछ, उस्को पुनर्जन्म हुँदैन । तर जस्ले ज्ञान हाँसिल गर्दैन, आफूभित्रको आत्मालाई चिन्दैन भने उस्को बारम्बार जन्म भइरहन्छ । हामीले कुन समयमा आफ्नो शरीरलाई त्याग गरिरहेका छौँ त्यसको पनि ठूलो महत्त्व हुन्छ । शरीरलाई त्याग गर्दा कुन-कुन मार्ग, समय तथा कालको बारेमा ख्याल गर्नु पर्दछ भनेर श्रीकृष्णले बताइरहनु भएको छ ।



**अग्निर्ज्योतिरहः शुक्लः षण्मासा उत्तरायणम् ।**
**तत्र प्रयाता गच्छन्ति ब्रह्म ब्रह्मविदो जनाः ॥ २४ ॥**

जुन मार्गमा ज्योतिर्मय अग्नि-अभिमानी देवता छन्, दिउँसोको अभिमानी देवता छन्, शुक्लपक्षका अभिमानी देवता छन् र उत्तरायणको छ महिनाको अभिमानी देवता छन् त्यस मार्गमा मरेर गएका ब्रह्मवेत्ता योगीजनहरू उपर्युक्त देवताहरूद्वारा क्रमशः लगिएर ब्रह्मलाई प्राप्त हुन्छन् ।

कुन कालमा मर्नु उपयुक्त हुन्छ सो बारेमा श्रीकृष्णले बताउँदै हुनुहुन्छ । जो परम ब्रह्मको ज्ञाता हुनुहुन्छ, उहाँ अग्निदेवको प्रभावमा, प्रकाशमा, दिउँसोको शुभक्षणमा, शुक्लपक्षमा वा जब सूर्य उत्तरायणको सुन्दर आकाशमा रहँदा, ती छ महिनामा यस संसारबाट शरीर त्याग गर्नेहरूलाई ब्रह्म प्राप्ति हुन्छ । यहाँ अग्नि, प्रकाश, दिउँसो तथा पक्षको उल्लेख गरिएको छ । यी सबैका अधिष्ठाता देवताहरू हुने गर्दछन् । यिनीहरूले नै मरणोपरान्त आत्माको यात्राको व्यवस्थापन गर्दछन् । यदि कसैले उपर्युक्त बमोजिम मृत्यु प्राप्त गर्दछ भने उस्ले निर्विशेष वा सधैँ एकै रूपमा रहने ब्रह्मज्योति प्राप्त गर्दछ । योगमा सिद्धता प्राप्त योगीले आफ्नो शरीर त्याग्ने समय तथा स्थान निर्धारण गर्न सक्दछ । योगसिद्ध व्यक्तिले यदि शुभमुहूर्तमा शरीर त्याग्न खोज्दा उस्ले पुनः जन्म-मृत्युको चक्करमा घुम्नु पर्दैन । अन्य व्यक्तिहरूको पुनरावृति भइरहन्छ । यहाँ दिनलाई ज्ञान, उज्यालो र विद्याको प्रतीकको रूपमा स्वीकार गरिएको छ, शुक्लपक्षलाई निर्मलतासँग गाँसिएको छ र अग्निलाई ब्रह्मतेजको प्रतीक मानिएको छ ।

**धूमो रात्रिस्तथा कृष्णः षण्मासा दक्षिणायनम् ।**
**तत्र  चान्द्रमसं  त्योतिर्योगी  प्राप्य  निवर्तते ॥ २५ ॥**

जुन मार्गमा धूमाभिमानी वा धुँवाभिमानी देवता छन्, रात्रि अभिमानी देवता छन्, तथा कृष्णपक्ष अभिमानी देवता छन् र दक्षिणायनको छ महीनाहरूको अभिमानी देवता छन्, त्यस मार्गबाट मरेर गएको सकाम कर्म गर्ने योगी उपर्युक्त देवताहरूद्वारा क्रमशः लिएर गएको चन्द्रमाको ज्योतिलाई प्राप्त गरेर स्वर्गमा आफ्नो शुभकर्महरूको फल भोगेर फर्किन्छ ।

जुन योगी धुँवा, रात्रि, कृष्णपक्षमा वा सूर्य दक्षिणायन भएको छ महीना भित्र दिवंगत हुन्छ, ऊ चन्द्रलोकमा जान्छ, त्यहाँ उस्ले स्वर्गको सुखभोग गरेर त्यहाँबाट

पुनः पृथ्वीमा फर्कन्छ । श्रीकृष्णले जिउने सम्बन्धी मात्र होइन मर्ने सम्बन्धी पनि तरिका बताइरहनु भएको छ । कुन समयको मृत्यु उत्तम हुन्न यसै कुरालाई उहाँले यस श्लोकमा बताइरहनु भएको छ । यज्ञको अग्नि भएको तर धुँवाले ढाकिएको, रात्रिको समयमा, कृष्णपक्षको चन्द्रमा क्षीण भइरहेको होस्, र दक्षिणायनको छ महीनाको अवधि भित्र होस् त्यस मार्गमा मरेर गएको सकाम कर्म गरेको योगीले चन्द्रलोकमा स्वर्गको सुखभोग गरी पुनः यस लोकमा जन्म लिनु पर्दछ । त्यो योगी जन्म-मरणको चक्करबाट मुक्त भएको हुँदैन ।

**शुक्लकृष्णे गती ह्येते जगतः शाश्र्वते मते ।**
**एकया यात्यनावृत्तिमन्ययावर्तते पुनः ॥ २६ ॥**

किनकि जगतका यी दुइ प्रकारका-शुक्ल र कृष्ण अर्थात् देवयान तथा पितृयान मार्गहरूलाई सनातन मानिएको छ । यसमध्ये एक मार्गबाट (अर्चिमार्ग) गएको जस्मा गएपछि फर्किनु पर्दैन, ले परम गति प्राप्त गर्दछ र दोश्रो मार्गबाट (धूम मार्ग) गएकोले फेरि फर्किनु पर्दछ अर्थात जन्म-मृत्युको साङ्लोमा बाँधिरहनु पर्दछ ।

वैदिक मतानुसार यस संसारबाट जाने दुई मार्गहरू छन् । पहिलो प्रकाशमय, शुक्ल, जस्मा चन्द्रमा बढछ तथा दोश्रो अन्धकारमय, कृष्ण, जस्मा चन्द्रमा घट्दछ । जब योगीको शुक्ल पक्षमा मृत्यु हुन्छ वा ऊ प्रकाशको मार्गबाट जान्छ भने ऊ फर्किन्न, उसलाई परम गति प्राप्त हुन्छ । तर जब योगी कृष्णपक्षको कालो रात्रिमा मृत्यु प्राप्त गर्दछ वा अन्धकारको बाटोबाट जान्छ, जब चन्द्रमा क्षिण हुँदै गइरहेको हुन्छ भने ऊ फर्कन्छ, ऊ जन्म-मृत्युको चक्करमा घुमिरहन्छ । तसर्थ जबसम्म योगीले पूर्ण प्रकासको अनुभूति गर्दैन तबसम्म उस्ले भजन गर्नुपर्दछ । योगीले सही समयमा नै प्राण त्याग्न सक्दछ । यदि समय सही छैन भने उस्ले कुर्नु बेश हुन्छ ।

**नैते सृती पार्थ जानन्योगी मुह्यति कश्र्चन ।**
**तस्मात्सर्वेषु कालेषु योगयुक्तो भवार्जुन ॥ २७ ॥**

हे पार्थ ! यसरी यी दुबै मार्गहरूलाई तत्वले जानेर कुनै पनि योगी मोहित हुँदैन । त्यसकारण हे अर्जुन ! तिमी सबै कालमा समबुद्धि रूप योगले युक्त बन अर्थात निरन्तर मेरो प्राप्तिको लागि साधना गर्ने बन ।



मृत्युको सही समयको बारेमा सम्झाउँदै श्रीकृष्ण भन्नुहुन्छ कि कुनै पनि योगी यी दुबै मार्गहरूलाई तत्वले जानेर मोहग्रस्त हुँदैन । किनकि योगीलाई अवगत छ कि यदि उस्ले पूर्ण प्रकाश प्राप्त गर्यो भने ब्रह्म प्राप्त गर्यो, परम पद्, परम धाम पायो । क्षीण प्रकाश पायो भने ऊ फेरि यस लोकमा जन्म लिन आउँछ । दुबै गतिहरू शाश्वत छन्, सधैँको लागि छन् । त्यसकारण तिमीले आफुमा समबुद्धि कायम गरेर सधैँ मेरो प्राप्तिको लागि योगयुक्त बन । एउटा असल भक्तले यी दुबै मार्गहरूको बारेमा सोचेर चिन्ता गरेर कष्ट उठाउन हुँदैन । ऊ त कृष्णभावनामृतमा तल्लिन रहेर भगवान् प्राप्तिको लागि निरन्तर योगमा रहेर रमाइरहनु पर्दछ । यसो गर्नाले भगवद्धामको मार्ग प्रत्यक्ष तथा सुगम हुन पुग्दछ । तसर्थ भक्तले सांसारिक कार्यहरूमा अनासक्ति राखेर सिद्धि प्राप्त गर्न योगमा स्थिर रहनु पर्दछ ।

**वेदेषु यज्ञेषु तपःसु चैव**
**दानेषु यत्पुण्यफलं प्रदिष्टम् ।**
**अत्येति तत्सर्वमिदं विदित्वा**
**योगी परं स्थानमुपैति चाद्याम् ॥ २८ ॥**

योगी पुरूषले यस रहस्यलाई तत्वले जानेर वेदहरूलाई पढनमा तथा यज्ञ, तप र दान आदि गर्नमा जो पुण्यफल प्राप्त हुन्छ भनी शास्त्रहरूमा भनिएको छ ती सबैलाई निःसन्देह उल्लङ्घन गर्दछ र सनातन परमपद् प्राप्त गर्दछ ।

वेदहरूको अध्ययन, यज्ञ, तप, दान आदि महाकर्महरू हुन् । यी सबै गर्नाले धैरै ठूलो पुण्य प्राप्त हुन्छ भनिन्छ । तर जुन योगी पुरूषले जन्म-मरण, परमपद् प्राप्तिको रहस्यलाई तत्वको आधारमा जान्दछ ऊ वेदहरूलाई पढ्ने, यज्ञ, तप तथा दानादि गर्नाले जुन पुण्यफल प्राप्त हुन्छ भनिन्छ ती सबैभन्दा अगाडि बढेर गई सनातन परम पद् प्राप्त गर्दछ । जस्ले परमात्माको सही रहस्यलाई बुझ्यो त्यसले वेद पढनु पर्ने कुनै आवश्यकता रहन्न । वेदको अध्ययन, यज्ञ, तप तथा दान आदि पनि उहाँ परमात्मासँग मिलन गर्ने विधिहरू हुन्, तर जुन योगीले परम तत्व वा परमात्माको बारेमा तत्वज्ञानको आधारमा जानिसकेको छ, भने उस्लाई यज्ञ तथा अन्य अनुष्ठानहरूको के आवश्यकता ? सबैभन्दा ठूलो योगी त्यही हुन्छ जस्ले सबैभन्दा ठूलो यस तत्वज्ञानको रहस्यलाई बुझेको हुन्छ ।

अथ नवमोध्यायः

# अध्याय नौं

# राजविद्याराजगुह्ययोग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**इदं तु ते गुह्यतमं प्रवक्ष्याम्यनसूयवे ।**
**५ ज्ञानं विज्ञानसहितं यज्ज्ञात्वा मोक्ष्यसेऽशुभात् ॥ १ ॥**

श्री भगवान्‌ले भन्नुभयो : तिमी दोषदृष्टिरहित भक्तको लागि यस परम गोपनीय विज्ञानसहितको ज्ञानलाई फेरि पनि राम्ररी भन्नेछु, जस्लाई जानेर तिमी दुःख रूपी संसारबाट मुक्त हुनेछौँ ।

यहाँ श्रीकृष्ण भगवान्‌ले भन्दै हुनुहुन्छ कि किनकि तिमीले कहिल्यै ईर्ष्या गर्दैनौं, म तिमीलाई यो परम गुह्यज्ञान बताउदछुँ, विज्ञान सहितको ज्ञान वा विशेष गुणयुक्त ज्ञानको बारेमा बताउँछु । जसलाई बुझेपछि तिमी संसारको सबै क्लेष र दुःखहरूबाट मुक्त हुनेछौँ। हामीले जब-जब भगवान्‌को उपदेश सुन्यौं उहाँका विषयहरूमा चर्चा गर्यौं तब-तब हाम्रो आत्मा बिशेषतः प्रकाशित हुने गर्दछ । श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि तिमी दोषरहित तथा ईर्ष्यारहित छौ । वास्तवमा जुन कर्मले हामीलाई मुक्तितर्फ लिएर जान्छ त्यो उत्तम कर्म हुन्छ । तर जुन कर्म गर्नाले यस सांसारिक मोहजालमा हामीलाई फसाउँदछ त्यो उत्तम हुँदैन ।

**राजविद्या राजगुह्यं पवित्रमिदमुत्तमम् ।**
**प्रत्यक्षावगमं धर्म्यं सुसुखं कर्तुमव्ययम् ॥ २ ॥**

यो विज्ञान सहितको ज्ञान सबै विद्याहरूको राजा हो, सबै गोपनीयहरूको राजा हो, यो अति पवित्र छ, अति उत्तम छ, प्रत्यक्ष फल दिनेछ, धर्मयुक्त छ, यस्को साधना गर्न धेरै सुगम छ र यो अविनाशी छ ।

श्रीकृष्णले अर्जुनलाई त्यो ज्ञान दिँदै हुनुहुन्छ जो विज्ञान सहित छ, वा विशेष छ जस्ले उनीलाई यस दुःखी संसारबाट मुक्त गरिदिन्छ । यो विशेष ज्ञान सहितको ज्ञान सबै विद्याहरूको राजा हो, यो भन्दा ठूलो अर्को कुनै ज्ञान छैन । जो सबै रहस्यमय विषयवस्तुहरू भन्दा बढी गोपनीय छ, योभन्दा ठूलो अन्य कुनै गोप्य



विषयवस्तुहरू छैन । यो परम शुद्ध छ, यस्ले आत्मासँग प्रत्यक्षतः अनुभूति गर्नेवाला छ, तसर्थ यो धर्मको सिद्धान्त हो । यो अविनाशी छ तथा यसलाई अत्यन्त सुखपूर्वक सम्पन्न गरिन्छ आदि भन्नु भई श्रीकृष्णले यस विद्याका विशेषताहरू वर्णन गर्नु भएको छ । यो वेदाध्ययनबाट प्राप्त ज्ञान तथा विभिन्न दर्शनहरूको सार हो । यो गोपनीय छ भन्नुको अर्थ यस्ले आत्मा तथा शरीरको बीचको सम्बन्धको तथा भिन्नताको बारेमा वर्णन गरेको छ । आत्मा शरीरको सबैभन्दा महत्त्वपूर्ण अङ्‌ग हो । श्रीकृष्णले आफ्नो भक्तलाई साह्रै माया गर्ने भएकोले यस्तो ज्ञान दिँदै हुनुहुन्छ ।

**अश्रद्दधानाः पुरूषा धर्मस्यास्य परंतप ।**
**अप्राप्य मां निवर्तन्ते मृत्युसंसारवर्त्मनि ॥ ३ ॥**

हे परंतप ! यस उपर्युक्त धर्ममा श्रद्धारहित पुरूषले मलाई प्राप्त नगरेर मृत्युरूपी यस संसारचक्रमा घुमिरहन्छ ।

जुन मानिसले भक्तिमा श्रद्धा राख्दैन उस्ले मलाई प्राप्त गर्न सक्दैन । अतः उस्ले यस भौतिक जगतमा जन्म-मृत्युको मार्गमा भौँतारिरहनु पर्दछ भनी भगवान्‌ले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ । कुनै पनि चिज वा कुरा प्राप्त गर्नु पर्यो भने पहिला त्यस प्रतिको श्रद्धा हुनु आवश्यक हुन्छ । श्रद्धा कहिल्यै झुठो हुँदैन । जुन पुरूषमा धर्म तथा कर्मप्रति श्रद्धा छैन ऊ कहिल्यै श्रीकृष्णलाई प्राप्त हुँदैन । यस दुःखी संसारमा उस्ले चक्कर काटिरहन्छ ।

**मया ततमिदं सर्वं जगदव्यक्तमूर्तिना ।**
**मत्स्थानि सर्वभूतानि न चाहं तेष्ववस्थितः ॥ ४ ॥**

म निराकार परमात्माबाट यो सबै जगत जलले बरफ परिपूर्ण रहेझैँ परिपूर्ण रहेको छ र सबै भूतहरू मेरो अन्तर्गत संकल्पका आधारले स्थित छन्, तर वास्तवमा म तिनीहरूमा स्थित रहेको छैन ।

यस श्लोकमा श्रीकृष्णले आफ्नो तथा जगतको स्वरूपको बारेमा बताइरहनु भएको छ । उहाँको अव्यक्त शरीरमा सारा संसार व्याप्त छ । तर उहाँ तिनीहरूमा हुनुहुन्न । यो धेरै नै गुह्य तथा पेचिँदो कुरा छ । वर्फ जलबाट बनेको हुन्छ तर वर्फमा मात्र जल छ तर जलमा वर्फ हुँदैन । त्यस्तै यस जगतको हरेक प्राणी श्रीकृष्णमा व्याप्त छ तर श्रीकृष्ण उनीहरूमा हुनुहुन्न । यस जगतका सबै भूतहरू वा जीवहरू

उनीहरूको सङ्कल्प, इच्छा, संस्कार बमोजिम यहाँ स्थित छन्, तर उहाँ श्रीकृष्ण तिनीहरूमा स्थित हुनुहुन्न ।

**न च मत्स्थानि भूतानि पश्य मे योगमैश्र्वरम् ।**
**भूतभृन्न च भूतस्थो ममात्मा भुतभावनः ॥ ५ ॥**

यी सबै भूतहरू म मा स्थित छैनन् तर मेरो ईश्वरीय योगशक्तिलाई हेर– भूतहरूलाई धारण-पोषण गर्ने र भूतहरूलाई उत्पन्न गर्नेवाला पनि मेरो आत्मा वास्तवमा भूतहरूमा स्थित छैन ।

यी सबै जीव तथा निर्जिव भूतहरू श्रीकृष्णमा स्थित छैनन । किनकि सबै भूतहरू नाशवान छन् । यस संसारमा जे पनि छन् ती सबैको मृत्यु हुन्छ भनेपछि नाशवान कुरो वा चिज कसरी अविनाशी श्रीकृष्णमा हुनसक्छ ? श्रीकृष्ण अगाडि भन्नुहुन्छ मेरो ईश्वरीय योगशक्तिलाई हेर। भूतहरूको धारण-पोषण गर्ने तथा भूतहरूलाई उत्पन्न गर्ने मेरो आत्मा पनि वास्तवमा भूतहरूमा स्थित छैन । हाम्रो अस्तित्व श्रीकृष्णसँग नै छ । हाम्रो आत्मा उहाँ परमात्मा कै अंश हो । तापनि उहाँ हामीमा हुनुहुन्न । यही नै उहाँको योगशक्ति हो ।

**यथाकाशस्थितो नित्यं वायुः सर्वत्रगो महान् ।**
**तथा सर्वाणि भूतानि मत्स्थानीत्युपधारय ॥ ६ ॥**

जसरी आकाशमा उत्पन्न सवैतिर वगिरहने महान वायु सधैँ आकाशमा स्थित रहन्छ, त्यसरी नै मेरो सङ्कल्पद्वारा उत्पन्न भएकोले सबै भूतहरू ममा स्थित छन, यसरी बुझ ।

हामीलाई बुझ्नलाई सजिलो होस भनेर भगवान्ले उदाहरण पेश गर्दै भन्नुहुन्छ जसरी आकाश हाम्रो कल्पनाको सबैभन्दा ठूलो अभिव्यक्ति हो र त्यस आकाशमा चलायमान रहेको वायु पनि विराट जगतको महानतम अभिव्यक्ति हो । वायुले जसरी आकाशलाई मलिन तुल्याउन सक्दैन त्यस्तै भूतहरूले पनि श्रीकृष्णलाई आसक्तियुक्त बनाउन सक्दैनन् । वायुबाटै प्रत्येक जीव तथा निर्जिवको गति सञ्चालित हुने गर्दछ । तर वायु महान रहे तापनि आकाश भित्रै वायु आकाशको मातहतमा स्थित रहेको हुन्छ । वायु आकाशभन्दा टाढिन सक्दैन । त्यसरी नै लोकहरूमा उत्पन्न भएका जीव तथा निर्जीव तत्वहरू ममा स्थित रहेका छन् । सबै भूतहरू श्रीकृष्णको विचार तथा



इच्छाले उत्पन्न भएकाले ती सबै वायु आकाश भित्र रहेको झैँ ती भूतहरू पनि उहाँ परमेश्वरमा स्थित छन् । यो सबै उहाँको योगशक्तिको प्रभावले भएको हो ।

**सर्वभूतानि कौन्तेय प्रकृतिं यान्ति मामिकाम् ।**
**कल्पक्षये पुनस्तानि कल्पादौ विसृजाम्यहम् ॥ ७ ॥**

हे अर्जुन ! कल्पहरूको अन्तमा सबै भूतहरू मेरो प्रकृतिमा समाविष्ट हुन्छन् अर्थात प्रकृतिमा लीन हुन्छन् र कल्पहरूको प्रारम्भमा म फेरि तिनीहरूको रचना गर्दछुँ ।

श्रृष्टिको तात्विक ज्ञान अर्जुनलाई दिने सन्दर्भमा अर्जुनलाई श्रीकृष्णले भन्दै हुनुहुन्छ कि प्रत्येक कल्पको अन्तमा सबै सृजित प्राणीहरू मेरो प्रकृतिमा फर्किन्छन् र त्यसपछिको अर्को कल्पमा म आफ्नो शक्तिले तिनीहरूलाई पुनः उत्पन्न गर्दछु । अचेतमा जागृति ल्याएर उहाँले संसारको थालनी गर्नुहुन्छ । उहाँको रचनापछि मात्र श्रृष्टि सुरू भई कल्पको आरम्भ हुन्छ । यो विराट भौतिक अभिव्यक्तिको सृजना, पोषण तथा संहार गर्ने कार्यहरू पूर्णरूपमा भगवान्‌को इच्छामा निर्भर गर्दछ । कल्पको क्षय हुने भनेको ब्रह्माको मृत्युपछि हुन्छ । ब्रह्मा एक सय वर्ष जीवित रहनु हुन्छ । यस अवस्थामा भगवान्ले श्रृष्टि गर्नु भएका सबै प्राणी उहाँमै संकुचित भएर मिल्दछन् । अनि फेरि अर्को कल्पमा तिनीहरूलाई उहाँबाट उत्पन्न गरिन्छ ।

**प्रकृतिं स्वामवष्टभ्य विसृजामि पुनः पुनः ।**
**भूतग्राममिमं कृत्स्नमवशं प्रकृतेर्वशात् ॥ ८ ॥**

आफ्नो प्रकृतिलाई स्वीकार गरेर स्वभावको बलले परतन्त्र भएका यी सबै भूतसमुदायलाई बारम्बार उनीहरूको कर्महरू बमोजिम म रचना गर्दछु ।

प्रत्येक जीवात्मालाई उनीहरूले विगतमा गरेका कर्महरू बमोजिम भौतिक प्रकृतिले निर्मित गर्दछ । भौतिक प्रकृतिहरूका संयोजित स्वरूपहरूले आ-आफ्नै किसिमको गुण तथा स्वभाव बोकेका हुन्छन् । तिनै स्वभावको कारण मानिसहरूले, शरीरको स्वभाविक इच्छा तथा आकाङ्क्षाहरू पुरा गर्न, सुकर्म तथा दुष्कर्महरू गरिरहेका हुन्छन् । यस्तै कर्महरूको आधारमा यिनीहरूलाई विभिन्न योनीहरूमा पठाउनु पर्ने व्यवस्था गर्नु पर्ने हुदा म रचना गर्दछु । विभिन्न जीवहरू योनीहरूको क्रियाकलाप श्रृष्टिको समयदेखि नै सुरू हुन्छन् । सबै योनीहरू ब्रह्माण्डको श्रृष्टिसँगै

उत्पन्न हुन्छन् । किनकि पूर्व प्रलयको समयमा जीवहरूले जे-जस्ता इच्छाहरू राखेका थिए ती फेरि त्यही स्वरूपमा प्रकट रूपमा देखा पर्दछन् । तसर्थ आफ्नो कर्मबाट कोही पनि बाच्न सक्दैन । पटक-पटक श्रृजना गर्नु नै श्रीकृष्णको कर्म हो । जस्तो हामीले कर्म गरेका थियौँ, त्यस्तै हाम्रो स्वभाव बन्यो र जस्तो हाम्रो स्वभाव बन्यो त्यस्कै गुणहरूको हिसाबले श्रीकृष्णले रचना गर्नुहुन्छ । यसरी श्रीकृष्णले पनि आफ्नो कर्म गर्नु हुन्छ र हामी पनि हाम्रो कर्म गरिरहेका हुन्छौँ ।

**न च मां तानि कर्माणि निबध्नन्ति धनंजय ।**
**उदासीनवदासीनमसक्तं तेषु कर्मसु ॥ ९ ॥**

हे अर्जुन ! ती कर्महरूमा आसक्तिरहित र उदासीन रहने म परमात्मालाई ती कर्महरूले बाँध्दैनन् ।

ती भइरहेका, भएका तथा हुने कर्महरूप्रति परमात्मा सदैव आसक्तिरहित तथा उदासीन रहनुहुन्छ । उहाँले ती कर्महरूमा कुनै किसिमको हस्तक्षेप गर्नु हुन्न । ती कर्महरूले उहाँलाई बाँध्न सक्दैनन् । सांसारिक भौतिक विषयवस्तुहरूको संरचना उहाँबाट अव्यक्त रूपमा भए तापनि उहाँ ती भौतिक विषयवस्तुहरू प्रति उदासीन रहनु हुन्छ । रचना गर्नु उहाँको कर्म हो तर उहाँ ती कर्महरूबाट बाँधिनु भएको छैन । यो सबै संसार परमात्माको सङ्कल्पबाट बनेको हो । उहाँले आफ्ना कर्महरू गरिरहनु भएको छ । तर संसारमा भए गरिएका कार्यहरूप्रति उहाँ बाँधिनु भएको छैन ।

**मयाध्यक्षेण प्रकृतिः सूयते सचराचरम् ।**
**हेतुनानेन कौन्तेय जगव्दिपरिवर्तते ॥ १० ॥**

हे अर्जुन ! म अधिष्ठाताको सकाश (प्रकास) ले प्रकृति, चराचर सहित सबै जगतको रचना गर्दछ र यस उद्देश्यले नै यो संसारचक्र घुमिरहेको छ ।

श्रीकृष्णले यस श्लोकमा संसारको रचना-विज्ञानको बारेमा बताउँदै हुनुहुन्छ । उहाँको अध्यक्षतामा मायाले तथा उहाँको सङ्कल्पले यस संसारको रचना गर्दछ । यो भौतिक प्रकृति उहाँका शक्तिहरूमध्येको एक हो । यसैबाट सबै चर तथा अचर प्राणीहरू उत्पन्न हुन्छन् । यही शासन व्यवस्थापन कार्यान्वयनको लागि यो संसारको बारम्बार सृजना तथा विनाश भइरहेको छ भनेर श्रीकृष्णले अर्जुनलाई सम्झाइरहनु भएको छ । तर यस संसारको सृजक तथा अधिष्ठाता परमेश्वर भए तापनि उहाँ



यहाँको सबै कार्यहरूको भाव तथा तिनको कर्मफलबाट पृथक रहनु भएको छ । यसरी चलिरहेको सृजनकार्य अन्तर्गत हामीले विभिन्न युगहरूमा जन्म लिइरहेका छौँ तथा मृत्यु प्राप्त गरिरहेका छौँ । यो चक्र यस प्रकार युगौँ-युगदेखि चलिआएको छ ।

**अवजानन्ति मां मूढा मानुषीं तनुमाश्रितम् ।**
**परं भावमजानन्तो मम भूतमहेश्वरम् ॥ ११ ॥**

मेरो परमभावलाई नजान्ने मूढ मानिसहरूले मनुष्यको शरीर धारण गर्ने म, सबै भूतहरूको महान् ईश्वरलाई, तुच्छ ठान्दछन् अर्थात आफ्नो योगमायाले संसारको उद्धारको लागि मनुष्यको रूपमा विचरण गर्ने म परमेश्वरलाई साधारण मानिस ठान्दछन् ।

यहाँ श्रीकृष्ण भन्नाले आफ्नो योगमाया शक्तिले सारा संसारको श्रृष्टिकर्ता, पालनकर्ता तथा संहारकको रूपमा हुनुहुन्छ । श्रीकृष्ण भन्नाले अर्जुनको सारथी, मित्र मात्र होइन् । उहाँ त जीव उद्धारको लागि यस संसारमा अवतरित भएको अवस्थालाई अज्ञानताले मूर्खहरूले उहाँको उपहास गर्दछन्, उहाँलाई साधारण मानिस ठान्दछन् । उनीहरूले उहाँ परमेश्वरको दिव्य स्वभावलाई जान्दैनन् तथा उहाँ संसारको उद्धारको लागि मनुष्यको रूप धारण गरेर यहाँ आएको भनी मान्दैनन् । संसारमा यिनीहरूले श्रीकृष्णलाई मात्र एक सामान्य शक्तिशाली व्यक्ति ठान्दछन् । उनीहरूले श्रीकृष्णले यो सारा विराट जगतलाई श्रृष्टि, पालन तथा संहार गर्नुहुन्छ भनी स्वीकार गर्दैनन् । ब्रह्म संहितामा भनिएको पनि छ : ईश्वरः परमः कृष्णः । उहाँ परम ईश्वर हुनुहुन्छ, उहाँमा दिव्य शक्ति रहेको छ । तर उहाँ जीवात्माहरूको हितको लागि अवतरित हुनु भएको छ भनी उनीहरूले स्वीकार्दैनन् ।

**मोघाशा मोघकर्माणो मोघज्ञाना विचेतसः ।**
**राक्षसीमासुरीं चैव प्रकृतिं मोहिनीं श्रिताः ॥ १२ ॥**

ती व्यर्थ आशा, व्यर्थ कर्म र व्यर्थ ज्ञानभएका विक्षिप्त चित्त भएका अज्ञानीजनले राक्षसी, आसुरी र मोहिनी प्रकृति नै धारण गरेका हुन्छन् ।

यस श्लोकमा कस्ता मानिसहरूले श्रीकृष्णलाई बुझ्दैनन् भन्ने बारेमा बताइएको छ । आसुरी तथा मोहिनी प्रकृतिका व्यक्तिहरूले श्रीकृष्णलाई बुझ्दैनन् । आसुरी तथा मोहिनी प्रकृति हुनु कुनै जाती होइन, बरू यो त मनको स्वभाव हो । यस्ता

व्यक्तिहरूले आफ्ना सम्पूर्ण जीवन व्यर्थको आशा, व्यर्थको कर्म तथा व्यर्थको ज्ञानमा बिताउंदछन् । तर त्यस्को विपरीत महात्माहरूले आफ्नो पूर्ण जीवनलाई सत्य जान्नमा लगाउँदछन् । राक्षसी स्वभावमा मानिसहरूले मद, मदिरा र मोहमा आफ्नो जीवनलाई खर्चिन्छन् । यस संसारमा विभिन्न चित्त भएका मानिसहरू बसोबास गर्दछन् । तीमध्ये एक हो विक्षिप्त चित्त भएको यस्ता आसुरी प्रवृतिका मानिसहरू । यिनीहरूले देखावटी रूपमा श्रीकृष्ण प्रति भक्ति वा सेवा गरेको भने तापनि यिनीहरूले श्रीकृष्णलाई परम ब्रह्म मान्दैनन् । यिनीहरूको आशा, कर्म, तथा ज्ञान सबै अन्ततोगत्वा निष्फल हुन्छ ।

**महात्मानस्तु मां पार्थ दैवीं प्रकृतिमाश्रिताः ।**
**भजन्त्यनन्यमनसो ज्ञात्वा भूतादिमव्ययम् ॥ १३ ॥**

तर हे कुन्तिपुत्र ! दैवी प्रकृतिका आश्रित महात्माजनले मलाई सबै भूतहरूको सनातन कारण र नाशरहित अक्षरस्वरूप बुझेर अनन्य मनले युक्त भएर निरन्तर भज्दछन् ।

आसुरी तथा मोहिनी प्रकृतिका व्यक्तिहरूले श्रीकृष्णलाई जान्न नचाहेर आ–आफ्ना जीवन त्यत्तिकै गुमाउँछन् । तर यस जगतमा केही मानिसहरू दैवी प्रकृतिका पनि हुन्छन् । दैवी स्वभावका महात्माजनहरूले मलाई यस श्रृष्टिको आदि क्षयरहित पुरूष ठानी मेरो निरन्तर अनन्य मनले भजन गर्दछन् । महात्माहरू दैविक प्रकृतिका हुन्छन् । उनीहरू भौतिक प्रकृतिको अधीनमा रहँदैनन् । अनन्य मन भन्नाले महात्माहरूको पूर्ण मन मात्र श्रीकृष्ण प्रति रहनु भन्ने बुझ्नु पर्दछ । उनीहरूमा कुनै संशय वा द्विविधा हुँदैन । उनीहरूमा श्रीकृष्ण नै आदि पुरूष हुनुहुन्छ भन्ने स्थायी धारणा रहेको हुन्छ । उहाँनै सबै कारणहरूको कारण हुनुहुन्छ भनी बुझ्ने यस्ता महात्माहरू उपयुक्त गुरू तथा उपयुक्त संगतिको कारणले बन्दछन् । उनीहरू श्रीकृष्णलाई नै सबै थोक मानी आफ्ना निष्काम कर्महरूमा लागिरहन्छन् ।

**सततं कीर्तयन्तो मां यतन्तश्र्च दृढव्रताः ।**
**नमस्यन्तश्र्च मां भक्त्या नित्ययुक्ता उपासते ॥ १४ ॥**

ती दृढ निश्चय भएका भक्तजनहरूले सधैँ मेरो नाम र गुणहरूको कीर्तन गर्दै तथा मेरो प्राप्तिको लागि प्रयास गर्दै र मलाई पटक–पटक प्रणाम गर्दै सधैँ मेरो ध्यानमा लागेर अनन्य प्रेमले मेरो उपासना गर्दछन् ।



यी दैवी स्वभावका भक्तजनहरू दृढनिश्चय, आत्मसम्मानमा अटल रहेका हुन्छन् । यिनीहरूले आफुमा तथा श्रीकृष्णमा भरोसा गर्दै निरन्तर श्रीकृष्णको भजन गर्दछन् । ती महात्माहरूले मेरो महिमाको सधैँ कीर्तन गरेर दृढसङ्कल्पले प्रयास गर्दै मलाई प्राप्ति गर्न प्रयत्नशील रहेर मलाई नमस्कार गर्दै पूर्ण भक्तिभावले मेरो ध्यान तथा उपासना गर्दछन् । महात्मामा हुने गुणहरूलाई श्रीकृष्णले विस्तारित गर्दा महात्माले सदैव श्रीकृष्णको गुणगानयुक्त कीर्तन गर्दछ, उस्ले भगवान्को पवित्र नाम लिन्छ, उहाँको नित्य रूप, उहाँका दिव्य गुणहरू तथा असमान्य लीलाहरूको प्रशंसा गर्दछ । यसरी ऊ भगवान् प्रति पूर्ण आसक्त रहेको हुन्छ । महात्माले मनसा, वाचा, कर्मणाले आफ्ना समस्त क्रियाकलापहरू उहाँकै लागि गर्दछ ।

**ज्ञानयज्ञेन चाप्यन्ये यजन्तो मामुपासते ।**
**एकत्वेन पृथक्त्वेन बहुधा विश्र्वतोमुखम् ॥ १५ ॥**

अर्का ज्ञानयोगीहरूले म निर्गुण–निराकार ब्रह्मलाई ज्ञानयज्ञद्वारा अभिन्नभाव वा एकाग्रचित्तले पूजा गर्दै पनि मेरो उपासना गर्दछन् र अरू मानिसहरू धेरै प्रकारहरूले स्थित भई रहेको विराट्स्वरूप म परमेश्र्वरलाई बेग्ला–बेग्लै भावले उपासना गर्दछन् ।

अन्य मानिसहरू जो ज्ञानको अनुशीलनद्वारा यज्ञमा लागेका छन उनीहरूले भगवान्को पूजा एकाग्र चित्त भएर बेजोड रूपमा गर्दछन् तथा केही यस्ता मानिसहरू पनि हुन्छन जो विविध प्रकारले म विराटस्वरूप परमेश्वरको बेग्लै भावले पूजा तथा उपासना गर्ने गर्दछन् । भनिन्छ जस्ता भक्तहरू हुन्छन्, उनीहरूको भक्तिका प्रकारहरू पनि उस्तै हुन्छन् । दैवी प्रकृतिका भक्तहरू आफ्ना भजनहरूद्वारा श्री कृष्णलाई सम्झिरहन्छन् । अर्काथरी भक्तहरू हुन्छन् ज्ञानयोगी । जस्ले श्रीकृष्णलाई निर्गुण, निराकार मान्दै उहाँको उपासना गर्दछन् । यस बाहेक केही अन्य भक्तहरू पनि हुन्छन् । जस्ले श्रीकृष्णको पृथक भावले उपासना गर्दछन् । हामीले हाम्रो स्वभावले भक्तिका विभिन्न बाटाहरूमध्ये कुनै एकको चयन गरी श्रीकृष्णको आराधना गर्न सक्छौँ । उपासनाको तरिका भिन्न हुनसक्छ । मूलतया के भने श्रीकृष्णले भन्नु भएका उपदेशहरूलाई हामीले मनन गरेर तिनीहरूलाई जीवनमा अनुसरण गरौँ ।

**अहं क्रतुरहं यज्ञः स्वधाहमहमौषधम् ।**
**मन्त्रोऽहमहमेवाज्यमहमग्निरहं हुतम् ॥ १६ ॥**

क्रतु (वैदिक अनुष्ठान, कर्म काण्ड) म हुँ, यज्ञ म हुँ, स्वधा (तर्पण) म हुँ, औषधि म हुँ, मन्त्र म हुँ, घिउ म हुँ, अग्नि म हुँ र हवनरूप क्रिया पनि म नै हुँ ।

परमेश्वरले आफ्नो बारेमा बताउँदै हुनुहुन्छ । उहाँ कर्मकाण्ड लगायतका वैदिक अनुष्ठान हुनुहुन्छ, उहाँ यज्ञ, तर्पण, औषधि, मन्त्र, घिउ, आगोको सँगै हवन रूपी सम्पूर्ण क्रिया समेत हुनुहुन्छ । उहाँ कर्ता हुनुहुन्छ, उहाँ यज्ञका, स्वधा, मन्त्र, घिउ, अग्नि तथा हवन रूपी क्रियाको सँगै औषधि पनि हुनुहुन्छ । उहाँले कर्ता मै हुँ भन्नाले कर्ता हामी तपाई जो सुकै देखिए पनि त्यस्को पछाडिको प्रेरक पृष्ट उहाँ नै हुनुहुन्छ । पितृको लागि बोलिने मन्त्र उहाँ नै हुनुहुन्छ, हामीलाई स्वस्थ बनाउने औषधि पनि श्रीकृष्ण नै हुनुहुन्छ । यज्ञमा चढाइने घिउ तथा अग्नि पनि श्रीकृष्ण नै हुनुहुन्छ । सारांशमा बुझ्दा जे पनि भइरहेको छ त्यहाँ श्रीकृष्ण हुनुहुन्छ, सबै क्रियाहरू श्रीकृष्णका स्वरूप हुन् । वेदको कर्मकाण्ड भागमा प्रतिपादित वैदिक यज्ञ पनि पूर्ण रूपले श्रीकृष्ण हुनुहुन्छ । यस प्रकार श्रृष्टिको संरचनालाई सबल राख्न गरिने सत्कर्महरूका सबै साधनहरू र त्यसपछिको उद्देश्य उहाँ श्रीकृष्ण हुनुहुन्छ ।

**पिताहमस्य जगतो माता धाता पितामहः ।**
**वेद्यं पवित्रमोंकार ऋक्साम यजुरेव च ॥ १७ ॥**

यस सम्पूर्ण जगतको धाता अथवा धारण गर्ने एवं कर्महरूको फल दिने, पिता, माता, पितामह, जाननेयोग्य, पवित्र ओर तथा ऋग्वेद, सामवेद र यजुर्वेद पनि मै नै हुँ ।

श्रीकृष्णले आफ्नो स्वरूपको वर्णन गर्दै भन्दै हुनुहुन्छ कि उहाँले यस संसारलाई धारण गर्नुभएको छ । यस संसारमा हुने गरेका सबै कर्महरूको फलदाता उहाँ नै हुनुहुन्छ, सबैको पिता, माता, पितामह भएर सबैलाई आश्रय दिने पनि उहाँ नै हुनुहुन्छ । सबैको शरीरमा उहाँकै अंश स्वरूप आत्माको उपस्थिति रहेको हुन्छ, अनि उहाँ श्रष्टाको रूपमा पनि हुनुहुन्छ, जान्नेयोग्य विषयवस्तुहरू पनि उहाँ, सबै वेदहरूको लक्ष्य पनि उहाँ नै हुनुहुन्छ, पवित्र ॐ मा उहाँ हुनुहुन्छ । अर्थात माता-पिता जहाँबाट हाम्रो उत्पत्ति भएको छ त्यस मूल उद्‌गम श्रीकृष्ण नै हुनुहुन्छ, परमात्मा उहाँको स्वरूपमा छ, ऋग्वेद अर्थात ऋग् अर्थात सबै प्रार्थनाहरू, सामवेदको साम अर्थात् समत्वभाव, यजुर्वेद अर्थात यज्ञको विधि विशेष श्रीकृष्ण नै हुनुहुन्छ । यसर्थ सबै योग तथा अनुष्ठानहरू श्रीकृष्णबाटै हुन्छन् ।



**गतिर्भर्ता प्रभुः साक्षी निवासः शरणं सुहृत् ।**
**प्रभवः प्रलयः स्थानं निधानं बीजमव्ययम् ॥ १८ ॥**

प्राप्त हुनेयोग्य परम धाम, भरण-पोषण गर्ने, सबैको स्वामी, शुभाशुभ हेर्ने, सबैको वासस्थान, शरण लिनेयोग्य, प्रत्युपकार, नचाहेर पनि हित गर्ने, सबैको उत्पत्ति तथा प्रलयको उद्देश्य, स्थितिको आधार, निधान (प्रलयकालमा सबै भूतहरू सूक्ष्मरूपले जस्मा लय हुन्छन्) र अविनाशी कारण पनि मै नै हुँ ।

आफ्नो स्वरूपको बारेमा अझै स्पष्टता ल्याउँदै श्रीकृष्णले भन्नुहुन्छ कि उहाँ लक्ष्य, पालनकर्ता, स्वामी, साक्षी, धाम, शरणदाता, शरणस्थल तथा प्रिय मित्र हुनुहुन्छ । उहाँ श्रृष्टि, प्रलय, सबैको आधार तथा अविनाशी कारण हुनुहुन्छ । परम धाम जो सबैले प्राप्त गर्ने इच्छा गर्दछन् त्यो पनि उहाँ श्रीकृष्ण हुनुहुन्छ । जस्ले हामी सबैको भरण-पोषण गर्नुहुन्छ उहाँ श्रीकृष्ण हाम्रो स्वामी हुनुहुन्छ । उहाँले शुभ-अशुभ हेर्नुहुन्छ, उहाँनै सबैको अन्तिम वासस्थान हुनुहुन्छ, शरण लिनेयोग्य हुनुहुन्छ, प्रत्युपकारी अर्थात् हामीले राम्रो कार्यहरू गरेकोमा हामीलाई राम्रो फल दिनु हुने, हामीले नचाहे पनि हाम्रो हितलाई सम्झेर हामीलाई हित गर्ने पनि उहाँ नै हुनुहुन्छ । जे भइरहेको छ, जे हुन्छ र जस्को कारणले हुन्छ ती सबै श्रीकृष्ण नै हुनुहुन्छ । उहाँ बाहेक केही पनि छैन ।

**तपाम्यहमहं वर्षं निगृह्णाम्युत्सृजामि च ।**
**अमृतं चैव मृत्युश्र्च सदसच्चाहमर्जुन ॥ १९ ॥**

म नै सूर्य रूपमा तापिन्छुँ, मैलेनै वर्षालाई आकर्षण गर्दछु र वर्षा गराउँछु । हे अर्जुन ! म नै अमृत र मृत्यु हुँ र सत्-असत् पनि मै नै हुँ ।

पृथ्वि सूयद्वारा तापिन्छ, पानी भाप भएर आकाशमा जान्छ र बादल भई वर्षन्छ, वर्षाले नै यस संसारको जीवात्मालाई जीवित राख्दछ र श्रृष्टिको क्रमलाई सञ्चालित गर्दछ । यसरी यो श्रृष्टिको पुनरावृति भइरहन्छ । आफ्नो स्वरूपलाई सम्झाउँदै श्रीकृष्णले अर्जुनलाई भन्नुहुन्छ जो सूर्य रूपले तापिन्छ, वर्षालाई आकर्षण गर्दछ र त्यसबाट पानी पार्दछ-त्यो म स्वयं नै हुँ । म नै अमृत तथा मृत्यु हुँ । अनि सत् तथा असत् मै हुँ । जस्बाट जीवन प्राप्त हुन्छ त्यो अमृत हो र त्यो अमृत श्रीकृष्ण हुनुहुन्छ तथा मृत्यु पनि उहाँ नै हो । आदि, अन्त्य, यो पुरा अनन्त, यहाँ भित्र हुने प्रत्येक क्रिया र प्रत्येक क्रियाको कारण पनि श्रीकृष्ण नै हुनुहुन्छ । यस प्रकार

श्रीकृष्णले आफ्ना विभिन्न शक्तिहरूद्वारा विद्युत्त तथा सूर्यको ताप र प्रकाश छर्नु हुन्छ। गर्मी तथा हिउँदका महिनाहरूमा वर्षा नगराउनु, वर्षामा पानी पारिरहनु, हामीलाई जीवन दिनु तथा हाम्रो मृत्युपछि हामी उहाँमै मिल्नु सबै उहाँकै कृत्यहरू हुन ।

**त्रैविद्या मां सोमपाः पूतपापा**
**यज्ञैरिष्ट्वा स्वर्गतिं प्रार्थयन्ते ।**
**ते पुण्यमासाद्य सुरेन्द्रलोक–**
**मश्नन्ति दिव्यान्दिवि देवभोगान् ॥ २० ॥**

तीनवटै वेदहरूमा विधान गरिएका सकाम कर्महरूलाई गर्ने, सोमरस पिउने, पापरहित पुरूषहरूले मलाई यज्ञ गरी पूजा गरेर स्वर्गको चाहना राख्नुहुन्छ, उहाँ पुरूषले आफ्ना पुण्यको फलको रूपमा स्वर्गलोक प्राप्त गरी स्वर्गमा दिव्य देवताहरूको भोगहरूलाई भोग्नु हुन्छ ।

जस्ले आराधना तथा विद्याका तीन अङ्गहरूको रूपमा रहेका वेदहरूमा विधान वा व्यवस्थित गरिएका सकाम कर्महरू गर्दछन् तथा सोमरस पान गर्दछन् उनीहरूले स्वर्गलोकको इच्छा राख्दै मेरो पूजा गर्दछन् । उनीहरू पापकर्महरूबाट शुद्ध भएर श्रीकृष्णलाई यज्ञद्वारा पूजा गरेर आशा गरेबमोजिम पुण्यको फल प्राप्ति स्वरूप स्वर्गमा जान्छन् र त्यहाँको आनन्द देवताहरू सरह भोग गर्दछन् । यस्ता व्यक्तिहरूले तीनै वेदहरूको अध्ययन गरेता पनि वेद अध्ययन पश्चात लिनु पर्ने ज्ञान तथा अनुसरण गर्नु पर्ने कर्महरूको चरम लक्ष्य जान्दैनन् । चरम लक्ष्य त भगवान्को निष्काम सेवा भक्तिमा हुन्छ न कि स्वर्गका सुखहरू लगायत केही सुविधाहरू प्राप्तिमा । तसर्थ यस्ता कर्महरू वेदहरूमा उल्लेखित सकाम कर्महरू गर्ने, सोमरस पिउने, पापकर्म नगर्ने व्यक्तिहरूले सुखभोग स्वरूप स्वर्गको सुखहरूको भोग गर्दछन् । सत्को कामना गर्नेहरूको यस्तो बाटो हुन्छ ।

**ते तं भुक्त्वा स्वर्गलोकं विशालं**
**क्षीणे पुण्ये मर्त्यलोकं विशन्ति ।**
**एवं त्रयीधर्ममनुप्रपन्ना**
**गतागतं कामकामा लभन्ते ॥ २१ ॥**

त्यस विशाल स्वर्गलोकको सुखभोग गरेर पुण्य क्षीण भएपछि उनीहरू मृत्युलोकमा फर्कन्छन् । यस प्रकार स्वर्गको साधन रूप तीनै वेदहरूमा वर्णित सकाम



कर्मको आश्रय लिनेहरू र भोगको कामना गर्नेहरू पटक–पटक यस पृथ्विलोकमा आउँछन् र जान्छन्, अर्थात पुण्यको प्रभावले स्वर्गलोक जान्छन् र पुण्य क्षीण भएपछि मृत्युलोकमा आउँछन् ।

वेदहरूका विधानहरू बमोजिमका सकाम कर्महरू गरी सोमरस पान गर्दै पापकर्महरू नगरी यज्ञद्वारा सत्यको कामना गरेर जस्ले श्रीकृष्णको पूजा आराधना स्वर्गलोकको इन्द्रिय सुख भोगहरूको लागि गर्दछन्, तिनीहरूले गरेका पुण्यकर्महरूको अनुपातमा सुखभोगको फल प्राप्त गरेपछि उनीहरू पुनः फर्केर मृत्युलोक यस पृथ्वीमा आउँछन् । यो आउने-जाने क्रम उनीहरूको लागि दोहरिरहन्छ । पुण्यको प्रभाव रहुञ्जेल स्वर्गको भोग गर्ने, पुण्य क्षीण भएपछि मृत्युलोकमा फर्किने, यही क्रम यस्ता व्यक्तिहरूको लागि अनवरत रूपले भइरहन्छ ।

**अनन्याश्चिन्तयन्तो मां ये जनाः पर्युपासते ।**
**तेषां नित्याभियुक्तानां योगक्षेमं वहाम्यहम् ॥ २२ ॥**

जो अनन्य प्रेमी भक्तजनहरूले म परमेश्वरलाई निरन्तर चिन्तन गर्दै निष्काम भावले भज्दछन्, ती नित्य निरन्तर मेरो चिन्तन गर्ने पुरूषहरूको योगक्षेम (भगवत स्वरूपको प्राप्तिको नाम योग हो तथा भगवत प्राप्तिको लागि गरिएका साधनाहरूको रक्षाको नाम क्षेम हो) लाई म स्वयं प्राप्त गरिदिन्छु अर्थात योगको सुरक्षा उहाँ स्वयम्ले गर्नुहुन्छ ।

यसरी अनन्य प्रेमी भक्तजनहरूले मेरो चिन्तन गर्दै निष्काम भावले मलाई भज्दछन् भने उनीहरूले आत्मसाक्षात्कारद्वारा मेरो दर्शन पाउँछन् । त्यस्को पूर्ण जिम्मेवारी म लिन्छु । जस्ले असत्को कामना गर्दछ उस्लाई मृत्यु प्राप्त हुन्छ, सत्को कामना गर्नेहरू जस्ले स्वर्ग चाहान्छन् उनीहरूले केही समयको लागि स्वर्गको सुखभोग गर्दछन् । तर पुण्यको समाप्ति पश्चात् उनीहरू पृथ्वीलोकमा फर्कन्छन् । तर कोही परमेश्वरको अनन्य प्रेमीहरूले उहाँको चिन्तन गर्दै उहाँलाई निष्काम भावले भज्दछन् भने ती पुरूषहरूको योगक्षेम श्रीकृष्णले स्वयं प्राप्त गर्नु हुन्छ । अर्थात् उनीहरूको योग साधनाको सुरक्षाको जिम्मेवारी उहाँ स्वयंले लिनुहुन्छ । यसरी निष्काम भावले उहाँको भजन कीर्तन गर्नेहरूको जिम्मेवारी उहाँ स्वयंले लिनुभएको छ ।

**येऽप्यन्यदेवता भक्ता यजन्ते श्रद्धयान्विताः ।**
**तेऽपि मामेव कौन्तेय यजन्त्यविधिपूर्वकम् ॥ २३ ॥**

हे अर्जुन ! यद्यपि श्रद्धायुक्त भएर जुन सकाम भक्तहरूले अन्य देवताहरूको पूजन गर्दछन्, उनीहरूले पनि मलाई ्नै पूजा गर्दछन्, किनकि तिनीहरूको त्यो पूजा अविधिपूर्वक अर्थात् अज्ञानपूर्वकको पूजन हो ।

जुन सकाम भक्तहरूले आ-आफ्ना विभिन्न कारणहरू तथा उद्देश्यहरूले अन्य देवताहरूलाई श्रद्धापूर्वक पूजा आराधना गर्दछन्, ती सबै पूजाहरू उनीहरूले अप्रक्षतः मेरै पूजा गरे सरह हो, किनकि त्यो पूजा उनीहरूले अज्ञानतावस गरिरहेका हुन्छन् । जसरी कुनै रूखका हाँगाहरू वा पातहरूलाई जल चढाउनु भनेको अन्ततोगत्वा पानी माथिबाट तल रूखका जराहरूले पाउने गरी नै पुग्दछ, त्यस्तै अन्य देवगणहरूको पूजा गर्नु भनेको मेरै पूजा गर्नु हो । किनकि श्रीकृष्ण बाहेक के नै छ र यस संसारमा । भिन्नता यति छ कि यस्ता व्यक्तिहरूले पूजाको विधिहरूलाई गलत किसिमले अज्ञानतावस गरिरहेका हुन्छन् । तसर्थ हामीले मूल जरो श्रीकृष्णको पूजा, आराधना, भक्तिभाव गर्यौ भने अन्य सबै देवताहरूका भक्तहरूले रूखको जरोमा जल हाल्दा हाँगाहरू तथा पातहरूले पाए जस्तै पाउने छन् भनी विश्वास कायम गरी पूजा गर्नु उचित हुनेछ ।

**अहं हि सर्वयज्ञानां भोक्ता च प्रभुरेव च ।**
**न तु मामभिजानन्ति तत्त्वेनातश्च्यवन्ति ते ॥ २४ ॥**

किनकि सबै यज्ञहरूको भोक्ता र स्वामी पनि म नै हुँ, तर उनीहरूले म परमेश्वरलाई तत्वको आधारमा जान्दैनन्, यही कारणले झर्दछन् अर्थात पुनर्जन्म लिन्छन् ।

म नै सबै यज्ञहरूको एकमात्र भोक्ता तथा स्वामी हुँ । तसर्थ जो भक्तहरूले मेरो दिव्य स्वभावलाई जानेका छैनन उनीहरूले विभिन्न जन्महरू लिइरहनु पर्दछ । वैदिक साहित्य अनुरूप सम्पन्न गरिने सबै यज्ञहरू उही श्रीकृष्णलाई प्रसन्न तुल्याउन गरिन्छ । मानव सभ्यताको समग्ररूप वर्णाश्रम हो । ती वर्णाश्रमका विधिहरू, जो यज्ञको रूपमा रहेका छन्, को पालना गर्नु पर्दछ । तसर्थ यज्ञहरू श्रीविष्णुलाई प्रसन्न पार्न गरिनु अत्यावश्यक छ । श्रीकृष्णनै परम प्रभु हुनुहुन्छ । तर अल्पज्ञहरूलाई यस तथ्यको ज्ञान छैन । उनीहरूले क्षणीक लाभको लागि अन्य देवताहरूको पूजा गर्दछन् । उनीहरूले भक्ति त गरिरहन्छन् तर तल झरी पुनर्जन्मको चक्रमा पनि घुमिरहन्छन् तथा जीवनको लक्ष्य मोक्ष अर्थात पृथ्वीलोकमा आउनु-जानु नपर्ने कहिल्यै प्राप्त गर्न सक्दैनन् ।



**यान्ति देवव्रता देवान्पितृन्यान्ति पितृव्रताः ।**
**भूतानि यान्ति भूतेज्या यान्ति मद्याजिनोऽपि माम् ॥ २५ ॥**

देवताहरूलाई पूजा गर्नेहरूले देवताहरूलाई प्राप्त गर्दछन, पितृहरूको पूजा गर्नेहरूले पितृहरूलाई प्राप्त हुन्छन्, भूतहरूलाई पूजा गर्नेहरूले भूतहरूलाई प्राप्त गर्दछन् र मेरो पूजा गर्ने भक्तहरूले मलाई नै प्राप्त गर्दछन् । श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि त्यसकारण मेरा भक्तहरूको पुनर्जन्म हुँदैन् ।

वेदहरूमा कर्मकाण्डको अंशमा दर्शपौर्णमास यज्ञको सन्दर्भमा विभिन्न लोकहरूमा स्थित देवताहरूको लागि बेग्ला-बेग्लै विशिष्ट पूजा विधि-विधानहरूको बारेमा चर्चा गरि एको छ । यी यज्ञहरू औँशी तथा पूर्णिमाको दिनहरूमा गरिन्छ । यस्तै विशिष्ट यज्ञ गरेर पितृहरूको पूजा गरिने विधान पनि छ । त्यस्तै भूत-प्रेत, पिशाच आदिको पूजाको बारेमा पनि उल्लेख भएको पाइएको छ । तर भगवान्को शुद्ध भक्तले उहाँको पूजा गरेर उहाँलाई प्राप्त गर्दछ । ऊ फेरि यस लोकमा दुःख–कष्ट सहन गर्न आउनु पर्दैन । किनकि उस्को हात भरपर्दो किसिमले श्रीकृष्णले थाम्नु भएको हुन्छ ।

**पत्र पुष्पं फलमं तोयं यो मे भक्त्या प्रयच्छति ।**
**तदहं भक्त्युपहृतमश्नामि प्रयतात्मनः ॥ २६ ॥**

जुन कुनै भक्तले मेरो लागि प्रेमले पत्र, पुष्प, फल, जल आदि अर्पण गर्दछ, त्यस शुद्धबुद्धि निष्काम प्रेमी भक्तव्दारा प्रेमपूर्वक अर्पण गरिएका ती पत्र-पुष्पादि म सगुणरूपले प्रकट भएर प्रीतिसहित खान्छु ।

ईश्वरलाई मात्र हाम्रो भावना चाहिएको छ । भावनालाई कसरी ईश्वरमा चढाउने ? भावनाका पनि अनेक रूपहरू हुन्छन् जस्तैः फूल, पात, फल, वा कुनै भोजन उहाँमा अर्पण गरेर । यदि कुनै भक्तले प्रेम तथा भक्ति साथ मलाई पत्र, फूल, फल तथा जल अर्पण गर्दछ भने म त्यस निष्काम प्रेमी भक्तद्वारा अर्पण गरिएका ती सामग्रीहरूलाई सगुण रूपमा उपस्थित भएर स्वीकार गर्दछु । भगवान्ले भक्तहरूबीच कुनै भेद गर्नु भएको छैन । तर ऊ शुद्ध हुनुपर्दछ तथा अर्पण गर्ने कार्य प्रेमपूर्वक हुनुपर्दछ । भक्त कुन जातीको छ, कहाँ छ, कुन स्तरको छ, नारी वा पुरूष छ, सानो वा ठूलो छ, धनी वा गरीब छ–यी सबै विषयवस्तुमा कुनै भेदभाव गरिएको छैन । भक्तिको विधि पनि साह्रै सरल रहेको छ । भक्तिपूर्वक पूजा गर्दा एउटा पात,

अलिकति जल, अलिकति फल जे चढाए पनि स्वीकार्य छ । उहाँलाई मात्र प्रेमभक्ति चाहिएको छ, अरू केही होइन ।

**यत्करोषि यदश्नासि यज्जुहोषि ददासि यत् ।**
**यत्तपस्यसि कौन्तेय तत्कुरूष्व मदर्पणम् ॥ २७ ॥**

हे अर्जुन ! तिमीले जुन कर्म गर्दछौँ, जे खान्छौ, जे हवन गर्दछौ, जे दान दिन्छौ र जे तप गर्दछौ-ती सबै मलाई अर्पण गर ।

श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि तिमीले जे-जसो कर्महरू गर्दछौ, जे खान्छौ, हवनादि गरेर जे-जसो अर्पण गर्दछौँ, जुन दान दिन्छौ तथा जे उद्देश्य प्राप्तिको लागि तप गर्दछौ ती सबै मलाई अर्पित गर्ने गर । अर्थात तिमीले जे-जसो कर्महरू गर्दछौ ती सबै मेरो लागि गर । हामीद्वारा गरिने सबै योगहरूको जिम्मेवारी श्री कृष्णले लिनै सक्नु भएको छ । खाने खाना पहिले मलाई अर्पण गरेर बाँकि रहेको भाग मात्र तिमीले खाऊ । प्रत्येक धार्मिक अनुष्ठान पनि मेरो लागि गर । दान पनि मलाई गर । यसप्रकार हाम्रो योगका सबै जिम्मेवारी श्रीकृष्णले लिनुहुन्छ । तसर्थ हामीले हाम्रो भोजन, दान, तप, कर्म सबै कुराहरू उहाँमा अर्पण गर्ने गर्नु पर्दछ । हामीले हाम्रा निर्धारित कर्महरू यथावत रूपमा गरिरहने तर कर्महरू हुनु र तिनका फलहरू सबै उहाँमा अर्पण गर्ने बानी बसाल्नु पर्दछ । हाम्रो हरेक कर्म तथा सङ्कल्पको पछाडि श्रीकृष्ण हुनुहुन्छ भनी बुझ्नु पर्दछ ।

**शुभाशुभफलैरेवं मोक्ष्यसे कर्मबन्धनैः ।**
**संन्यासयोगयुक्तात्मा विमुक्तो मामुपैष्यसि ॥ २८ ॥**

यसप्रकार जस्मा सबै कर्महरू म भगवान्लाई अर्पण हुन्छन्-यस्तो संन्यासयोगले युक्त चित्तवाला तिमी शुभाशुभ फलरूप कर्मबन्धनबाट मुक्त हुनेछौँ र ती बन्धनहरूबाट मुक्त भएर तिमी मलाई नै प्राप्त हुनेछौँ ।

सर्वस्वको नाशलाई सन्यास भनिन्छ । सन्यासमा संलग्न व्यक्तिको चित्त सफा हुदै जान्छ । सन्यासमा डुब्दै गएपछि कर्ता जसरी-जसरी आत्मसाक्षात्कारतर्फ अग्रसर हुदै जान्छ त्यसरी-त्यसरी ऊ परमेश्वर प्रति समर्पित हुँदै जान्छ । यस्ता भक्तले यदि आफ्ना कर्महरू भगवान्लाई अर्पण गरेर ती कर्महरूको फलहरू प्रति कुनै आसक्ति राखेन, कर्तव्य बमोजिम आफ्ना कर्महरू गर्यो, साँचो मनले भगवान्को



भक्ति गर्यो तब यस्तो भक्त कर्मबन्धनबाट मुक्त हुन्छ । यस तथ्यको पुष्टि स्वयं श्रीकृष्णले गर्दै हुनुहुन्छ । यसरी गर्नेहरूले सिधा विशिष्ट मुक्ति प्राप्त गर्दछन्, उनीहरू भगवद्धाममा प्रवेश गर्दछन् । यसरी भगवत्सेवामा रत रहने भक्तहरू नै असलमा सन्यासी हुन्छन् । उनीहरूले आफुलाई दास ठानी भगवान्को सेवामा आफ्नो समय व्यतित गर्दछन् । उनीहरू समस्त शुभ तथा अशुभ कर्महरूको बन्धनबाट मुक्त भएका हुन्छन् ।

**समोऽहं सर्वभूतेषु न मे व्देष्योऽस्ति न प्रियः ।**
**ये भजन्ति तु मां भक्त्या मयि ते तेषु चाप्यहम् ॥ २९ ॥**

म सबै भूतहरूमा समभावले व्यापक छुँ, न कोही मेरालागि अप्रिय छन् र नै प्रिय छन्, तर जुन-जुन भक्तहरूले मलाई प्रेमले भज्दछन् उनीहरू म मा छन र म पनि उनीहरूमा प्रत्यक्षतया प्रकट हुन्छुँ ।

जे-जसो यस संसारमा छ ती सबैमा श्रीकृष्णको उपस्थिति रहेको छ । उहाँले सबैमा समभाव कायम राख्नुहुन्छ । उहाँको कसैप्रति राग वा द्वेष छैन तथा कोही प्रति बिशेष लगाव पनि छैन । तर जो कोहीले उहाँलाई भक्तिपूर्वक भज्दछ ऊ उहाँको मित्र हुन्छ, ऊ उहाँमा स्थित हुन पुग्दछ र उहाँ पनि उस्को मित्र बन्न पुग्नु हुन्छ । त्यसैगरी हामी सबैमा श्रीकृष्णको उपस्थिति रहेको छ, उहाँले कसैमा भेदभाव गर्नुहुन्न तर उहाँ त्यस व्यक्तिको मात्र अन्तस्करणमा प्रकट हुनुहुन्छ जस्ले उहाँको साँचो भक्तको रूपमा योग र आराधना गर्दछ र जस्ले उहाँले दिनु भएका उपदेशहरूलाई पालना गर्दछ । श्रीकृष्णको भनाई बमोजिम यस संसारका प्रत्येक जीव उहाँको सन्तान हो । जीव जुनसुकै योनीको किन न होस् उस्लाई उहाँले एकनासले जीवनलाई आवश्यक हुने विषयवस्तुहरू प्रदान गर्नुहुन्छ । सबैमा उहाँले समभाव राखी व्यवहार गर्नुहुन्छ । तर जो भक्तले उहाँको बिशेष सेवाभक्ति गर्दछ त्यसलाई उहाँले पनि बिशेष ध्यान दिनुहुन्छ ।

**अपि चेत्सुदुराचारो भजते मामनन्यभाक् ।**
**साधुरेव स मन्तव्यः सम्यग्व्यवसितो हि सः ॥ ३० ॥**

यदि कुनै अतिशय दुराचारी व्यक्तिले पनि अनन्य भावले मेरो भक्त भएर मलाई भज्दछ भने त्यो साधु नै मानिनेयोग्य छ, किनकि ऊ यथार्थ निश्चयवाला छ ।

अर्थात उस्ले राम्ररी निश्चय गरिसकेको छ कि परमेश्वरको भजन जस्तो राम्रो तथा शुभ अरू केही छैन ।

कुनै व्यक्ति जघन्य अपराधी भए तापनि यदि उस्ले एकाग्रभावले श्रीकृष्णको भजन गर्दछ भने त्यसलाई हामीले साधुनै मान्नु पर्दछ । किनकि उस्ले दृढ निश्चयको साथमा भगवान्प्रति समर्पित भएर भजन गर्दैछ । उस्ले निष्कर्षमा भगवान्को भजन बाहेक अन्य विकल्प छैन भनी ठहर्याई सकेको छ । आध्यात्मिक स्वभाव ग्रहण गरी श्रीकृष्णमा भक्तिभाव राख्नेका कर्महरूलाई दिव्यकर्म भनिन्छ । तर कहिलेकाहिँ उस्बाट राजनीतिक तथा सामाजिक दृष्टिकोणले अपराधिक कार्यहरू हुन जान्छन् । यस्तो क्षणीक पतनबाट ऊ अयोग्य भइ हाल्दैन । उस्को हृदयमा वास गर्नु भएको भगवान्ले उस्लाई शुद्ध बनाउनु हुन्छ । त्यस्का निन्दनीय कार्यहरूलाई उहाँले क्षमा गरिदिनु हुन्छ । यस संसारमा रहेको बाक्लो भौतिक कल्मषको कारणले त्यो भक्तबाट यदाकदा चुक हुन गएको हुन्छ ।

**क्षिप्रं भवति धर्मात्मा शश्वच्छान्तिं निगच्छति ।**
**कौन्तेय प्रति जानीहि न मे भक्तः प्रणश्यति ॥ ३१ ॥**

ऊ शीघ्र नै धर्मात्मा हुन पुग्दछ र सदा रहिरहने परम शान्ति उस्ले प्राप्त गर्दछ । हे अर्जुन ! तिमीले निश्चयपूर्वक यो सत्य जानी राख कि मेरो भक्त नष्ट हुन्न ।

ऊ तुरुन्तै धर्मात्मा बन्न पुग्दछ तथा उस्ले स्थायी शान्ति प्राप्त गर्दछ । तसर्थ तिमीले ढुक्क भएर यो बुझिराख कि मेरो भक्त कहिल्यै नष्ट हुँदैन भनी अर्जुनलाई भन्दै हुनुहुन्छ । साधारणतया नौं प्रकारका भक्तिकार्यहरूमा युक्त रहेका भक्तहरू आफ्ना हृदयहरूलाई भौतिक कल्मषबाट शुद्ध गर्ने कार्यमा लागिरहेका हुन्छन् । उनीहरूले आफ्नो हृदयभित्र भगवान्लाई स्थित गराउँदछन् । अनि निरन्तर भगवान्कै चिन्तनमा लागिरहन्छन् । तसर्थ उनीहरूका सबै भौतिक कल्मषहरू पखालिएर शुद्ध हुन पुग्दछन् । यसप्रकार दुराचारी मानिसहरू पनि धर्मात्मा बन्न सक्दछन् । सांचो मनले भगवान्ले निर्देशित गरेबमोजिमका चिन्तन तथा व्यवहारहरू गर्नाले यो सम्भव छ । उस्ले सोझै भगवान्लाई प्राप्त गर्दछ । तसर्थ जब दुराचारीहरूको लागि भगवान्ले यस्तो प्रावधान गरी अवसर उपलब्ध गराउनु भएको छ भने अन्य भक्तहरूको लागि त सम्भव नहुने कुरै छैन ।



**मां हि पार्थ व्यपाश्रित्य येऽपि स्युः पापयोनयः ।**
**स्त्रियो वैश्यास्तथा शूद्रास्तेऽपि यान्ति परां गतिम् ॥ ३२ ॥**

हे अर्जुन ! स्त्री, वैश्य, शूद्र तथा पापयोनि–चाण्डालादि जोसुकै होस, उनीहरू पनि मेरो शरणागति भएर परम गति नै प्राप्त गर्दछन् ।

श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि मेरो शरणागतिमा आउने निम्न जाती भनिएकाहरू जस्तैः वैश्य वा व्यापारी, शूद्र वा श्रमिकवर्ग, पापयोनि चाण्डालहरू वा समाजमा थिचोमिचोमा परेका नारीहरू सबैले अन्ततः परम गति प्राप्त गर्दछन् । भगवान्को घरमा उच्च तथा निम्न जाति बीच कुनै भेदभाव छैन । समाजमा जातिगत भेदभाव रहे तापनि उहाँको द्वारमा यस्ता किसिमका भेदभावहरू छैनन् । उहाँको दिव्य भक्तिमा लागेका व्यक्तिहरूमा यो भेदभावहरू छैनन् । भनिएकै छ शुद्ध भक्तको संसर्गमा आएपछि चण्डाल पनि शुद्ध हुन पुग्दछ । प्रकृतिका विभिन्न गुणहरू बमोजिम मानिसहरूलाई सात्विक जस्मा ब्राह्मण कर्म गर्नेहरू पर्दछन्, रजोगुणी जस्मा क्षत्रिय कर्म गर्नेहरू पर्दछन तथा तामसी जस्मा वैश्य तथा शूद्रहरू पर्दछन् । समाजमा यीमध्ये निम्न पुरुषमा शुद्र अन्तर्गत चण्डाललाई सम्झिने गरिन्थ्यो । तर अब यो कानुनतः अपराध भइसकेको छ । तर भक्तियोग यस्तो प्रबल छ कि यसको माध्यमले निम्नकुलकाले पनि परम सिद्धि प्राप्त गर्न सक्दछन् । तसर्थ श्रीकृष्ण सबैको लागि हुनुहुन्छ । कोही कही पनि जन्मेको होस, कुनै पनि जातको होस, कुनै पनि योनीको होस, कुनै पनि धर्मको होस उहाँ सबैको लागि हुनुहुन्छ । यसर्थ जो श्रीकृष्णको शरणमा आउँछ त्यस्को जिम्मेवारी श्रीकृष्णले लिनुहुन्छ । यी सबै भेदभावहरू त मानिसहरूले समाज सुसञ्चालन गर्न मात्र बनाएका हुन, भेदभावको लागि कदापि होइन् । भगवान्कोमा त देवता तथा मानिसमा समेत भेदभाव गरिन्न ।

**किं पुनर्ब्राह्मणाः पुण्या भक्ता राजर्षयस्तथा ।**
**अनित्यमसुखं लोकमिमं प्राप्य भजस्व माम् ॥ ३३ ॥**

तर फेरि यस्मा त भन्नु नै के छ र, जो पुण्यशील ब्राह्मण तथा राजर्षि भक्तजनले मेरो शरणमा आएर परम गति प्राप्त गर्दछन् । त्यसकारण तिमी सुखरहित र क्षणभङ्कुर यस मानव शरीरलाई प्राप्त गरेर निरन्तर मेरो नै भजन गर ।

ब्राह्मण, क्षत्रिय, वैश्य तथा शूद्र यी सबै कर्महरू अनुसार बाडिएका जातीहरू हुन् । जस्ले जस्तो कर्म गर्दछ उस्ले आफुलाई त्यसै श्रेणीमा पाउँदछ । ब्राह्मण त्यो

हुन्छ जो ब्रह्मलाई जान्ने अभिलाषी भई सो बमोजिमका कर्महरू गर्दछ । यो कुनै जन्म तथा जाति विशेषसँग गाँसेर हेर्ने कुरा होइन । अनि राजर्षि भक्तजन भन्नाले त्यस्ता भक्तहरू जस्मा सौर्य, स्वाभिमान तथा दृढनिश्चय रहेको हुन्छ । यसमध्ये पनि ब्रह्मको रूपमा स्थित श्री कृष्णको प्रेमाभक्ति गर्ने व्यक्तिहरूले परम गति प्राप्त गर्दछन् । त्यसकारणले हामीले मनुष्यको शरीर पाएपछि ब्रह्मलाई जान्नु पर्दछ । अघिल्लो श्लोकको अर्थबमोजिम निम्न जातिकाहरूलाई समेत बिना भेदभाव भगवान्ले समान अवसर प्रदान गर्नुहुन्छ भने पुण्यशील ब्राह्मणहरू तथा राजर्षि भक्तजनहरूको लागि त के नै भन्नु पर्नेछ र । त्यसकारण तिमीले यस दुःखपूर्ण, विनाश भइरहने संसारमा मेरो प्रेमाभक्ति गर भनेर अर्जुनलाई भगवान्ले सम्झाउँदै हुनुहुन्छ । यो जगत अनित्य छ, दुःखपूर्ण छ, तथा मानिसहरूले बस्ने लायक छैन । सँगैमा अर्को जगत भने नित्य छ अनि सुखमय पनि । त्यसकारण तिमी पनि अन्य मानिसहरू सरह मेरो प्रेमाभक्तिमा लाग, मेरो सेवामा लाग । यसरी मेरो सुखमय संसारमा आऊ । जहाँ तिमी पनि सदा सुखिरहन सक्छौ ।

**मन्मना भव मभ्दक्तो मद्याजी मां नमस्कुरू ।**
**मामेवैष्यसि युक्त्वैवमात्मानं मत्परायणः ॥ ३४ ॥**

म मा मन लगाउने होऊ, मेरो भक्त बन, मेरो पूजा गर्ने बन, मलाई प्रणाम गर । यसरी आत्मालाई म मा नियुक्त गरेर मेरो परायण भएर तिमी मलाई नै प्राप्त हुनेछौ ।

तिम्रो मनलाई मेरो सधैं चिन्तनमा लगाऊ, मेरो भक्त बन, मलाई नमस्कार गर, मेरो पूजा गर । यसरी तिमी ममा तल्लिन भइरह्यौ भने तिमीले निश्चित रूपले मलाई प्राप्त गर्नेछौ भनेर श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ । हाम्रो मनमा श्री कृष्ण बाहेक कोही नआउन । हाम्रो आत्मा उहाँ परमात्मा श्रीकृष्णको अंश हो । यो जगतको संरचना उहाँकै हो र हामीले उहाँलाई आफु सहित आफ्ना कर्म तथा तीबाट प्राप्त फलहरू बुझाउने हो । तर त्यो बुझाउनको लागि हामीले ज्ञान हाँसिल गर्नु पर्दछ, योग गर्नु पर्दछ, त्यो पनि निष्काम कर्म गरेर, फलप्रति आसक्ति नराखेर, श्रीकृष्णमा प्रेमाभक्ति राखेर । यही शिक्षा अर्जुन लगायत हामीलाई यस श्लोकबाट दिइएको छ ।



अथ दशमोऽध्यायः

## अध्याय दश

## विभूतियोग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**भूय एव महाबाहो श्रृणु मे परमं वचः ।**
**यत्तेऽहं प्रीयमाणाय वक्ष्यामि हितकाम्यया ॥ १ ॥**

श्री भगवान्ले भन्नुभयो : हे महाबाहो ! तापनि मेरो परम रहस्य र प्रभावयुक्त वचनलाई सुन, जुन तिमीले मलाई अतिशय वा अत्यधिक प्रेम गर्नेको हितमा होस् भन्ने उद्देश्यले मैले भन्नेछु ।

श्रीकृष्णले अर्जुनलाई आफ्नो परम रहस्य तथा प्रभावलाई पुनः सुन भनी भन्दै हुनुहुन्छ । तिमीलाई म अत्यधिक प्रेम गर्दछु, म तिम्रो हित होस भन्ने चाहान्छु । तसर्थ तिमी मेरो परम वचन, जो प्रभावकारक छ, लाई सुन । यसभन्दा ठूलो ज्ञान अरू केही छैन । जब हामी उहाँको शरणमा पुग्छौ त्यतिखेर यो उहाँको जिम्मेवारी हुन्छ कि उहाँले भक्तको हितमा काम गर्नुहोस् । जबसम्म अर्जुनले जीवात्मा, जगत तथा परमात्मा बीचको सम्वन्ध, लोभ र मायाको तुँवालोले ग्रस्त जीव, आत्मा र परमात्मा बीचको सम्वन्धको बारेमा बुझ्दैनन् तबसम्म उहाँले उनीलाई ज्ञान दिइरहनुहुन्छ । यहाँ श्रीकृष्णलाई भगवान् भनी सम्वोधन गरिएको छ । पराशर मुनिको अनुसार भगवान्मा ६ वटा ऐश्वर्यहरू हुन्छन् । ती हुन : सम्पूर्ण शक्ति, सम्पूर्ण यश, सम्पूर्ण धन, सम्पूर्ण ज्ञान, सम्पूर्ण सौन्दर्य तथा सम्पूर्ण त्याग । यी ६ वटै लक्षणहरू श्रीकृष्णमा थिए जस्को पहिचान पराशर मुनिले गरेका थिए, तसर्थ श्रीकृष्णलाई उनले भगवान् मान्दथे ।

**न मे विदुः सुरगणाः प्रभवं न महर्षयः ।**
**अहमादिर्हि देवानां महर्षीणां च सर्वशः ॥ २ ॥**

मेरो उत्पत्तिको बारेमा अर्थात् मेरा लीलाहरूको बारेमा न देवताहरूलाईनै थाहा छ र नै महर्षीजनलाईनै थाहा छ, किनकि म सबै प्रकारहरूवाट देवताहरूको तथा महर्षीहरूको पनि आदिकारण हुँ ।

न देवताहरूलाई र नै महर्षीहरूलाई मेरो जन्मिनु पछिको कारण तथा मेरा लीलाहरूको बारेमा थाहा छ, किनकि म नै उनीहरूको उत्पत्तिको आदि कारण हुँ । भगवान् श्रीकृष्ण सबै कारणहरूको पनि कारण हुनुहुन्छ । देवता तथा महर्षीहरूले विभिन्न आध्यात्मिक आधारमा चिन्तन, भजन, योग गर्दा समेत उहाँको बारेमा सम्पूर्ण रूपले जान्दैनन् भने अन्य सामान्य व्यक्तिले सम्पूर्णतया उहाँलाई जान्ने कुरा त सम्भव नै भएन । श्रीकृष्णको जन्म तथा कर्म अलौकिक भएकोले हाम्रा यी साधारण आंखाहरूले ती सबै विषयहरूलाई देख्न सक्दैनन् । यही कारणले देवताहरू तथा महर्षीहरूले श्रीकृष्णको उत्पत्तिको बारेमा, प्रकट भएको बारेमा, देवभावलाई तथा परम तत्वलाई सम्पूर्ण रूपले बुझ्न सक्दैनन् । किनकि श्रीकृष्ण उहाँहरूको पनि आदिकारण हुनुहुन्छ ।

**यो मामजमनादिं च वेत्ति लोकमहेश्र्वरम् ।**
**असंमूढः स मर्त्येषु सर्वपापैः प्रमुच्यते ॥ ३ ॥**

जस्ले मलाई अजन्मा अर्थात वास्तवमा जन्मरहित, अनादि (आदिरहित, सबैको कारण) र लोकहरूको महान ईश्वर तत्व भनी जान्दछ, त्यो मनुष्यहरूमा ज्ञानवान पुरूष सम्पूर्ण पापहरूबाट मुक्त हुन्छ ।

श्रीकृष्णले यसअघि पनि बताइसकेका सन्दर्भहरूलाई यहाँ दोहर्याउँदै हुनुहुन्छ किनकि भक्तहरूव्दारा उहाँको बारेमा बुझ्न कुनै किसिमको गल्ति नहोस् । उहाँ जन्मरहित हुनुहुन्छ, संसारमा भएका सबैको आदि कारण हुनुहुन्छ तथा सबैभन्दा श्रेष्ठ ईश्वर हुनुहुन्छ भन्ने विषयलाई जस्ले तत्वले बुझ्यो त्यो मानिस सबै पापहरूबाट मुक्त भएर उस्ले यस पृथ्वीलोकमा पुनः जन्म लिइरहनु पर्दैन । उहाँ चाहनु हुन्छ कि हरेक व्यक्तिले उहाँको ईश्वरीय तत्वलाई सम्झियोस् तथा यो बुझोस् कि कसरी संसारको जीव तथा निर्जिवमा श्रीकृष्णको छवी छ । जसबाट उनीहरूको यस लोकबाट उद्धार होस् ।

**बुद्धिर्ज्ञानसम्मोहः क्षमा सत्यं दमः शमः ।**
**सुखं दुःखं भवोऽभावो भयं चाभयमेव च ॥ ४ ॥**
**अहिंसा समता तुष्टिस्तपो दानं यशोऽयशः ।**
**भवन्ति भावा भूतानां मत्त एव पृथग्विधाः ॥ ५ ॥**



निश्चय गर्ने शक्ति, यथार्थ ज्ञान, असम्मूढता (समझदारी), क्षमा, सत्य, इन्द्रियहरूलाई वशमा गर्नु, मनलाई निग्रह (वशमा गर्नु) गर्नु तथा सुख-दुःख, उत्पत्ति-प्रलय र भय-अभय तथा अहिंसा, समता, सन्तोष, तप (स्वधर्मको आचरणहरू बमोजिम इन्द्रियादिलाई तपाएर शुद्ध गर्ने), दान, कीर्ति र अपकीर्ति-यस्ता यी प्राणीहरूका विभिन्न प्रकारका भावहरू मबाटै उत्पन्न हुन्छन् ।

मानिसको जीवनमा अवस्था अनुसार विभिन्न भावहरू आउने गर्दछन् । लोकमा रहेका जीवहरूमा आउने भावहरू तथा हुने कार्यहरू : बुद्धि, ज्ञान, संशय, मोहबाट मुक्ति, क्षमाभावना, सत्यता, इन्द्रिय तथा मनलाई वशमा गर्नु, सुख तथा दुःख, जन्म, मृत्यु, भय, अभय, अहिंसा, समता, तुष्टि, तप, दान, यश तथा अपयश आदि उहाँ भगवान्बाट नै उत्पन्न भई सञ्चालित हुन्छन् । बुद्धिको अर्थ हुन्छ सही वा गलत छुट्याउने शक्ति, ज्ञानको अर्थ हुन्छ आत्मा तथा पदार्थको बारेमा जानकारी हुनु, असम्मोह वा संशयबाट वा मोहबाट मुक्ति तब मात्र प्राप्त हुन्छ जब मनुष्य द्विविधा मुक्त हुन्छ र उहाँको दिव्य दर्शनलाई उस्ले बुझ्दछ । क्षमा क्रमशः अभ्यास गरेर प्राप्त हुन्छ, सामाजिक प्रथामा सत्य भन्नाले तथ्यलाई सही रूपमा अरूको हितको लागि प्रश्तुत गर्नु, यस्तो सत्य मात्र बोल्नु पर्दछ जो अरूलाई प्रिय लागोस् । सत्यलाई सही ढङ्गले सही स्थान तथा समयमा लोकहितको लागि बोल्नु पर्दछ । इन्द्रियहरूलाई व्यर्थका विषय भोगमा लगाउनु हुँदैन । अनावश्यक इन्द्रियभोग गर्नु आध्यात्मिक उन्नतिमा बाधक हुन्छ । त्यस्तै मनलाई पनि अनावश्यक विचार आउन दिनबाट रोक लगाउनु पर्दछ । मनलाई मनुष्यहरूको आधारभूत आवश्यकता परिपूर्तिका कार्यहरूमा लगाउनु पर्दछ । सत्संगमा जानेतर्फ लगाउनु पर्दछ । दुःख भनेको अवसर प्राप्त नगरी भव सागरमा रूमलिरहनु हो । भव भनेको जन्म, यस्को सम्बन्ध शरीरसँग मात्र रहेको हुन्छ किनकि आत्मा भगवान्को अंश भएकोले यस्को जन्म तथा मरणको प्रश्न नै उठ्दैन । भय भन्नाले भविष्यको चिन्ता लिनेहरूको लागि हुन्छ । जो श्री कृष्णमा मन, वचन, तथा कर्मले समर्पित भइसकेको छ उस्लाई भयले सताउँदैन । अहिंसाको अर्थ हुन्छ अरूलाई कष्ट नपुर्‍याउनु । जसबाट मानिसहरूको भावी आध्यात्मिक सुखमा बृद्धि हुन्छ त्यही अहिंसा हो । समता भनेको जीवनमा कसैप्रतिको राग-द्वेषबाट मुक्ति । भौतिक जगतलाई राग-द्वेषबाट मुक्त भएर स्वीकार गर्नुपर्दछ । तुष्टिको अर्थ हुन्छ ईश्वरको कृपाले प्राप्त वस्तु वा सेवामा सन्तोष गर्नु, अत्यधिक सामग्री वा सेवाको अभिलाषा नगर्नु । यसै प्रकार तप, दान, यश तथा

अपयश आदि सबै परमेश्वरलाई ध्यानमा राखेर परोपकारी भई गरिने भाव तथा कृत्यहरू हुन् । यसरी जीवनमा हरेक स्थितिले आफ्नो साथमा एउटा भावलाई बोकेको हुन्छ । जस्तो अवस्था हुन्छ त्यस्तै भावना हामीमा जागृत हुन पुग्दछ । उपर्युक्त सबै किसिमका भावहरू उहाँबाटै निसृत हुन्छन् ।

**महर्षयः सप्त पूर्वे चत्वारो मनवस्तथा ।**
**मभ्दावा मानसा जाता येषां लोक इमाः प्रजाः ॥ ६ ॥**

सात महर्षिजन, चार उहाँहरू भन्दा पहिला भएका सनकादि तथा स्वायम्भुव आदि चौध मनुहरू- यी म मा भावराख्नेहरू सबै मेरो संकल्पबाट उत्पन्न भएका हुन् । जस्का संसारका यी प्रजाहरू हुन् ।

हामी हुनुभन्दा पहिला संसारमा रहेका विषयवस्तुहरूको बारेमा श्रीकृष्णले भन्दै हुनुहुन्छ । सप्तऋषिगण तथा उहाँहरू भन्दा पनि अघि जन्मनु भएका सनकादि तथा स्वायम्भुव आदि चौध मनुहरू लगायत सबै मानव जातीका पूर्वजहरू उहाँबाटै उत्पन्न हुनु भएको हो । यसबाहेक विभिन्न लोकहरूमा रहेका जीवहरू पनि उहाँबाट उत्पन्न भएका हुन् । यहाँ भगवान्ले ब्रह्माण्डका प्रजाहरूको आनुवंशिक विवरण प्रश्तुत गर्नु भएको छ । सबैभन्दा पहिलो ब्रह्मा, त्यसपछि उहाँबाट सात महर्षिहरू तथा तीभन्दा पनि पहिला चार महर्षिहरूः सनक, सनन्दन, सनातन तथा सनत्कुमार (मन, बुद्धि, चित्त, तथा अहङ्कार) प्रकट भएका हुन् । २५ महान ऋषिहरू ब्रह्माण्डका सबै जीवहरूको लागि धर्मको पथप्रदर्शक भनिन्छन् । यहाँ असङ्ख्य ब्रह्माण्डहरू छन्, असङ्ख्य ब्रह्माण्डमा अनेक लोकहरू छन्, अनेक लोकहरूमा विभिन्न किसिमका योनिहरू बसोबास गर्दछन् । ती सबै पच्चिस प्रजातीहरूका उपज हुन् । यसरी सबैभन्दा पहिला केही नहुँदा पनि श्रीकृष्ण हुनुहुन्थ्यो, तथा अन्तमा केही नहुँदा पनि श्री कृष्णनै हुनुहुन्छ किनकि आगामि सृष्टिको संरचना तैयार गर्ने जिम्मेवारी उहाँकै काँधमा रहेको छ ।

**एतां विभूतिं योगं च मम यो वेत्ति तत्त्वतः ।**
**सोऽविकम्पेन योगेन युज्यते नात्र संशयः ॥ ७ ॥**

जुन पुरूषले मेरो यस परमैश्वर्यरूप विभूतिलाई र योगशक्तिलाई तत्वले जान्दछ ऊ निश्चल भक्तियोगले युक्त हुन पुग्दछ-यस्मा केही पनि संशय छैन । (दृश्य



मात्र संसार हो, जो सबै भगवान्को माया हो र एउटा वासुदेव नै सबैतिर परिपूर्ण हुनुहुन्छ भनी जान्नु नै तत्वले जान्नु हो) ।

जस्ले मेरो यस ऐश्वर्य तथा योगलाई पूर्णरूपले तत्वले जान्दछ र त्यसप्रति आश्वस्त छ, ऊ मेरो अनन्य भक्तिमा तत्पर रहन्छ । यस्मा अलिकति पनि शङ्का मान्नु पर्ने छैन । आध्यात्मिक सिद्धिको चरम स्तर हो भगवद्ज्ञान । ईश्वर महान् हुनुहुन्छ भन्ने थाहा भएपछि मानिसहरू ईश्वरप्रति शरणागत भएर भगवद्भक्तिमा लाग्दछन् । भगवान्का ऐश्वर्यहरूसँग अवगत भइसकेपछि उस्को अगाडि शरणागत बाहेक कुनै विकल्प पनि रहन्न । यस ब्रह्माण्डमा रहेका विभिन्न लोकहरूमा विभिन्न देवगणहरूः ब्रह्मा, शिव, चार कुमारहरू, प्रजापति आदि रहनु भएको छ । ती सबैको परम श्रोत श्रीकृष्ण नै हुनुहुन्छ । उहाँ ब्रह्मा परम पिताको पनि पिता हुनुहुन्छ । मानिसलाई यस धारणाप्रति अटूट विश्वास भइसकेपछि ऊ पूर्ण आश्वस्त भएर उहाँको अनन्य भक्तिमा लाग्दछ । यसरी जुन पुरूषले उहाँको परम ईश्वरीय रूप विभूतिलाई तथा योगशक्तिलाई तत्वले जान्दछ, त्यो सबैभन्दा ठूलो ज्ञानी हो । हामीले हाम्रो आँखाले देख्ने सबै भगवान्का माया मात्र हुन । सबैतिर श्री कृष्णको संसारपरि पूर्ण छ । उहाँ सबैमा हुनुहुन्छ । यो जान्नु नै तत्वलाई जान्नु हो । जुन पुरुषले यो तत्वलाई जान्दछ ऊ निश्चल भक्ति योगबाट युक्त हुन्छ ।

**अहं सर्वस्य प्रभवो मत्तः सर्वं प्रवर्तते ।**
**इति मत्वा भजन्ते मां बुधा भावसमन्विताः ॥ ८ ॥**

म वासुदेव नै सम्पूर्ण जगतको उत्पत्तिको कारण हुँ र मसँग नै सबै जगतले चेष्टा गर्दछ, यसरी बुझेर श्रद्धा र भक्तिले युक्त भएर बुद्धिमान भक्तजनहरूले म परमेश्वरलाई नै निरन्तर भज्दछन् ।

म समस्त आध्यात्मिक तथा भौतिक जगतको कारण हुँ, संसारको प्रत्येक वस्तुको उद्‌भव मबाट नै भएको हो । जो बुद्धिमानलाई यस विषयको राम्ररी ज्ञान छ, ऊ मेरो प्रेमाभक्तिमा सधैँ लागिरहन्छ । भौतिक तथा आध्यात्मिक जगतको मूल श्रीकृष्ण हुनुहुन्छ भनी जस्लाई शास्त्रहरूको अध्ययन तथा ब्रह्मज्ञानी गुरूबाट दीक्षा प्राप्त भएको छ, त्यो मानिस मेरो प्रेमाभक्तिमा निरन्तर लागिरहन्छ । यस जगतमा हामीले जे-जे देख्दछौँ, जे-जे सुन्दछौँ र जे-जे ग्रहण गर्दछौँ त्यसबाट हाम्रो मनमा केही भावहरू आउँदछन् । हामीलाई केही पाउने तथा केही छाड्ने मन गर्दछ । यसै

सन्दर्भमा श्रीकृष्णले भन्नुहुन्छ कि उहाँनै सम्पूर्ण जगतको उत्पत्तिको कारण हुनुहुन्छ, मैसँग सबै जगतले चेष्टा वा अपेक्षा गर्दछन् । हरेक भाव र अपेक्षाको पछाडि श्रीकृष्ण हुनुहुन्छ । हामीले यसरी ज्ञानी तथा बुद्धिमानी भएर श्रद्धा तथा भक्तिले उहाँ परमात्मालाई सदा भज्ने गरेमा हाम्रो मनमा अवश्य पनि राम्रो भाव आउनेछ ।

**मच्चित्ता मद्‌गतप्राणा बोधयन्तः परस्परम् ।**
**कथयन्तश्च मां नित्यं तुष्यन्ति च रमन्ति च ॥ ९ ॥**

निरन्तर म मा मन लगाउने र ममा नै आफ्ना प्राणहरूलाई अर्पण गर्ने भक्तजनहरूले मेरो भक्तिको चर्चाव्दारा आपसमा मेरो प्रभावलाई बुझेर तथा गुण र प्रभावसहित मेरा कथनहरू गर्दै सन्तुष्ट हुन्छन् र म वासुदेवमा नै निरन्तर रमण गर्दछन् ।

मेरा शुद्ध भक्तहरूको विचार म मा वास गर्दछ, उनीहरूको जीवन मेरो सेवा तथा भक्तिमा अर्पित गरिएको हुन्छ । उनीहरूले सङ्गति गरेर एक आपसमा ज्ञान बाँड्दछन् । यसरी मेरो विषयमा चर्चा-परिचर्चा गर्दै परम सन्तोष तथा आनन्दको अनुभूति गर्दछन् । भगवान्का शुद्ध भक्तहरू उहाँको दिव्य प्रेमाभक्तिमा रमाउँछन् । उनीहरूको मनमा श्रीकृष्णको चरणकमलको वास हुन्छ । उनीहरूले भगवान्का दिव्य विषयहरूको बारेमा नै चर्चा गरिरहन्छन् । तसर्थ आध्यात्मको संसारमा सत्संग र बिहान तथा बेलुकीको आरतिहरूलाई निक्कै महत्त्व दिइन्छ । यसरी उहाँको बारेमा नै चर्चा-परिचर्चा गर्नेहरू सधैँ श्रीकृष्णमै रमण गर्दछन् तथा सन्तुष्टी अनि खुशीको अनुभूति गर्दछन् ।

**तेषां सततयुक्तानां भजतां प्रीतिपूर्वकम् ।**
**ददामि बुद्धियोगं तं येन मामुपयान्ति ते ॥ १० ॥**

निरन्तर मेरो ध्यान आदिमा लागेका प्रेमपूर्वक भज्ने ती भक्तहरूलाई म तत्वज्ञानरूप योग दिन्छु, जस्लेगर्दा उनीहरू मलाई नै प्राप्त हुन्छन् ।

जो निरन्तर मेरो सेवा भक्तिमा लागिरहन्छन उनीहरूलाई म ज्ञान प्रदान गर्दछु, ती ज्ञानहरूद्वारा उनीहरू मसम्म पुग्न सक्दछन् । सत्संग तथा परमेश्वरको साधनाले ज्ञान, भक्तिका उपायहरूको बारेमा हामीले पनि सिक्दछौँ तथा अन्य संलग्न समकक्षीहरूलाई पनि सो बारेमा सिकाउँदछौं । हामीले निरन्तर योग साधनामा



लागिरह्यौँ भने मात्र हामीलाई तत्वज्ञान प्राप्ति हुन्छ । तत्व ज्ञानबाटै परमेश्वरको प्राप्ति हुने हुँदा अरू के नै चाहिन्छ र ।

**तेषामेवानुकम्पार्थमहमज्ञानजं तमः ।**
**नाशयाम्यात्मभवस्थो ज्ञानदीपेन भास्वता ॥ ११ ॥**

हे अर्जुन ! उनीहरूको लागि अनुग्रह गर्नको लागि उनीहरूको अन्तःकरणमा स्थित भएको म स्वयम्ले नै उनीहरूको अज्ञानजनित अन्धकारलाई प्रकाशमय तत्वज्ञान रूप दीपकद्वारा नष्ट गरिदिन्छु ।

मैले उनीहरू माथि विशेष कृपा गर्ने उद्देश्यले उनीहरूको हृदयमा वास गरेरै ज्ञानको प्रकाशमय दीपकद्वारा उनीहरूको अज्ञानजन्य अन्धकारलाई नष्ट गर्दछु भनी श्रीकृष्णले भन्दै हुनुहुन्छ । यो हामी उपर श्रीकृष्णबाट हुने कृपा हो । मात्र चिन्तनले परम सत्य भगवान्लाई बुझ्न गाह्रो हुन्छ, परम सत्यका प्रेमीहरूले भगवान्लाई बुझ्न भक्तिको मार्गमा लाग्नु पर्दछ । परम सत्य श्रीकृष्ण भक्तिले छिटो प्रसन्न हुनुहुन्छ । शुद्धभक्तको हृदयमा उहाँ सधैँ वास गर्नुहुन्छ । उहाँको उपस्थिति सूर्यको समान हुन्छ जस्बाट सम्पूर्ण रूपमा अज्ञानतारूपी अन्धकारको नाश हुन्छ । मानिसहरूको मन भौतिक कल्मषहरूको धूलोले छोपिएको हुने गर्दछ । हामीले साँचो मनले निरन्तर उहाँको ध्यानमा, योगमा लागिरहनाले नै तत्वज्ञानको प्राप्ति हुने गर्दछ । हामीले यसरी योगभक्तिले निरन्तर लागिरहेर परमेश्वरको प्राप्ति गर्यौ भने सबै कुराहरू पाएको हुन्छ । परमेश्वरले हाम्रो कर्म तथा योगलाई कायम राख्नु हुन्छ ।

अर्जुन उवाच (भन्दछन्)

**परं ब्रह्म परं धाम पवित्रं परमं भवान् ।**
**पुरूषं शाश्वतं दिव्यमादिदेवमजं विभुम् ॥ १२ ॥**
**आहुस्त्वामृषयः सर्वे देवर्षिर्नारदस्तथा ।**
**असितो देवलो व्यासः स्वयं चैव ब्रवीषि मे ॥ १३ ॥**

अर्जुनले भन्दछन् : हजुर परम ब्रह्म, परम धाम र परम पवित्र हुनुहुन्छ, किनकि हजुरलाई सबै ऋषिगणहरूले सनातन, दिव्य पुरूष, देवताहरूको पनि आदिदेवता, अजन्मा र सर्वव्यापी भन्दछन् । त्यस्तै नै देवर्षि नारद तथा असित र देवल ऋषिले तथा महर्षि व्यासले पनि भन्नुहुन्छ र हजुरले पनि म प्रति भन्नुहुन्छ ।

यहाँ अर्जुनले श्रीकृष्णलाई भगवान् तथा परम पवित्र परमब्रह्म भनी स्वीकार गरेका छन् । विभिन्न ऋषिहरूले उहाँलाई सनातन, दिव्य पुरूष, आदिदेव, अजन्मा तथा सर्वव्यापी मान्दछन् । यही विषय श्रीकृष्णले पनि अर्जुनलाई भन्नु हुन्छ । परम ब्रह्मको गुणस्वरूपको बारेमा जानकारी भइसकेपछि अर्जुनले स्वीकारेको हुन् । यस अघि अर्जुनले आफुलाई भगवान् भन्दा परम स्वतन्त्र ठान्दथे । अब उनीले उहाँलाई प्रत्येक वस्तु तथा प्रत्येक प्राणीको आदि कारण हुनुहुन्छ, सबै देवताहरू तथा मानिसहरू उहाँमा आश्रित छन, उहाँ परम सत्य हुनुहुन्छ भनी ठान्दछन् । वैदिक आदेशहरूबाट पनि यो पुष्टी हुन्छ कि जस्ले परमेश्वरको भक्ति गर्दछ, त्यस्ले मात्र उहाँलाई सम्झिन्छ । युद्धभूमिको परिवेशलाई समीक्षा गर्दा अर्जुनले युद्ध नगर्ने भनी शस्त्र छोडिसकेका छन् । उनी युद्ध क्षेत्रको बीच भागमा रहेको अवस्थामा श्रीकृष्णले उनीलाई उपदेश दिइरहेको हुनुहुन्छ । उहाँ बारेको परम सत्य अर्जुनलाई क्रमशः अवगत हुदै गएपछि उनले परमेश्वरको बारेमा ज्ञान तथा उहाँको स्वरूपको बारेमा बुझ्न थालेको छन् । यस कार्यमा समय लाग्नु त स्वभाविकै हो । तर यस्मा हामीले हाम्रो गुरू, मार्गदर्शक र जीवन सारथीका उपदेशहरू ध्यानले सुन्यौं भने ज्ञान अवश्य प्राप्त हुन्छ ।

**सर्वमेतदृतं मन्य यन्मां वदसि केशव ।**
**न हि ते भगवन्व्यक्तिं विदुर्देवा न दानवाः ॥ १४ ॥**

हे केशव ! हजुरले जे केही पनि मेरो लागि भन्नुहुन्छ, यी सबैलाई म सत्य मान्दछुँ । हे भगवन् ! हजुरको लीलामय स्वरूपलाई न त दानव जान्दछन र नै देवता नै ।

श्री कृष्णका उपर्युक्त उपदेशहरू सुनिसकेपछि अर्जुनले भन्दछन् कि हजुर ले मलाई जे पनि भन्नु भएको छ, ती सबै कुराहरूलाई म पूर्णतया सत्य मान्दछुं । तर हजुरको विभिन्न लीलामय स्वरूपहरूलाई देवता एवं दानव दुवैले बुझ्न सक्दैनन् । यो त हजुरको कृपा हो र मैले हजुरलाई बुझैं । अन्यथा देवतागणहरूले त श्रीकृष्णको लीलामय स्वरूपहरूलाई बुझ्न सक्दैनन् भने अरू दानवहरूले बुझ्ने सम्भावना नै रहेन । पर म सत्य तथा परम शक्तिमानको लीला पनि त विशाल हुनु स्वभाविकै हो । तसर्थ सामान्य व्यक्ति होस् तथा देवगणनै किन नहोस्, उहाँलाई यथार्थ तथा सम्पूर्ण रूपमा चिन्ह गाह्रो छ ।



**स्वयमेवात्मनात्मानं वेत्थ त्वं पुरूषोत्तम ।**
**भूतभावन भूतेश देवदेव जगत्पते ॥ १५ ॥**

हे भूतहरूलाई उत्पन्न गर्ने ! हे भूतहरूको ईश्वर ! हे देवहरूको देव ! हे जगतको स्वामी ! हे पुरूषोत्तम ! हजुर स्वयंले नै आफैलाई आफैले जान्नुहुन्छ ।

हे परमपुरूष !, हे सबैको उद्‌गम !, हे समस्त प्राणीहरूको स्वामी !, हे देवताहरूको देवता !, हे ब्रह्माण्डको प्रभु !, यस लोकमा हजुर एकमात्रले निसन्देह आफ्ना अन्तरंग शक्तिले स्वयम्ले स्वयम्लाई जान्नुहुन्छ । आसुरी तथा नास्तिक स्वभावका व्यक्तिहरूले श्रीकृष्णलाई चिन्न सक्दैनन् । श्रीकृष्णलाई तिनीहरूले मात्र चिन्न सक्दछन् जो अर्जुन जस्तै भक्तिको माध्यमव्दारा उहाँको सम्पर्कमा रहन्छन् । परम सत्यको अनुभव तीन प्रकारबाट गर्न सकिन्छ : निराकार ब्रह्म, अन्तर्यामी परमात्मा तथा भगवान् । परम सत्यको ज्ञानको अन्तिम अवस्था भगवान् हो । भूत भन्नाले यो सबै संसार, यो सबै उहाँकै श्रृष्टि भन्ने बुझिन्छ । अर्जुनले भन्दैछन हजुर स्वयंले स्वयंलाई चिन्नु हुन्छ । श्रीकृष्ण हामी भित्र हुनुहुन्छ । हामी भित्र रहेर उहाँले यो भाव जगाउनु हुन्छ कि जस्ले गर्दा हामीले श्रीकृष्णको असली रूपलाई जान्न सकौं । यही हो आफुले आफुलाई जान्नु ।

**वक्तुमर्हस्यशेषेण दिव्या ह्यात्मविभूतयः ।**
**याभिर्विभूतिभिर्लोकानिमांस्त्वं व्याप्य तिष्ठसि ॥ १६ ॥**

त्यसकारण हजुरले नै ती आफ्ना दिव्य विभूतिहरूलाई समष्टिगत रूपमा भन्न समर्थ हुनुहुन्छ, जुन विभूतिहरूद्वारा हजुरले यी सबै लोकहरूलाई व्याप्त गरेर स्थित हुनु हुन्छ ।

कृपा गरेर हजुरले विस्तारपूर्वक मलाई आफ्ना ती दैवी ऐश्वर्यहरूको बारेमा बताउनुस्, जसद्वारा हजुर यी सम्पूर्ण लोकहरूमा व्याप्त हुनुहुन्छ । श्रीकृष्ण सम्बन्धी ज्ञानले अर्जुन सन्तुष्ट भइसकेको छन् । श्रीकृष्णको कृपाले अर्जुनले व्यक्तिगत अनुभव, बुद्धि, ज्ञान र मानिसहरूले जे केही प्राप्त गर्नु पर्ने हुन्छ त्यो प्राप्त गरिसकेको छन् । उनले श्रीकृष्णलाई भगवान्‌को रूपमा सम्झिसकेको छन् । तथापि अर्जुनले भगवान्‌लाई आफ्ना विभिन्न शक्तिहरूद्वारा कसरी सर्वव्यापी रूपमा विद्यमान रहनु हुन्छ त्यस्को बारेमा थप जानकारी दिन अनुरोध गर्दैछन् । यो कार्य वा अनुरोध उनीले जगतका सामान्य व्यक्तिहरूको हितलाई ध्यानमा राखेर सोधेका हुन् । ज्ञानको

मार्ग त्यतिको सजिलो छैन तर जो जान्न चाहान्छ त्यो रोकिदा पनि रोकिँदैन । उस्ले अझै जान्नु पर्दछ । त्यस्तै अर्जुनसँग पनि भएको छ । श्रीकृष्णको स्वरूपको ज्ञान अर्जुनको लागि बाँकि थियो । उस्को संशय नाश हुन सुरू त भइसकेको छ तर पूर्णतया नाश भइसकेको छैन । त्यसकारण उनीले श्रीकृष्णलाई भनेका हुन कि हजुरले नै हजुरका दिव्य विभूतिहरूको बारेमा वर्णन गर्न सक्नु हुन्छ ।

**कथं विद्यामहं योगिंस्त्वां सदा परिचिन्तयन् ।**
**केषु केषु च भावेषु चिन्त्योऽसि भगवन्मया ॥ १७ ॥**

हे योगेश्वर ! मैले कसरी निरन्तर चिन्तन गर्दै हजुरलाई बुझौं र हे भगवान् ! हजुर कुन-कुन भावहरूमा मद्वारा चिन्तन गर्ने योग्य हुनुहुन्छ ।

म कसरी हजुरको चिन्तन निरन्तर गर्दै रहुँ ? म हजुरलाई कसरी बुझौं ? मैले कुन-कुन स्वरूपमा हजुरको स्मरण गरौं ? भनी अर्जुनले श्रीकृष्णलाई सोधेका छन् । अर्जुनलाई अब विश्वास भइसकेको छ कि उनको परम मित्र श्रीकृष्ण भगवान् हुनुहुन्छ । भगवान्ले आफ्नो योगमायाले यस संसारलाई ढाक्नु भएको छ । तर शरणागत भक्तहरूले भक्ति एवं सेवाले उहाँको दर्शन गर्न पाउँदछन् । तर उनीले ती सामान्य विधिहरूलाई जान्न खोज्दैछन् जसद्वारा सामान्य मानिसहरूले पनि उहाँलाई सर्वव्यापी रूपमा देख्न सकोस् । यहाँ श्रीकृष्णलाई योगेश्वर तथा भगवन् भनी सम्बोधन गरिएको छ । कस्ता चिन्तनहरू गर्नु पर्दछन् ?, कस्ता किसिमका भावहरू चिन्तनमा ल्याउनु पर्दछन् ? जस्बाट भगवान्लाई चिन्न-जान्न सकिन्छ । यसबाट के शिक्षा पाइन्छ कि जबसम्म ज्ञान पुरा पाइन्न हामीले ज्ञान पाउने इच्छालाई त्याग्न हुदैन् । यस सत्कार्यमा निरन्तर लागिरहेमा एक दिन अवश्य सफल होइन्छ ।

**विस्तरेणात्मनो योगं विभूतिं च जनार्दन ।**
**भूयः कथय तृप्तिर्हि श्रृण्वतो नास्ति मेऽमृतम् ॥ १८ ॥**

हे जनार्दन ! आफ्नो योगशक्तिलाई तथा विभूतिलाई तापनि विस्तारपूर्वक भन्नुस्, किनकि हजुरको अमृतमय वचनहरूलाई सुन्दै मलाई तृप्ति भइरहेको छैन अर्थात सुन्ने उत्कण्ठा रहिरहेको छ ।

हजुरले फेरि विस्तारपूर्वक आफ्ना ऐश्वर्यहरू तथा योगशक्तिको बारेमा वर्णन गर्नु होस् । हजुरको विषयमा सुनेर म कहिल्यै अघाइरहेको छैन, किनकि मैले



जति-जति हजुरको बारेमा सुन्दछु उति-उति ती अमृतरूपी वचन मलाई अझै सुन्न मन लागिरहेको छ । यहाँ अर्जुन श्रीकृष्णको बारेमा तथा विशेष रूपमा उहाँका लीलाहरूको बारेमा सुन्न इच्छुक रहेको पाइन्छ । श्रीकृष्ण सम्बन्धी प्रत्येक आख्यान अमृततुल्य छन् । उहाँका लीलाहरूको बारेमा हाम्रा आध्यात्मिक ग्रन्थहरू त्यतिकै भरिएका छैनन् । अर्जुनको मनले अझै शान्ति पाइसकेको थिएन । उनीले शान्ति पाउनको लागि श्रीकृष्णका लीलाहरूको बारेमा थप जानकारी पाउन उहाँसँग अनुरोध गर्दैछन् । धनुर्धरमा सर्वोत्तम रहेको अर्जुनले श्रीकृष्णबाट योगशक्ति तथा उहाँको ऐश्वर्यहरूको बारेमा जानेर सर्वोत्तम हुन खोज्दैछन ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**हन्त ते कथयिष्यामि दिव्या ह्यात्मविभूतयः ।**
**प्राधान्यतः कुरुश्रेष्ठ नास्त्यन्तो विस्तरस्य मे ॥ १९ ॥**

श्री भगवान्ले भन्नुभयो : हे कुरुश्रेष्ठ ! अब म मेरा जुन दिव्य विभूतिहरू छन्, तिनीहरू तिम्रो लागि प्राथमिकता बमोजिम भन्दछु, किनकि मेरो विस्तारको अन्त छैन् ।

अर्जुनले श्रीकृष्णको ऐश्वर्यको विस्तार वा सीमा जान्न खोज्दै छन् । श्री भगवान्ले भन्नुभयो कि अब म तिमीलाई आफ्ना मुख्य-मुख्य वैभवयुक्त रूपहरूको वर्णन गर्दछु, हुन त उहाँका ऐश्वर्यहरू असीमित छन् । श्रीकृष्णको महानता एवं ऐश्वर्यहरूलाई बुझी नसक्नु छ । झनै जीवहरूका यी सीमित इन्द्रियहरूले बुझ्न त साह्रै गाह्रो । श्री कृष्णका सन्दर्भहरू शुद्ध भक्तहरूलाई अमृततुल्य लाग्दछन्, ती सबै सुनेर उहाँहरूलाई दिव्य आनन्द प्राप्त हुने गर्दछ । तसर्थ उहाँहरू एकाग्र भएर यस्मा निरन्तर लागिरहनु हुन्छ । श्रीकृष्णलाई यो अवगत छ कि जीवहरूले उहाँको बारेमा सबै जान्न सक्दैनन् । उहाँ त अनादि तथा अनन्त हुनुहुन्छ । तसर्थ प्रमुख-प्रमुख लीलाहरूको बारेमा बर्णन गर्दछु भनी अर्जुनलाई जानकारी दिनु भएको छ । उहाँका विभूतिहरू अन्तर्गत ती सबै ऐश्वर्यहरू पर्दछन जसद्वारा उहाँले सम्पूर्ण विश्वलाई नियन्त्रण तथा सञ्चालन गर्नुहुन्छ ।

**अहमात्मा गुडाकेश सर्वभूताशयस्थितः ।**
**अहमादिश्च मध्यं च भूतानामन्त एव च ॥ २० ॥**

हे अर्जुन ! म सबै भूतहरूको हृदयमा स्थित सबैका आत्माहरू हुँ तथा सबै भूतहरूको आदि, मध्य र अन्त पनि मै नै हुँ ।

म सबै जीवहरूको हृदयहरूमा स्थित रहेको आत्मा हुँ । मनै समस्त जीवहरूको आदि, मध्य तथा अन्त हुँ । यहाँ गुडाकेश भनी अर्जुनलाई सम्बोधन गर्नुको अर्थ निन्द्रा रूपी अन्धकारलाई जीत्नेवाला हो । तर अज्ञानरूपी अन्धकारमा रहेका जीवहरूलाई भगवान्का लीलाहरू, उहाँ कुन-कुन रूपमा यस लोकमा तथा अन्य लोकहरूमा उपस्थित हुनुहुन्छ भनी जान्न सम्भव छैन । तर अर्जुनले निन्द्रालाई जीते जस्तै ज्ञानलाई छोप्ने अन्धकारलाई जीतेका छन् । उनी यस्ता अन्धकारहरू भन्दा माथि छन् । यस कारण भगवान्ले उनीलाई आफ्ना ऐश्वर्यहरूको बारेमा बताउँदै हुनुहुन्छ । धेरैजसो हामीले केही कार्य गर्नु अघि त्यस कार्यको बारेमा विचार गर्दा यो सही हो वा गलत भनी द्विविधामा पर्दा यो सही हो भनी घच्घच्याउने अन्तर्आत्मा जो हामीमा रहेको हुन्छ, हो ! त्यही श्रीकृष्ण हुनुहुन्छ । यसैले अन्तर्आत्माले भनेको सदैव सुन्नु पर्दछ, मनन गर्नु पर्दछ, श्रीकृष्ण त भित्रै हुनुहुन्छ भनी पहिचान गर्नु पर्दछ ।

**आदित्यानामहं विष्णुर्ज्योतिषां रविरंशुमान् ।**
**मरीचिर्मरूतामस्मि नक्षत्राणामहं शशी ॥ २१ ॥**

म अदितिको बाह्र पुत्रहरूमा विष्णु र ज्योतिहरूमा किरणहरू भएको सूर्य हुँ तथा म उनन्पचास वायु देवताहरूको तेज र नक्षत्रहरूको अधिपति (मालिक) चन्द्रमा हुँ ।

कश्यप पत्नी अदिति ऋषिका बाह्र पुत्रहरू जस्लाई देवता भनिन्छ तीमध्ये श्रीकृष्ण विष्णु हुनुहुन्छ, ज्योतिहरूमा सबैभन्दा तेजस्वी सूर्य श्रीकृष्ण हुनुहुन्छ, उहाँ ४९ वायु देवताहरूको तेज हुनुहुन्छ, तथा नक्षत्रहरूमा अधिपति चन्द्रमा पनि श्रीकृष्ण हुनुहुन्छ । यहाँ श्रीकृष्णले आफ्नो महिमा, विराट स्वरूपलाई सम्झाउँदै हुनुहुन्छ । विश्वमा रहेका सबै ज्योतिहरूमध्ये अधिकतम तेजोमय ज्योति सूर्य श्रीकृष्ण हुनुहुन्छ । हामीले यी विषयवस्तुहरूलाई तत्वको आधारबाट बुझ्नु पर्दछ । यहाँ विभिन्न पक्षहरूमा, विषयवस्तुहरूमा सर्वोत्कृष्ट तथा शक्तिवान श्रीकृष्ण हुनुहुन्छ भनी वर्णन गरिएको छ ।

**वेदानां सामवेदोऽस्मि देवानामस्मि वासवः ।**
**इन्द्रियाणां मनश्र्चास्मि भूतानामस्मि चेतना ॥ २२ ॥**

म वेदमा सामवेद हुँ, देवताहरूमा इन्द्र हुँ, इन्द्रियहरूमा मन हुँ र भूत प्राणीहरूमा चेतना अर्थात जीवन-शक्ति हुँ ।



आफ्नो वर्णनको क्रममा श्रीकृष्णले भन्दै हुनुहुन्छ म वेदहरूमा ऋचा जो स्वरसहित गाइन्छ त्यो सामवेद जस्मा इन्द्ररूपमा भगवान्को वर्णन गरिएको छ त्यो म हुँ, देवताहरूमा देवताहरूको राजा इन्द्र म हुँ, नाक, कान, आँखा, जीब्रो, त्वचा, मन, बुद्धि, अहङ्कार आदि इन्द्रियहरूमा मन मुख्य हो त्यो म हुँ, यी सबै इन्द्रियहरूले साथमा मनलाई अगाडि लिएर हिँडदछन् । अन्यथा मन साथमा रहन्न भने इन्द्रियहरूले आ-आफ्ना कामहरू गर्न सक्दैनन् । त्यसैले मनलाई भगवान्ले आफ्नो विभूति बताउनु भई भूत प्राणीहरूमा चेतना वा जीवन-शक्ति हुँ भन्नु भएको छ । पदार्थ तथा जीवमा देखिएको अन्तर चेतना नै हो । पदार्थहरूमा चेतना हुँदैन जबकि जीवहरूमा चेतना रहेको हुन्छ । चेतना नरहेमा शरीर पार्थिव हुन्छ । तसर्थ चेतना शाश्वत् भगवान् हुनुहुन्छ ।

**रूद्राणां शंकरश्र्चास्मि वित्तेशो यक्षरक्षसाम् ।**
**वसूनां पावकश्र्चास्मि मेरूः शिखरिणामहम् ॥ २३ ॥**

म एकादश रूद्रमा शंकर हुँ र यक्ष तथा राक्षसहरूमा धनको स्वामी कुबेर हुँ । म आठ वसुहरूमा अग्नि हुँ र शिखर पर्वतहरूमा सुमेरू पर्वत हुँ ।

ऋग्वेदमा रूद्रलाई बलवानहरूमा सबैभन्दा बलवान भनिएको छ, यस्ता एघारवटा रूद्रहरूमध्ये म शङ्कर हुँ । रूद्र देवतालाई दुष्टलाई दण्ड दिने, रोगहरूको निवारण गर्ने, महाबीर तथा सभाको अध्यक्ष भनिएको छ । यस्ता रूद्रहरूमा श्रीकृष्ण शङ्कर हुनुहुन्छ । यक्षहरू तथा राक्षसहरूमा धनको स्वामी कुबेर, आठवटा वसुहरूमा उहाँ अग्नि हुनुहुन्छ र पहाडहरूमा सुमेरू पर्वत म हुँ भनेर श्रीकृष्णले आफ्नो वर्णन गर्दा भन्दै हुनुहुन्छ । रूद्रहरूमध्ये शक्तिशाली, जस्मा तमोगुणको भार रहेको छ त्यस्तो शङ्कर म हुँ, यक्ष तथा राक्षसहरूको नायक, देवताहरूको कोषाध्यक्ष कुबेर म हुँ, आठ वसुहरूमा उहाँ अग्नि हुनुहुन्छ, सम्बृद्ध प्राकृतिक सम्पदा भएको सुमेरू पर्वत म हुँ भनेर वर्णन गर्दै हुनुहुन्छ ।

**पुरोधसां च मुख्यं मां विद्धि पार्थ बृहस्पतिम् ।**
**सेनानीनामहं स्कन्दः सरसामस्मि सागरः ॥ २४ ॥**

पुरोहितहरूको मुखिया बृहस्पति मलाई नै जान । हे पार्थ ! म सेनापतिमा स्कन्द र जलासयहरूमा समुन्द्र मै हुँ ।

म धार्मिक कृत्य गर्ने पुरोहितहरूमध्ये मुख्य पुरोहित बृहस्पति मै नै हुँ भनी बुझ । बृहस्पतिलाई प्रार्थना तथा भक्तिको स्वामी पनि भनिन्छ । जति पनि प्रार्थना गर्नेवालाहरू छन् तिनीहरूमा सर्वश्रेष्ठ बृहस्पति श्रीकृष्ण नै हुनुहुन्छ । मनै सबै सेनानायकमध्येको प्रमुख सेनानायक कुमार वा कार्तिकेय हुँ तथा सबै जलासयमध्ये सागर मै हुँ भनेर अर्जुनलाई बुझ्न भन्दै हुनुहुन्छ । स्वर्गको राजा इन्द्रको स्वर्गको पुरोहित बृहस्पति मै हुँ, त्यस्तै पार्वती तथा शिवको पुत्र स्कन्द वा कार्तिकेय सेनानायक हुन्, त्यो स्कन्द मै हुँ, सबै जलासयहरूमध्ये समुन्द्र सबैभन्दा ठूलो हो, तसर्थ म समुन्द्र हुँ ।

**महर्षीणां भृगुरहं गिरामस्म्येकमक्षरम् ।**
**यज्ञानां जपयज्ञोऽस्मि स्थावराणां हिमालयः ॥ २५ ॥**

म महर्षिहरूमा भृगु र शब्दहरूमा एक अक्षर अर्थात ओम् हुँ । सबै प्रकारका यज्ञहरूमा जपयज्ञ र स्थिर रहनेहरूमा हिमालय पहाड हुँ ।

आफ्नो स्वरूपकै वर्णनको क्रममा श्रीकृष्ण भन्नुहुन्छ कि उहाँ सात महर्षिहरूमा भृगु तथा वाणीहरूमा ओंकार, सबै यज्ञहरूमा पवित्र नामको कीर्तन जपयज्ञ तथा सबै अचल वस्तुहरूमध्ये हिमालय हुनुहुन्छ । ब्रह्मा पुत्रहरूमा मानस पुत्र महर्षि भृगु धेरै शक्तिशाली हुनुहुन्थ्यो । सात महर्षीहरूमध्येको ज्योतिषको विद्वान्, जस्ले भृगु संहिताको रचना पनि गर्नु भएको थियो, त्यस्ता महर्षिहरूमा उहाँ भृगु हुनुहुन्छ । भृगु ऋषिको वंशलाई भार्गव भनिन्छ । ब्रह्माको मष्तिस्कबाट उत्पन्न भएकोले भृगु ब्रह्माका मानस पुत्रको नामबाट पनि चिनिनु हुन्छ । सम्पूर्ण दिव्य ध्वनिहरूमध्ये ओंकार श्रीकृष्णको रूप हो । ओंकार शब्द ब्रह्माण्ड विष्फोटको समयमा निस्केको आदि शब्द हो । समस्त यज्ञहरूमध्ये जपयज्ञ जो शुद्ध छ, अहिंसाको द्योतक छ, सरल छ श्री कृष्ण हुनुहुन्छ । सबै जगतमा जे-जसो शुभ छ ती सबै श्रीकृष्ण हुनुहुन्छ । अचलमा उहाँ हिमालय हुनुहुन्छ । जो सदा तटस्थ रहन्छ त्यो हिमालय हो । अघिल्लो अध्यायमा अचलमा सुमेरूको भनिएकोमा सुमेरू पर्वत यदाकदा चल रूपमा पनि पाइएको छ । तसर्थ हिमालय सुमेरूभन्दा सर्वाधिक अचल छ ।

**अश्वत्थः सर्ववृक्षाणां देवर्षीणां च नारदः ।**
**गन्धर्वाणां चित्ररथः सिद्धानां कपिलो मुनिः ॥ २६ ॥**



म सबै वृक्षहरूमध्ये पिपलको वृक्ष, देवर्षिहरूमा नारद मुनि, गन्धर्वहरूमा चित्ररथ र सिद्धहरूमा कपिल मुनि हुँ ।

संसारका सबै वृक्षहरूमध्ये श्रीकृष्णले आफुलाई पिपलको रूख भन्नु भएको छ । पिपलको रूखमा माथि परमात्मा जो मूल भई स्थापित हुनुहुन्छ र तल प्रकृतिको रूपमा रहेका जराहरू अग्लो तथा सुन्दर देखिन्छन् । यस रूखलाई नित्य नियमपूर्वक पूजा गरिन्छ । देवर्षीहरूमा नारद विश्वभरी नै सबैभन्दा ठूलो भक्त मानिनु हुन्छ र पूजा गरिनु हुन्छ । यसरी भक्तहरूमा उहाँ नारद हुनुहुन्छ । गन्धर्व लोकको सबैभन्दा राम्रो गायक चित्ररथ उहाँ हुनुहुन्छ । सिद्ध पुरूषहरूमा देवहूतिको पुत्र कपिल मुनि श्री कृष्णको प्रतिनिधि हुनुहुन्छ । भागवतको अनुसार पनि उहाँ श्रीकृष्णको अवताार मानिनु हुन्छ ।

**उच्चैः श्रवसमश्र्वानां विद्धि माममृतोध्दवम् ।**
**ऐरावतं गजेन्द्राणां नराणां च नराधिपम् ॥ २७ ॥**

घोडाहरूमा अमृतसँगै उत्पन्न भएको उच्चैःश्रवा नामक घोडा, श्रेष्ठ हात्तीहरूमा ऐरावत नामक हात्ती र मानिसहरू राजा मलाई ठान ।

एक पटक देवताहरू तथा असुरहरूले समुन्द्र मन्थनमा भाग लिएका थिए । यस मन्थनबाट अमृत तथा विष उत्पन्न भयो । विषलाई शिवजीले पान गरेर उहाँ त निलकण्ठ हुनुभयो । तर अमृतसँगै विभिन्न जीवहरू पनि उत्पन्न भएका थिए । तीमध्येको एक उच्चैःश्रवा नामक घोडा पनि हो । घोडा गतिको प्रतीक हो । आत्माको तत्वलाई बुझ्नको लागि मनले जब गति लिन्छ, त्यही गति लिनसक्ने उच्चैःश्रवा घोडा श्री कृष्ण हुनुहुन्छ । अनि यसै अमृतको साथमा ऐरावत नामक हात्ती पनि उत्पन्न भएको थियो । यी दुवै अमृत सँग-सँगै उत्पन्न भएकाले यी बिशेष शक्तिशाली तथा महत्त्वका थिए । यी दुवै श्रीकृष्णका प्रतिनिधि हुन् । श्रीकृष्ण ब्रह्माण्डको पालक तथा राजा हुनुहुन्छ । किनकि यशस्वी राजाहरू आफ्ना दैविक गुणहरूको कारणले कुनै निश्चित भू-भागको पालक हुन्छन् । राजा जनक, राजा राम, राजा परीक्षित, राजा युधिष्ठिरहरूले आफ्ना प्रजाहरूको सदैव हितमा सोचे तथा धर्मात्मा कहलिए । वैदिक साहित्यमा राजालाई ईश्वरको प्रतिनिधि मानिएको छ । हरेक अवस्था तथा वस्तुमा जो श्रेष्ठ छ उहाँ श्रीकृष्ण हुनुहुन्छ भनी अर्जुन लगायत हामीले बुझ्े हुन्छ ।

**आयुधानामहं वज्रं धेनूनामस्मि कामधुक् ।**
**प्रजनश्र्चास्मि कन्दर्पः सर्पाणामस्मि वासुकिः ॥ २८ ॥**

म शस्त्रहरूमा वज्र र गाइहरूमा कामधेनु हुँ । शास्त्रोक्त रीतिले सन्तानको उत्पत्तिको लागि म कामदेव हुँ र साँपहरूमा सर्पराज वासुकि हुँ ।

म हतियारहरूमा वज्र हुँ, गाइहरूमा सुरभि कामधेनु गाइ हुँ । सन्तान उत्पन्न गर्ने कारणहरूमा म प्रेमको देवता कामदेव हुँ, साँपहरूमा म वासुकि नाग हुँ । वज्र एउटा निक्कै बलशाली हतियार हो र यो श्रीकृष्णको शक्तिको प्रतीक हो जो दधिची ऋषिको हाडबाट बनेको थियो । वैकुण्ठ लोकमा रहेका गाईहरूलाई जुनसुकै बेलामा पनि दुही चाहिएको मात्रामा दुध प्राप्त गर्न सकिन्छ । यसरी दुध दिने गाईहरूलाई सुरभि भनिन्छ । राम्रो सन्तान प्राप्तिको लागि गरिएको सम्भोगलाई कन्दर्प (काम वासना) भनिन्छ र त्यो कामदेव श्रीकृष्णको प्रतिनिधि हो । अनि सर्पहरूमा उहाँ वासुकि साँप हुनुहुन्छ ।

**अनन्तश्र्चास्मि नागानां वरूणो यादसामहम् ।**
**पितृणामर्यमा चास्मि यमः संयमतामहम् ॥ २९ ॥**

म नागहरूमा शेषनाग र जलचरहरूको अधिपति वा मालिक वरूण देवता हुँ र पितृहरूमा अर्यमा नामक पितृ तथा शासन गर्नेहरूमा यमराज ।

हजारौं मुखहरू भएका नागहरूमा म शेषनाग हुँ र जलचरहरूमा म वरूण हुँ । म पितृहरूमा अर्थमा हुँ तथा शासन गर्नेहरूमा म मृत्युका देवता यमराज हुँ । अनेक मुख भएका नागहरूमा अनन्त प्रधान हुन् जस्मा विष्णु भगवान् सुत्नुहुन्छ । पौराणिक कथाहरू अनुरूप हाम्रो पृथ्वीलाई शेषनागलेनै धारण गरेको पाइन्छ । जलचरहरूमा प्रधान रहेको अधिपति वरूणदेव श्री कृष्ण हुनुहुन्छ । त्यस्तै पितृलोकको अधिष्ठाता अर्यमा हुन् जो श्रीकृष्णको प्रतिनिधि हुन । दुष्टहरूलाई दण्ड दिने विभिन्न जीवहरू छन् तर त्यस्तामा उहाँ यमराज हुनुहुन्छ । यमराज बस्नुहुने यमलोक पृथ्वीलोकभन्दा नजिकको लोक हो । जहाँ दुष्टहरूलाई दण्ड दिइन्छ ।

**प्रह्लादश्र्चास्मिं दैत्यानां कालः कलयतामहम् ।**
**मृगाणां च मृगेन्द्रोऽहं वैनतेयश्र्च पक्षिणाम् ॥ ३० ॥**



म दैत्यहरूमा प्रह्लाद र गणना गर्नेहरूमा समय हुँ तथा पशुहरूमा मृगराज सिंह र चराहरूमा म गरूड हुँ ।

म दैत्यहरूमा भक्तराज प्रह्लाद हुँ, दमन गर्नेहरूमा काल हुँ, पशुहरूमा सिंह हुँ तथा चराहरूमा गरूड हुँ । प्रह्लाद हिरण्यकश्यपुको छोरा हुन् जो दैत्य कुलमा जन्म लिएर पनि सानैदेखि हरिको परम भक्त थिए । उनको हरिप्रतिको भक्ति तथा दैवी गुणहरूको कारणले उनी श्रीकृष्णको प्रतिनिधि मानिन्छन् । गणना गर्नेहरूको समय उहाँ नै हुनुहुन्छ । क्षण, घडी, दिन, पक्ष, महिना, वर्ष आदिमा जुन समय छ त्यो श्री कृष्ण नै हुनुहुन्छ । समय वितिरहेको हुन्छ तर त्यसलाई सम्फाउन गाह्रो छ । त्यही समय श्रीकृष्ण हुनुहुन्छ । यस संसारमा दमनका विभिन्न नियमहरू छन् । तर काल यस्तो दमनकर्ता हो जस्ले सबैलाई क्षीण तुल्याउँछ । तसर्थ उहाँ श्री कृष्णको प्रतिनिधि हो । पशुहरूमा सिंह सवैभन्दा हिंसक तथा शक्तिशाली हुन्छ, चराहरूमा भगवान् विष्णुको वाहन गरूड सबैभन्दा महान हुन्छ । ती दुवै श्रीकृष्णका स्वरूपहरू हुन् ।

**पवनः पवतामस्मि रामः शस्त्रभृतामहम् ।**
**झषाणां मकरश्र्चास्मि स्रोतसामस्मि जाह्नवी ॥ ३१ ॥**

म पवित्र गर्नेवालामा वायु हुँ र शस्त्रधारीहरूमा श्री राम हुँ तथा माछाहरूमा मकर हुँ र नदीहरूमा श्री भागीरथी गंगाजी हुँ ।

यज्ञले सबै वातावरणलाई शुद्ध पार्दछ, यसरी पवित्र गर्ने यज्ञको वायु श्रीकृष्ण हुनुहुन्छ । वायु बिना जीवित रहन असम्भव छ । प्रदूषणले जब-जब वातावरण दुषित हुन्छ तब-तब शुद्ध वायुले नै त्यस प्रदूषणलाई सफा एवं पवित्र गरेर स्वाँस लिने लायक बनाउँदछ । त्यो वायु श्रीकृष्ण हुनुहुन्छ । शस्त्रहरू उठाई युद्ध गर्नेमा श्रीकृष्ण श्रीराम हुनुहुन्छ । मर्यादा पुरूषोत्तम श्रीराम, दशरथ पुत्र, ले रावणलाई बध गर्नु भई त्रेतायुगमा धर्मको स्थापना गर्नु भएको थियो । माछाहरूमा श्रीकृष्ण गोही तथा नदीहरूमा श्री भागिरथी गंगाजी हुनुहुन्छ । भगिरथ ऋषिको तपले जुन गंगाजी यस पृथ्वीलोकमा आउनु भएको थियो, जस्लाई शिवले आफ्नो तीनवटा जटामा समाहित गर्नु भएको थियो त्यही पवित्र गंगा श्रीकृष्ण हुनुहुन्छ ।

**सर्गाणामादिरन्तश्र्च मध्यं चैवाहमर्जुन ।**
**अध्यात्मविद्या विद्यानां वादः प्रवदतामहम् ॥ ३२ ॥**

हे अर्जुन ! श्रृष्टिहरूको आदि र अन्त तथा मध्य पनि मै नै हुँ । म विद्याहरूमा आध्यात्मविद्या अर्थात ब्रह्मविद्या र परस्पर विवाद गर्नेहरूको लागि तत्व-निर्णयको लागि गरिनेवाला वाद मैँ हुँ ।

समस्त श्रृष्टिहरूको आदि, मध्य, तथा अन्त मैँ हुँ । श्रृष्टि जहाँबाट सुरू भयो, अहिले जुन चलिरहेको छ तथा एकदिन जब प्रलय आउँछ र सबै ब्रह्ममा विलिन हुन्छ अर्थात अन्त यी तीनवटै अवस्थाहरू श्रीकृष्ण हुनुहुन्छ । सबै विद्याहरूमा आध्यात्मविद्या जस्ले हाम्रो आत्माको ढोका आध्यात्म तर्फ खोल्दछ र हामीलाई ब्रह्मको प्राप्ति हुन्छ त्यो म हुँ तथा तर्कशास्त्रिहरूको लागि म निर्णायक सत्य हुँ । श्रृष्टि गर्दा सर्वप्रथम यी भौतिक तत्वहरूको श्रृष्टि गरिन्छ । यो दृश्य जगत महाविष्णुः गर्भोदकशायी विष्णु तथा क्षीरोदकशायी विष्णुद्वारा उत्पत्ति तथा सञ्चालित छ । ब्रह्मा गौण श्रष्टा मात्र हुनुहुन्छ । सम्भारक शिव हुनुहुन्छ । सृजन, पालन, संहार गर्ने यी सबै अधिकारहरू उहाँ परमेश्वरको भौतिक गुणहरूका अवतारहरू हुन् । उच्च विद्याको लागि ज्ञानका विभिन्न ग्रन्थहरू छन्: चार वेदहरू, तिनका छ वटा वेदाङ्गहरू, वेदान्त सुत्र, तर्क ग्रन्थ, धर्म ग्रन्थ, पुराणहरू । त्यसमध्ये अध्यात्मविद्या सम्बन्धी ग्रन्थ बिशेषतः वेदान्त सूत्र श्रीकृष्णको स्वरूप हो । तर्कशास्त्रीहरूले विभिन्न किसिमका तर्कहरू गर्दछन् । प्रमाणद्वा रातर्कको पुष्टि जस्लाई विपक्षको पनि समर्थन प्राप्त छ लाई जल्प भनिन्छ । प्रतिद्वन्दीहरूलाई हराउने प्रयासलाई वितण्डा भनिन्छ । तर वास्तविक निर्णय भने वादबाट नीतिगत तथा आदर्श बमोजिम आउँदछ । त्यो वादको निर्णयात्मक सत्य श्रीकृष्ण हुनुहुन्छ ।

**अक्षराणामकारोऽस्मि द्वन्दः सामासिकस्य च ।**
**अहमेवाक्षयः कालो धाताहं विश्र्वतोमुखः ॥ ३३ ॥**

म अक्षरहरूमा अकार हुँ र समासमा द्वन्द नामक समास हुँ । अक्षयकाल अर्थात कालको पनि महाकाल तथा सबैतिर मुख भएको, विराट्स्वरूप, सबैको धारण-पोषण गर्ने पनि मैँ नै हुँ ।

अक्षरहरूमा अकार तथा समासहरूमा व्दन्द समास मैँ नै हुँ । म शाश्वत् काल पनि हुँ र श्रष्टामा ब्रह्मा हुँ । संस्कृत अक्षरमालाको प्रथम अक्षर अ अकार वैदिक साहित्य फाँटको शुभारम्भ हो । अकार बिना कुनै स्वर उच्चारण नै हुँदैन । यसलाई आदि स्वर पनि भनिन्छ । संस्कृतमा विभिन्न किसिमका सामासिक शव्दहरू



हुन्छन् । जस्तै राम-कृष्ण जस्तो दोहोरा शब्द । यसमा राम तथा कृष्ण आफ्ना साबिकै प्रधान रूपमा छन्, अतः यस्लाई द्वन्द समास भनिन्छ । अक्षयकाल अर्थात् कालको पनि महाकाल, सबैतिर मुख भएको विराटस्वरूप, सबैलाई धारण गर्ने तथा पोषण गर्ने पनि मैँ नै हुँ ।

**मृत्युः सर्वहरश्र्चाहमुम्दवश्र्च भविष्यताम् ।**
**कीर्तिः श्रीर्वाक्च नारीणां स्मृतिर्मेधा धृतिः क्षमा ॥ ३४ ॥**

म सबैलाई नाश गर्ने मृत्यु र उत्पन्न हुनेहरूको उत्पन्न हुने उद्देश्य हुँ तथा महिलाहरूमा कीर्ति, श्री, वाक्, स्मृति, मेधा, धृति र क्षमा हुं ।

लोकहरूमा प्रति क्षण जीवहरूको आयु अर्थात समय सकिएपछि तिनीहरूलाई आघात पुगी मृत्यु हुन्छ । मृत्युको आघात अन्तिम हुने गर्दछ । त्यो मृत्यु श्रीकृष्ण हुनुहुन्छ । लोकहरूमा विकासको ऋममा समस्त जीवहरूको ६ किसिमका विकासहरू हुन्छन् । ऊ जन्मिन्छ, बढछ, केही कालसम्म संसारमा रहन्छ, सन्तान उत्पन्न गर्दछ, क्षीण हुदैजान्छ र अन्तमा मृत्यु प्राप्त गरी समाप्त हुन्छ । यो ६ वटै परिवर्तनहरूमध्ये पहिलो गर्भबाट मुक्ति श्रीकृष्ण नै हो । पहिलो उत्पत्ति नै भविष्यको कार्यको शुभारम्भ हो । यहाँ स्त्रिवाचक ७ वटा ऐश्वर्यहरूको नामहरू : कीर्ति, श्री (सम्मान), वाक् (बोल्नु), स्मृति (स्मरण), मेधा (तीक्ष्ण बुद्धि भएको), धृति (सम, बराबरी) तथा क्षमा मध्ये केही ऐश्वर्यहरू पनि यदि कुनै मानिसमा भएमा ऊ यशस्वी हुन्छ । यी सबै श्रीकृष्ण नै हुनुहुन्छ । यदि कुनै मानिस धर्मात्मा छ भने ऊ यशस्वी हुन्छ । संस्कृत पूर्ण भाषा हो । तसर्थ यो यशस्विनी छ । यदि कुनै मानिसले पढेर त्यसलाई लामो अवधिसम्म स्मरणमा राख्न सक्दछ भने त्यो दह्रो स्मृतिको कारणले यशस्वी हुन पुग्दछ । विभिन्न ग्रन्थहरू पढेर पढेका विषयहरूलाई उपयोगमा ल्याउन सक्नेलाई मेधा वा बुद्धिमान भनिन्छ । अस्थिरतामा विजय प्राप्त गर्नु धृति वा दृढता भनिन्छ । जो पूर्णतया योग्य भएर विनम्र पनि छ तथा सुख तथा दुःखमा समभाव राख्दछ भने त्यसलाई क्षमा भनिन्छ । यो पनि ठूलो ऐश्वर्य हो । ती सबै श्रीकृष्ण हुनुहुन्छ ।

**बृहत्साम तथा साम्नां गायत्री छन्दसामहम् ।**
**मासानां :मार्गशीर्षोऽहमृतूनां कुसुमाकरः ॥ ३५ ॥**

तथा गायन गर्नेयोग्य श्रुतिहरूमा म बृहत्साम र छन्दहरूमा गायत्री छन्द हुँ तथा महिनाहरूमा मार्गशीर्ष र ऋतुहरूमा वसन्त ऋतुमैँ हुँ ।

सामवेदका गीतहरू तथा गायन गर्ने श्रुतिहरूमा म बृहत्साम हुँ । सामवेद गीत-संगीत प्रधान छ । यो सबै वेदहरूको साररूप हो । यो विभिन्न देउताहरूद्वारा गाइने गीतहरूको संग्रह हो । तिनै गीतहरूमध्ये बृहत्सामको ध्वनि सुमधुर छ र जस्लाई अर्धरात्रिमा गाइन्छ । बृहत्साम भन्नाले यस्तो गायन जो स्वर्गलोक श्रेष्ठत मन तथा तेजलाई स्वर अलापले व्यञ्जित गर्दछ । सबैभन्दा ठूलो गायन जो ऋचाहरूमा स्वर प्रधान छ । त्यो श्रीकृष्ण हुनुहुन्छ । छन्दहरूमा म गायत्री छन्द हुँ । अर्थात गायत्री महामन्त्र । सबै महिनाहरूमा म मार्गशीर्ष र समस्त ऋतुहरूमा वसन्त ऋतु हुँ । गायत्री मन्त्र ईश्वर साक्षात्कारको लागि हो । संस्कृत साहित्यको काव्यहरू निश्चित विधान अनुसार व्यवस्थित गरिएका छन् । तिनीहरूमा लय तथा ताल मिलेका हुन्छन् । यस्तै नियमित काव्यमा गायत्री मन्त्र पर्दछ । यो मन्त्र आध्यात्ममा उन्नत मानिसहरूको लागि बनेको छ । भगवान्को दिव्य धाममा प्रवेश चाहनेहरूको लागि यो मन्त्रको जप गर्नाले सफलता पाइन्छ । यस्लाई ब्रह्मको नाद अवतार मानिन्छ । यस मन्त्रको गुरू ब्रह्मा हुनुहुन्छ ।

**द्यूतं छलयतामस्मि तेजस्तेजस्विनामहम् ।**
**जयोऽस्मि व्यवसायोऽस्मि सत्त्वं सत्त्ववतामहम् ॥ ३६ ॥**

म छल गर्नेहरूमा जूवा र प्रभावशाली पुरूषहरूको प्रभाव हुँ । म जीत्नेहरूमा विजय हुँ, निश्चय गर्नेहरूमा निश्चय हुँ र सात्विक पुरूषहरूको म सात्विक भाव हुँ ।

म छल्नेहरूमा जूवा र तेजस्विहरूमा तेज हुँ । म विजय हुँ, साहस हुँ र बलवानहरूको बल हुँ । सबै छल कपटका कर्महरूमा जूवा सर्वोपरि छ किनकि यस्मा एक क्षणमा हार वा जीत हुनसक्दछ । यो श्रीकृष्णको प्रतीक हो । परमेश्वरको रूपमा श्रीकृष्ण कुनै पनि सामान्य व्यक्तिको दाँजोमा धेरै छली हुनुहुन्छ । प्रभावशाली व्यक्तिको प्रभाव वा ओज पनि श्रीकृष्ण नै हुनुहुन्छ । जस्ले जीत्दछ त्यस्को विजय श्रीकृष्ण हुनुहुन्छ । त्यसरी नै निश्चय गर्नेहरूको निश्चय तथा सात्विक भाव हुनेहरूको सात्विक भाव पनि श्रीकृष्ण नै हुनुहुन्छ ।

**वृष्णिनां वासुदेवऽस्मि पाण्डवानां धनंजय ।**
**मुनीनामप्यहं व्यासः कवीनामुशना कविः ॥ ३७ ॥**

वृष्णिवंशहरूमा वासुदेव अर्थात म स्वयं तिम्रो साथी, पाण्डवहरूमा धनञ्जय अर्थात तिमी, मुनिहरूमा वेदव्यास र कविहरूमा शुक्राचार्य कवि पनि मै नै हुँ ।



यादवहरूमा एउटा वृष्णिवंश पनि थियो । त्यस बारेमा श्रीकृष्णले भन्नुहुन्छ कि वृष्णिवंशमा म वासुदेव हुँ, जो स्वयं अर्जुनको अगाडि उभिनु भएको छ । श्रीकृष्णले भन्नुहुन्छ कि पाण्डवहरूमा उहाँ धनञ्जय हुनुहुन्छ । पाण्डवहरू पाँचै जनामा गुणहरूको कमी थिएन । तर तीमध्ये सर्वश्रेष्ठ अर्जुन नै भएकोले उहाँ अर्जुन हुनुहुन्छ । मुनिहरूमा उहाँ वैदिक ज्ञानहरूको धनी महाभारतको रचयिता वेदव्यास हुनुहुन्छ । उहाँले कलियुगका मानिसहरूको लागि वैदिक ज्ञानहरूलाई अनेक रूपमा प्रश्तुत गर्नु भएको छ । कविहरूमा असुरहरूको गुरू शुक्राचार्य, जो धेरै नै बुद्धिमान तथा दूरदर्शी राजनेता थिए, कवि पनि उहाँ नै हुनुहुन्छ । शुक्राचार्यलाई श्रीकृष्णको ऐश्वर्यको अर्को स्वरूप पनि भनिन्छ ।

**दण्डो दमयतामस्मि नीतिरस्मि जिगीषताम् ।**
**मौनं चैवास्मि गुह्यानां ज्ञानं ज्ञानवतामहम् ॥ ३८ ॥**

म दमन गर्नेको दण्ड अर्थात दमन गर्ने शक्ति हुँ, जीतने इच्छा गर्नेवालाको नीति हुँ, गुप्त राख्नेयोग्य भावहरूको रक्षक म मौन हुँ र ज्ञानीहरूको तत्वज्ञानमै नै हुँ ।

अराजकतालाई दमन गर्ने सबै साधनहरूमध्ये म दण्ड हुँ, अर्थात् दमन गर्नेहरूको शक्ति हुँ । जो विजयको आकाङ्क्षी छ उस्कोलागि म नीति हुँ । जित्नको लागि धेरै कामहरू गर्नु पर्दछ : श्रम, इच्छाशक्ति र अभ्यास आदि । तर बिना नीतिको जीत सम्भव हुँदैन । गुप्त राख्ने योग्य भावको रक्षक मौन मै हुँ । जबसम्म मौन टुट्दैन तबसम्म गुप्त विषयहरू खुल्दैनन् । तसर्थ रहस्यहरूमा म मौन हुँ तथा बुद्धिमानहरूको लागि म तत्वज्ञान हुँ ।

**यच्चापि सर्वभूतानां बीजं तदहमर्जुन ।**
**न तदस्ति विना यत्स्यान्मया भूतं चराचरम् ॥ ३९ ॥**

र हे अर्जुन ! जो सबै भूतहरूको उत्पत्तिको कारण हो, त्यो पनि मै हुँ, किनकि यस्तो चर वा अचर कुनै भूत छैन जो मभन्दा रहित होस् ।

म सबै श्रृष्टिहरूको जनक बीउँ हुँ । यस्तो चर तथा अचर कुनै पनि प्राणी लोकमा छैन जो म बिना होस् । जस्मा प्राण छ वा जो निर्जीव छ त्यो मेरै सङ्कल्पले छ । त्यस्को उत्पत्ति मैबाट भएको हो तथा एकदिन त्यो ममै बिलिन पनि हुन्छ । जसमा प्राण छ, त्यस्को आत्मा उहाँ श्रीकृष्णको अंश हो । जो पहिलादेखि नै उस्मा

विद्यमान छ । हामीले अविद्यालाई हटाएर ज्ञान हासिल गरेर श्रीकृष्णलाई आफ्नै भित्र पाउन सक्दछौँ । संसारमा भएका प्रत्येक वस्तु वा जीव हुनुको वा भैरहनुको कारण हुन्छ । निर्जीव वस्तुहरू प्रलय कालसम्म रहनुको मुख्य कारण श्रीकृष्ण हुनुहुन्छ । उहाँको शक्ति वा ऐश्वर्यबिना चर वा अचर केही पनि कही रहन सक्दैन । त्यसैले उहाँलाई सर्वशक्तिमान पनि भनिन्छ ।

**नान्तोऽस्ति मम दिव्यानां विभूतीनां परंतप ।**
**एष तूद्देशतः प्रोक्तो विभूतेर्विस्तरो मया ॥ ४० ॥**

हे परंतप ! मेरा दिव्य विभूतिहरूको अन्त छैन, मैले आफ्ना यी विभूतिहरूको विस्तार त तिम्रो लागि एकदेशले अर्थात सङ्क्षेपमा भनेको हुँ ।

श्रीकृष्णले आफ्ना महिमा वा स्वरूपको बारेमा भन्दै हुनुहुन्छ । हे योद्धा ! मेरा दैविक विभूतिहरूको कुनै अन्त छैन । श्रीकृष्णले आफ्ना विभिन्न विभूतिहरूको बारेमा अर्जुनलाई भन्नु भयो । जीवनसँग गाँसिएका हरेक क्षेत्रको बारेमा उहाँले उदाहरण पनि दिनुभयो । उहाँको विभूतिहरू असीमित छन् वा जस्को अन्त छैन । मैले तिमीलाई जे जसो भनेको छुँ त्यो त मेरो अनन्त विभूतिमध्येको सङ्क्षिप्त वर्णन मात्र हो । वैदिक शास्त्रहरूमा उल्लेख गरिएको छ कि परमेश्वरका शक्तिहरू तथा विभूतिहरूलाई विभिन्न किसिमले जान्न सकिन्छ । ती सबैको वर्णन गरेर साध्य पनि छैन् । तिनीहरूको कहिल्यै अन्त छैन । तिम्रा जिज्ञासाहरू शान्त गर्न यहाँ केही विभूतिहरूको बारेमा सङ्क्षेपमा वर्णन गरेको मात्र हुँ ।

**यद्यद्विभूतिमत्सत्त्वं श्रीमदूर्जितमेव वा ।**
**तत्तदेवावगच्छ त्वं मम तेजोंऽशसम्भवम् ॥ ४१ ॥**

जे-जे पनि विभूतियुक्त अर्थात ऐश्वर्ययुक्त, कान्तियुक्त र शक्तियुक्त वस्तुहरू छन्, ती सबैलाई तिमीले मेरै तेजको अंशको अभिव्यक्ति हो भनी जान ।

यस श्लोकमा श्रीकृष्णले आफ्ना सबै विभूतिहरूलाई सामान्यिकरण गर्दै भन्दै हुनु हुन्छ । तिमी यो बुझिराख कि सबै ऐश्वर्य, सौन्दर्य तथा तेजस्वी सृष्टिहरू मेरो तेजको सानो भागबाट बनेका हुन् । लोकमा रहेका कुनै पनि तेजिलो, सुन्दर तथा अन्य गुण भएको श्रृष्टि चाहे त्यो अध्यात्म जगतमा होस् वा चाहे भौतिक जगतमा ती सबै श्रीकृष्णकै विभूतिको अंश हो भनी ठान्नु पर्दछ । कुनै पनि अलौलिक



वस्तु श्रीकृष्णकै कारणले छ भनी हामीले मान्नु पर्दछ । हामीले हाम्रो चारैतिर जे-जे देख्दछौँः दमन गर्ने शक्ति, प्रभावशाली व्यक्ति, छल हेर्यौ वा कसैको गायकी सुन्यौ, प्रत्येक वस्तु, क्रिया र प्राणीमा जे पनि तेज, ऐश्वर्य वा कान्तिले पूर्ण छ त्यो श्रीकृष्णको अंश हो । तसर्थ हामीले जे गरे पनि त्यस्मा श्रीकृष्णलाई सम्झेर खोज्नु पर्दछ ।

**अथवा बहुनैतेन किं ज्ञातेन तवार्जुन ।**
**विष्टभ्याहमिदं कृत्स्नमेकांशेन स्थितो जगत् ॥ ४२ ॥**

अथवा हे अर्जुन ! यति धेरै जानेर तिमीलाई के प्रयोजन हो । म यो सम्पूर्ण जगतलाई आफ्नो योगशक्तिको एक अंश मात्रले धारण गरेर स्थित छु ।

श्रीकृष्णले सबै विषयवस्तुलाई सङ्क्षेपीकरण गरेर भन्दै हुनुहुन्छ कि यी सबै बृहद् ज्ञानको तिमीलाई के को आवश्यकता छ ? म त आफ्नो योगशक्तिको एक अंश मात्रले सम्पूर्ण ब्रह्माण्डमा व्याप्त भएर यसलाई धारण गर्दछु । परमात्माको रूपमा ब्रह्माण्डका सबै वस्तुहरूमा प्रवेश गर्ने कारणले उहाँ परमेश्वरको सबै भौतिक जगतमा प्रतिनिधित्व रहेको छ । उहाँले अर्जुनलाई सम्झाइरहनु भएको छ कि तिमीले यो जान्नुमा कुनै किसिमको सार्थकता छैन कि सबै वस्तुहरू कसरी बेग्ला-बेग्लै आ-आफ्ना ऐश्वर्य तथा उत्कर्षमा स्थित छन् । अर्जुनले यति मात्र जान्नु पर्याप्त छ कि संसारका प्रत्येक वस्तुको अस्तित्व त्यसमा श्रीकृष्णको उपस्थिति परमात्माको रूपमा रहेको हुनाले कायम छ । अर्जुनले अब आफ्नो कर्तव्य, युद्ध तथा कर्मसँग मात्र सम्बन्ध गाँसी युद्ध गर्नु पर्दछ भन्ने श्रीकृष्णको अर्थ रहेको छ ।

अथैकादशोऽध्यायः

## अध्याय एघार

## विश्र्वरूपदर्शनयोग

अर्जुन उवाच (भन्दछन्)

**मदनुग्रहाय परमं गुह्यमध्यात्मसंज्ञितम् ।**
**यत्त्वयोक्तं वचस्तेन मोहोऽयं विगतो मम ॥ १ ॥**

अर्जुन भन्दछन् : ममाथि अनुग्रह गर्नको लागि हजुरले जुन परम गोपनीय आध्यात्म विषयक वचन अर्थात् उपदेश दिनुभयो, त्यसले मेरो यो अज्ञान नष्ट भइसकेको छ ।

अर्जुनले श्रीकृष्णलाई भन्दछन् कि हजुरले मलाई जुन अत्यन्तै गुह्य आध्यात्मिक विषयहरूको उपदेश दिनु भयो त्यो सुनेर मेरो अज्ञानता नाश हुन पुगेको छ । श्रीकृष्ण सबै कारणहरूको पनि कारण हुनुहुन्छ । श्रीकृष्ण समस्त अवतार, स्थितिको श्रोत हुनुहुन्छ । यस अघि सुनेका सबै उपदेशहरूको फलस्वरूप अर्जुनको अज्ञानता र आफन्त प्रतिको मोह हटेको छ भनी अर्जुनले भन्दैछन् । यस्तो तत्वज्ञानको उपदेश दिने मित्र पाउँदा अर्जुन प्रबुद्ध तथा खुशी भएको छन् । गीताकै अध्याय दशको एघारौँ श्लोकमा भगवान्ले मेरो भजन गर्नेहरू माथि कृपा गरेर म स्वयंले उनीहरूको अज्ञानजन्य अन्धकारलाई नाश गर्दछु भनी भन्नु भएको सन्दर्भले अर्जुन माथि राम्रो असर गरेको पाइयो । यसपछि अर्जुनले भगवान्को स्तुति गर्न थाले । भगवान्ले निक्कै ठूलो परमगुह्य विभूति युक्त ज्ञान अर्जुनलाई सुनाउँदै मैले आफ्नो कुनै अंशले सम्पूर्ण जगत अनन्तकोटि ब्रह्माण्डलाई व्याप्त गरेर स्थित छु भन्नु भयो । विश्वका यी सबै विभूतिहरूको श्रोत, सञ्चालक सबै परमेश्वर नै हुनुहुन्छ भनी जान्ने तत्वज्ञानी अविचल भक्तियोगले युक्त हुन पुग्दछ ।

**भवाप्ययौ हि भूतानां श्रुतौ विस्तरशो मया ।**
**त्वत्तः कमलपत्राक्ष माहात्म्यमपि चाव्ययम् ॥ २ ॥**

किनकि हे कमलनेत्र ! मैले हजुरसँग भूतहरूको उत्पत्ति र प्रलयको बारेमा विस्तारपूर्वक सुनेको छु तथा हजुरको अविनाशी महिमा पनि सुनेको छु ।



मैले हजुरबाट प्रत्येक जीवको उत्पत्ति तथा प्रलयको बारेमा विस्तारले सुनिसकेको छु । हजुरको अक्षय महिमाको बारेमा पनि सुनिसकेको छु । अर्जुन मोहग्रस्त भए । आफन्तहरूसँग युद्ध गर्ने बारेमा उनीलाई चित्त बुझिरहेको थिएन । शस्त्रलाई छोडेर दुःखी भएर उनी युद्धस्थलमा रथमा बसेको थिए । त्यसैकारणले श्रीकृष्णले उनीलाई ज्ञान दिन प्रारम्भ गर्नु भयो । ज्ञानहरूबाट उन्को मोह समाप्त हुन त सुरूभयो । तर उनको मनमा श्रीकृष्णको विश्वरूपलाई हेर्ने लालसा जागेर आयो । कस्लाई उहाँको विश्वरूप हेर्न मन लाग्दैन र ? अर्जुनले यहाँ श्रीकृष्णसँग खुशी भएर उहाँलाई कमलनयन भनी सम्बोधन गरेका छन् । अर्जुनलाई थाहा भइसकेको छ कि श्रीकृष्ण सम्पूर्ण भौतिक जगतको उत्पत्ति तथा प्रलयको कारण हुनुहुन्छ । तर उत्पत्ति तथा प्रलयको कारण भए पनि उहाँ यी सबैबाट टाढा हुनुहुन्छ ।

**एवमेतद्यथात्थ त्वमात्मानं परमेश्र्वर ।**
**द्रष्टुमिच्छामि ते रूपमैश्र्वरं पुरूषोत्तम ॥ ३ ॥**

हे परमेश्वर ! हजुरले आफुलाई जस्तो भन्नु हुन्छ, यो ठीक त्यस्तै नै छ, तर हे पुरूषोत्तम ! हजुरको ज्ञान, ऐश्वर्य, शक्ति, बल, वीर्य र तेजबाट युक्त ऐश्वर्य रूपलाई म प्रत्यक्ष हेर्न चाहान्छु ।

श्रीकृष्णको महिमा अर्जुनले स्वयं उहाँकै मुखबाट त सुनिसके । श्रीकृष्णले आफ्ना महिमाको बारेमा अर्जुनलाई बताउनु भयो जो सबै परम् गोपनीय थिए । ती उहाँका बारेका विषयवस्तुहरूको सम्बन्धमा ठूल–ठूला ऋषिहरूलाई पनि थाहा थिएन् । तर श्रीकृष्णको लागि उहाँको भक्त महत्त्वपूर्ण थियो । उहाँले अर्जुनलाई माध्यम बनाएर संसारको सबैभन्दा महत्त्वपूर्ण तर गोपनीय ज्ञानहरू बाँड्नु भयो । तर अर्जुन भन्दैछन्ः अहिले म आफ्नो समक्ष हजुरद्वारा वर्णित हजुरले बताएसरी हजुरको वास्तविक रूपलाई देखिरहेको छु । तर हजुर यस दृष्य जगतमा कसरी प्रविष्ट गर्नु भो ? म त्यस रूपको दर्शन गर्न इच्छुक छु । हजुरबाट निसृत हुने, हजुरमा समाहित हुने दृश्य सहितको हजुरको विराट् स्वरूप हेर्न चाहान्छुं ।

**मन्यसे यदि तच्छक्यं मया द्रष्टुमिति प्रभो ।**
**योगेश्र्वर ततो मे त्वं दर्शयात्मानमव्ययम् ॥ ४ ॥**

हे प्रभो (भगवान्ले उत्पत्ति, स्थिति र प्रलय तथा अन्तर्यामी रूपले शासन गर्ने भएकोले उहाँलाई प्रभु भनी सम्बोधन गरिएको हो) ! यदि मव्दारा हजुरको त्यो

रूप देख्न सकिन्छ भने-यस्तो हजुरले ठान्नु हुन्छ, भने हे योगेश्वर ! त्यस अविनाशी स्वरूपको मलाई दर्शन गराउनु होस् ।

लोकहरूका हरेक कण-कण, हरेक जीव श्रीकृष्णबाट नै आएका हुन् । यहाँको हरेक काम उहाँकै संकल्पको परिणाम हो । यदि हजुरले सोच्नु हुन्छ कि मैले हजुरको विश्व रूपलाई देख्न समर्थ हुन सक्छु भने कृपा गरेर मलाई हजुरको विराट् विश्व रूपको दर्शन गराउनुस् भनी अर्जुनले विनयपूर्वक श्रीकृष्णलाई अनुरोध गर्दैछन् । संसारको प्रत्येक जीव आध्यात्मिक सानो अंश मात्र हो तर सामान्यतया परमेश्वरलाई जान्न सक्नु सम्भव छैन । भक्त रूपमा रहेको अर्जुनलाई उनको सीमाको तथा भगवान्को अकल्पनीय स्थितिको बारेमा ज्ञान छ । एउटा सानो जीवले त्यो विराट एवं अनन्त शक्तिलाई बुझ्न सक्नु सम्भव छैन । तर त्यो अनन्त शक्तिको कृपा भयो भने उहाँको प्रकृतिलाई बुझ्न सकिन्छ । भगवान्सँग अचिन्त्य शक्ति भएकोले यहाँ उहाँलाई योगेश्वर भनी सम्बोधन गरिएको छ ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**पश्य मे पार्थ रूपाणि शतशोऽथ सहस्रशः ।**
**नानाविधानि दिव्यानि नानावर्णाकृतीनि च ॥ ५ ॥**

श्री भगवान्ले भन्नुभयो हे पार्थ ! अब तिमीले मेरो सयौँ, हजारौँ विभिन्न किसिमका र विभिन्न वर्णहरूको तथा विभिन्न आकृतिहरूको अलौकिक रूपहरूलाई हेर ।

श्रीकृष्ण जब यस पृथ्वीमा आउनु भयो उहाँले विभिन्न कृत्यहरू सम्पादन गर्नु भयो । उहाँका कृत्यहरू अनुरूप उहाँका विभिन्न नामहरू छन् । तर त्यो नै उहाँको सही रूप भने होइन । असलमा अब भगवान्ले अर्जुनलाई आफ्नो असल रूप देखाउने तरखरमा हुनुहुन्छ । श्रीकृष्णले अर्जुनलाई भन्नुभयो हे पार्थ ! अब तिमी मेरा ऐश्वर्यहरूका, सयौँ हजारौ किसिमका दैवी तथा विविध रूपहरू जस्मा विभिन्न वर्ण, आकृतिहरू छन् लाई हेर । अर्जुन श्रीकृष्णको विश्वरूपको दर्शन गर्न अभिलाषी छन् ।

**पश्यादित्यान्वसून्रुद्रानश्विनौ मरूतस्था ।**
**बहून्यदृष्टपूर्वाणि पश्याश्र्चर्याणि भारत ॥ ६ ॥**



हे भरतवंशी अर्जुन ! तिमीले म मा आदित्यहरूलाई अर्थात् अदितिका द्वादश पुत्रहरूलाई, आठ वसुहरूलाई, एकादश रूद्रहरूलाई, दुबै अश्विनीकुमारहरूलाई र उनन्चास ४९ मरूद्गणहरूलाई हेर तथा अरू पनि धेरैजसो पहिले नदेखिएका आश्चर्यमय रूपहरूलाई हेर ।

अब तिमीले मेरो यस विराट् स्वरूपमा सूर्यहरू, वसुहरू, रूद्रहरू, अश्विनीकुमारहरू तथा अन्य देवताहरूका विभिन्न रूपहरूलाई हेर । तिमीले मेरो आश्चर्यजनक रूपलाई पनि हेर जो कसैले पहिले नदेखेका थिए र नै सुनेका थिए । अर्जुन श्रीकृष्णको अन्तरंग सखा तथा स्वयम् विद्वान् भए तापनि उहाँको बारेमा सबै कुराहरू उनीलाई पनि थाहा थिएन् । श्रीकृष्णको वास्तविक स्वरूपको लागि कल्पना गर्न पनि सम्भव छैन । श्रीकृष्ण अव्यक्त हुनुहुन्छ । अनि जो अव्यक्त छ त्यसलाई बिना कुनै आधारले कल्पना गर्न सम्भव हुँदैन । तर अब त्यस्को पनि आवश्यकता रहेन । अर्जुनले अब त्यस्तो विराट् स्वरूपको दर्शन पाउने भएका छन् ।

**इहैकस्थं जगत्कृत्स्नं पश्याद्य सचराचरम् ।**
**मम देहे गुडाकेश यच्चान्यद्द्रष्टुमिच्छसि ॥ ७ ।**

हे अर्जुन ! अब मेरो यस शरीरमा एउटा ठाउँमा स्थित चराचर सहित सम्पूर्ण जगतलाई हेर तथा अरू पनि जे केही हेर्न इच्छुक छौँ, त्यस्लाई हेर ।

यस संसारमा रहेका जड तथा चेतन वस्तुहरूको अधिष्ठाता श्रीकृष्ण हुनुहुन्छ । तिनीहरूको संचालक पनि उहाँनै हुनुहुन्छ । जमिन, नदी, पहाड सबै उहाँको मायाबाट उत्पत्ति भएका हुन । हामीमा रहेको आत्मा पनि उहाँकै अंश हो । तसर्थ हामीले श्रीकृष्णको वास्तविक रूपलाई यदि हेर्यौं भने हामीलाई ती सबै उल्लेखित कुराहरू देखिनु पर्ने हो । तसर्थ उहाँले भन्नु हुन्छ तिमी जे पनि हेर्न चाहान्छौँ, मेरो शरीरमा हेर । तिमीले यस समय तथा भविष्यमा पनि जे हेर्न चाहान्छौ, त्यस्लाई यस विश्वरूपले देखाउने छ । यहाँ एउटै स्थानमा चर तथा अचर दुबै छन् । कुनै पनि सामान्य व्यक्तिले एउटा स्थानमा बसेर सारा विश्वलाई अवलोकन गर्न सक्दैन । तर श्रीकृष्णले अर्जुनलाई एकै ठाउँमा बसेर सारा विश्वका गतिविधिहरू हेर्न सक्ने शक्ति दिनु भएको छ । यो शक्ति पाएर उनीले भूत, भविष्य तथा वर्तमानमा भएका, भइरहेका तथा हुने सबै संरचना तथा क्रियाहरू हेर्न सक्छन् । यो श्रीकृष्णको अनुग्रह थियो र उनीले विश्वका सबै वस्तुहरू हेर्न सक्ने भए ।

**न तु मां शक्यसे द्रष्टुमनेनैव स्वचक्षुषा ।**
**दिव्यं ददामि ते चक्षुः पश्य मे योगमैश्र्वरम् ॥ ८ ॥**

तर मलाई तिमीले आफ्ना यी प्राकृतिक आखाद्वारा देख्न निःसन्देह समर्थ छैनौ, त्यसैले म तिमीलाई दिव्य तथा अलौकिक चक्षु(आँखा) दिन्छु, यसले तिमीले मेरो ईश्वरीय योगशक्तिलाई हेर ।

तिमीले आफ्ना ती सामान्य आँखाहरूले मेरो दिव्य स्वरूपलाई देख्न सक्दैनौँ । प्रकृतिको प्राकृतिक शक्तिको सीमा पनि श्रीकृष्णसम्म पुग्न सक्दैन रहेछ र प्राकृतिक आंखाले अर्जुनले उहाँको विराट् स्वरूपलाई देख्न सक्दैनन् भनिएको छ । म तिमीलाई दिव्य तथा अलौकिक आँखा दिन्छु । त्यसले तिमीले मेरो योग ऐश्वर्यलाई हेर । भगवत् कृपाले भक्तहरूले उहाँको विराट् स्वरूपको दर्शन दिव्य चक्षुहरूले हेर्न सक्दछन् । मनले चाहेर मात्र हुन्न । अवधारणा तथा दृष्टिमा परिवर्तनको आवश्यकता हुने गर्दछ । अर्जुनलाई विराट् स्वरूपको दर्शन गर्न उहाँबाट विशिष्ट दृष्टि दिइएको छ ।

संजय उवाच (भन्दछन्)

**एवमुक्त्वा ततो राजन्महायोगेश्र्वरो हरिः ।**
**दर्शयामास पार्थाय परमं रूपमैश्र्वरम् ॥ ९ ॥**

संजयले भनेः हे राजन ! महायोगश्वर र सबै पापहरूलाई नाश गर्ने भगवान्ले यसरी भनेर त्यसपछि अर्जुनलाई परम ऐश्वर्ययुक्त दिव्य स्वरूप देखाउनु भयो ।

कुरूक्षेत्रको युद्धभूमिमा आँखाले देखेका सबै विवरणहरू संजयले धृतराष्ट्रलाई सुनाइरहेको छन् । संजयको माध्यमले नै यो गीता हामी समक्ष आएको हो । अब अर्जुनले जे देख्नेछन् त्यो विराट् स्वरूप संजयले पनि देख्नेछन् । धृतराष्ट्रले त देख्न सक्दैनन् । तर संजयको माध्यमले सुन्न त पाउँछन् । यसप्रकार श्रीकृष्णले आफ्नो दिव्य स्वरूप देखाउनु भयो ।

**अनेकवक्त्रनयनमनेकाभ्दुतदर्शनम् ।**
**अनेकदिव्याभरणं दिव्यानेकोद्यतायुधम् ॥ १० ॥**
**दिव्यमाल्याम्बरधरं दिव्यगन्धानुलेपनम् ।**
**सर्वाश्र्चर्यमयं देवमनन्तं विश्र्वतोमुखम् ॥ ११ ॥**



अनेक मुखहरू तथा आँखाहरू भएको, अनेक अद्भुत दर्शनहरू भएको, विभिन्न दिव्य भूषणहरूले युक्त र धेरै दिव्य शस्त्रहरूलाई हातहरूमा बोकेको, दिव्य माला तथा वस्त्रहरू धारण गरेको र दिव्य गन्धहरू सम्पूर्ण शरीरमा लेपन गरेको, सबै प्रकारका आश्चर्यहरूले युक्त भएर, सीमारहित र सबैतिर मुखहरू भएको विराट्स्वरूप परम देव परमेश्वरलाई अर्जुनले देखे ।

अर्जुनले त्यस विराट् विश्वरूपमा असङ्ख्य मुखहरू, असङ्ख्य आँखाहरू तथा असङ्ख्य आश्चर्यजनक दृश्यहरू देखे । यो रूप विभिन्न दैवी आभूषणहरूद्वारा अलङ्कृत छ । हातहरूले विभिन्न दैविक हतियारहरू बोकेका छन् । दैवी माला तथा वस्त्रहरूले सुसज्जित छन् । त्यस्मा अनेक दिव्य सुगन्ध रहेको अनुभूति भइरहेको छ । सबै कुराहरू आश्चर्यमय, तेजमय, असीम तथा सर्वत्र व्याप्त रहेको महशुस भइरहेको छ । अर्जुनले भगवान्को जुन स्वरूपलाई देखिरहेको छन् त्यसमा हातहरू, मुखहरू तथा खुट्टाहरू असीमित छन् । त्यो स्वरूप सम्पूर्ण ब्रह्माण्डमा फैलिएको छ । तर भगवान्को कृपाले त्यो दृश्य अर्जुनले एउटै स्थानमा बसेर हेरिरहेको छन् । पूर्वमा विभिन्न श्लोकहरूद्वारा वर्णित सबै तथ्यहरूलाई स्पष्टतया यस स्वरूपमा देखाइरहिएको छ ।

**दिवि सूर्यसहस्रस्य भवेद्युगपदुत्थिता ।**
**यदि भाः सदृशी सा स्याम्दासस्तस्य महात्मनः ॥ १२ ॥**

आकाशमा हजारौ सूर्यहरू एकैपल्ट उदाउँदा जुन प्रकाश हुन्छ, त्यो पनि त्यस विश्वरूप परमात्माको प्रकाश समान सायदै होला ।

अर्जुनले जे देखे त्यो भनी नसक्नु छ । तथापि संजयले धृतराष्ट्रलाई त्यस महान दर्शनको मानसिक चित्र पस्किने प्रयत्न गरिरहेको छन् । परम पुरुषको विश्वरूप हजारौँ सूर्यहरूको तेज जस्तो तेजिलो छ भनी अर्जुनले अनुभूति गरे । हामीले सूर्यसँग आँखा जुधाउन सक्दैनौँ । श्रीकृष्णको विराटरूपलाई हेर्नु भनेको हजारौँ सूर्यलाई हेरेको भन्दा बढी हो । अर्जुनले त्यस स्वरूपलाई प्राकृत आँखाले हेर्न सम्भव नभएकोले त्यस स्वरूपलाई हेर्न उनीलाई दिव्य चच्छु दिइएको छ । संजयले हजार सूर्यको प्रकाश भन्दा बढी उज्यालो त्यहाँ देखिरहिएको छ भनी धृतराष्ट्रलाई भने ।

**तत्रैकस्थं जगत्कृत्स्नं प्रविभक्तमनेकथा ।**
**अपश्यद्देवदेवस्य शरीरे पाण्डवस्तदा ॥ १३ ॥**

पाण्डुपुत्र अर्जुनले त्यसबेला अनेक प्रकारले विभक्त भएको अर्थात बेग्ला–बेग्लै रहेको सम्पूर्ण जगतलाई देवताहरूको देवता श्रीकृष्ण भगवान्को त्यस शरीरमा एक ठाउँमा स्थित देखे ।

त्यसबेलामा अर्जुनले भगवान्को विश्वरूपमा हजारौँ भागहरूमा विभक्त रहेका ब्रह्माण्डका अनन्त अंशहरूलाई एउटै ठाउँमा देख्नसके । अर्जुनले विश्वरूप देख्दा अर्जुन तथा श्रीकृष्ण दुबै रथमा छन् । युद्ध भूमिमा रहेका अन्य व्यक्तिहरूले त्यस रूपलाई देख्न सकेनन्, किनकि श्रीकृष्णले अर्जुनलाई मात्र दिव्य दृष्टि दिनु भएको छ । उनीले श्रीकृष्णको त्यस विराट स्वरूपमा हजारौँ लोकहरू देखे । वैदिक शास्त्रहरू बमोजिम ब्रह्माण्डहरू अनेक छन् तथा लोकहरू पनि अनेक छन् । कुनै लोक माटोले बनेको छ, कुनै लोक सुनको, कुनै रत्नको, कुनै धेरै ठूलो छ तथा कुनै अलिक सानो छ । आफ्नो रथमा बसेर अर्जुनले ती सबै देखिरहेका छन् । उनले लोकमा रहेका चराचरहरू, प्राकृतिक सम्पदाहरू तथा मानिसहरूका आत्माहरू सबै देखे ।

**ततः स विस्मयाविष्टो हृष्टरोमा धनंजयः ।**
**प्रणम्य शिरसा देवं कृताञ्जलिरभाषत ॥ १४ ॥**

त्यसपछि अन्त नहुने त्यस आश्चर्यले चकित र खुशी शरीर भएको अर्जुनले प्रकाशमय विश्वरूप परमात्मालाई श्रद्धा भक्तिले टाउको निहुराएर प्रणाम गरेर हात जोडेर भने ।

त्यस रूपलाई देखेपछि अर्जुन आश्चर्यचकित तथा खुशी भए । त्यस रूपले उनीलाई रोमाञ्चित तुल्यायो । त्यस रूपलाई उनीले आफ्नो टाउको निहुराएर हातहरू जोडेर भगवान्लाई प्रणाम गर्न लागे । दुइ जीवहरूको बीच, देवताहरूको बीच, तथा भगवान् र भक्तको बीच हुने पारस्परिक सम्बन्धको सागर श्रीकृष्ण हुनुहुन्छ । त्यस्तो विशाल स्वरूपलाई देखिसकेपछि नतमस्तक भएर बडो आदरपूर्वक श्रीकृष्णलाई उनीले प्रणाम गरे । अर्जुनको प्रेमपूर्वक रहेको मित्रता यसरी अझै बढी आदरपूर्ण, श्रद्धापूर्ण तथा भक्तिपूर्ण बन्न पुग्यो । यस प्रकार द्विविधामा रहेको अर्जुनलाई श्रीकृष्णले ज्ञानका उपदेशहरू दिएर विराट् दिव्य विश्वरूपको दर्शन गराइसकेपछि उनी नतमस्तक हुन पुगे ।



अर्जुन उवाच (भन्दछन्)

**पश्यामि देवांस्तव देव देहे**
**सर्वांस्तथा भूतविशेषसङ्घान् ।**
**ब्रह्माणमीशं कमलासनस्थ–**
**मृषींश्च सर्वानुरगांश्च दिव्यान् ॥ १५ ॥**

अर्जुनले भने : हे देव ! मैले हजुरको शरीरमा सम्पूर्ण देवताहरूलाई तथा विभिन्न भूतहरूको समुदायहरूलाई, कमलको आसनमा विराजित ब्रह्मालाई, महादेवलाई र सम्पूर्ण ऋषिहरूलाई तथा दिव्य सर्पहरूलाई देख्दैछु ।

हात जोडेर आश्चर्यले भरिएको अर्जुनले ब्रह्माण्डको प्रत्येक वस्तु त्यस विराट स्वरूपमा देखिरहेका छन् । उनीले ब्रह्माण्डको प्रथम प्राणी ब्रह्मालाई तथा त्यस दिव्य सर्पलाई जस्मा गर्भोदकशायी विष्णु ब्रह्माण्डको अधोतलमा शयन गर्नुहुन्छ लाई देखिरहेका छन् । यसको अर्थ के भने अर्जुनले आदिदेखि अन्त्यसम्मका सबै वस्तुहरू आफ्नो रथमा एउटै स्थानमा बसेर देखिरहेका छन् । श्रीकृष्णले यस अघिका श्लोकहरूमा वर्णन गर्दै जस्तो रूप बताउनु भएको थियो त्यो रूप अर्जुनले आफ्नो अगाडि देखे ।

**अनेकबाहूदरवक्त्रनत्रं**
**पश्यामि त्वां सर्वतोऽनन्तरूपम् ।**
**नान्तं न मध्यं न पुनस्तवादिं**
**पश्यामि विश्र्वेश्र्वर विश्र्वरूप ॥ १६ ॥**

हे सम्पूर्ण विश्वका स्वामी ! हजुरलाई अनेक हातहरू, पेटहरू, मुखहरू र आँखाहरूयुक्त तथा सबैतिरबाट अनन्त रूप भएको देख्दैछु । हे विश्वरूप ! मैले न हजुरको अन्तलाई देख्दैछु, न मध्यलाई र न आदिलाई देख्दैछु ।

श्रीकृष्णको योगमायाको शक्तिले उहाँका भक्तहरूलाई उहाँले आवश्यकता बमोजिम जे पनि देखाउन सक्नुहुन्छ । उहाँका विभिन्न हातहरू, मुखहरू, आँखाहरू तथा अनेक दिशामा अनन्त रूपमा रहेको अर्जुनले देखिरहेका छन् । यस्तो विशाल रूपको न कतै प्रारम्भ भएको, न कतै मध्यमा रहेको र नै कतै अन्त रहेको अर्जुनले देखे ।

**किरीटिनं गदिनं चक्रिणं च**
**तेजोराशिं सर्वतो दीप्तिमन्तम् ।**
**पश्यामि त्वां दुर्निरीक्ष्यं समन्ता–**
**द्दीप्तानलार्कद्युतिमप्रमेयम् ॥ १७ ॥**

हजुरलाई म मुकुटयुक्त, गदायुक्त र चक्रयुक्त तथा सबै तिरबाट प्रकाशमान तेजको पुञ्ज, प्रज्वलित अग्नि र सूर्यको समान ज्योतियुक्त, गाह्रोगरी देखिन सकिने र सबै तिरबाट अप्रमेय वा अपार स्वरूपमा देख्दैछु ।

अर्जुनले कसैगरी शब्दहरूद्धारा आश्चर्य प्रकट गर्दै भन्दछन् कि हजुरको रूपलाई अत्यधिक उज्यालो तेजको कारणले मलाई हेर्न कठिन भइरहेको छ । किनकि त्यो प्रज्वलित अग्नि जस्तो वा सूर्यको अपार प्रकाशको जस्तो चारैतिर फिजिरहेको छ । तापनि यो तेजोमय रूपलाई म देखिरहेको छु । विभिन्न मुकुटहरू, गदाहरू तथा चक्रहरूव्दारा त्यो रूप विभूषित छ । यो देखिसकेपछि अर्जुनले श्रीकृष्णको त न आदि छ र नै अन्त्य रहेछ भनी बुझे । उहाँ त सबैतिर हुनुहुन्छ भनी अर्जुनले महशुस गरिरहेको छन् ।

**त्वमक्षरं परमं वेदितव्यं**
**त्वमस्य विश्र्वस्य परं निधानम् ।**
**त्वमव्ययः शाश्र्वतधर्मगोप्ता**
**सनातनस्त्वं पुरूषो मतो मे ॥ १८ ॥**

हजुर नै बुझ्ने योग्य परम अक्षर अर्थात परब्रह्म परमात्मा हुनुहुन्छ, हजुर नै यस जगतको परम आश्रय हुनुहुन्छ, हजुर नै अनादि धर्मको रक्षक हुनुहुन्छ र हजुर नै अविनाशी सनातन पुरूष हुनुहुन्छ । यस्तो मेरो धारणा रहेको छ ।

जे सुनेको थिए अब त्यसैलाई देखेर अर्जुनको अन्तःकरणले श्रीकृष्णलाई चिनिरहेको छन् । श्रीकृष्णले भन्नु भएको थियो कि उहाँ परम अक्षर हुनुहुन्छ, जो क्षय वा नाश हुँदैन । श्रीकृष्णले यो पनि भन्नु भएको थियो कि जब केही थिएन तब पनि उहाँ हुनुहुन्थ्यो । यस अघिका ती समयहरूको बारेमा पनि श्रीकृष्णलाई थाहा छ जब अर्जुन जन्मेकै थिएनन् तथा भविष्यमा आउने त्यस समयलाई पनि उहाँले जान्नु हुन्छ जो अहिले आएकै छैन । त्यसैले अर्जुनले श्रीकृष्णलाई यस जगतको परम आश्रय, अनादि धर्मको रक्षक, अविनाशी सनातन पुरूष हुनुहुन्छ भनी बताइरहेका



छन् । श्रीकृष्णको विराट् स्वरूपलाई देखेर अब अर्जुनले बुझिरहेका छन कि किन श्रीकृष्ण सनातन पुरूष हुन र किन चारैतर्फ उहाँका हातहरू तथा मुखहरू छन् । सबैतिर मात्र श्रीकृष्ण हुनुहुन्छ, अरू केही पनि छैन ।

**अनादिमध्यान्तमनन्तवीर्य–**
**मनन्तबाहुं शशिसूर्यनेत्रम् ।**
**पश्यामि त्वां दीप्तहुताशवक्त्रं**
**स्वतेजसा विश्र्वमिदं तपन्तम् ॥ १९ ॥**

हजुरलाई आदि, अन्त र मध्यभन्दा रहित, अनन्त सामर्थ्यले युक्त, अनन्त हातहरू भएको, चन्द्र–सूर्य जस्ता आंखा भएको, प्रज्वलित अग्निरूप मुख भएको र आफ्नो तेजले यस जगतलाई संतप्त गरिरहेको देखिरहेको छु ।

श्रीकृष्णलाई विराट रूपमा देखिसकेपछि अर्जुनले भन्दैछन् कि हजुर आदि, मध्य तथा अन्तरहित हुनुहुन्छ । हजुरले जगतको पालना गरिरहेको म देख्दैछु । हजुर का सामर्थ्यहरू तथा यशहरू अनन्त छन् । हजुरका असङ्ख्य हातहरू छन्, चन्द्रमा तथा सूर्य हजुरका आँखाहरू हुन् । हजुरको मुखबाट निस्किरहेको प्रज्वलित आगो र हजुरको तेजले यस सम्पूर्ण ब्रह्माण्डलाई जलाइरहेको म देख्दैछु । भगवान् षड्ऐश्वर्यहरूः ज्ञान, शक्ति, बल, ऐश्वर्य, वीर्य तथा तेज सहितका कर्म विपाक्हरूः क्लेश, कर्म, विपाक्, आशयरहित हुनुहन्छ । श्रीकृष्णको यही तेजले सम्पूर्ण जगतको पालन–पोषण गरिरहेको छ ।

**द्यावापृथिव्योरिदमन्तरं हि**
**व्याप्तं त्वयैकेन दिशश्र्च सर्वाः ।**
**दृष्ट्वाद्भुतं रूपमुग्रं तवेदं**
**लोकत्रयं प्रव्यथितं महात्मन् ॥ २० ॥**

हे महात्मन ! यो स्वर्ग र पृथ्वी बीचको सम्पूर्ण आकाश तथा सबै दिशाहरू एउटा हजुरबाटै परिपूर्ण छन् तथा हजुरको यस अलौकिक र भयङ्कर रूपलाई देखेर तीनै लोकहरूले अति व्यथाको अनुभव गरिरहेका छन् ।

यस पृथ्वी तथा स्वर्ग बीचको सम्पूर्ण आकाश तथा सम्बध्द सबै दिशाहरू मात्र हजुरबाटै परिपूर्ण छन् । हजुरको यस अद्भूत तथा भयानक रूपलाई देखेर तीनै

लोकहरू त्रसित भएका छन् । त्यस विश्वरूपको तेजोमय प्रकाशले सबै लोकहरू प्रकाशमय हुनपुगे । दिव्य दृष्टि भएकाहरूले त्यस अद्भूत रूपलाई देखेर तर्से । हामीले यस संसारलाई हेर्दा तल पृथ्वी, बीचमा वायु तथा माथि आकाश देखिन्छ । यी तीनै बीचको संसार देखिन्छ, यस्मा विचरण गरिरहेका प्राणीहरू देखिन्छन् । यसै बीचको स्वर्ग तथा पृथ्वी बीच सम्पूर्ण आकाश तथा सबै दिशाहरू श्रीकृष्णबाटै परिपूर्ण भयो । यो अलौकिक दृश्य जो यस लोकको होइन । यो रूप यस्तो भयङ्कर वा डर लाग्दो छ कि तीनै लोकहरूले डरको कारणले अति व्यथा प्राप्त गरिरहेका छन भनी अर्जुनले त्यस दिव्य रूपको वर्णन गरे ।

**अमी हि त्वां सुरसङ्घा विशन्ति**
**केचिम्दीताः प्राञ्जालयो गृणन्ति ।**
**स्वस्तीत्युक्त्वा महर्षिसिध्दसङ्घाः**
**स्तुवन्ति त्वां स्तुतिभिः पुष्कलाभिः ॥ २१ ॥**

तीनै देवताहरूको समुह हजुरमा प्रवेश गर्दैछन् र केही भयभित भएर हात जोडेर हजुरको नाम तथा गुणहरूलाई उच्चारण गर्दैछन् तथा महर्षि तथा सिद्धहरूको समुदाय 'कल्याण होस् !' यस्तो भनेर उत्तम-उत्तम स्तोत्रहरूव्दारा हजुरको स्तुति गर्दैछन् ।

अर्जुनले श्रीकृष्णको विराट् स्वरूपलाई देखेर आफुले बुझे बमोजिम त्यस्को वर्णन गर्दैछन् । पृथ्वीदेखि आकाशसम्मका सबै दिशाहरूमा उनीलाई मात्र श्रीकृष्ण देखिरहिएको छ । देवताहरूको सारा समूहले हजुरको शरण लिएर हजुरमै प्रवेश गर्दैछन् । त्यसमध्ये केही अत्यन्तै भयभित भएर हात जोडेर हजुरको प्रार्थना गर्दैछन् । महर्षिहरू तथा सिद्धहरूको समूहहरूले हजुरको जय होस् !, कल्याण होस् ! भन्दै वैदिक स्तोत्रहरूको पाठ गरेर हजुरको स्तुति गर्दैछन् । यसरी सबै लोकहरूका देवता, महर्षिहरू, सिद्धहरू विश्वरूपको भयानकतालाई देखेर भयभित भई रक्षाको लागि हजुरको प्रार्थना गर्दैछन् । चराचर जगत होस् वा देवताहरूको जगत होस् सबैले श्रीकृष्णबाट उत्पत्ति पाउँदछन् तथा सम्बर्धन पाउँदै अन्तमा त्यसैमा प्रवेश पाउँछन् ।

**रूद्रादित्या वसवो ये च साध्या**
**विश्वेऽश्विनौ मरूतश्चोष्मपाश्च ।**



**गन्धर्वयक्षासुरसिद्धसङ्घा**
**वीक्षन्ते त्वां विस्मिताश्चैव सर्वे ॥ २२ ॥**

जुन एघार रूद्रहरू र बाह्र सूर्यहरू तथा आठ वसुहरू, साध्यगण, विश्वेदेव, अश्विनीकुमार तथा मरूग्दण र पितृहरूको समुदाय तथा गन्धर्व, यक्ष, राक्षस तथा सिद्धहरूको समुदाय छन्-ती सबैले विस्मित वा आश्चर्यचकित भएर हजुरलाई हेरिरहेका छन् ।

कालान्तरमा शिवले एघार रूपमा प्रकट भई देवताको रक्षा गरेको थिए । त्यस विराट् स्वरूपमा ती शिवका विविध रूपहरू, देव आदित्यगण, देव वसु, साध्यगण, विश्वेदेव, दुबै अश्विनीकुमारहरू, मरूद्गण, पितृगण, गन्धर्व, यक्ष, असुर तथा सिद्धदेव सबैले श्रीकृष्णलाई आश्चर्यचकित भएर हेर्दैछन् भनेर अर्जुनले भनिरहेका छन् । यस्तो श्रीकृष्णको रूपलाई देखेर के मानिस, के देवगण सबै नै आश्चर्यचकित भएका छन् ।

**रूपं महत्ते बहुवक्त्रनेत्रं**
**६ महाबाहो बहुबाहूरूपादम् ।**
**बहूदरं बहुदंष्ट्राकरालं**
**दृष्ट्वा लोकाः प्रव्यथितास्तथाहम् ॥ २३ ॥**

हे महाबाहो ! हजुरका धैरै मुखहरू र आँखाहरू भएका, धेरै हातहरू, तिघ्राहरू र खुट्टाहरू भएका, धेरै पेटहरू र धेरै चौडाई भएका दाँतहरूको कारण धेरै नै विकराल महान रूपलाई हेरेर सबै मानिसहरू हैरान भइरहेका छन तथा म पनि हैरान भइरहेको छु ।

विराट् स्वरूपको बारेमा बर्णन गर्दै अर्जुन भन्दैछन् कि हजुरको यी धेरै सङ्ख्यामा रहेका विभिन्न अङ्गहरू देखेर देवतागण, म लगायत साधारण मानिसहरू आश्चर्यचकित र विचलित भइरहेका छन् । श्रीकृष्णको बालरूप, गोपीहरूसँगका विभिन्न रूपहरू आदिमा उहाँको बारेको खासै सत्यता छैन । असल सत्यता त उहाँको दिव्य विराट् रूपमा रहेको छ । यो रूप विराट्को साथ-साथै विकराल पनि छ । यो कालरूपलाई देखेर सबैले धैर्य गुमाएका छन् ।

**नभःस्पृशं दीप्तमनेकवर्णं**
**व्यात्ताननं दीप्तविशालनेत्रम् ।**

**दृष्ट्वा हि त्वां प्रव्यथितान्तरात्मा**
**धृतिं न विन्दामि शमं च विष्णो ॥ २४ ॥**

किनकि हे विष्णो ! आकाशलाई स्पर्श गर्ने, देदीप्यमान, धेरै वर्णहरूले युक्त तथा फराकिलो बनाइएको मुख र प्रकाशमान विशाल आँखाहरू भएको हजुरलाई देखेर भयभीत अन्तःकरण भएको मैले धैर्य र शान्ति पाइन ।

हे सर्वव्यापी विष्णु ! विभिन्न ज्योतिर्मय रंगहरू भएको हजुरले आकाशलाई स्पर्श गरिरहेको, मुख फैलाएको तथा ठूल-ठूला चम्किला आँखाहरू गरेको देखेर डरले मेरो मन विचलित भएको छ । मैले त न धैर्य संगाल्न सकेको छु र नै मानसिक सन्तुलन कायम गर्न सकेको छु । श्रीकृष्णको विराट् स्वरूप पृथ्वीबाट सुरू भई आकाशसम्म फैलिरहेको छ । मुखबाट एउटा ज्योति निस्किरहेको छ । प्रकाशले भरिएका आँखाहरूले सबैतिर हेरिरहेका छन् । यस्तो भनिन्छ कि भगवान्को एक झलक पाउने बित्तिक्कै मनमा शान्ति प्राप्त हुन्छ । तर यहाँ यस्तो भइरहेको छैन । श्रीकृष्णको विराट् स्वरूपलाई देखेर अर्जुनको अन्तःकरण भयभित भइरहेको छ, उनीमा धैर्य तथा शान्ति हराइरहेको छ । श्रीकृष्णमा सबै कालहरू, सबै लोकहरू समाविष्ट भएका छन् । यो सबै अति भयङ्कर देखिने भएको अर्जुनले महशुस गरिरहेको छन् ।

**दंष्ट्राकरालानि च ते मुखानि**
**दृष्ट्वैव कालानलसन्निभानि ।**
**दिशो न जाने न लभे च शर्म**
**प्रसीद देवेश जगन्निवास ॥ २५ ॥**

दाँतहरूको कारणले विकराल र प्रलयकालको अग्नि जस्तो प्रज्वलित हजुरको मुखहरूलाई देखेर मैले दिशाहरू बिर्सिसके र सुख पनि पाउँदिन । त्यसकारणले हे देवेश ! हे जगन्निवास ! हजुर प्रसन्न हुनुहोस् ।

हजुर मसँग प्रसन्न हुनु होस् । यसप्रकारले हजुरको प्रलयाग्नि स्वरूप मुखहरूलाई र विकराल दाँतहरूलाई देखेर मैले मेरो सन्तुलन कायम गर्न सकेको छैन् । भयङ्कर तथा विकराल रूप सबैतिर फैलिएको छ । यसका हरेक तर्फ मुखहरू छन् र हरेक तर्फ हातहरू छन् । त्यसकारण अर्जुन अन्योलग्रस्त र भयभीत छन् । उनी दिशाबोध बिहीन भइरहेको छन् ।



**अमी च त्वां धृतराष्ट्रस्य पुत्राः**
**सर्वे सहैवावनिपालसङ्घैः ।**
**भीष्मो द्रोणः सूतपुत्रस्तथासौ**
**सहास्मदीयैरपि योधमुख्यैः ॥ २६ ॥**
**वक्त्राणि ते त्वरमाणा विशन्ति**

**दंष्ट्राकरालानि भयानकानि ।**
**केचिद्विलग्ना दशनान्तरेषु**
**संदृश्यन्ते चूर्णितैरुत्तमाङ्गैः ॥ २७ ॥**

ती सबै धृतराष्ट्रका पुत्रहरू राजाहरूको समुदाय सहित हजुरमा प्रवेश गरिरहेका छन् र भीष्मपितामह, द्रोणाचार्य तथा त्यो कर्ण र हाम्रा पक्षका पनि प्रधान योद्धाहरू सहित सबै हजुरका दाँतहरूको कारण विकराल भयानक मुखहरूमा बडो तेज गतिले कुद्दै प्रवेश गरिरहेका छन र धेरैजसो टाउको सहित धूलो भएर हजुर को दाँतहरूको बीचमा रहेका देखिन्छन् ।

यहाँ अर्जुनले देखिरहेका छन् कि विपक्षका सैन्य नेताहरू : भीष्म, द्रोण, कर्ण, धृतराष्ट्रका सबै छोराहरू, तिनलाई साथ दिने सैनिकहरू तथा अर्जुन पक्षका पनि केही सैनिकहरूको पनि विनाश भइरहेको छ । यहाँ यो पनि बताइएको छ कि भीष्म जस्लाई अजेय मानिन्थ्यो उहाँ पनि ध्वस्त हुनुहुने छ । त्यही गति कर्णको पनि हुनेछ । मात्र विपक्षका नेताहरू होइनन कि अर्जुन पक्षका केही नेताहरूको पनि विनास हुनेछ । यो विकराल दृश्य निक्कै डरलाग्दो छ । उनीले आफ्नो दिव्य दृष्टिले यी सबै हेरिरहेका छन् । अर्जुनले हेर्न खोजेको विराट् रूप श्रीकृष्णले उनीलाई देखाए ।

**यथा नदीनां बहवोऽम्बुवेगाः**
**समुन्द्रमेवाभिमुखा द्रवन्ति ।**
**तथा तवामी नरलोकवीरा**
**विशन्ति वक्त्राण्यभिविज्वलन्ति ॥ २८ ॥**

जसरी नदीहरूको धेरैजसो जलको प्रवाह स्वाभाविक रूपमा समुन्द्रको सम्मुख कुद्छन अर्थात समुन्द्रमा प्रवेश गर्दछन्, त्यस्तै नै ती नरलोकका वीरहरू हजुरका मुखहरूमा प्रवेश गर्दैछन् ।

जस प्रकार नदीहरूका जल कुद्दै समुन्द्रमा प्रवेश गर्दछन्, त्यस्तै यी समस्त नरलोकका वीरहरू वा महाभारतको धर्मयुद्धमा सहभागी भएका महान योद्धाहरू हजुरका प्रज्वलित मुखहरूमा प्रवेश गर्दैछन् । जीवनका यथार्थहरू क्रुर रूपमा अर्जुन तथा श्रीकृष्णको सामुन्ने पेश भइरहेको दृष्य हो यो । यही कुरो श्रीकृष्णले भन्नु पनि भएको थियो कि एकदिन सबै उहाँमै प्राप्त हुन्छन् । योद्धाहरूले आ-आफ्ना कर्महरू गर्दै लड्ने छन्, वीरगति प्राप्त गर्ने छन ती पनि श्रीकृष्णलाईनै प्राप्त हुनेछन् । त्यस्तै यहाँ पनि भइरहेको छ ।

**यथा प्रदीप्तं ज्वलनं पतङ्गा**
**विशन्ति नाशाय समृद्धवेगाः ।**
**तथैव नाशाय विशन्ति लोका–**
**स्तवापि वक्त्राणि समृद्धवेगाः ॥ २९ ॥**

जसरी किराहरू मोहवश नष्ट हुनको लागि प्रज्वलित अग्निमा धेरै वेगका साथ कुद्दै प्रवेश गर्दछन, त्यस्तै यी सबै मानिसहरू पनि आफ्नो नाशको लागि हजुरको मुखमा कुद्दै प्रवेश गरिरहेका छन् ।

समस्त मानिसहरूलाई पूर्ण वेगले हजुरको मुखमा त्यसरीनै प्रवेश भएको र नष्ट भएको म देखिरहेको छु, जसरी फट्याङ्ग्रा लगायतका किराहरू आफ्नो विनाशको लागि प्रज्वलित अग्निमा हाम्फाल्दछन् । यसरी होमिएर नाश हुने कार्य सदियौंदेखि वा प्रकृतिको सुरुवातदेखिनै हुँदै आइरहेको छ । यो मोह कस्तो हुन्छ जस्ले किराहरूलाई ज्योतितर्फ तानेर ल्याउँछ । श्रीकृष्णले बताउनु भएको छ कि हरेक मानिसको स्वभाव उस्को सङ्कल्पले हुन्छ । अर्जुनले यो हेरिरहेका छन् कि अग्निमा जलिरहेका किराहरू सरह सबै जीवहरू प्रज्वलित अग्निमा कुद्दै गइरहेका छन् । यही त यी योद्धाहरूको पनि नियति रहेको छ । यसरीनै यिनीहरूको अन्त कायम गरिएको छ ।

**लेलिह्यसे ग्रसमानः समन्ता–**
**ल्लोकान्समग्रान्वदनैर्ज्वलम्दिः ।**
**तेजोभिरापूर्य जगत्समग्रं**
**भासस्तवोग्राः प्रतपन्ति विष्णो ॥ ३० ॥**



हजुरले ती सम्पूर्ण लोकहरूलाई प्रज्वलित मुखहरूव्दारा ग्रास गर्दै (खाँदै) सबैतिरबाट पटक-पटक चाट्दै हुनुहुन्छ, हे विष्णो ! हजुरको उग्र प्रकाशले सम्पूर्ण जगतलाई तेजव्दारा परिपूर्ण गरेर तातो पारिरहेको छ ।

हे विष्णो ! म हेर्दैछु कि हजुरले आफ्नो प्रज्वलित मुखव्दारा सबै दिशाहरूका मानिसहरूलाई निल्दै हुनुहुन्छ । सम्पूर्ण ब्रह्माण्डलाई आफ्नो तेजले परिपूर्ण गरेर हजुरले तातो पारिरहनु भएको छ । अर्जुन सबैभन्दा महान योद्धा हुन । अनि उनीले देखेको त्यस विराट् दृश्यले उनी व्याकुल तथा भयभित भएका छन । श्रीकृष्णका गन्न नसकिने मुखहरूबाट निस्केको अग्निले सबै विषयवस्तुहरू तातेका छन् । जति पनि योद्धाहरू तेज गतिले ती मुखतिर आइरहेका छन सबैलाई ती मुखहरूले खाँदै र सँगैमा तिनीहरूलाई चाट्दै पनि छन् । यो दृश्य साह्रै विकराल तथा विभत्स रहेको छ ।

**आख्याहि मे को भवानुग्ररूपो**
**नमोऽस्तु ते देववर प्रसीद ।**
**विज्ञातुमिच्छामि भवन्तमाद्यं**
**न हि प्रजानामि तव प्रवृत्तिम् ॥ ३१ ॥**

मलाई बताउनुस् कि हजुर उग्ररूपवाला को हुनुहुन्छ ? हे देवताहरूमा श्रेष्ठ हजुरलाई नमस्कार छ । हजुर प्रसन्न हुनुहोस् । आदिपुरूष हजुरलाई म विशेष रूपले जान्न चाहान्छु, किनकि मैले हजुरको प्रवृतिलाई जान्दिन ।

विराट् स्वरूप देखेका अर्जुनले व्याकुल भएर भगवान्लाई सोद्धछन् कि हे देवेस ! कृपा गरेर मलाई बताउनुस् कि यस्तो उग्ररूपको हजुर को हुनुहुन्छ ? म हजुरलाई नमस्कार गर्दछु, कृपा गरेर मदेखि प्रसन्न हुनुहोस् । हजुर आदि भगवान् हुनुहुन्छ । म हजुरलाई बुझ्न चाहान्छु, किनकि म हजुरको स्वभाव के हो भनी बुझिरहेको छैन । अर्जुनले आफ्नो जिज्ञासालाई शान्त गर्न श्री कृष्णसँग बिन्ति गरे कि उनी श्रीकृष्णको विश्वरूप हेर्न चाहान्छन् । तर विश्वरूप हेरिसकेपछि उनको मनमा अझै थप जिज्ञासाहरू वा प्रश्नहरू आए । त्यसमध्येको सबैभन्दा ठूलो प्रश्न कि अब उनीले श्रीकृष्णको प्रवृतिलाई जान्न चाहान्छन ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**कालोऽस्मि लोकक्षयकृत्प्रवृद्धो**
**लोकान्समाहर्तुमिह प्रवृत्तः ।**

**ऋतेऽपि त्वां न भविष्यन्ति सर्वे**
**येऽवस्थिताः प्रत्यनीकेषु योधाः ॥ ३२ ॥**

श्री भगवान्ले भन्नुभयोः म लोकहरूलाई नाश गर्ने बृह्द रूपको महाकाल हु । यतिखेर यी लोकहरूलाई नाश गर्न भनी प्रवृत भएको छु । त्यसकारणले जो-जो प्रतिपक्षहरूको सेनामा स्थित योद्धाहरू छन् ती सबै तिमी नभए पनि रहँदैनन् अर्थात् तिमीले युद्ध नगरे पनि यी सबैको नाश हुनेछ ।

श्री भगवान्ले भन्नुभयोः समस्त जगतहरूलाई विनष्ट गर्ने महाकाल मै हुँ र म यहाँ समस्त लोकहरूलाई विनाश गर्न भनी आएको छु । प्रतिपक्षमा रहेका सेनाहरू तिमी नभए पनि जसरी भए पनि मारिने छन् । कठोपनिषद्मा पनि भनिएको छ कि अन्तमा सबै ब्राह्मणहरू, क्षत्रियहरू तथा अन्य सबैले परमेश्वरव्दारा मृत्यु प्राप्त गर्नेछन् । श्रीकृष्णको यो रूपले सबैलाई भक्षण गर्नेवाला छ । श्रीकृष्णले आफुलाई सर्वभक्षी कालको रूपमा प्रश्तुत गर्नु भएको छ । केही पाण्डवहरूको अतिरिक्त युद्धभूमिमा युद्ध गर्न आएका सबैलाई उहाँले भक्षित गर्नु हुनेछ । अर्जुन युद्ध गर्ने पक्षमा थिएनन् । तर श्रीकृष्णको इच्छा बमोजिम अर्जुन न लडे पनि सबै उहाँको गाँस बन्ने निश्चित छ । अर्जुन मार्ने साधन न बने, उनीहरू अन्य विधिले मर्ने छन्, उनीहरूको मृत्यु टार्न सम्भव थिएन । तसर्थ श्रीकृष्णले अर्जुनलाई तिमीले शोक गर्दैछौ, तर तिनीहरूको मृत्यु पूर्व निर्धारित छ । तिमीले युद्ध नगरे पनि ती सबै मर्ने छन् । उनीहरूको मृत्यु युद्धको नियति हो । अनि त्यस्तै त्यहाँ भइरहेको पनि छ ।

**तस्मात्त्वमुत्तिष्ठ यशो लभस्व**
**जित्वा शत्रून् भुङ्क्ष्व राज्यं समृद्धम् ।**
**मयैवैते निहताः पूर्वमेव**
**निमित्तमात्रं भव सव्यसाचिन् ॥ ३३ ॥**

तसर्थ तिमी उठ ! यश प्राप्त गर र शत्रुहरूलाई जीतेर धन-धान्यले सम्पन्न राज्यको सुख भोग । यी सबै सूरबीरहरू पहिले नै मव्दारा मारिएका छन् । हे सव्यसाचिन (देब्रे हातले समेत बांड चलाउने) ! तिमी मात्र निमित्त बन ।

तिमी उठ । युद्ध गर्नको लागि तैयार होऊ र यश आर्जन गर । तिम्रा शत्रुहरूलाई जीतेर धन धान्यले सम्पन्न राज्यको सुख भोग गर । यी सबै सूरबीरहरू



मद्वारा पहिले नै मारिसकिएका हुन् । तिमी त युद्धमा निमित्त मात्र हुन सक्छौ । तिमी युद्धकला निपुण भएकोले तिमी निमित्त मात्र बन । यसबाट हामीले पनि निमित्त बनेर आफ्ना कर्महरू तथा कर्तव्यहरू यस संसारमा निर्वाह गर्नु पर्दछ भनी बुझ्नु पर्ने आवश्यकता छ ।

**द्रोणं च भीष्मं च जयद्रथं च**
**कर्णं तथान्यानपि योधवीरान् ।**
**मया हतांस्त्वं जहि मा व्यथिष्ठा**
**युध्यस्व जेतासि रणे सपत्नान् ॥ ३४॥**

द्रोणाचार्य, भीष्मपितामह तथा जयद्रथ र कर्ण तथा अरू पनि धेरैजसो मद्वारा मारिएका सूरवीर योद्धाहरूलाई तिमी मार । डर नमान । निःसन्देह तिमीले युद्धमा वैरीहरूलाई जित्नेछौ । तसर्थ तिमी युद्ध गर ।

द्रोण, भीष्म, जयद्रथ, कर्ण तथा अन्य महान् योद्धाहरू पहिले नै मद्वारा मारिसकिएका छन् । अतः तिमीले उनीलाई बध गर्न अलिकति पनि विचलित नहुनु । तिमी मात्र युद्ध गर । युद्धमा तिमीले आफ्ना शत्रुहरूलाई परास्त गर्नेछौ । जीव जगतका प्रत्येक योजना भगवान्द्वारा बन्दछ । तर जुन भक्तले उहाँको इच्छा बमोजिम योजनाको पालना गर्दछ, तिनीहरूलाई उहाँले श्रेय दिनु हुन्छ । भगवान्का योजनाहरू तथा कृपाहरू गुरुहरूको माध्यमव्दारा सहजतापूर्वक बुझिन्छ ।

संजय उवाच (भन्दछन्)

**एतच्छ्रुत्वा वचनं केशवस्य**
**कृताञ्जलिर्वेपमानः किरीटी ।**
**नमस्कृत्वा भूय एवाह कृष्णं**
**सगद्गदं भीतभीतः प्रणम्य ॥ ३५ ॥**

संजयले भनेः केशव भगवान्को यस वचनलाई सुनेर मुकुटधारी अर्जुनले कँम्दै हाथ जोडेर नमस्कार गरेर, तापनि अत्यन्तै भयभित भएर प्रणाम गरेर भगवान् श्री कृष्णप्रति गद्गद् वाणीले भने :-

संजयले घृतराष्ट्रलाई भने कि भगवान्को मुखबाट ती वचनहरूलाई सुनेर काँप्दै अर्जुनले हात जोडेर उहाँलाई नमस्कार गरे । किनकि अर्जुनले जे देखे त्यो

अकल्पनीयभन्दा पनि टाढाको दृश्य हुन पुग्यो । फेरि उनीले भयभित भएर अवरूद्ध स्वरले श्री कृष्णलाई यस प्रकार भने । सयौँ के हजारौँ सालहरूमा मात्र केही ज्ञानीहरूको लागि यस्तो स्वरूपको बारेमा अवगत भएको हुन्छ । सामान्य व्यक्तिहरूलाई नभए यस्को बारेमा के ज्ञान हुनु । भगवान्को विराट् विश्वरूपको कारण अर्जुन भयभित तथा आश्चर्यचकित भए । तसर्थ उनीले श्री कृष्णलाई बारम्बार नमस्कार गर्न लागे । अनि अवरूद्ध कण्ठले भक्तको रूपमा श्री कृष्णको प्रार्थना गर्न लागे ।

अर्जुन उवाच (भन्दछन्)

**स्थाने हृषिकेश तव प्रकीर्त्या**
**जगत्प्रहृष्यत्यनुरज्यते च ।**
**रक्षांसि भीतानि दिशो द्रवन्ति**
**सर्वे नमस्यन्ति च सिद्धसंघा ॥ ३६ ॥**

अर्जुनले भनेः हे अन्तर्यामिन् ! यो योग्य नै छ कि हजुरको नाम, गुण र प्रभावका कीर्तनहरूले जगत अति हर्षित भैरहेछ र अनुराग पनि प्राप्त गरिरहेछ तथा भयभित राक्षसहरू विभिन्न दिशाहरूमा भागिरहेछन र सबै सिद्धगणहरूको समुदायले हजुरलाई नमस्कार गरिरहेछन् ।

अर्जुन भावविभोर भइसकेको छन् । यस विराट स्वरूपबाट उनी निक्कै प्रभावित भएका छन् । अर्जुनले विराट स्वरूपको वर्णन गर्ने क्रममा डराएर काम्दै भन्दैछन् कि हजुर त अन्तर्यामी हुनुहुन्छ । हजुरको नामको श्रवणले संसार हर्षित भइरहेको छ । सबै मानिसहरू हजुरप्रति अनुरक्त भइरहेका छन् । सिद्धपुरूषहरूले हजुरलाई नमस्कार गरिरहेका छन् । असुरगणहरू भयभित भएर यता-उता भागिरहेछन् । त्यस विराट स्वरूपलाई देखिसकेपछि अर्जुन युद्धको परिणामबाट अवगत भए । अनि भगवान्लाई हजुरले जे गर्नुहुन्छ राम्रै गर्नुहुन्छ । यसरी अर्जुनले पुष्टि गरे कि श्रीकृष्णनै पालक हुनुहुन्छ, भक्तहरूको आराध्य हुनुहुन्छ तथा अवाञ्छित तत्वहरूको संहारकर्ता हुनुहुन्छ । उहाँको विराट स्वरूपलाई देखेर देवगणहरू प्रसन्न भए भने असुरहरू तथा नास्तिकहरू भगवान्को प्रशंसा सुन्न नसकेर भागा-भाग भए ।

**कस्माच्च ते न नमेरन्महात्मन्**
**गरीयसे ब्रह्मणोऽप्यादिकर्त्रे ।**



**अनन्त देवेश जगन्निवास**
**त्वमक्षरं सदसत्तत्परं यत् ॥ ३७ ॥**

हे महात्मन ! ब्रह्माको पनि आदिकर्ता र सबैभन्दा ठूलो हजुरको लागि उनीहरूले कसरी नमस्कार नगरून्, किनकि हे अनन्त ! हे देवेश ! हे जगन्निवास ! जुन सत्, असत् र त्योभन्दा पर अक्षर अर्थात सच्चिदानन्दघन ब्रह्म हुनुहुन्छ, त्यो हजुर नै हुनुहुन्छ ।

हजुर ब्रह्माभन्दा पनि ठूलो हुनुहुन्छ । हजुर उहाँको पनि आदि श्रष्टा हुनुहुन्छ । तसर्थ उनीहरूले हजुरलाई सादर नमस्कार किन नगरून् ? हजुर परम श्रोत, परम अक्षर, कारणहरूको पनि कारण हुनुहुन्छ तापनि यस भौतिक जगतबाट भिन्न हुनुहुन्छ । यहाँ श्रीकृष्णलाई अर्जुनले विभिन्न नामहरूः महात्मा, अनन्त, देवेश, जगन्निवासले सम्वोधन गरेका छन् । श्रीकृष्ण उदार तथा अनन्त भएकोले उहाँलाई महात्मा भनी सम्बोधन गरिएको हो । संसारमा यस्तो केही पनि छैन जो भगवान्को शक्ति तथा प्रभावभन्दा टाढा होस् । तसर्थ उहाँ अनन्त हुनुहुन्छ । देवेश भन्नाले उहाँ सबै देवगणहरूभन्दा उच्च हुनुहुन्छ तथा देवताहरू उहाँकै संरक्षण तथा नियन्त्रण रहने गर्दछन् । उहाँ सबैको आश्रयको थलो हुनुहुन्छ । यस प्रकार अर्जुनले सैद्धान्तिक रूपमा ज्ञान पाएर तथा व्यवहारिक रूपमा विराट् स्वरूप देखेर श्रीकृष्ण तथा उहाँको परा र अपरा शक्तिको बारेमा बुझ्न सके ।

**त्वमादिदेवः पुरूषः पुराण–**
**स्त्वमस्य विश्र्वस्य परं निधानम् ।**
**वेत्तासि वेद्यं च परं च धाम**
**त्वया ततं विश्र्वमनन्तरूप ॥ ३८ ॥**

हजुर आदिदेव तथा सनातन पुरूष हुनुहुन्छ, हजुर यस जगतको परम आश्रय, जान्ने तथा जान्नयोग्य र परम धाम हुनुहुन्छ । हे अनन्तरूप ! हजुरबाट यो जगत व्याप्त वा परिपूर्ण छ ।

हजुर आदिदेव, सनातन पुरूष तथा यस दृश्य जगतको परम आश्रय हुनुहुन्छ । हजुरलाई सबै कुराहरू थाहा छ र हजुर नै सबै थोक हुनुहुन्छ जो जान्नयोग्य छ । यो सम्पूर्ण दृश्य जगत हजुरको शक्ति तथा प्रभावद्वारा व्याप्त एवं सञ्चालित छ । जब विश्वमा केही पनि थिएन त्यसबेलामा श्रीकृष्ण हुनुहन्थ्यो । तसर्थ

उहाँ आदिदेव हुनुभयो । श्रीकृष्ण पहिला पनि हुनुहुन्थ्यो, अहिले पनि हुनुहुन्छ तथा यस श्रृष्टिको समाप्ति पछि पनि रहनु हुनेछ । तसर्थ उहाँ सनातन हुनुभयो । सबै जीवहरूलाई आश्रय दिने, सद्‌मार्गको अवसर उपलब्ध गराउने तथा सम्पूर्ण ब्रह्माण्डको बारेमा उहाँ एकमात्र ज्ञाता हुनुहुन्छ ।

**वायुर्यमोऽग्निर्वरूणः शशाङ्कः**
**प्रजापतिस्त्वं प्रपितामहश्र्च ।**
**नमो नमस्तेऽस्तु सहस्रकृत्वः**
**पुनश्र्च भूयोऽपि नमो नमस्ते ॥ ३९ ॥**

हजुर वायु, यमराज, अग्नि, वरूण, चन्द्रमा, प्रजाको स्वामी ब्रह्मा र ब्रह्माको पिता पनि हुनुहुन्छ । हजुरको लागि हजारौं पटक नमस्कार ! नमस्कार हजुर ‼ हजुरको लागि फेरि बारम्बार नमस्कार ! नमस्कार ‼

श्रीकृष्णको विराट रूप देखेर अर्जुन आफ्नो होस हराउन सक्ने अवस्थामा पुग्दछन् । उनीले स्वयंलाई नियन्त्रणमा ल्याउन खोज्दै भन्दछन् कि हजुर वायु, यमराज, आगो, पानी, चन्द्रमा तथा आदि जीव ब्रह्मा हुनुहुन्छ । हजुर ब्रह्माको बुवा पनि हुनुहुन्छ । तसर्थ हजुरलाई हजारौं पटक नमस्कार ! हजुरलाई फेरि पनि बारम्बार नमस्कार छ ‼

**नमः पुरस्तादथ पृष्ठतस्ते**
**नमोऽस्तु ने सर्वत एव सर्व ।**
**अनन्तवीर्यामितविक्रमस्त्वं**
**सर्वं समाप्नोषि ततोऽसि सर्वः ॥ ४० ॥**

हे अनन्त सामर्थ भएका ! हजुरको लागि अघिबाट पनि र पछिल्तिरबाट पनि नमस्कार ! हे सर्वात्मन् ! हजुरको लागि सबैतिरबाट नमस्कार छ । किनकि अनन्त पराक्रमशाली हजुरले समस्त संसारलाई व्याप्त गर्नु भएको छ, यस्बाट हजुर नै सर्वरूप हुनुहुन्छ ।

हजुरलाई अगाडि, पछाडि तथा चारैतिरबाट नमस्कार ! हे असीम शक्ति भएका ! हजुर अनन्त पराक्रमको स्वामी हुनुहुन्छ । अर्जुनले देखेको भगवान्‌को विराट् स्वरूप कुनै पनि नियन्त्रणमा वा सीमामा बांधिन सक्छ जस्तो उनीलाई लागेन ।



हजुर सर्वव्यापी हुनुहुन्छ तथा हजुर नै सबै थोक हुनुहुन्छ । यस्तो स्वरूपलाई मात्र नमस्कार गर्न सकिन्छ ।

**सखेति मत्वा प्रसभं यदुक्तं**
**हे कृष्ण हे यादव हे सखेति ।**
**अजानता महिमानं तवेदं**
**मया प्रमादात्प्रणयेन वापि ॥ ४१ ॥**
**यच्चावहासार्थमसत्कृतोऽसि**
**विहारशय्यासनभोजनेषु ।**
**एकोऽथवाप्यच्युत तत्समक्षं**
**तत्क्षामये त्वामहमप्रमेयम् ॥ ४२ ॥**

हजुरको यस प्रभावलाई नजानेर, हजुर मेरो साथी हुनुहुन्छ यस्तो मानेर प्रेमले अथवा प्रमाद (नशा वा मद) ले पनि हे कृष्ण !, हे यादव !, हे साथी ! यसरी केही नसोची नसम्झी हठात मद्वारा जे-जसो भनिएका छन् र हे अच्युत ! हजुरलाई जो मद्वारा विनोदको लागि विहार, शय्या, आसन र भोजनादिमा एक्लै अथवा ती साथीहरूको अगाडि पनि अपमानित गरिएको छ-ती सबै अपराधहरूको लागि अप्रमेयस्वरूप (बुझ्न गाह्रो) अर्थात अचिन्त्य प्रभाव भएको हजुरसँग म क्षमा माग्दछु ।

आफ्नो मित्र मानेर मैले हठपूर्वक हजुरलाई हे कृष्ण, हे यादव, हे साथी जस्ता सम्बोधनहरू गरेर बोलाएको छु । त्यसबेलामा मैले हजुरको महिमालाई जानेको थिइन । मैले मूर्खतावश तथा प्रेमवश जेसुकै पनि भनेको छु वा गरेको छु, कृपया त्यस्को लागि म क्षमा याचना गर्दछु । यति मात्र होइन मैले कतिपटक हजुर ले आराम गरेको बेलामा, सँगै पल्ट्या बेलामा, सँग-सँगै खाँदाखेर, सँगै बसेको बेलामा कहिले एक्लै भएको बेलामा, त कहिले साथीहरूको माझमा हजुरलाई अनादर गरेको छु । तसर्थ हे अच्युत ! मेरा ती समस्त अपराधहरूको लागि मलाई क्षमा गर्नुहोस् । यहाँ मित्रताको कारण अर्जुनले श्रीकृष्णसंग गरेको वा बोलेका शब्दहरूको लागि अर्जुनले क्षमा याचना गर्दैछन् । श्रीकृष्णको विराट्स्वरूप देखेपछि मात्र उनीलाई ज्ञान भयो कि श्रीकृष्ण यस्तो प्रभावपूर्ण र विराट स्वरूपको हुनुहन्छ । मित्रताको हिसाबले श्रीकृष्णलाई अर्जुनले प्रयोग गरेका केही शब्दहरू आदरसूचक नभएकोले उनीले क्षमायाचना गर्नु परेको हो ।

**पितासि लोकस्य चराचरस्य**
**त्वमस्य पूज्यश्च गुरूर्गरीयान् ।**
**न त्वसमोऽस्त्यम्यधिकः कुतोऽन्यो**
**लोकत्रयेऽप्यप्रतिमप्रभाव ॥ ४३ ॥**

हजुर यस चराचर जगतको पिता र सबैभन्दा ठूलो गुरू एवं अति पुजनीय हुनुहुन्छ, हे अनुपम प्रभाव भएका ! तीनै लोकहरूमा हजुरको समान अरू कोही छैनन, फेरि हजुरभन्दा बढी त कसरी हुनसक्छन् र !

अर्जुन अब आफ्नो होसमा फर्केर आउँदैछन् । अनि उनीले बुझिरहेका छन कि जोसँग उनीले साथी जस्तो व्यवहार गरेको थिए उहाँ त यस चर तथा अचर सम्पूर्ण दृश्य जगतको जनक हुनुहुन्छ । हजुर परम पूज्य महान आध्यात्मिक गुरू हुनुहुन्छ । हजुरको बराबरी गर्ने कोही छैनन् । उहाँको भयङ्कर रूपमा सबै सुरबीरहरू समाहित भइरहेका छन् । किनकि उनीहरू कालमा समाविष्ट हुँदैछन् । श्रीकृष्ण अनुपम प्रभाववाला हुनुहुन्छ । तीनवटै लोकहरूमा हजुरभन्दा ठूलो को हुनसक्दछ र ! श्रीकृष्ण पितातुल्य पूजायोग्य हुनुहुन्छ । उहाँले नै सर्वप्रथम ब्रह्माजीलाई वेदहरूको उपदेश दिनु भएकोले उहाँलाई आदि गुरू मानिन्छ । उहाँको महानता असीमित छ, अतुलनीय छ । उहाँभन्दा ठूलो तथा उहाँको समान न यस लोकमा र नै वैकुण्ठ लोकमा कोही छन् । अर्जुनले पहिले श्रीकृष्णलाई जे सम्झेको थिए श्रीकृष्ण त्यो हुनुहुँदो रैन'छ भनेर अर्जुनले अब बुझिसकेका छन् ।

**तस्मात्प्रणम्य प्रणिधाय कायं**
**प्रसादये त्वामहमीशमीडयम् ।**
**पितेव पुत्रस्य सखेव सख्युः**
**प्रियः प्रियायार्हसि देव सोढुम् ॥ ४४ ॥**

अतएव हे प्रभु ! मैले आफ्नो शरीरलाई राम्ररी हजुरका चरणहरूमा निवेदित गरेर, प्रणाम गरेर, स्तुति गर्ने योग्य हजुर ईश्वरलाई प्रसन्न हुनको लागि प्रार्थना गर्दछु । हे देव ! पिताले जसरी पुत्रलाई, साथीले जसरी साथीलाई र पतिले जसरी प्रियतमा पत्निको अपराधलाई सहन गर्दछन्-त्यस्तै हजुर पनि मेरा अपराधहरूलाई सहन गर्ने योग्य हुनुहुन्छ ।



हजुर प्रत्येक जीवको लागि पुजनीय भगवान् हुनुहुन्छ । तसर्थ म निहुरिएर हजुरलाई सादर प्रणाम गर्दछु तथा हजुरको कृपाको लागि याचना गर्दछु । जसरी पिताले आफ्नो पुत्रको जिद्दीपन सहन गर्दछ, एउटा मित्रले अर्को मित्रको घृष्टता सहन गर्दछ र एउटा पतिले आफ्नो प्रियतमा पत्निको अपराध सहन गर्दछ त्यस्तै हजुरले मेरा त्रुटिहरूलाई सहन गरिदिनु होस् । श्रीकृष्णका भक्तहरूले उहाँसँग विभिन्न किसिमका सम्बन्ध गाँसेका हुन्छन्, जस्तैः कसैले पुत्रवत, कसैले पतिको समान, कसैले मित्रको रूपमा तथा कसैले मालिकको रूपमा उहाँलाई मान्दछन् । श्रीकृष्ण तथा अर्जुनको सम्बन्ध मित्रताको छ । तर श्रीकृष्णको विराट्स्वरूप देखिसके पछि उनीले मित्र ठानी गरेको व्यवहारमा भए गरेका उच-निच शब्दहरूको उच्चारणको लागि क्षमा याचना गरिरहेका छन् । कुनै ठूलो वा महान व्यक्तिसँग जानेर वा नजानेर कुनै नराम्रो व्यवहार गरिएको छ र उहाँले केही पनि भन्नु भएन भने मनमा ग्लानी महशुस हुन्छ । यस्तै अर्जुनको साथमा पनि भएको छ । अर्जुनले श्री कृष्णको चरणमा निवेदन गर्दै स्तुति गर्नेयोग्य हजुर ईश्वरलाई प्रसन्न हुन म प्रार्थना गर्दछु भनी भन्दैछन् । हामीबाट पनि कही कतै गल्ति भएमा माफी माग्न सङ्कोच गर्नुहुन्न भनी हामीले यहाँ शिक्षा प्राप्त गर्दछौं ।

**अदृष्टपूर्वं हषितोऽस्मि दृष्ट्वा**
**भयेन च प्रव्यथितं मनो मे ।**
**तदेव मे दर्शय देवरूपं**
**प्रसीद देवेश जगन्निवास ॥ ४५ ॥**

पहिले नदेखेको हजुरको यस आश्चर्यजनक रूपलाई देखेर म हर्षित भइरहेको छु र मेरो मन भयले अत्यन्त व्याकुल पनि भइरहेछ, त्यसकारणले हजुरले त्यस आफ्नो चतुर्भुज विष्णु रूपलाई नै मलाई देखाउनु होस् । हे देवेश ! हे जगन्निवास ! प्रसन्न हुनुहोस् ।

श्रीकृष्ण अर्जुनको प्रिय मित्र भएकोले उनीलाई श्रीकृष्ण माथि पूर्ण विश्वास छ । आफ्नो मित्र श्रीकृष्णलाई भगवान्को रूपमा देखेर, उहाँको यत्रो ऐश्वर्य देख्दा उनी हर्षित पनि छन् । मित्रको यत्रो विराट्स्वरूप देख्दा मित्र भएको कारणले जिस्केर भनिएका शब्दहरू तथा गरिएका व्यवहारहरूप्रति भगवान्लाई मैले यस्तो व्यवहार गर्न हुन्नथ्यो भनेर उनको मनमा डर पनि छ । बेग्ला-बेग्लै द्विविधायुक्त

एकातिर हर्ष तथा अर्कोतर्फ डरको भावनामा यतिखेर अर्जुन रहेको देखिन्छन् । अर्जुनको यो खुशीले सबै भौतिक सुख सुविधालाई उछिनेको छ । यस्तो ज्ञानमय र तत्वगत ज्ञानको सुख पाउँदाको खुशी कस्लाई हुन्न र ? तसर्थ अर्जुनले प्रार्थना गर्दैछन् कि ती अपराधहरूको लागि उनीलाई क्षमा गर्दै उही चतुर्भुज विष्णुको रूप परिवर्तन गरी उनलाई देखाउनु होस् । यसरी श्रीकृष्णको वैकुण्ठ लोकको उहाँको कुनै एक रूप हेर्न अर्जुन इच्छुक छन् ।

**किरीटिनं गदिनं चक्रहस्त–**
**मिच्छामि त्वां द्रष्टुमहं तथैव ।**
**तेनैव रूपेण चतुर्भुजेन**
**सहस्रबाहो भव विश्रवमूर्ते ॥ ४६ ॥**

म त्यस्तै नै हजुरलाई मुकुट धारण गरेको तथा गदा र चक्र हातमा लिएको हेर्न चाहान्छु, त्यस कारणले हे विश्वस्वरूप ! हे सहस्रबाहो ! हजुर त्यही चतुर्भुज रूपमा प्रकट हुनुहोस् ।

हाम्रा यस संसारका खुशीहरू असली ज्ञानको सामुन्ने धेरै साना छन् । उहाँको बारेको असल ज्ञानमा नै सही आनन्द पाइन्छ । पृथ्वीलाई दुःखको घर पनि भन्ने गरिन्छ । परमात्माले ती दुःखहरूबाट निवारण गर्ने बाटो देखाउन यस गीताको रचना गर्नु भएको हो । उहाँ परमात्माको प्राप्तिको लागि अर्जुनले उहाँको चतुर्भुज रूपको लागि विनती गर्दैछन् । हे मुकुटधारी ! म हजुरको चतुर्भुज रूपको दर्शन गर्न चाहान्छु जस्मा हजुरले चार हातमा शंख, चक्र, गदा, पद्म धारण गर्नु भएको हुन्छ । भगवान् विभिन्न रूपमा नित्य विद्यमान हुन सक्नु हुन्छ । जसमध्ये राम, नृसिंह, नारायण आदि । अर्जुनलाई थाहा छ कि श्रीकृष्णनै आदि भगवान्को रूप हुनुहुन्छ, उहाँले क्षणमै विराट रूप पनि धारण गर्न सक्नुहुन्छ । अब अर्जुनले उहाँलाई आफ्नो उही नारायण रूपमा प्रकट हुन यस श्लोक मार्फत आग्रह गर्दैछन् ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**मया प्रसन्नेन तवार्जुनेदं**
**रूपं परं दर्शितमात्मयोगात् ।**
**तेजोमयं विश्रवमनन्तमाद्यं**
**यन्मे त्वदन्येन न दृष्टपूर्वम् ॥ ४७ ॥**



श्री भगवान्ले भन्नुभयो : हे अर्जुन ! अनुग्रहपूर्वक मैले आफ्नो योगशक्तिको प्रभावले यो मेरो परम तेजोमय, सबैको आदि र सीमा रहित विराट्रूप तिमीलाई देखाएको छु, जस्लाई तिमी बाहेक अरू कसैले पहिले देखेको थिएन ।

श्रीकृष्णलाई अर्जुन धेरै प्यारो छन् । त्यसैले उहाँले भन्नु भयो कि पाण्डवहरूमा म धनन्जय हुँ । अनि भगवान्ले अर्जुनलाई भन्नुभयो कि मैले प्रसन्न भएर आफ्नो अन्तरंगा योग शक्तिको बलले तिमीलाई यस संसारमा आफ्नो यस परम विश्वरूपको दर्शन गराएको छु । यसभन्दा अघि कसैले पनि यो असीम तथा तेजयुक्त सबैको आदि रूपको दर्शन पाएका थिएनन् । अर्जुनले भगवान्को विश्वरूपको दर्शन गर्न चाहेको थियो । त्यसैकारण भगवान्ले उनीलाई आफ्नो तेजोमय तथा ऐश्वर्यमय विश्र्वरूपको दर्शन गराउनु भएको हो । यो मानव कल्पनाभन्दा टाढा रहेको अन्तरङ्गा शक्तिको प्रभावले प्रकट भएको श्रीकृष्णको विराट्रूप हो । यो रूप सूर्य जस्तै चम्किरहने तथा यस्का मुखहरू निरन्तर परिवर्तन भइरहने छन् । तर अर्जुनलाई यो रूप देखाउँदा स्वर्गका तथा अन्य लोकहरूका श्रीकृष्णका भक्तहरूले समेत यो रूपको दर्शन गर्ने अवसर पाए । तर भलो होस् यस गीताको, संजयको, श्रीकृष्णको तथा यससँग सम्बद्ध सबैको कि हामीले यो शाश्वत तथ्य पढन तथा बुझ्न पायौँ ।

**न वेदयज्ञाध्ययनैर्न दानै–**
**र्न च कियाभिर्न तपोभिरूग्रैः ।**
**एवंरूपः शक्य अहं नृलोके**
**द्रष्टुं त्वदन्येन कुरूप्रवीर ॥ ४८ ॥**

हे अर्जुन ! मनुष्य लोकमा यस प्रकार विश्वरूपवाला म न वेद र न यज्ञहरूको अध्ययनबाट, न दानबाट, न क्रियाहरूबाट र नै उग्र तपहरूबाट तिमी बाहेक अरूद्वारा देखिन सक्छु ।

तिमीभन्दा पहिला मेरो यस विश्वरूपलाई कसैले देखेका थिएनन् किनकि म न वेदको अध्ययन गरेर, न यज्ञ, दान, पुण्य वा गाह्रो गरी तपस्या गरेर यस रूपमा यस संसारमा देखिन सक्दछु । न चारै वेदहरूः ऋग्, यजु, साम तथा अथर्व, अठार पुराणहरू, सबै उपनिषद् तथा वेदान्त सूत्रहरू लगायतका वैदिक साहित्यहरूको अध्ययन गरेर, यज्ञ विधि अध्ययन गर्ने सूत्रहरूः कल्पसूत्र तथा मीमांसा सूत्र अध्ययन गरेर, सुपात्रलाई दान नै गरेर, विभिन्न वर्णहरूका मानिसहरूबाट गरिएका कार्यहरू

गरेर, शारीरिक कष्टहरूलाई स्वेच्छाले अंगिकार गरी तप गरेर मेरो यस रूपलाई देख्न सकिन्छ। अज्ञानभन्दा बाहिर तिमी आइरहेकोले तथा तिमीमा मप्रति प्रेमाभक्ति भएर मात्र तिमीले यस रूपको दर्शन गर्न पाएका हौं।

**मा ते व्यथा मा च विमूढभावो**
**दृष्ट्वा रूपं घोरमीदृङ्ममेदम्।**
**व्यपेतभीः प्रीतमनाः पुनस्त्वं**
**तदेव मे रूपमिदं प्रपश्य ॥ ४९ ॥**

मेरो यस प्रकारको यस विकराल रूपलाई देखेर तिमीमा व्याकुलता नहुनु पर्ने हो र मूढभाव वा अज्ञानता पनि नहुनु पर्ने हो। तिमी भयरहित तथा प्रीतियुक्त मनवाला भएर त्यही मेरो शङ्ख-चक्र-गदा-पद्मयुक्त चतुर्भज रूपलाई फेरि हेर।

श्रीकृष्णले आफ्नो विराट् विश्व स्वरूपको दर्शन अर्जुनलाई देखाउनुको कारण यो थियो कि जस्लाई उनीले आफन्तजन भनिरहेका छन् जस्तैः भीष्म पितामह, गुरू द्रोणाचार्य आदि त आफ्नै कर्तव्य विमुखताको कारण अर्थात् द्रोपदीको चीरहरणको समयमा कौरव-सभामा केही नबोल्नाले यिनीहरूको पहिला नै मृत्यु भइसकेको छ। भक्तहरू शान्त स्वभावका हुन्छन्। उनीहरूले जघन्य कार्यहरू गर्दैनन्। तर यस रूपलाई देखिसके पछि अर्जुनलाई उहाँ आफन्तजनहरूको कुकृत्यको बारेमा स्पष्टतया पुनः स्मरण भयो र उनीले श्रीकृष्णको उपदेश तथा भनाईलाई मान्ने भए। त्यसपछि भगवान्ले उहाँको शङ्ख-चक्र-गदा-पद्मयुक्त चतुर्भज रूपलाई फेरि हेर भनी देखाउनु भयो।

संजय उवाच (भन्दछन्)

**इत्यर्जुनं वासुदेवस्तथोक्त्वा**
**स्वकं रूपं दर्शयामास भूयः।**
**आश्र्वासयामास च भीतमेनं**
**भूत्वा पुनः सौम्यवपुर्महात्मा ॥ ५० ॥**

संजयले भनेः वासुदेव भगवान्ले अर्जुनप्रति यसप्रकार भन्नु भएर फेरि उही आफ्नो चतुर्भुज रूपलाई देखाउनु भयो र फेरि महात्मा श्री कृष्णले सौम्यमूर्ति (शान्तस्वभावको सुन्दर रूप भएको) भएर यस भयभित अर्जुनलाई धैर्यता दिनुभयो।



संजयले धृतराष्ट्रलाई भनेः अर्जुनले यस प्रकार अनुरोध गरेपछि भगवान् श्रीकृष्ण फेरि आफ्नो उही सही चतुर्भुज रूपमा प्रकट हुनुभयो तथा भयभित अर्जुनलाई धैर्यता दिनुभयो। यी सबै रूपहरू त उहाँले अर्जुनमा रहेको अज्ञानताको पत्र हटाएर आफ्नो आत्माको समक्ष उपस्थित हुन र भगवान्को रूप चिन्न सहज होस् भनेर वा ज्ञान दिन भनी प्रकट गर्नु भयो। श्रीकृष्ण यसभन्दा अघि देवकी तथा वसुदेवको पुत्रको रूपमा प्रकट हुँदा पनि चतुर्भुज रूपमा प्रकट हुनु भएको थियो। त्यस बेलामा पनि आमाबुवाले प्रार्थना गरेपछि पुनः सामान्य बालकको रूपमा प्रकट हुनु भयो। यस समयमा पनि श्रीकृष्णले पहिले चतुर्भुज रूपको, अनि त्यसपछि दुइ हातहरू भएका श्रीकृष्णको सुन्दर रूपको दर्शन दिनु भयो। उहाँको सुन्दर तथा शान्त रूप साह्रै राम्रो थियो जस्लाई देखेर सबैजसो मानिसहरू मोहित हुने गर्दछन्।

अर्जुन उवाच (भन्दछन्)

**दृष्ट्वेदं मानुषं रूपं तव सौम्यं जनार्दन।**
**इदानीमस्मि संवृत्तः सचेताः प्रकृतिं गतः ॥ ५१ ॥**

अर्जुनले भनेः हे जनार्दन ! हजुरको यस अति शान्त मनुष्य रूपलाई देखेर अब म स्थिर चित्त भएको छु र आफ्नो स्वभाविक स्थितिलाई प्राप्त गरिसकेको छु।

अर्जुनले श्रीकृष्णको स्वभाविक पूर्ववत रूपलाई देखेर भनेः हजुरको यस अत्यन्तै सुन्दर मानवीय रूपलाई देखेर मेरो चित्त अब स्थिर भएको छ तथा मैले आफ्नो स्वभाविक प्राकृत अवस्था प्राप्त गरिसकेको छु। अर्जुनमा उत्तेजना जो डरको सँगसँगै आएको थियो त्यो अब समाप्त भइसकेको छ। सामान्य अज्ञानी मानिसहरूलाई ज्ञान दिनको लागि समेत उहाँले पहिले विश्वरूप, अनि चतुर्भुज नारायणको रूप धारण गर्नुभयो। यसरी आफ्ना रूपहरू प्रकट गर्ने सामर्थ्य भएको व्यक्ति भगवान् बाहेक को हुनसक्छ र !

श्रीभगवान उवाच (भन्नुहुन्छ)

**सुदुर्दर्शमिदं रूपं दृष्टवानसि यन्मम।**
**देवा अप्यस्य रूपस्य नित्यं दर्शनकाङ्क्षिणः ॥ ५२ ॥**

श्री भगवान्ले भन्नुभयोः मेरो जुन चतुर्भुज रूप तिमीले देखेका छौं, यो सुदर्शन रूप हो अर्थात यस्को दर्शन धेरै नै दुर्लभ छ। देवताहरूले पनि सधैं यस रूपलाई हेर्ने आकाङ्क्षा गरिरहन्छन्।

जुन रूप र छवी देवताहरूलाई प्राप्त छैन त्यो अर्जुनलाई प्राप्त भएको छ। युद्ध परित्याग गर्ने भनेर रथमा बसेका अर्जुनलाई श्रीकृष्णद्वारा दिइएको उपदेश तथा ज्ञानले युद्ध गर्न उर्जा प्रदान गर्यो। श्रीकृष्णको शरीर सच्चिदानन्द स्वरूप हो। उहाँको शरीर हामी मनुष्यको जस्तो भौतिक शरीरको होइन। उहाँको विश्वरूप दर्शन गर्न जसरी जप, तप, वेदाअध्ययन, उहाँका बारेमा दार्शनिक चिन्तन आदि क्रियाहरूको साथै भक्ति तत्वको अनिवार्यताको खाँचो हुन्छ। जस्बाट उहाँका यस्ता रूपहरूको दर्शन पाउन सहज हुन्छ भन्ने ज्ञान पाठक वर्गले लिनु पर्ने हुन्छ।

**नाहं वेदैर्न तपसा न दानेन न चेज्यया।**
**शक्य एवंविधो द्रष्टुं दृष्टवानसि मां यथा॥ ५३॥**

जसरी तिमीले मलाई देखेका छौं-यस प्रकारको चतुर्भुज रूपवाला म न वेदहरूको ज्ञान प्राप्त गर्नाले, न तप गर्नाले, न दान गर्नाले र न यज्ञ गर्नाले नै देखिन सक्छु।

तिमीले जुन दिव्य आँखाहरूले मेरो चतुर्भुज रूपको दर्शन गरेका छौं, त्यो रूपको दर्शन न वेदहरूको अध्ययन गरेर, न अत्यन्तै कठिन तप गरेर, न दान गरेर, न पूजादिबाट गर्न पाइन्छ। यो देख्नलाई मनमा साँचोपना र अनन्य श्रद्धा चाहिन्छ। अनावश्यक आडम्बर, अहंपना, जटिल विधि-विधानहरूले श्रीकृष्णको दर्शन पाउने अवसरलाई टाढा पुर्‍याइदिन्छ। श्रीकृष्णको चतुर्भुज रूप दर्शन पाउनुको कारण अर्जुनको श्रीकृष्णप्रतिको श्रद्धा, विश्वास, जगत संचालनको उद्येश्यलाई पूरा गर्ने सहयोगी भूमिका, ज्ञानमय प्रकास आदि कारणहरू हुन्।

**भक्त्या त्वनन्यया शक्य अहमेवंविधोऽर्जुन।**
**ज्ञातुं द्रष्टुं च तत्त्वेन प्रवेष्टुं च परंतप॥ ५४॥**

तर हे परंतप अर्जुन! अनन्य भक्तिव्दारा यस प्रकार चतुर्भुजरूपवाला म प्रत्यक्ष देखिनको लागि र तत्त्वले जान्नको लागि तथा प्रवेश गर्नको लागि अर्थात् एकिभावले प्राप्त हुनको लागि पनि सक्दछु।

हे अर्जुन! मात्र अनन्य भक्तिले मलाई त्यस रूपमा सम्झिन सकिन्छ, जुन रूपमा म तिम्रो सामुन्न खडा छु र यस्तै प्रकारले मेरो साक्षात् दर्शन पनि गर्न सकिन्छ। मात्र यस तरिकाले तिमीले मेरो ज्ञानको रहस्यलाई पाउन सक्दछौ। श्रीकृष्णले



आफ्नो शक्तिले जस्तो रूप पनि धारण गर्न सक्नु हुन्छ। श्रीकृष्णको चतुर्भुज रूप, सामान्य मानिसको रूप तथा विशाल रूप यस्का उदाहरणहरू हुन्। यी रूपहरूको दर्शन पाउन एक मात्र माध्यम अनन्य भक्ति हो। न वेदहरूको अध्ययन गरी ज्ञान आर्जन गरेर नै उहाँको बारेमा दार्शनिक चिन्तन गरेर उहाँको यस रूपको दर्शन सम्भव छ। सङ्क्षेपमा भन्ने हो भने श्रीकृष्णको चतुर्भुज रूपलाई हेर्न पाउनु एकदमै असम्भव छ, तापनि एउटा उपाय छ। मेरो चतुर्भुज रूप पनि देखिनेछ, मेरो बारेमा तत्व ज्ञान पनि हुनेछ यदि तिम्रो मनमा एकमात्र मेरो अनन्य भक्तिभाव छ भने भनेर उहाँले अर्जुन लगायतका भक्तहरूको लागि दर्शन गर्ने बाटो प्रशस्त गर्नु भयो।

**मत्कर्मकृन्मत्परमो मम्दक्तः सङ्गवर्जितः।**
**निर्वैरः सर्वभूतेषु यः स मामेति पाण्डव॥ ५५॥**

हे अर्जुन! जुन पुरूषले मात्र मेरो नै लागि सम्पूर्ण कर्तव्य कर्महरू गर्नेवाला छ, मेरो परायण छ, मेरो भक्त छ, आसक्तिरहित छ र सम्पूर्ण भूतप्राणीहरूमा वैरभाव राख्दैन, त्यो अनन्यभक्तियुक्त पुरूष मलाई मात्र प्राप्त हुन्छ।

श्रीकृष्णले अर्जुनलाई सम्झाइरहनु भएको छ कि जुन मानिस सकाम कर्महरू तथा मनोधर्मका कल्मषबाट मुक्त भएर मेरो शुद्ध भक्तिमा तत्पर रहन्छ, जस्ले मेरो लागि कर्महरू गर्दछ, जस्ले मलाइ नै जीवन लक्ष्य ठान्दछ र जस्ले प्रत्येक जीवसँग मैत्री भाव राख्दछ उस्ले निश्चित रूपमा मलाई प्राप्त गर्दछ। यस श्लोकमा उल्लेखित उपदेशलाई गीताको सारांश मान्दा हुन्छ। यस्मा भगवान्लाई प्राप्त गर्ने मार्ग प्रशस्त गरिएको छ। जुन व्यक्तिले उहाँकै लागि, उहाँलाई नै उद्देश्य ठानेर आफ्ना सबै कर्महरू सम्पादन गर्दछ, सबै भौतिक तथा अभौतिक वस्तुहरू उहाँकै हो, उहाँनै सबै विषयवस्तुको मालिक हुनुहुन्छ भनेर व्यवसाय गर्दछ, विषयवस्तुहरूप्रति कुनै पनि आसक्तिभाव राख्दैन, उहाँले भनेको वा आफ्नो अन्तःकरणले भनेको मानेर कार्यहरू गर्दछ, उहाँको एकाग्र भावले सेवाभक्ति गर्दछ, सबै जीवतत्वहरूसँग मैत्रीभाव राख्दछ, सबैमा उनै परमात्माको अंश रहेको छ भनी समभाव राख्दछ, कुनै पनि किसिमको कसैसँग पनि शत्रुभाव राख्दैन भने त्यस्तो व्यक्तिले मलाई निश्चित रूपले प्राप्त गर्दछ। मनमा साँचो भक्ति, कर्मकोप्रति कर्तव्य छ, कुनै विषयवस्तु प्रति आसक्ति पनि छैन भने श्रीकृष्ण देखिनु पनि हुन्छ र प्राप्त पनि हुनुहुन्छ।

अथ व्दादशोऽध्यायः

# अध्याय बाह्र

# भक्तियोग

अर्जुन उवाच (भन्दछन्)

**एवं सततयुक्ता ये भक्तास्त्वां पर्युपासते ।**
**ये चाप्यक्षरमव्यक्तं तेषां के योगवित्तमाः ॥ १ ॥**

अर्जुनले भनेः जुन अनन्यप्रेमी भक्तजनहरूले उपर्युक्त किसिमले निरन्तर हजुरको भजन तथा ध्यानमा लागेर हजुर सगुणरूप परमेश्वरलाई र अर्काथरि जस्ले मात्र अविनाशी सच्चिदानन्दघन निराकार ब्रह्मलाई नै अतिश्रेष्ठ भावले भज्दछन्-ती दुइ प्रकारका उपासकहरूमा अति उत्तम योगवेत्ता को हो ?

यहाँ दुइ थरिका भक्तजनहरूको बारेमा उल्लेख गरिएको छ । तीमध्येको श्रेष्ठ वा सिद्धको हो भन्ने बारेमा श्रीकृष्णलाई अर्जुनले सोधिरहेको छन् । पहिलो जो भक्तजनहरूले हजुरको सेवा, भजन, कीर्तन, ध्यान सदैब गर्दछन् वा जस्ले अव्यक्त निर्विशेष ब्रह्मको अर्थात् सच्चिदानन्दघन निराकार ब्रह्मलाई भज्दै पूजा आराधना गर्दछन् । यहाँ आध्यात्मवादीहरूलाई दुई भागमा विभाजन गरिएको छ । पहिलो सगुणवादी तथा दोश्रो निर्विशेषवादी । सगुणवादी भक्तहरूले आफ्नो सबै शक्तिहरूले परमेश्वरको सेवा गर्दछन् । उनीहरूले साकार तथा प्रत्यक्ष रूपमा श्रीकृष्णको सेवा गर्दछन् । तर निर्विशेषवादीले श्रीकृष्णको सेवा तथा भजन अप्रत्यक्ष रूपमा निर्विशेष ब्रह्मको ध्यान गरेर गर्दछन् । यस प्रकार एकथरिले श्री कृष्णको सगुण रूपलाई जान्दछन् । जो एउटा ब्रह्म हुनुहुन्छ तथा उहाँको अंश आत्माको रूपमा हामी सबैमा छ । अर्काथरिले श्रीकृष्णलाई निराकार परमात्मा निर्गुणको रूपमा जान्दछन् । निराकार रूपमा उहाँ सर्वव्यापी हुनुहुन्छ भन्ने धारणा कायम गरेका छन् र सोही रूपमा भज्दछन् । यस्ता दुइ रूपमा भज्नेहरूमा श्रीकृष्णलाई श्रेष्ठ कुन लाग्दछ भनी उपयोगी प्रश्न अर्जुनद्वारा यहाँ गरिएको छ ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**मय्यावेश्य मनो ये मां नित्ययुक्ता उपासते ।**
**श्रद्धया परयोपेतास्ते मे युक्ततमा मताः ॥ २ ॥**



श्री भगवान्ले भन्नुभयोः ममा मनलाई एकाग्र गरेर निरन्तर भजन ध्यानमा लागेका जो भक्तजन अतिशय श्रेष्ठ श्रद्धाले युक्त भएर म सगुणरूप परमेश्वरलाई भज्दछन्, उनीहरू मलाई योगीहरूमा अति उत्तम योगी मान्य छन् ।

वंशी बजाउने, विभिन्न किसिमका रासलीला रचाउने यी सबै श्रीकृष्णका सगुण रूपहरू हुन् । सगुण रूपमा एउटा आकार हुन्छ, एउटा अस्तित्व हुन्छ र एउटा पहिचान हुन्छ । जस्का गुणहरूको माध्यमले हामीले कसैलाई उदाहरण प्रश्तुत गर्न पनि सक्दछौँ । तर निर्गुण रूपमा कुनै आकार हुँदैन, कुनै पहिचान हुँदैन र कुनै अस्तित्व हुँदैन । एक परमतत्वको भावना तथा आदर्श बोकेको हुन्छ । अर्जुनको प्रश्नको उत्तर दिँदै श्रीकृष्ण भन्नुहुन्छ कि सगुण रूपमा पूजा गर्ने योगीजन उहाँलाई धेरै मन पर्दछन् ।

**ये त्वक्षरमनिर्देश्यमव्यक्तं पर्युपासते ।**
**सर्वत्रगमचिन्त्यं च कूटस्थमचलं ध्रुवम् ॥ ३ ॥**
**संनियम्येन्द्रियग्रामं सर्वत्र समबुद्धयः ।**
**ते प्राप्नुवन्ति मामेव सर्वभूतहिते रताः ॥ ४ ॥**

तर जुन पुरूषहरूले इन्द्रियहरूको समुदायलाई राम्ररी वशमा गरेर मन–बुद्धिभन्दा टाढा, सर्वव्यापी, अकथनीय स्वरूप र सधैँ एकरस रहने, नित्य, अचल, निराकार, अविनाशी, सच्चिदानन्दघन ब्रह्मलाई निरन्तर एकाग्र भावले ध्यान गर्दै भज्दछन् तिनीहरू सबै भूतहरूको हितमा रहेका र सबैमा समान भाव राखेका योगीहरू मलाई नै प्राप्त हुन्छन् ।

तर जो मानिसहरूले आफ्ना इन्द्रियहरूलाई वशमा राखेर, सबैमा समभाव राखेर परम सत्यको निराकार कल्पना गरेर भजन तथा पूजा आदि गर्दछन् र जस्ले सर्वव्यापी, अकल्पनीय, अविनाशी, निराकार, अचल, नित्य सच्चिदानन्दघन ब्रह्मलाई सधैँ एकाग्र भाव राखी ध्यान तथा भजन गर्दछन्, त्यस्ता सबै भूतहरूको वा मानिसहरूको हितमा समभाव राख्ने योगीहरूले मलाई प्राप्त गर्दछन् भनी श्रीकृष्णले यस श्लोकबाट अर्को पनि मार्ग निर्देश गर्नु भएको छ । सगुण रूपमा पूजा, भक्ति, सेवा गर्ने योगी उहाँलाई मन पर्ने, निर्गुण रूपमा ध्यान तथा भजन गर्ने भक्तले उहाँलाई प्राप्त गर्ने भनेपछि अब भक्तहरूको रोजाई आफ्नो हुने भयो ।

**क्लेशोऽधिकतरस्तेषामव्यक्तासक्तचेतसाम् ।**
**अव्यक्ता हि गतिर्दुःखं देहवद्भिरवाप्यते ॥ ५ ॥**

उहाँ सच्चिदानन्दधन निराकार ब्रह्ममा आसक्त चित्त भएका पुरूषहरूको साधनामा परिश्रम विशेष हुन्छ, किनकि देहाभिमानीहरूद्वारा अव्यक्तविषयक गति दुःखपूर्वक प्राप्त गरिन्छ ।

यस संसारमा शरीर धारण गरेर आई ज्ञानयोगमा संलग्न रहेकाहरूको गति कस्तो हुन्छ भन्ने बारेमा यहाँ वर्णन गरिएको छ । जुन मानिसको मन परमेश्वरको अव्यक्त एवं निराकार स्वरूपप्रति आसक्त छ, उनीहरूको लागि प्रगति गर्नु विशेष कष्टप्रद हुने गर्दछ । आध्यात्मवादीहरूको समूहहरूमध्येको ज्ञानयोगमा विश्वास राख्ने तथा त्यस्मै रतरहदै परमेश्वरको अचिन्त्य, अव्यक्त तथा निराकार स्वरूपको बाटोलाई अनुसरण गर्ने ज्ञानयोगीहरूको बाटो कष्टकर हुन्छ । निर्गुण ब्रह्मको पूजन सहज कुरो हैन । श्रीकृष्णले भन्दै हुनुहुन्छ कि त्यस निराकार ब्रह्ममा आसक्त चित्त भएका पुरूषहरूव्दारा गरिएको साधनामा विशेष परिश्रम गर्नुपर्ने हुन्छ । किनकि यस्मा ती पुरूषहरूले आफ्ना देहाभिमानलाई छाडनु पर्दछ । निराकार परमब्रह्मको पूजा गर्ने भनेको उहाँको कुनै स्वरूपमा विश्वास नरहनु हो । त्यस विश्वासलाई कायम गर्न भक्तले आफ्नो देहको आकार तथा स्वाभिमान पनि त छोडनु पर्यो । श्रीकृष्ण भन्नु हुन्छ जबसम्म देह वा शरीरको भान गरिन्छ तबसम्म अव्यक्तको प्राप्ति धेरै मुश्किल हुन्छ । निर्गुणको उपासन गलत होइन । यसमा भक्तले आफ्नो स्वाभिमानलाई पनि त्याग गर्नुपर्ने हुन्छ । यसरी परमेश्वरको प्राप्ति त हुन्छ तर यो मार्ग सजिलो छैन ।

**ये तु सर्वाणि कर्माणि मयि संन्यस्य मत्पराः ।**
**अनन्येनैव योगेन मां ध्यायन्त उपासते ॥ ६ ॥**

तर जो मेरो परायण रहने भक्तजनहरूले सम्पूर्ण कर्महरूलाई ममा अर्पण गरेर म सगुणरूप परमेश्वरलाई नै अनन्य भक्तियोगव्दारा निरन्तर चिन्तन गर्दै भज्दछन् ।

यस श्लोकमा श्रीकृष्णले भक्तियोगमा संलग्न रहने भक्तजनहरूको लागि बाटो प्रशस्त गर्न खोज्नु भएको छ । जो भक्तहरू मेरो अधिनमा वा नियन्त्रणमा छन्, जस्ले आफ्ना सबै कर्महरूलाई ममा अर्पण गर्दछन्, भक्तियोगद्वारा मेरो निरन्तर चिन्तन र भजन गर्दछन् उनीहरूले मलाई प्राप्त गर्दछन् । यस्ता किसिमका भक्तहरूलाई मैले नै उद्धार गर्दछु ।



**तेषामहं समुद्धर्ता मृत्युसंसारसागरात् ।**
**भवामि नचिरात्पार्थ मय्यावेशितचेतसाम् ॥ ७ ॥**

हे अर्जुन ! ती म मा चित्त लगाउने प्रेमी भक्तहरूलाई मैले शीघ्र नै यस मृत्युरूप संसार-समुन्द्रबाट उद्धार गर्नेवाला हुन्छु ।

श्रीकृष्णले अर्जुनलाई भक्तियोगमा निरन्तर लाग्नेहरूको बारेमा भन्दै हुनुहुन्छ कि जो यसरी ममा आत्मीय रूपले चित्त लगाई राख्दछन् तिनीहरूले यस मृत्युरूपी संसारमा धेरै रूमलिरहनु पर्दैन । तिनीहरूलाई उहाँले शीघ्रनै उद्धार गर्नु हुनेछ । शुद्ध भक्ति गर्नेहरूलाई यस्तो अनुभूति हुन थाल्दछ कि भगवान् महान हुनुहुन्छ तथा जीवात्माहरू उहाँकै अधिनमा छन् । उस्को कर्तव्य हो कि उस्ले उनै भगवान्को सेवा भक्ति गरोस् । यदि उस्ले यस्तो गरेन भने ऊ सांसारिक माया जालमा फस्दछ । भक्तिबाट मात्र भगवान्को सहज प्राप्ति सम्भव छ । गुरूले शिष्यलाई मार्ग दर्शन गरिदिँदा शिष्यको लागि पनि अध्ययनको मार्ग सहज बन्न पुग्दछ । त्यस्तै श्रीकृष्णको सगुणरूपको पूजा गर्ने मार्ग सहज छ भनेर उहाँले स्वयं बताउँदै हुनुहुन्छ ।

**मय्येव मन आधत्स्व मयि बुद्धिं निवेशय ।**
**निवसिष्यसि मय्येव अत ऊर्ध्वं न संशय ॥ ८ ॥**

ममा मनलाई लगाएर र ममा नै बुद्धि लगाएर, त्यसपछि तिमी ममा नै वसोवास गर्नेछौ, यस्मा कुनै पनि संशय छैन ।

म भगवान्मा आफ्नो चित्तलाई स्थिर गर र आफ्ना सबै बुद्धिहरू ममा लगाऊ । यसप्रकार तिमी ममा निसन्देह वास गर्नेछौ । जो व्यक्ति भगवान् श्रीकृष्णको लागि भक्तिरत रहन्छ उस्को परमात्मासँग प्रत्यक्ष सम्बन्ध कायम हुन्छ । उस्को स्थिति दिव्य हुन्छ । भक्त त सधैं श्रीकृष्णमै वास गर्दछ । भगवान्को पवित्र नाम तथा भगवान् अभिन्न हुनुहुन्छ । असल भक्त जस्ले उहाँको नाम तथा उहाँलाई आफ्नो मन मन्दिरमा राख्दछ उस्ले चढाएको श्रद्धा तथा सामग्रीहरू भगवान् स्वयंले प्रत्यक्षतः स्वीकार गर्नुहुन्छ । यस प्रकार भक्तले आफ्नो लक्ष्य सहज रूपमा प्राप्त गर्दछ । तसर्थ जे पनि असल उद्येश्य लिएर मन तथा बुद्धिले भक्तले निरन्तर कार्य गर्दछ उस्ले त्यस्को फल प्राप्ति गर्दछ ।

**अथ चित्तं समाधातुं न शन्कोषि मयि स्थिरम् ।**
**अभ्यासयोगेन ततो मामिच्छाप्तुं धनंजय ॥ ९ ॥**

यदि तिमीले मनलाई ममा अचल रूपले स्थापना गर्न समर्थ छैनौँ भने हे अर्जुन ! अभ्यासरूप योगव्दारा मलाई प्राप्त गर्ने इच्छा गर ।

श्रीकृष्णले विकल्पको अर्को विधि पनि अर्जुनलाई वर्णन गर्दै हुनुहुन्छ । यो विकल्प प्रश्तुत गर्नु पर्ने कारण मन असाध्यै चञ्चल भएर हो । यस्लाई स्थिर गर्न गाह्रो हुने गर्दछ । मनलाई स्थीर गर्न गाह्रो त छ तर असम्भव भने छैन । उहाँले भन्दै हुनुहुन्छ कि यदि तिमीले तिम्रो मनलाई ममा स्थिर गर्न सक्दैनौँ भने तिमीले एकाग्र चित्त गरेर मलाई प्राप्त गर्ने उद्येश्य लिएर योगाभ्यास गर, अवश्य प्राप्त गर्नेछौ । यहाँ भक्तियोगका दुइ विधिहरू उल्लेख गरिएका छन् । पहिलो दिव्य प्रेम श्रीकृष्णलाई गरेर उहाँप्रति वास्तविक आसक्ति जागृत गर्ने, तथा दोश्रो विधि ती भक्तहरूको लागि हो जस्ले यस्तो किसिमले भगवान्प्रति आसक्ति सृजना गर्न सकेनन्, भक्तिको लागि योगाभ्यास गर्नु । आफ्ना अशुद्ध इन्द्रियहरूलाई योगको माध्यमले सुध्याउनु पर्दछ । हाम्रा इन्द्रियहरू इन्द्रिय तृप्तिमा लागिरहेका हुन्छन्, तसर्थ तिनीहरूलाई सर्वप्रथम सुध्याउनु आवश्यक हुन्छ । यी इन्द्रियहरू शुद्ध भइसकेपछि तिनीहरू परमेश्वरसँग सोझो सम्पर्कमा आउँदछन् ।

**अभ्यासेऽप्यसमर्थोऽसि मत्कर्मपरमो भव ।**
**मदर्थमपि कर्माणि कुर्वन्सिद्धिमवाप्स्यसि ॥ १० ॥**

यदि तिमी उपर्युक्त अभ्यास गर्नमा पनि असमर्थ छौँ भने मात्र मेरोलागि कर्म गर्ने नै परायण होऊ । यस प्रकार मेरोलागि कर्महरू गर्दै पनि मेरो प्राप्ति रूप सिद्धि तिमीलाई प्राप्त हुनेछ ।

मनलाई संयममा राख्ने तरिका श्रीकृष्णको वर्णन बमोजिम योगाभ्यास हो । यदि तिमीले एकाग्र भएर मेरो भक्ति गर्न सक्दैनौँ, योगाभ्यास पनि गर्न सक्दैनौँ भने तिमीले गर्ने सबै कर्महरू कर्मपरायण भई मलाई समर्पण गर्ने प्रयास गर । श्रीकृष्णको लागि कर्महरू गर्ने गर । आफ्ना सबै कर्महरू श्रीकृष्णलाई जिम्मा लगाएर आफ्ना मन, वाणी तथा शरीरलाई पनि श्रीकृष्णलाई नै समर्पित गरिदिनु पर्दछ । मेरोलागि कर्म गर्नाले तिमीले सिद्धि वा पूर्ण अवस्था प्राप्त गर्नेछौ । यो भन्नुको तात्पर्य चौबीस घण्टा नै श्रीकृष्णको जप गरिरहने होइन । हामीले जे पनि कार्यहरू गर्दछौँ त्यस कार्य गर्ने उद्देश्य, त्यस्को फलको अधिकारी श्रीकृष्ण हुनुहुन्छ भन्ने धारणा राखेर व्यवहार गर्दै जाने हो ।



**अथैतदप्यशक्तोऽसि कर्तुं मद्योगमाश्रितः ।**
**सर्वकर्मफलत्यागं ततः कुरू यतात्मवान् ॥ ११ ॥**

यदि मेरो प्राप्ति रूप योगमा आश्रित भएर उपर्युक्त साधन गर्न पनि तिमी असमर्थ छौ भने मन-बुद्धि आदिमा विजय प्राप्त गर्ने भएर तिमीले गरेका सबै कर्महरूका फलहरूलाई त्याग गर ।

श्रीकृष्णले अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ यदि तिमीले आफ्नो मन तथा शरीरलाई ममा लाउन सक्दैनौँ भने, मेरो लागि भनेर कर्म गर्न पनि असमर्थ छौँ भने तिमीले आफ्नो मन बुद्धिमा विजय प्राप्त गरेर गरेका सबै कर्महरूको फललाई त्याग गर । यसमा गरिने कर्महरूबाट हुने लाभ वा हानीको विचार गर्ने नगर । यसरी गर्यौँ भने तिम्रो मनमा गलत विचारको आगमन नै हुँदैन । तिमी मन र बुद्धिमा विजय प्राप्त गर्न सक्षम हुन्छौ भने तिमीले मलाई पाउन सक्छौँ । यदि कुनै व्यक्तिले परमेश्वरलाई सम्झेर परमेश्वरको कर्म हो भनी कर्महरू सम्पादन गर्दा पारिवारिक, सामाजिक र धार्मिक कारणले अवरोध सृजना हुन्छ भने उस्ले गरेका क्रियाकलापहरूबाट आर्जित वा सञ्चित फलहरू कुनै शुभ कार्यमा लगावोस् । यसका लागि अनेक यज्ञादि, पुण्यकर्म तथा बिशेष कार्यहरू छन् भनी वैदिक नियमहरूमा वर्णन गरिएका छन् ।

**श्रेयो हि ज्ञानमभ्यासाज्ज्ञानाद्ध्यानं विशिष्यते ।**
**ध्यानात्कर्मफलत्यागस्त्यागाच्छान्तिरनन्तरम् ॥ १२ ॥**

मर्मलाई नजानेर गरिएको अभ्यासभन्दा ज्ञान श्रेष्ठ हुन्छ, ज्ञानभन्दा म परमेश्वरको ध्यान श्रेष्ठ हो र ध्यानभन्दा पनि सबै कर्महरूको फलको त्याग गर्नु श्रेष्ठ हो किनकि त्याग गर्नाले तत्कालै परम शान्ति प्राप्त हुने गर्दछ ।

यदि तिमीले यो अभ्यास पनि गर्न सक्दैनौँ, यदि तिमीले यो अभ्यास किन गरिरहेका छौ भनी जान्दैनौँ भने त्यस अभ्यासबाट तिमीले के पाउँछौ ? योभन्दा ज्ञान धेरै राम्रो हुन्छ । श्रीकृष्ण भन्नुहुन्छ कि तिमी ज्ञानको अनुशीलनमा वा खोजमा लाग । हेर ! ज्ञानभन्दा श्रेष्ठ म परमेश्वरको स्वरूपको ध्यान हुन्छ, ध्यानभन्दा श्रेष्ठ कर्म फलको परित्याग गर्नु हुन्छ किनकि यसरी त्याग गर्नाले मानिसको मनले शान्ति प्राप्त गर्न सक्दछ । तिमीले कर्मफललाई त्याग गर्न सक्छौँ भने त्योभन्दा ठूलो पूजा अरू कुनै हुँदैन । तर यसको सँगसँगै मानिसले ज्ञान प्राप्त गर्न सक्यो भने ऊ

परमेश्वरको ध्यान गर्न अभिमूख हुन्छ । अनि उस्ले ध्यान गर्दा-गर्दै कुनै राम्रो कार्यको लागि कर्मफलको परित्याग गर्न थाल्दछ ।

अर्जुन उवाच (भन्दछन् )

**अव्देष्टा सर्वभूतानां मैत्रः करूण एव च ।**
**निर्ममो निरहंकारः समदुःखसुखः क्षमी ॥ १३ ॥**
**संतुष्टः सततं योगी यतात्मा दृढनिश्र्चयः ।**
**मय्यर्पितमनोबुद्धिर्यो मम्दक्तः स मे प्रियः ॥ १४ ॥**

जुन पुरूष सबै भूतहरूमा व्देषभावरहित, स्वार्थरहित, सबैको प्रेमी र हेतुरहित दयालु छ तथा ममता र अहङ्कारले रहित छ, सुख-दुःख प्राप्तिमा समभाव राख्दछ र क्षमावान छ अर्थात अपराध गर्नेहरूलाई पनि अभय दान दिने गर्दछ तथा जुन योगी निरन्तर सन्तुष्ट रहन्छ, मन इन्द्रियहरू सहित शरीरलाई वशमा राखेको छ र ममा दृढ निश्चय राख्दछ-त्यो ममा अर्पण गरिएको मन-बुद्धिवाला मेरो भक्त मलाई प्रिय छ ।

श्रीकृष्णले प्रिय भक्तमा हुनुपर्ने ती सबै गुणहरूको बारेमा यी श्लोकहरूमा वर्णन गर्नु भएको छ । जुन पुरूषहरूले यी गुणहरूलाई प्राप्त गर्ने कोशिस गर्दछन् ती पनि श्रीकृष्णलाई प्रिय हुन्छन् । शुद्ध भक्त कुनैपनि परिस्थितिमा विचलित हुँदैन, कसैप्रति इर्ष्यालु हुँदैन, शत्रु भनाउँदोलाई आफ्ना विगतका कर्महरूको कारणले शत्रु हुन पुगेको हो, त्यस्को विरोध गर्नुको साटो उस्बाट दिइएको कष्ट सहन गर्नु उचित छ भनी ठान्दछ, आफुले भोग्नु परेका समस्याहरूलाई भगवान्को कृपा ठानी विगतमा हुन गएका वा गरिएका दुष्कर्महरूको लागि मैले त धेरै कष्ट सहन गर्नु पर्दथ्यो तर भगवान्को कृपाले थोरै कष्ट मात्र प्राप्त गरिएको छ भन्ने ठानी उस्ले आफुमा धीरता कायम गर्दछ । सबै उपर दयाभाव प्रदर्शन गर्दछ । शरीर भौतिक मात्र हो भनी शरीरलाई प्राथमिकता दिँदैन, मिथ्या अहङ्कार राख्दैन । भगवत कृपाले उस्लाई जे प्राप्त हुन्छ त्यस्मै ऊ सन्तुष्ट रहन्छ । उस्ले आफ्नो गुरूका आदेशहरूको पालना गर्दछ, इन्द्रियहरूलाई सुख भोगमा पटक्कै लाउँदैन । यी सबै गुणहरूलाई कायम राखी मन तथा बुद्धिलाई भगवत भक्तिमा एकाग्रचित्तले लगाउँदछ ।

**यस्मान्नोद्विजते लोको लोकान्नोव्दिजते च यः ।**
**हर्षामर्षभयोद्वेगैर्मुक्तो यः स च मे प्रियः ॥ १५ ॥**



जसबाट कुनै पनि जीवले उद्वेग (उत्तेजना) प्राप्त गर्दैन र जस्ले स्वयं पनि कुनै जीवबाट उद्वेग प्राप्त गर्दैन, तथा जो हर्ष, अमर्ष (अरूको उन्नति देखेर संताप गर्नु), भय र उद्वेग आदिबाट रहित छ-त्यो भक्त मेरो लागि प्रिय छ ।

जुन व्यक्तिबाट कुनै पनि जीवले उत्तेजना प्राप्त गर्दैन र नै कसैलाई उत्तेजित पार्दछ, जस्लाई अरूको उन्नति देखेर जलन हुँदैन, जस्ले कसैबाट दुःख, कष्ट प्राप्त गर्दैन तथा जो अन्य कुनै जीवबाट पनि विचलित हुँदैन र जस्ले दुःख-सुखमा, भय तथा चिन्तामा समभाव राख्दछ त्यो भक्त वा योगी मलाई प्यारो छ । यहाँ भक्तहरूका केही थप गुणहरूको बारेमा वर्णन गरिएका छन् । त्यस्तो योगी मात्र आफ्नो काममा लागेको हुन्छ । तसर्थ त्यस्ता योगीहरू जस्बाट कुनै पनि किसिमका दुःख, कष्ट, भय, चिन्ताहरू हुँदैनन् । दयालु भक्तले कसैलाई दुःख,कष्ट, भय, चिन्ता नदिने गर्दछ र नै लिने गर्दछ । कसैले त्यस्ता योगीलाई चिन्ता र डर दिने कार्य गरे पनि ऊ चिन्तित हुँदैन, डराउँदैन । ऊ त मात्र आफ्नो लक्ष्यप्रति उन्मुख रहन्छ । इन्द्रिय सुख भोगमा रहने मानिसहरू मात्र यस्ता व्यवहारबाट खुशी वा व्यथित हुने गर्दछन् । यस्तै किसिमका योगीहरू श्रीकृष्णलाई प्यारो लाग्दछन् ।

**अनपेक्षः शुचिर्दक्ष उदासीनो गतव्यथः ।**
**सर्वारम्भपरित्यागी यो मम्दक्तः स मे प्रियः ॥ १६ ॥**

जो पुरूष आकाङ्क्षारहित छ, बाहिर भित्रबाट शुद्ध, बाठो, पक्षपातरहित र दुःखबाट छुटेको छ-त्यस्तो सबै आरम्भहरूलाई त्याग गर्ने मेरो भक्त मलाई प्यारो छ ।

श्रीकृष्ण भन्नुहुन्छ कि योगीहरू आकाङ्क्षारहित हुनुपर्दछ । हामीले आकाङ्क्षा संगाल्दा सबै नराम्रा भावहरू हाम्रा मनमा पलाउँछन् । तर अर्कोतर्फ आकाङ्क्षा नभईकन कसरी जीवनलाई गति दिने ? भन्ने प्रश्न पनि उठ्दछ । त्यसको लागि हामीले हाम्रा कर्म तथा कर्तव्यलाई सबैभन्दा राम्रो गर्न चाहान्छौं भने त्यो आकाङ्क्षा गर्नुमा केही हानी छैन । तर आकाङ्क्षा धन, सांसारिक भोगको छ भने त्यो उचित आकाङ्क्षा हुँदैन । यस्तो योगी जो इच्छा, आकाङ्क्षारहित छ, सम्पूर्ण रूपले शुद्ध छ, समभाव राख्दछ, कसैप्रति पनि पक्षपात पूर्ण व्यवहार गर्दैन, सुखमा असाध्यै हर्षित हुने तथा दुःखमा साह्रै नै दुःखी हुने गर्दैन, कर्म त गर्दछ तर फलको आशा कदापि गर्दैन भने त्यस्तो भक्त मलाई प्यारो छ ।

**यो न हृष्यति न द्वेष्टि न शोचति न काङ्क्षति ।**
**शुभाशुभपरित्यागी भक्तिमान्यः स मे प्रियः ॥ १७ ॥**

जो न कहिल्यै हर्षित हुन्छ, न कसैप्रति द्वेष राख्दछ, न शोक गर्दछ, न केही कामना गर्दछ तथा जस्ले शुभ तथा अशुभ सबै कर्महरूको त्याग गर्दछ–त्यो भक्तियुक्त पुरूष मलाई प्यारो छ ।

जुन भक्त आवश्यकताभन्दा बढी हर्षित हुँदैन् ऊ श्रीकृष्णको प्यारो हुन्छ । आवश्कताभन्दा बढी हर्षित हुनु भनेको दुःखद् परिस्थितिमा आवश्यकताभन्दा बढी दुःखी हुनु पनि हो । सच्चा भक्तले दिनपछि रात आए जस्तै सुख तथा दुःख आउँछ र जान्छ भनी स्वभाविक ठान्दछ । यस्मा हर्षित वा दुःखी हुनु आवश्यक छैन भनेर उस्ले ठान्दछ । यो सबै भगवान्द्वारा सृजित हुन भनी ऊ हर्षित तथा विस्मात हुँदैन । जो न द्वेष राख्दछ, न शोक गर्दछ, न कुनै कुरो चाहियो भनेर इच्छा नै राख्दछ तथा जस्ले शुभ तथा अशुभ दुबै किसिमका विषयवस्तुहरूको परित्याग गर्दछ त्यस्ता भक्तहरू श्रीकृष्णलाई प्यारो हुन्छन् ।

**समः शत्रौ च मित्रे च तथा मानापमानयोः ।**
**शीतोष्णसुखदुःखेषु समः सङ्गविवर्जितः ॥ १८ ॥**

जो भक्त शत्रु–मित्रमा, मान–अपमानमा सम छ तथा सदी–गर्मीमा तथा सुख–दुःखादि द्वन्दमा सम छ तथा आसक्तिरहित छ ।

जुन भक्तले मित्र तथा शत्रुमा समान भाव राखेर कुनै भेदभाव नगरेर व्यवहार गर्दछ, सर्दी तथा गर्मीमा, मान तथा अपमानमा, सुख तथा दुःखमा समभाव राख्दछ तथा आसक्ति रहित परमेश्वरको सेवा भक्तिमा रत रहन्छ त्यो भक्त श्रीकृष्णलाई असाध्यै प्यारो हुन्छ । योगी तटस्थ रहन्छ । सामान्य व्यक्ति जस्तो शोक, कामना, सुख र दुःखले उसलाई दुःख दिँदैनन् । ऊ मात्र आफ्ना कर्महरूमा नियमित रूपले संलग्न रहिरहन्छ ।

**तुल्यनिन्दास्तुतिर्मौनी संतुष्टो येन केनचित् ।**
**अनिकेतः स्थिरमतिर्भक्तिमान्मे प्रियो नरः ॥ १९ ॥**

जस्ले निन्दा तथा स्तुतिलाई समान ठान्दछ, मननशील भएर र जसरी भए पनि शरीरको निर्वाह हुनुमा सधैं सन्तुष्ट हुन्छ र वासस्थानमा ममता र आसक्तिबाट



रहित रहन्छ त्यस्तो स्थिरबुद्धि भक्तिमान पुरूष मलाई प्यारो लाग्दछ ।

भक्त सदैव ज्ञानशील, धैर्यवान र सहनशील हुने गर्दछ । ऊ कहिल्यै पनि प्रशंसाले उचालिदैन तथा निन्दाले उत्तेजित तथा क्रोधित हुँदैन । साथै उस्ले भौतिक तथा लौकिक विषयवस्तुहरूको लागि न कसैको निन्दा गर्दछ र नै कसैको प्रशंसा गर्दछ । उस्लाई कसैले निन्दा गर्यो भने पनि वा कसैले प्रशंसा गर्यो भने पनि उसलाई केही फरक पर्दैन, ऊ हर्षित पनि हुदैन र नै ऊ रिसाउँदछ । सबै परमेश्वरको सृष्टि हो, सबैको एक मात्र अधिकारी उहाँ मात्र हुनुहुन्छ । तसर्थ उहाँबाट जे जसो प्राप्त छ त्यसैमा ऊ सन्तुष्ट रहने गर्दछ । उसमा आसत्तिको सानो अंश समेत रहँदैन । ऊ समस्त परिस्थितिहरूमा एकनास रहन्छ । उस्ले बस्ने आवासको पनि चिन्ता गर्दैन । उस्को बुद्धि स्थिर रहेको हुन्छ किनकि ऊ आफ्नो ज्ञान तथा संकल्पमा दृढ रहन्छ । यी सबैजसो सद्गुणहरू सही भक्तले आफुमा स्वभावको रूपमा कायम राखेको हुन्छ । अनि मात्र पो ऊ श्रीकृष्णको लागि प्यारो हुन पुग्दछ ।

**ये तु धर्म्यामृतमिदं यथोक्तं पर्युपासते ।**
**श्रद्दधाना मत्परमा भक्तास्तेऽतीव मे प्रियाः ॥ २० ॥**

तर जुन श्रद्धायुक्त पुरूषले मेरो परायण वा अधिनमा रहेर उपर्युक्त धर्ममय अमृतलाई निष्काम प्रेमभावले सेवन गर्दछ, त्यो भक्त मलाई अति नै प्यारो छ ।

जुन पुरूषले आफ्ना कर्तव्यहरूमा, कर्महरूमा, श्रीकृष्णको ज्ञानमा, उहाँको स्वरूपमा श्रद्धा राख्दछ त्यो भक्त श्रीकृष्णलाई साह्रै नै प्यारो छ । जहाँ श्रद्धा हुन्छ त्यहाँ कुनै शङ्का हुँदैन । जस्ले श्रीकृष्णलाई नै आफ्नो चरम लक्ष्य बनाएर उहाँले दर्शाउनु भएका उपदेशहरूको निष्काम प्रेमभावले पालना गर्दै आफ्नो जीवन रथलाई अगाडि बढाउदछ, त्यो भक्त श्रीकृष्णलाई धेरै नै प्यारो लाग्दछ । यी उपर्युक्त श्लोकहरूमा भगवान्ले आफ्नो नजिक पुग्ने दिव्य सेवाहरूका विधिहरूको बारेमा वर्णन गर्नु भएको छ । ती विधिहरूले मानिसहरूलाई सत्मार्ग प्रदान गर्ने भएकाले उहाँलाई असाध्यै प्रिय छन् । ती विधिहरूको पालना गर्ने भक्त तथा योगीजनहरूलाई उहाँले हार्दिकता पूर्वक स्वीकार गर्नुहुन्छ । तसर्थ आत्म साक्षात्कारका समस्त विधिहरूमध्ये भगवान्को भक्ति सर्वश्रेष्ठ छ ।

अथ त्रयोदशाऽध्याय

## अध्याय तेह्र

## क्षेत्र–क्षेत्रज्ञविभागयोग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**इदं शरीरं कौन्तेय क्षेत्रमित्यभिधीयते ।**
**एतद्यो वेत्तित प्राहुः क्षेत्रज्ञ इति तद्विदः ॥ १ ॥**

श्री भगवान्‌ले भन्नुभयोः हे अर्जुन ! यो शरीर 'क्षेत्र' यस नामबाट भनिन्छ र यसलाई जस्ले जान्दछ त्यसलाई 'क्षेत्रज्ञ' यस नामले तिनीहरूलाई तत्वले जान्नेलाई 'ज्ञानीजन' भनिन्छ ।

यस शरीरलाई क्षेत्र तथा यस क्षेत्रलाई जान्नेलाई क्षेत्रज्ञ भनिन्छ । जसरी खेतमा रोपिएका बिउहरूबाट तिनीहरूको तात्विक गुण बमोजिम नै समयमा तिनका फलहरू प्रकट हुन्छन् त्यस्तै हाम्रो कर्मको संस्कारका बिउहरू हाम्रा शरीरहरूमा रोपिन्छन् र त्यसै अनुरूप तीबाट कर्मफल प्रकट हुन्छन् । यसर्थ हाम्रो शरीरलाई क्षेत्र भनिएको हो । अनि जस्ले यस विषयलाई जान्दछ उहाँलाई क्षेत्रज्ञ भनिन्छ । जस्ले यस विषयवस्तुको मर्मलाई तत्वको रूपमा जान्दछ उहाँलाई ज्ञानी भनिन्छ । जसरी एउटा कृषकले आफ्नो क्षेत्रलाई संरक्षण तथा सम्बर्धन गर्दछ त्यसरी नै हामीले पनि हाम्रो शरीरको ध्यान दिनु पर्दछ ।

**क्षेत्रज्ञं चापि मां विद्धि सर्वक्षेत्रेषु भारत ।**
**क्षेत्रक्षेत्रज्ञयोर्ज्ञानं यत्तंज्ज्ञानं मतं मम ॥ २ ॥**

हे अर्जुन ! तिमीले सबै क्षेत्रहरूमा क्षेत्रज्ञ अर्थात जीवात्मा पनि मै हुँ भन्ने बुझ र क्षेत्र-क्षेत्रज्ञलाई अर्थात विकारसहित प्रकृति र पुरूषलाई जुन तत्वको आधारमा जान्नु पर्ने हो त्यो ज्ञान हो-यस्तो मेरो मत छ ।

जहाँ केही हुन्छ त्यसलाई शरीर वा क्षेत्र भनिन्छ । यस शरीरलाई नै कर्मक्षेत्र भनिन्छ । यस क्षेत्रलाई जस्ले जान्दछ र क्षेत्रमा केही गरियो भने त्यस्को असर उसमा पर्दछ भने त्यस्लाई क्षेत्रज्ञ अर्थात आत्मा भनिन्छ । शरीर र आत्मा बेग्लै छन् । तर शरीरमा केही भयो भने त्यस्को असर आत्मामा पर्दछ । क्षेत्रमा वा शरीरमा भएका विषयवस्तुको जहाँ असर वा प्रभाव पर्दछ त्यस्लाई क्षेत्रज्ञ अर्थात् आत्मा भनिन्छ ।



हामीले खेतमा पानी, खाद आदि हाल्यौं भने त्यसको असर बालीमा पर्दछ । यिनीहरूमा विकारसहित रहेको प्रकृति तथा पुरूषलाई जुन तत्वको आधारमा जान्नु पर्ने हो त्यही नै ज्ञान हो भनी श्रीकृष्णले आफ्नो विचार वर्णन गर्नु भएको छ ।

**तत्क्षेत्रं यच्च यादृक्च यद्विकारि यतश्र्च यत् ।**
**स च यो यत्प्रभावश्र्च तत्समासेन मे श्रृणु ॥ ३ ॥**

त्यो क्षेत्र जुन र जस्तो छ तथा जस्तो विकारवाला छ र जुन कारणले जे भएको छ तथा त्यो क्षेत्रज्ञ पनि जुन र जस्तो प्रभाववाला छ-ती सबै संक्षेपमा मबाट सुन ।

अब तिमी मसँग संक्षेपमा सुन कि कर्मक्षेत्र के हो ?, यो कसरी बन्दछ ?, त्यसमा के-के परिवर्तनहरू हुन्छन् ?, यो कहाँबाट उत्पन्न हुन्छ ?, यस कर्मक्षेत्रलाई जान्नेवाला को हो ? र त्यस्को के प्रभाव छ ? भगवान्‌ले कर्मक्षेत्र (क्षेत्र) तथा कर्मक्षेत्रको ज्ञाता (क्षेत्रज्ञ) को स्वाभाविक स्थितिको बारेमा वर्णन गर्दै हुनुहुन्छ । मानिसले यो जान्नु पनि आवश्यक छ कि यो शरीर कसरी बनेको छ, यसमा कुन-कुन पदार्थहरू समावेश भएका छन्, यो कस्को नियन्त्रणमा क्रियाशील छ, यसमा कसरी परिवर्तन हुने गर्दछ, ती परिवर्तनहरू कहाँबाट आउँदछन्, के कारणले आउँदछन्, आत्माको चरम लक्ष्य के हो ?, आत्माको वास्तविक स्वरूप के हो ? यस प्रकार आत्मा तथा परमात्मा, तिनीहरूको विभिन्न प्रभावहरू र तिनीहरूको शक्तिको बारेमा श्रीकृष्णले वर्णन गर्दै हुनुहुन्छ ।

**ऋषिभिर्बहुधा गीतं छन्दोभिर्विविधैः पृथक् ।**
**ब्रह्मसूत्रपदैश्चैव हेतुमद्भिर्विनिश्र्चितैः ॥ ४ ॥**

यस क्षेत्र तथा क्षेत्रज्ञको तत्वको बारेमा ऋषिहरूद्वारा धेरै किसिमले भनिएका छन् र विविध वेदमन्त्रहरूद्वारा पनि विभागपूर्वक भनिएका छन् तथा राम्ररी निश्चय गरिएको युक्तियुक्त ब्रह्मसूत्रका पदहरूद्वारा पनि भनिएका छन् ।

विभिन्न ऋषिहरूद्वारा विभिन्न वैदिक ग्रन्थहरूमा कार्यहरू गरिने क्षेत्रहरूको बारेमा तथा ती क्रियाकलापका ज्ञाताहरूको बारेमा वा क्षेत्रज्ञहरूको वर्णन गरिएका छन् । यस कार्यको लागि तिनीहरूलाई विभिन्न विभागहरूमा बाडेर बेग्ला-बेग्लै तिनीहरूको नामाकरण गरेर पनि वर्णन गरिएका छन् । यसलाई विशेष रूपमा वेदान्त

सूत्रमा यी बीचको कार्य-कारण सम्बन्धी सबै तर्कहरू समेत प्रश्तुत गरिएका छन् । यसरी वेदान्त, ब्रह्मसूत्र तथा महर्षिहरूले बताएका सन्दर्भहरूलाई एकिकृत गरी श्रीकृष्णले बताउँदै हुनुहुन्छ । गीता ती सबै ज्ञानको सञ्चय गरिएको भण्डार हो जुन हाम्रा वेद तथा उपनिषद्हरूमा वर्णित छन् । हाम्रा ऋषिहरूको हजारौँ वर्षहरूको साधनाको प्रतिफल हो गीता ।

**महाभूतान्यहंकारो बुद्धिरव्यक्तमेव च ।**
**इन्द्रियाणि दशैकं च पञ्च चेन्द्रियगोचराः ॥ ५ ॥**

पाँच महाभूत, अहङ्कार, बुद्धि र मूल प्रकृति पनि तथा दस इन्द्रियहरू, एक मन र पाँच इन्द्रियहरूका विषयहरू अर्थात शब्द, स्पर्श, रूप, रस र गन्ध सबै क्षेत्रहरू हुन् ।

यहाँ कर्मका क्षेत्रहरूको बारेमा श्रीकृष्णद्वारा बर्णन गरिएको छ । सङ्क्षेपमा ती हुन्ः पञ्च महाभूत, अहङ्कार, बुद्धि, अव्यक्त मूल प्रकृति अर्थात् आद्य शक्ति, दस इन्द्रियहरू, एक मन, पाँच इन्द्रियहरू जस्तैः शब्द, स्पर्श, रूप, रस र गन्ध । यी सबैको अर्थात् २४ वटाको समष्टीगत समूहलाई क्षेत्र भनिन्छ । यी कर्महरू हुने क्षेत्रहरूमा पाँच महाभूत भन्नाले पृथ्वी, जल, अग्नि, वायु तथा आकाश यस क्षेत्रका स्वरूप हुन् । अनि अहङ्कार, बुद्धि र हाम्रो मूल प्रकृति, हाम्रा दश इन्द्रियहरू (आद्य शक्ति, पाँच ज्ञानेन्द्रियहरूः आँखा, कान, नाक, जिभ्रो तथा त्वचा । फेरि पाँच कर्मेन्द्रियहरूः बोली, खुट्टा, हात, मलव्दार तथा लिङ्ग) । यी सबै इन्द्रियहरूभन्दा माथि मन छ । यी इन्द्रियहरूका विकारयुक्त पाँच विषयहरू छन् । पाँच इन्द्रियहरूको विषयहरू अर्थात् शब्द, स्पर्श, रूप, रस र गन्ध । यी चौबिस तत्वहरूको समूहलाई कर्मक्षेत्र भन्दछन् ।

**इच्छा द्वेषः सुखं दुःखं संघातश्र्चेतना धृतिः ।**
**एतत्क्षेत्रं समासेन सविकारमुदाहृतम् ॥ ६ ॥**

ती कर्मक्षेत्रहरूमा उपर्युक्त उल्लेखित सहित इच्छा, द्वेष, सुख, दुःख, स्थूल शरीरको पिण्ड, चेतना र धृति यस प्रकार विकारयुक्त क्षेत्रहरू सङ्क्षेपमा भनियो ।

कर्मक्षेत्रहरूसँग संलग्न हुने विकारहरूः इच्छा, द्वेष, सुख तथा दुःख, स्थूल शरीरको पिण्ड ती बीच हुने अर्न्तक्रियाहरू पर्दछन् । चेतना तथा धैर्य पनि क्षेत्रका



विकारहरू हुन् । यी स्थूल शरीरका पाँच महाभूतहरूको अभिव्यक्ति हुन् । हामी जुन-जुन साधनहरूद्वारा यस संसारमा कृया तथा अन्तरक्रिया गर्दछौँ ती सबैलाई शरीररूपी क्षेत्रको विकार मानिएको छ । हामीले यहाँ रोप्न खोजेको राम्रो कृत्यलाई असल संस्कार भनिन्छ । हामीबाट गरिएका नराम्रा कृत्यहरूलाई दुष्कृत्य भनिन्छ । कृषकहरूले जसरी रोपेको बिउँहरूको फल काट्दछन् त्यस्तै गरिएका कर्महरूको फल संस्कारको रूपमा हामीले काट्दछौँ ।

**अमानित्वमदम्भित्वमहिंसा क्षान्तिरार्जवम् ।**
**आचार्योपासनं शौचं स्थैर्यमात्मविनिग्रहः ॥ ७ ॥**

श्रेष्ठताको अभिमानको अभाव, दम्भाचरणको अभाव, कुनै पनि प्राणीलाई कुनै पनि प्रकारले नसताउने, क्षमाभाव, मन-वाणी आदिमा सरलता, श्रद्धा-भक्ति सहित गुरूको सेवा, बाहिर-भित्रको सुद्धि, अन्तकरणमा स्थिरता र मन इन्द्रियहरू सहित शरीरको निग्रह वा संयम-यी क्षेत्रज्ञका गुणहरू हुन् ।

श्रीकृष्णले यहाँ क्षेत्रज्ञको बारेमा भन्दै हुनुहुन्छ । कस्तो हुन्छ क्षेत्रज्ञ ? जस्ले क्षेत्रको तत्वको बारेमा बुझ्दछ । क्षेत्रज्ञमा हुने गुणहरूः विनम्रता, दम्भहीनता, अहिंसा, क्षमाभाव वा सहिष्णुता, सरलता, प्रामाणिक गुरू समिप जाने, खानु-पिउनु तथा जीवन शुद्ध र भित्रको मन पनि शुद्ध, पवित्रता, अन्तकरणमा स्थिरता, आत्मसंयम, इन्द्रियतृप्तिका विषयहरूको परित्यागमा पर्दछन् । यसरी उस्ले आफ्ना अस्तित्वलाई जानेको हुन्छ र त्यसलाई आचरणमा ढाली संयमी हुन सक्दछ ।

**इन्द्रियार्थेषु वैराग्यमनहंकार एव च ।**
**जन्ममृत्युजराव्याधिदुःखदोषानुदर्शनम् ॥ ८ ॥**

यस लोकका तथा परलोकका सम्पूर्ण भोगहरूमा आसक्तिको अभाव र अहङ्कारको पनि अभाव, जन्म, मृत्यु, जरा र रोग आदिमा दुःख तथा दोषहरूको पटक-पटक विचार गर्नु-यी पनि क्षेत्रज्ञका गुणहरू हुन् ।

क्षेत्रज्ञमा भएका गुणहरूको बारेमा थप जानकारी दिँदै श्रीकृष्ण यस श्लोकमा भन्नुहुन्छ क्षेत्रज्ञलाई न यस लोकको र नै परलोकका भोगहरूमा कुनै आसक्ति हुन्छ । यहाँ त यस लोकका विभिन्न भोगहरूप्रतिको आसक्तिमा नै सबैजसो जीवहरू फसेका छन् । घर, पैसा, आरामको जिन्दगीमा समय व्यर्थमा गुमाउँदै फसेका छन् । यति

मात्र कहाँ हो र ! जो यस लोकमा रहेका भौतिक सुखभोगबाट अलग्गिएका छन् उनीहरू परलोकको जस्तैः स्वर्गको लोभमा फसेका छन् । यी दुबै लोकहरूको आसक्तिबाट बचेर रहने नै क्षेत्रज्ञ हो । क्षेत्रज्ञमा म र मेरो सम्पत्ति, शक्ति र सम्मान आदि अहङ्कारको अभाव हुनुपर्दछ । जन्म, मृत्यु, बृद्धावस्था र रोग आदिमा किन दुःख तथा दोष हुन्छ यसको बारेमा पटक-पटक विचार गर्ने नै क्षेत्रज्ञको अर्को गुण हो ।

**असक्तिरनभिष्वङ्गः पुत्रदारगृहादिषु ।**
**नित्यं च समचित्तत्वमिष्टोपपत्तिषु ॥ ९ ॥**

छोरा, श्रीमती, घर र धन आदिमा आसक्तिको अभाव, माया-ममता नहुनु तथा प्रिय र अप्रियको प्राप्तिमा सदा चित्तमा समभाव राख्नु ।

जब मानिसको जन्म हुन्छ, उस्को घर हुन्छ, विवाह हुन्छ, अनि स्त्रीको साथमा सन्तान जन्मिन्छ, घरमा धन आउँछ वा धन जान्छ । यो क्रम हरेक जन्ममा निरन्तर चलिरहन्छ । यस्को बारेमा किन हरेक जन्ममा यस्तो हुन्छ ? यो क्रम किन चलिरहन्छ ? भनी सोचेपछि त्यस मानिसको ज्ञानको ढोका खुल्दछ । राम्रो भएपछि ऊ खुशी हुन्छ, नराम्रो भएपछि उस्मा दुःख र क्रोध आउँछ । एक जन्ममा पनि यस्ता कार्यहरू दोहरिरहेको पाइन्छ । यो कहिलेसम्म चलिरहन्छ ? अर्को जन्ममा पनि के यस्तै भइरहन्छ ? कहिलेसम्म यस सांसारिक जालमा फसेर बस्ने ? यी बिषयवस्तुहरूको बारेमा सोच्नु पनि क्षेत्रज्ञ हो । यस्तो ज्ञानको उत्तर प्राप्ति पश्चात क्षेत्रज्ञले सन्तान, श्रीमती, घर, धन आदिमा आसक्ति एवं मायाबाट मुक्ति, राम्रो तथा नराम्रो धटनाप्रति निरन्तर समभाव राख्ने गर्दछ ।

**मयि चानन्ययोगेन भक्तिरव्यभिचारिणी ।**
**विविक्तदेशसेवित्वमरतिर्जनसंसदि ॥ १० ॥**

म परमेश्वरमा अनन्य योगद्वारा अव्यभिचारिणी भक्ति तथा एकान्त र शुद्ध देशमा रहने स्वभाव र विषयासक्त मानिसहरूको समुदायको लागि प्रेम नहुनु । क्षेत्रज्ञका गुणहरू हुन् ।

क्षेत्रज्ञ त्यही हुन्छ जस्मा क्षेत्रको बारेमा ज्ञान हुन्छ । श्रीकृष्णले त्यसै सन्दर्भमा भन्नुहुन्छ कि क्षेत्रज्ञमा के को ज्ञान हुन्छ ? क्षेत्रज्ञमा म परमेश्वरमा अनन्य योगद्वारा मात्र वासुदेवप्रति अव्यभिचारिणी अनन्य सशक्त भक्ति हुनु, अरू कसैप्रति पनि भक्ति नहुनु नै ज्ञान हो । यस बाहेक एकान्त अनि शुद्ध देशमा बस्ने स्वभाव र



सांसारिक विषयहरूप्रति इच्छा शक्ति वा आसक्ति भएका मानिसहरूको जनसमुदायबाट टाढा रहने स्वभाव हुनु ज्ञान हो । एकान्त मात्र योगीले मन पराउँदछ । अन्य व्यक्तिहरू त जनसमुदायमा रहेर सांसारिक मोहजालमा फसेर बसेका हुन्छन् । यस्तो कोलाहलपूर्ण वातावरणबाट बेग्लै बसेर ध्यान गर्नु नै ज्ञान हो ।

**अध्यात्मज्ञाननित्यत्वं तत्त्वज्ञानार्थदर्शनम् ।**
**एतज्ज्ञानमिति प्रोक्तमज्ञानं यदतोऽन्यथा ॥ ११ ॥**

अध्यात्मज्ञान (जुन ज्ञानव्दारा आत्मवस्तु र अनात्मवस्तुको बारेमा जानिन्छ) मा नित्य स्थिति रहनु र तत्वज्ञानमा अर्थरूप परमात्मालाई नै देख्नु-यी सबै ज्ञान हुन र जो यसको विपरीत छ त्यो अज्ञान हो-यस्तो भनिन्छ ।

ज्ञान के हो ? र के होइन् त्यसैलाई श्रीकृष्णले स्पष्ट गर्दै हुनुहुन्छ । आधिपत्य आध्यात्मज्ञानबाट आत्मा नै सबै थोक हो भन्ने जानकारी प्राप्त हुन्छ । यस्मा आत्मा बाहेक अरू केही पनि छैनन् भनी बोध हुन्छ । फेरि, तत्व ज्ञानमा परमात्मासँग साक्षात्कार हुन्छ । तत्वज्ञानको प्राप्ति पश्चात मात्र परमात्मा देखिनु हुन्छ । अरू केही पनि होइनन् । यस प्रकार आध्यात्मज्ञान तथा तत्वज्ञान यी दुइ किसिमका ज्ञानहरू हुन्छन्, अरू केही हुँदैनन् । अरू जे पनि यस्को विपरीत हुन्छ, त्यो अज्ञान हो । जस्तैः मान, दम्भ, हिंसा आदि । अज्ञानले हामीलाई आध्यात्मज्ञान तथा तत्वज्ञानबाट टाढा लैजान्छ । तर आध्यात्मज्ञान तथा तत्वज्ञानले हामीलाई सत्यताको नजिक पुर्याउँछ ।

**ज्ञेयं यत्तत्प्रवक्ष्यामि यज्ज्ञात्वामृतमश्नुते ।**
**अनादिमत्परं ब्रह्म न सत्तन्नासदुच्यते ॥ १२ ॥**

जे जान्नेयोग्य छ तथा जस्लाई जानेर मानिसले परमानन्दलाई प्राप्त गर्दछ, त्यस बारेमा राम्ररी भनौंला । त्यो अनादि परमब्रह्मलाई न सत् नै भनिन्छ र नै असत् ।

यस संसारमा ज्ञाताले आत्मा तथा परमात्मा दुबैको बारेमा ज्ञान राख्दछ । उस्ले मानिसको यस जीवनमा अमृतको रसास्वादन गर्दछ । यसै क्रममा श्रीकृष्णले जीवनलाई क्रमशः खोल्दै हुनुहुन्छ । सबैभन्दा ठूलो भेद, सबैभन्दा गोप्य कुरालाई एक-एक गरेर बताउँदै हुनुहुन्छ । उहाँले जान्नेयोग विषय बताउँदै हुनुहुन्छ र जस्लाई जानेर मानिसले परमानन्द प्राप्ति गर्दछ । श्रीकृष्णले परब्रह्मको बारेमा धेरै नै गुह्य कुरा गर्दै हुनुहुन्छ । यो अनादिवाला परब्रह्मलाई न सत् र न असत् भनिन्छ । जस्को कुनै आदि वा प्रारम्भ छैन, जो सधैँदेखि छ त्यो हो परब्रह्म । जो एक सत्य हो, त्यो

एक मात्र परमात्मा हो । जब यो परब्रह्म एक्लै हुनुहुन्छ, तब सत्य हुन्छ तथा जब यस्मा असत्य मानिस मिल्दछ भने कस्लाई सत्य भन्नु कसलाई असत्य भनी छुट्याउनु । किनकि दुबै एउटै भइसकेका हुन्छन् ।

**सर्वतः पाणिपादं तत्सर्वतोऽक्षिशिरोमुखम् ।**
**सर्वतः श्रुतिमल्लोके सर्वमावृत्य तिष्ठति ॥ १३ ॥**

उहाँ सबैतिर हात-खुट्टाहरू भएको, सबैतिर आँखा, टाउको र मुखहरू तथा कानहरू भएको हुनुहुन्छ । किनकि उहाँले संसारमा सबैलाई व्याप्त गरेर स्थित रहनु भएको छ ।

श्रीकृष्णले पब्रह्मको ब्याख्या गर्दै हुनुहुन्छ । परब्रह्म सबैतिर हातहरू र खुट्टाहरू, आँखाहरू, टाउकोहरू, मुखहरू र कानहरू भएको हुनुहुन्छ । यसरी परमात्माले संसारमा सबैलाई व्याप्त गरेर स्वयम् स्थित रहनु भएको छ । हाम्रो यो पृथ्वी आकाशमा स्थित छ । यो गोलो छ, यस्को सबैतिर आकाश छ । यसै आकाशमा वायु, अग्नि, जल तथा पृथ्वी स्थित छन् । यो आकाश पनि ती सबैको कारण हो । आकाशले ती सबैलाई धारण नगर्ने हो भने केही पनि हुन्न । त्यस्तै परमात्मा पनि सबैको कारण रूप हुनाले सबै संसारलाई व्याप्त गरेर स्थित हुनुहुन्छ । अर्थात् हामी सबै उहाँ परब्रह्मको कारणले छौँ तथा परब्रह्ममा स्थित छौँ । परमात्मा सूर्यले जस्तै आफ्ना किरणहरू सबैतिर व्याप्त गरेर स्थित रहेको हुनुहुन्छ त्यसैले सबैमा व्याप्त हुनुहुन्छ । उहाँमा आदि ब्रह्मादेखि कमिलासम्म रहेका छन् ।

**सर्वेन्द्रियगुणाभासं सर्वेन्द्रियविवर्जितम् ।**
**असक्तं सर्वभृच्चैव निर्गुणं गुणभोक्तृ च ॥ १४ ॥**

उहाँले सबै इन्द्रियहरूको विषयहरूलाई जान्नुहुन्छ, तर वास्तवमा सबै इन्द्रियहरूको प्रभावबाट रहित हुनुहुन्छ तथा आसक्तिरहित भएर पनि सबैलाई धारण एवं पोषण गर्ने वा निर्गुण भएर पनि गुणहरूलाई भोग्ने हुनुहुन्छ ।

परमात्मा सबै इन्द्रियहरूको मूल श्रोत हुनुहुन्छ । तर पनि उहाँ इन्द्रियहरूबाट उत्पन्न हुने आसक्तिरहित हुनुहुन्छ । उहाँ समस्त जीवहरूको पालनकर्ता भएर पनि उनीहरू प्रति उहाँले अनासक्ती कायम राख्नुहुन्छ । यसलाई आत्म साक्षात्कार पनि भनिन्छ । हामी जीवहरू उहाँ ब्रह्मबाट निस्केकोले स्वभाविक रूपमा त्यस ब्रह्मलाई हाम्रा इन्द्रियहरूको बारेमा सबै जानकारी रहेको हुन्छ । तर ती इन्द्रियहरूबाट भए



गरेका दुष्कर्महरूबाट उहाँ टाढा हुनुहुन्छ । परमात्माको कुनै आकार हुँदैन तथापि उहाँले सबै गुणहरूलाई भोग्ने हुनुहुन्छ । उहाँ प्रकृतिका गुणहरूभन्दा टाढा हुनुहुन्छ । तापनि उहाँ भौतिक प्रकृतिका सबै गुणहरूको मालिक हुनुहुन्छ । उहाँ सबै जीवहरूका इन्द्रियहरूको श्रोत अर्थात श्रृष्टिकर्ता, सञ्चालक तथा संहारक भएपनि जीवहरूको जस्तै माया जालमा बांधिएका उहाँका इन्द्रियहरू नभई ती दिव्य हुन्छन् । उहाँका इन्द्रियहरू भौतिक विषयवस्तुको चाहना रहित हुन्छन् । तसर्थ तिनीहरूलाई निर्गुण भनिन्छ । ती कल्मषरहित हुन्छन् ।

**बहिरन्तश्र्च भूतानामचरं चरमेव च ।**
**सूक्ष्मत्वात्तदविज्ञेयं दूरस्थं चान्तिके च तत् ॥ १५ ॥**

उहाँ चराचर सबै भूतहरूको बाहिर-भित्र परिपूर्ण हुनुहुन्छ र चर-अचर पनि उहाँ नै हुनुहुन्छ । र उहाँ सूक्ष्म भएकोले अविज्ञेय (साह्रै सानो भएकोले जान्न नसकिने) हुनुहुन्छ तथा धेरै नै नजिक तथा धेरै नै टाढा पनि स्थित हुनुहुन्छ ।

परब्रह्म के हो ? भन्ने बारेमा श्रीकृष्णले हामीलाई सम्झाइरहनु भएको छ । संसारका सजीव तथा निर्जीव प्राणीहरू सबैको बाहिर तथा भित्र उहाँ परिपूर्ण स्वरूपमा हुनुहुन्छ । अर्थात हाम्रा आत्माहरू भई उहाँ नै अंशको रूपमा हुनुहुन्छ । परम सत्य सबै जीवहरूको बाहिर-भित्र सर्वत्र हुनुहुन्छ । उहाँ अति नै सूक्ष्म भएकोले जीव तत्वको इन्द्रियहरूले देख्ने तथा जान्ने हुनुहुन्न । जस्तै सूर्यको किरणमा सूक्ष्मतम रूपमा रहेको जल हामी देख्न सक्दैनौं । तर उहाँले हामीलाई बेग्ला-बेग्लै रूपमा हेरिरहनु भएको हुन्छ । साथै उहाँ धेरै नै टाढा रहनुहुन्छ तथा हाम्रो समीपमा हुनुहुन्छ । उहाँ भौतिक तथा आध्यात्मिक दुबै जगतमा विद्यमान हुनुहुन्छ । उहाँले दिव्य ऐश्वर्यहरूको भोग गरिरहनु हुन्छ । तर हाम्रा यी भौतिक आँखाहरूले हामीले उहाँलाई देख्न तथा जान्न सक्दैनौं । हाम्रा मन तथा इन्द्रियहरू यस कार्यमा असमर्थ छन् । तर श्रीकृष्णको भक्तिसेवामा रत योगीले आफ्नो मनलाई शुद्ध गरेर उहाँलाई निरन्तर देख्न सक्दछ ।

**अविभक्तं च भूतेषु विभक्तमिव च स्थितम् ।**
**भूतभर्तृ च तज्ज्ञेयं ग्रसिष्णु प्रभविष्णु च ॥ १६ ॥**

उहाँ परमात्मा विभागरहित भएर एक रूपमा आकाश जस्तै परिपूर्ण भएर पनि चराचर सबै भूतहरूमा छुट्टिएर रहनु भएको प्रतित हुन्छ तथा उहाँ जान्नेयोग्य

परमात्मा विष्णुको रूपमा भूतहरूलाई धारण-पोषण गर्ने तथा रूद्र रूपमा संहार गर्ने तथा ब्रह्मा रूपमा सबैलाई उत्पत्ति गर्ने हुनुहुन्छ ।

सामान्यतया परमात्मा समस्त जीवहरूको रूपमा विभक्त भएको देखिनु हुन्छ, तर उहाँ कहिल्यै विभाजित हुनुहुन्न । उहाँ एउटै रूपमा आकाश जस्तो परिपूर्ण भएर स्थित हुनुहुन्छ । हामीले केही गाग्राहरूमा पानी भरेर राख्यौं भने सबैमा आकाश बाँडिएको जस्तो लाग्दछ, तर आकाश बाडिएको हुन्न । उहाँ सबै जीवहरूको श्रृष्टिकर्ता, पालनकर्ता तथा संहारक हुनुहुन्छ । परमात्मा सबैको हृदयमा आत्माको रूपमा विराजमान हुनुहुन्छ । उहाँ अविभाजित हुनुहुन्छ । जस्तै मध्याह्नकालमा सबै मानिसहरूको शीरको माथि सूर्य रहेको देखिन्छ तर सूर्य एउटै हुन्छ । प्रत्येक मानिसको लागि सूर्य बाडिएर रहेको हुन्न । त्यस्तै परमात्माको स्वरूप हो । उहाँ ब्रह्मा, विष्णु र शिवको रूपमा विभाजित देखिए तापनि उहाँ एउटै हुनुहुन्छ । उहाँले श्रृष्टि गर्नुभएको यस लोकको लागि उहाँले विष्णुको रूपमा हामी सबै जीवहरूलाई धारण-पोषण गर्नुहुन्छ, रूद्रको रूपमा संहारक वा विनाशक हुनुहुन्छ तथा ब्रह्मदेवको रूपमा श्रृष्टिकर्ता हुनुहुन्छ ।

**ज्योतिषामपि तज्ज्योतिस्तमसः परमुच्यते ।**
**ज्ञानं ज्ञेयं ज्ञानगम्यं हृदि सर्वस्य विष्ठितम् ॥ १७ ॥**

उहाँ परब्रह्म ज्योतिहरूको पनि ज्योति एवम् मायाबाट धेरै टाढा रहनु भएको छ भनिन्छ । उहाँ परमात्मा बोधस्वरूप, जान्नेयोग्य एवं तत्वज्ञानले प्राप्त गर्ने योग्य हुनुहुन्छ र सबैको हृदयमा विशेषरूपले स्थित हुनुहुन्छ ।

उहाँ समस्त ज्योतिहरूको प्रकाशको श्रोत हुनुहुन्छ । उहाँ भौतिक अन्धकार तथा कल्मषभन्दा टाढा हुनुहुन्छ । उहाँ देख्न नसकिने बोधस्वरूप वा ज्ञानस्वरूप वा जान्नेयोग्य हुनुहुन्छ । उहाँ ज्ञान हुनुहुन्छ, ज्ञेय हुनुहुन्छ तथा ज्ञानको लक्ष्य हुनुहुन्छ । उहाँको प्राप्ति तत्वज्ञानबाट हुन्छ । परमात्मा के हो ?, परमात्मा किन हुनुहुन्छ ?, उहाँ कस्तो हुनुहुन्छ ? यी सबै विषयहरू पहिला बुझ्नु पर्ने हुन्छ । यसैलाई तत्वज्ञान भनिन्छ । तत्वज्ञान हासिल भएपछि मात्र हामीलाई परमात्माको प्राप्ति हुन्छ । उहाँ सबैको हृदयमा वास गर्नु हुन्छ । विश्वमा रहेका प्रकाशमान वस्तुहरू सूर्य, चन्द्र लगायतको ज्योतिको श्रोत उहाँ हुनुहुन्छ । उहाँ परमेश्वरको तेजोमय प्रकाशले गर्दा वैकुण्ठलोकमा सूर्य तथा चन्द्रमाको प्रकाशको आवश्यकता हुँदैन । तर यो संसारमा



भने त्यो तेज भौतिक कल्मष, माया-जाल आदिले छोपिन पुगेको छ । त्यसकारण हामीलाई यस संसारमा सूर्य, चन्द्र, बिजुली लगायतको प्रकाशको आवश्यकता पर्दछ ।

**इति क्षेत्रं तथा ज्ञानं ज्ञेयं चोक्तं समासतः ।**
**मम्द्क्त एतव्दिज्ञाय मम्दावायोपपद्यते ॥ १८ ॥**

यसरी क्षेत्र तथा ज्ञान र जान्नेयोग्य परमात्माको स्वरूप बारेमा सङ्क्षेपमा भनियो । मेरो भक्तले यस विषयलाई तत्वको आधारमा जानेर मेरो स्वरूपलाई प्राप्त गर्नेछ ।

श्रीकृष्णले भन्नुभयो कि यसरी मैले कर्मक्षेत्र वा शरीर, ज्ञान, ज्ञेयको बारेमा सङ्क्षेपमा वर्णन गरे । यी विषयवस्तुहरूलाई मेरा भक्तहरूले तत्व ज्ञानको आधारमा मात्र पूर्णरूपले मलाई बुझ्न सक्दछन् र मेरो स्वरूपलाई प्राप्त गर्दछन् । श्रीकृष्णको अनुसार हाम्रो शरीर नै हाम्रो क्षेत्र हो । जसरी बिऊ खेतबारीमा रोपिन्छ त्यसरी नै हाम्रो शरीरमा संस्कारहरू रोपिन्छन् । तिनै संस्कारहरू बमोजिम हामीले राम्रो गर्दै गयौ भने हामीले र राम्रो फल प्राप्त गर्दछौं । ज्ञानको सन्दर्भमा त्यस ब्रह्मको अंश जो हामी भित्र तथा हामी बाहिर छ त्यसलाई जान्नु नै सबैभन्दा ठूलो ज्ञान हो र त्यस ज्ञानलाई प्राप्त गरि सकेपछि हाम्रो सत्मार्गको बाटो खुल्दछ । तत्पश्चात परमात्माको प्राप्ति हुन्छ । यो बाटो कि श्रीकृष्णलाई पाउने हो वा स्वयम्लाई श्रीकृष्णमा विलिन गर्ने हो ।

**प्रकृतिं पुरूषं चैव विध्द्यनादी उभावपि ।**
**विकारांश्र्च गुणांश्र्चैव विद्धि प्रकृतिसम्भवान् ॥ १९ ॥**

प्रकृति र पुरूष-यी दुबैलाई नै तिमी अनादि ठान र राग-द्वेषादि विकारहरूलाई तथा त्रिगुणात्मक सबै पदार्थहरूलाई पनि प्रकृतिबाट नै उत्पन्न भएको बुझ ।

श्रीकृष्णले भन्नुभयो कि प्रकृति तथा पुरूषहरू अर्थात् शिव र शक्ति यी दुवैको मिलनबाट संसार अगाडि बढिरहेको छ । यी दुबैलाई तिमी अनादि कालदेखि छन् अर्थात् यी सनातन हुन् भनी बुझ । हामीमा हुने राग, द्वेष र विकार पनि प्रकृतिबाट नै उत्पन्न हुन्छन् तथा कसैप्रति प्रेम र द्वेष आदि जस्ता भावहरू पनि प्रकृतिजन्य हुन् भनी सम्झ । सात्विक, राजसिक र तामसिक यी तीन गुणबाट बनेका पदार्थहरू पनि प्रकृतिबाट उत्पन्न भएका हुन् भनी बुझ ।

**कार्यकारणकर्तृत्वे हेतुः प्रकृतिरूच्यते ।**
**पुरूषः सुखदुःखानां भोक्तृत्वे हेतुरूच्यते ॥ २० ॥**

कार्य र करणलाई उत्पन्न गर्ने उद्देश्य बोकेकोलाई प्रकृति भनिन्छ र जीवात्मा सुख-दुःखको भोक्तापनमा अर्थात् भोग्ने उद्येश्य बोकेकोलाई भनिन्छ ।

कार्य अन्तर्गत पञ्च महाभूतहरूमाः आकाश, वायु, अग्नि, जल र पृथ्वी तथा शब्द, स्पर्श, रूप, रस र गन्ध पर्दछन् । त्यस्तै करण अन्तर्गतः बुद्धि, अहङ्कार र मन तथा श्रोत्र (कान), त्वचा, रसना, आँखा र घ्राण एवं वाक, हस्त (हात), पाद (खुट्टा, पाऊ), उपस्थ (जनेनन्द्रिय) र गुदा यी १३ वटा पर्दछन् । कार्य र करण दुबै प्रकृतिबाट नै उत्पन्न हुन्छन् । यही कार्य र करणले गर्दा सुख र दुःख उत्पन्न हुन्छन् । यी सुख तथा दुःख भोग्नेवालालाई पुरूष भनिन्छ । यसरी पुरूष तथा प्रकृतिलाई बुझ्न सजिलो हुन्छ ।

**पुरूषः प्रकृतिस्थो हि भुङ्क्ते प्रकृतिजान्गुणान् ।**
**कारणं गुणसङ्गोऽस्य सदसद्योनिजन्मसु ॥ २१ ॥**

प्रकृतिमा स्थित भएको नै पुरूषले प्रकृतिबाट उत्पन्न त्रिगुणात्मक पदार्थहरूलाई भोग्दछ र यी गुणहरूको साथ नै यस जीवात्माको राम्रो तथा नराम्रो योनीहरूमा जन्म लिने कारण हुन्छ ।

जीवहरूले प्रकृतिका तीनै गुणहरूलाई भोग गर्दै प्रकृतिमा नै जीवन व्यतित गर्दछन् । त्यस प्रकृतिसँग सङ्गति गरेको कारणले यस्तो हुन्छ । यस प्रकार उनीहरूले उत्तम तथा अधम योनी प्राप्त गर्दछन् । जीवहरूले एउटा शरीरबाट अर्को शरीर धारण गर्ने कारणमा उनीहरूको असीमित वर्चस्वपूर्ण इच्छा हो । मानिसहरूले प्रकृतिमा प्रभुत्व जमाउने इच्छाको कारणले प्रतिकूल परिस्थितिहरूमा उनीहरू फस्दै जान्छन् । यिनै भौतिक इच्छाहरूले वसिभूत भएर कहिले देवताको रूपमा, कहिले मानिस, कहिले पशु, कहिले किरा, कहिले सन्तपुरूष भई जीवहरूले जन्म लिन्छन् । विडम्बना यो छ कि प्रत्येक परिस्थितिमा उस्ले आफूलाई प्रकृतिको मालिक ठान्दछ जब कि उस्को मालिक प्रकृति हुन्छ । प्रकृतिका विभिन्न गुणहरूसँगको सङ्गतको कारणले ऊ पुनर्जन्मको चक्करमा पर्दछ । ती प्रकृतिका गुणहरूभन्दा माथि उठ्न सक्यो भने मात्र ऊ दिव्य पदमा स्थित हुन सक्दछ । यदि उस्ले सात्विक रूपमा जीवन बिताउँदछ भने उस्को देव योनीमा जन्म हुन्छ, रजोगुणको साथ रहेको छ भने



मानिसको योनी प्राप्त हुन्छ तथा तमोगुणको साथ रहेको छ भने पशुादि नीच योनीमा जन्म लिन्छ । नीच योनी भन्नाले मानिसको जस्तो सोच्न सक्ने क्षमता नभएको, पशुको जस्तो सोच्ने क्षमता भएको भनी यहाँ बुझ्नु पर्दछ ।

**उपद्रष्टानुमन्ता च भर्ता भोक्ता महेश्र्वरः ।**
**परमात्मेति चाप्युक्तो देहेऽस्मिन्पुरूषः परः ॥ २२ ॥**

यस शरीरमा स्थित यो आत्मा वास्तवमा परमात्मा नै हो । त्यही आत्मा साक्षी भएको कारणले उपद्रष्टा वा गवाही र यथार्थ सम्मति दिने भएकोले अनुमन्ता (अनुमति, स्वीकृति दिने), सबैको धारण-पोषण गर्ने भएकोले भर्ता, जीवरूपमा भोक्ता, ब्रह्मा आदिको पनि स्वामी भएकोले महेश्वर र शुद्ध सच्चिदानन्दघन भएकोले परमात्मा-यस्तो भनिएको छ ।

यस शरीरमा एउटा अर्को दिव्य भोक्ता छ, जो आत्माको नाममा ईश्वर हो, परम स्वामी हो र यो साक्षी तथा अनुमति दिनेवालाको रूपमा विद्यमान रहेको छ र जस्लाई परमात्मा भनिन्छ । यो हामीले गर्ने कार्यहरूको साक्षी भएर बसेको हुन्छ । यसरी यस्ले साक्षी बनी गवाही दिने कार्य गर्दछ जस्लाई उपद्रष्टा पनि भनिन्छ । यही आत्माले अनुमति पनि दिने भएकोले यसलाई अनुमन्ता भनिन्छ । यो आत्मा भर्ता पनि हो किनकि यस्ले हाम्रो भरण-पोषण वा पालन-पोषण गर्दछ । यही आत्मा योगमा संलग्न भएर हामीद्वारा गरिने योगलाई तथा हामीलाई बचाउँदछ । जब हाम्रो साधना बढ्दछ अर्थात सूक्ष्म हुन्छ तब आत्माले हामीद्वारा गरिएको यज्ञ तथा तपलाई ग्रहण गर्ने भएकोले यसलाई भोक्ता भनिएको हो । आत्माले हामीद्वारा गरिएको साधना ग्रहण गरेपछि यो परमात्मासँग मिल्दछ ।

**य एवं वेत्ति पुरूषं प्रकृतिं च गुणैः सह ।**
**सर्वथा वर्तमानोऽपि न स भूयोऽभिजायते ॥ २३ ॥**

यस प्रकार पुरूषलाई तथा गुणहरू सहित प्रकृतिलाई जुन मानिसले तत्वले जान्दछ ऊ सबै प्रकारले कर्तव्य कर्म गर्दा-गर्दै फेरि जन्मिदैन ।

मायाको कारणले यो सबै संसार क्षणभङ्गुर, नाशवान, जड, अस्थायी तथा अनित्य छ । जबकि जीवात्मा नित्य, चेतन, निर्विकार तथा अविनाशी छ र त्यो उही परमात्माको सनातन अंश हो । तसर्थ रोजाई गर्दा हामीले स्थायी निर्विकार परमेश्वरलाई

पाउन चाहान्छौँ वा त्यसको विपरीत अस्थायी तथा नाशवान विषयवस्तुहरूलाई ? यही विषयको ज्ञानलाई तत्वज्ञान भनिन्छ । यसरी जुन व्यक्तिले प्रकृति, जीव तथा प्रकृतिका गुणहरूको अर्न्तक्रियाको अवधारणालाई बुझ्दछ उस्ले यस संसारमा कर्तव्य र सत्कर्महरू गर्दा-गर्दै पनि मुक्ति प्राप्त गर्ने निश्चित छ । उस्को वर्तमान स्थिति जस्तोसुकै किन न होस् उस्को पुनर्जन्म हुँदैन ।

**ध्यानेनात्मनि पश्यन्ति केचिदात्मानमात्मना ।**
**अन्ये सांख्येन योगेन कर्मयोगेन चापरे ॥ २४ ॥**

उहाँ परमात्मालाई धेरैजसो मानिसहरू त शुद्ध भएको सूक्ष्म बुद्धिले ध्यानको माध्यमले हृदयमा देख्दछन्, अन्य धेरैजसो ज्ञानयोगव्दारा र अरू कतिजना कर्मयोगद्वारा देख्दछन् अर्थात् प्राप्त गर्दछन् ।

परमात्मा एउटा हुनुहुन्छ । उहाँलाई हेर्ने भिन्दा-भिन्दै तरिकाहरू छन् । हामीले हाम्रो इच्छा बमोजिम तीमध्येको एउटा तरिकाको छनौट गर्न सक्दछौँ । भगवान्ले अर्जुनलाई बताउँदै हुनुहुन्छ कि आध्यात्मिक जीवन सम्बन्धी आफ्नो ज्ञान प्रति श्रद्धावान् आत्मदर्शी भक्तले ध्यान गरेर परमात्मालाई आफ्नै हृदयमा प्राप्त गर्दछ । अर्थात योगको माध्यमव्दारा आफु भित्र हेर्दछ । उस्को धारणामा यस प्रकृतिभन्दा टाढा वैकुण्ठ लोक र भगवान् हुनुहुन्छ । जस्को विस्तार परमात्माको रूपमा सबै जीवहरूमा भएको छ अर्थात उहाँ सर्वव्यापी हुनुहुन्छ । कोही ज्ञानको अनुसिलन गरेर वा सांख्ययोगद्वारा उहाँ परमात्मालाई देख्दछन् । जब स्वयंको खोजमा हामीले आत्माको ज्ञान हासिल गर्दछौँ भने हामीलाई परमात्मा पाइन्छ । साङ्ख्य दार्शनिकहरूले यस भौतिक जगतलाई २४ तत्वहरूमा विश्लेषण गरेका छन् तथा आत्मालाई २५ सौँ तत्वमा राख्दछन् । जब उनीहरूले आत्मालाई भौतिक तत्वहरूभन्दा बेग्लै ठान्न समर्थ हुन्छन्, त्यसपछि उनीहरूले आत्माभन्दा माथि परमात्मा रहनु भएको छ भनी स्वीकार गर्दछन् र उनीहरूले परमात्मालाई २६ सौँ तत्वको रूपमा मान्दछन् । अर्कोथरि केही मानिसहरू परमात्मालाई कर्मयोगद्वारा पनि प्राप्त गर्दछन् । जब हामीले हाम्रा हरेक कर्मलाई निष्काम तरिकाले गर्दछौँ तथा सबै कुराहरू उहाँ परमात्मालाई अर्पित गर्दछौँ भने हामीले उहाँलाई नै प्राप्त गर्दछौँ ।

**अन्ये त्वेवमजानन्तः श्रुत्वान्येभ्य उपासते ।**
**तेऽपि चातितरन्त्येव मृत्युं श्रुतिपरायणाः ॥ २५ ॥**



तर यीभन्दा अर्कोथरि अर्थात जो मन्द बुद्धि भएका व्यक्तिहरू छन्, उनीहरूले यी प्रकारहरू नजानेर अरूबाट अर्थात तत्वज्ञानीहरूबाट यस बारेमा सुनेर उपासना गर्दछन् र ती श्रवणपरायण पुरूषहरू पनि यस मृत्युरूप संसार-सागरबाट निःसन्देह तर्दछन् ।

यस्ता पनि मानिसहरू छन् जस्लाई आध्यात्मिक ज्ञान प्राप्त छैन । उनीहरूले साधना, ज्ञान तथा कर्मयोगले परमात्मालाई प्राप्त गर्न सकिने विधिहरू जान्दैनन् । उनीहरूले अन्य व्यक्तिहरूबाट वा तत्व विषयको जानकार ज्ञानीहरूबाट परम पुरुषको बारेमा सुनेर उहाँको पूजा आराधना गर्ने गर्दछन् । उनीहरूले पनि प्रामाणिक गुरुहरूबाट सुनेको कारणले यस संसारको जन्म तथा मृत्युको बाटोबाट बिना कुनै शङ्काले मुक्ति पाउँदछन् । यसर्थ राम्रो गर्नेहरूको पछि हिडनाले पनि फाइदा नै हुन्छ भनी यहाँ हामीले बुझ्नु पर्ने खाँचो छ ।

**यावत्संजायते किंचित्सत्त्वं स्थावरजङ्गमम् ।**
**क्षेत्रक्षेत्रज्ञसंयोगात्तद्विध्दि भरतर्षभ ॥ २६ ॥**

हे अर्जुन ! जे भए पनि यो तिमीले बुझ कि जति पनि स्थावर वा अचर तथा जङ्गम वा चर प्राणीहरू उत्पन्न हुन्छन्, ती सबैलाई तिमी क्षेत्र र क्षेत्रज्ञको संयोगले उत्पन्न भएको भनी बुझ ।

श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि यस संसारमा चर (चलायमान) तथा अचर जे पनि अस्तित्वमा तिमीले देखिरहेका छौं तिनीहरूको उत्पत्ति कर्मक्षेत्र तथा क्षेत्रको ज्ञाताको संयोगबाट भएको हो भनेर तिमीले बुझ । सरल अर्थमा क्षेत्र भन्नाले शरीर तथा क्षेत्रज्ञ भन्नाले त्यस्को वा शरीरको बारेमा ज्ञान वा तत्वज्ञान हुने क्षेत्रज्ञ हो । क्षेत्रज्ञनै मोक्षको साधन हो । क्षेत्र तथा क्षेत्रज्ञको सम्बन्धलाई गाई वा दाम्लोको सम्बन्ध पनि मान्न सकिन्छ । यहाँ गाई क्षेत्र भयो तथा दाम्लो क्षेत्रज्ञ भयो । जहाँ-जहाँ दाम्लो जान्छ गाई पनि त्यहीँ-त्यहीँ जान्छ । दाम्लो बिनाको गाईले के गन्तव्य प्राप्त गर्न सक्ला र ? सक्दैन् । जुन पुरूषले शरीरलाई मायाबाट उत्पन्न भएको हो भनी ज्ञान हाँसिल गर्दछ त्यतिबेला उस्मा रहेको अज्ञानता हट्दछ । संसारमा विद्यमान यी सबै उत्पत्तिहरू यी दुबैको मिलनबाट मात्र सम्भव भएको हो भनी श्रीकृष्णले अर्जुनलाई अवगत गराउँदै हुनुहुन्छ ।

**समं सर्वेषु भूतेषु तिष्ठन्तं परमेश्र्वरम् ।**
**विनश्यत्स्वविनश्यन्तं यः पश्यति स पश्यति ॥ २७ ॥**

जुन पुरूषले नष्ट भइरहेका सबै चराचर भूतहरूमा परमेश्वरलाई नाशरहित र समभावमा स्थित रहेको देख्दछ, त्यसैले यथार्थ देख्दछ ।

जस्ले परमात्मालाई समस्त जीवहरूका शरीरहरूमा आत्मा भई रहेको छ भनी देख्दछ, त्यहाँ परमेश्वरलाई नाशरहित तथा समभावले स्थित रहेको देख्दछ सोही व्यक्तिले यथार्थ देख्दछ । जुन व्यक्तिले सत्संगतिले तीन वस्तुहरूः शरीर, शरीरको मालिक या आत्मा, तथा आत्मा मित्रलाई एकसाथ सँगै देख्दछ त्यही मानिस साँचो अर्थमा ज्ञानी हो । शरीर नाश भएपछि पनि आत्मा तथा परमात्मा नाश हुँदैनन् । जो क्षणभङ्गुर वा अस्थायी छ अर्थात शरीर त्यो अवश्यमेव नष्ट हुन्छ । जुन पुरूष नष्ट हुँदा–हुँदै जीव तथा अजीवमा परमात्मालाई देख्दछ, जस्ले जीव तथा अजीवलाई एउटै भावले हेर्दछ त्यसैले सही देख्दछ । उस्लाई यो पहिचान भएको हुन्छ कि यस संसारमा के साँचो छ तथा के भूठो छ । तर हामीमध्ये धेरैजसो मानिसहरू धन आर्जनको लागि मरिमेट्दछौं, परमेश्वर प्रति सेवामूखि पटक्कै हुँदैनन् । यो संसार तथा यहाँका तत्वहरू सबै भूठा हुन् भनी बुझ्दैनौं वा बुझे पनि नबुझेका जस्तो गर्दछौं । तसर्थ यस अवस्थामा हामी यथार्थबाट टाढा रहेका छौं भनी बुझे हुन्छ ।

**समं पश्यन्हि सर्वत्र समवस्थितमीश्र्वरम् ।**
**न हिनस्त्यात्मनात्मानं ततो याति परां गतिम् ॥ २८ ॥**

किनकि जुन पुरूषले सबैमा समभावले स्थित परमेश्वरलाई समान देख्दै, आफैंद्वारा आफैंलाई नष्ट गर्दैन, यस कार्यबाट उस्ले परम गति प्राप्त गर्दछ ।

जुन व्यक्तिले परमात्मालाई सर्वत्र तथा प्रत्येक जीवमा रहेको देख्दछ, उस्ले आफ्नो मनद्वारा आफैंलाई नष्ट गर्दैन भने उस्ले दिव्य गति प्राप्त गर्दछ । परमेश्वर आफ्नो परमात्मा स्वरूपमा सर्वत्र विद्यमान हुनुहुन्छ । यदि मानिसले परमात्माको उपस्थिति सबै वस्तु वा जीवमा देख्दछ भने त्यो ज्ञानी हो । उसले आफ्नो शरीरमा पनि उनै परमात्माको अंश रहेको छ भनी ज्ञान प्राप्त गरेको हुन्छ । त्यस तत्वज्ञानले उसले आफ्नो शरीरको समयावधिलाई नाश नगरी आध्यात्मिक कार्यमा आफुलाई समर्पित गर्दछ । कहिल्यै पनि आफ्नो जीवनलाई नष्ट गर्दैन । धेरैजसोका मनहरू



मात्र इन्द्रिय तृप्तिमा रत रहन्छन् । जस्ले जति जन्महरूसम्म शरीरलाई नै सबैथोक ठानी कार्य गर्दछ उस्ले यस लोकमा त्यति नै जन्महरू लिइरहनु पर्दछ । त्यस मनलाई शरीरका इन्द्रियहरूको इच्छा तृप्तिको कार्यबाट बिमुख गरेर परमेश्वरको सेवा तथा उपासनामा लगाएमा त्यस व्यक्तिले आध्यात्मिक ज्ञानले जीवनमा सत्मार्गमा लाग्दै परम गति प्राप्त गर्दछ ।

**प्रकृत्यैव च कर्माणि कियामाणानि सर्वशः ।**
**यः पश्यति तथात्मानमकर्तारं स पश्यति ॥ २९ ॥**

र जुन पुरूषले सबै कर्महरूलाई सबै प्रकारले प्रकृतिद्वारा नै भइरहेको देख्दछ र आत्मालाई अकर्ता देख्दछ, त्यसैले यथार्थ देख्दछ ।

तीन गुणहरूद्वारा बनेको माया नै प्रकृति हो । हाम्रा सबै कर्महरू मन, शरीर तथा वाणीद्वारा नै गरिन्छन् । यी सबै कर्महरूको पछाडि प्रकृति नै हुन्छ । जो ज्ञानी हुन्छ उस्लाई यो थाहा हुन्छ कि मनुष्यहरूद्वारा जुन कर्महरू हुन्छन् त्यस्को पछाडि प्रकृतिको हात हुन्छ । आत्माको होइन । हामीसँग हाम्रा कर्महरू तिनै प्रकृतिले गराउँदछन् । जुन पुरूषले उस्को शरीर प्रकृतिद्वारा निर्मित हो तथा ऊबाट भएका कार्यहरू प्रकृतिबाट भएका हुन् भन्ने धारणा राख्दछ, आत्मा मात्र अकर्ता भई साक्षीको रूपमा हेरी मात्र रहेको हुन्छ भन्ने ठान्दछ भने उस्ले यथार्थ देखिरहेको हुन्छ । मानिसहरूको शरीर परमात्माको निर्देशन बमोजिम प्रकृतिद्वारा बनेको हो । मानिसहरूले गर्ने कार्यहरू उनीहरूको शारीरिक रचना बमोजिम हुने गर्दछ । तर आत्मा ती शारीरिक कार्यहरूभन्दा बेग्लै रहेको हुन्छ । उस्ले ती कार्यहरूमा केही हस्तक्षेप गर्दैन । ज्ञानीले मात्र यस यथार्थलाई देख्दछ । अरू अज्ञानीहरूले सबै कार्य मैले वा मेरो शरीरले गरेको हो भन्ने ठान्दछ, अनि जीवन चक्रमा फेरो लगाइरहन्छ । कर्मको बन्धनमा बाँधिएर पुनर्जन्मको चक्करमा परिरहन्छ ।

**यदा भूतपृथग्भावमेकस्थेकस्थमनुपश्यति ।**
**तत एव च विस्तारं ब्रह्म सम्पद्यते तदा ॥ ३० ॥**

जुन क्षणमा यो पुरूषले भूतहरूको बेग्ला-बेग्लै भावलाई एउटा परमात्मामा नै स्थित तथा उहाँ परमात्माबाट नै सबै भूतहरूको विस्तार देख्दछ, त्यसै बेला ऊ सच्चिदानन्दघन ब्रह्मलाई प्राप्त हुन्छ ।

ज्ञानी पुरूषले जब बेग्ला-बेग्लै भावमा वा बेग्ला-बेग्लै भूतहरूमा एउटै परमात्मालाई देख्दछ तब उस्लाई ब्रह्मको प्राप्ति हुन्छ । जब उस्ले यस कुरालाई बुझ्दछ कि परमात्माबाट नै हरेक भाव वा हरेक भूत वा हरेक वस्तुको विस्तार भएको छ तब मात्र उस्ले ब्रह्मलाई बुझ्दछ । द्रष्टा जीव समेत अरू भूतहरूको आँखामा परमात्मा हो तथा अरू जीवहरू उस्को लागि परमात्मा हुन् । आत्माले चेतनता प्रदान गर्ने हुँदा जीव अस्तित्वमा रहेको हुन्छ र सञ्चालित भएको हुन्छ । जस्तैः जब ज्ञानीले यो बुझ्दछ कि आत्माबाट प्राण, आशा, तेज, जल, अन्नको विस्तार भएको छ, अर्थात् आत्माबाट नै यी सबै विषयवस्तुहरू प्रकट भएका छन् र उहाँ परमेश्वरमा नै सबै अन्ततः विलिन हुन्छन् भने उस्ले ब्रह्मलाई बुझेको हुन्छ ।

**अनादित्वान्निर्गुणत्वात्परमात्मायमव्ययः ।**
**शरीरस्थोऽपि कौन्तेय न करोति न लिप्यते ॥ ३१ ॥**

हे अर्जुन ! अनादि तथा निर्गुण भएकोले यो अविनाशी परमात्मा शरीरमा स्थित भएर पनि वास्तवमा न केही गर्दछ र नै लिप्त नै हुन्छ ।

शाश्वत ज्ञानीले यो कुरो बुझ्दछ कि परमात्मा दिव्य, शाश्वत तथा अनादि र निर्गुण छ । यो भौतिक शरीरको साथमा परमात्मा अंशको रूपमा आत्माको नामबाट रहे पनि यस्ले न त्यहाँ केही गर्दछ र नै त्यस शरीरका क्रियाकलापहरूसँग गाँसिएको हुन्छ । संसारमा भएका सबै कार्यहरूको पछाडि केही कारणहरू हुने गर्दछन् । पानी पर्नु, दिन तथा रात हुनु सबै केही कारणहरूले हुने गर्दछन् । तर जो कारण विहिन छ त्यो हो परमात्मा । यो अनादि छ । यसैको अंशको रूपमा आत्मा शरीरमा रहेको हुन्छ । तसर्थ यो आत्मा पनि परमात्मा जस्तै अनादि छ, परापूर्व कालदेखि सनातन छ । यो निर्गुण छ । अर्थात हामीले यसलाई यस्तो-उस्तो हो भनी कुनै गुण वर्णन गरी व्याख्या गर्न सक्दैनौं । यसर्थ गुणरहित छ यो आत्मा । यस्को कहिल्यै नाश हुँदैन । यसै कारणले आत्मा शरीरमा रहे तापनि ऊ शरीरका कर्महरूमा तथा संस्कारहरूमा आसक्त नभई तिनमा लिप्त हुँदैन ।

**यथा सर्वगतं सौक्ष्म्यादाकाशं नोपलिप्यते ।**
**सर्वत्रावस्थितो देहे तथात्मा नोपलिप्यते ॥ ३२ ॥**

जसरी सबैतिर व्याप्त आकाश सूक्ष्म भएको कारणले लिप्त हुँदैन, त्यसरी नै शरीरमा सर्वत्र स्थित आत्मा निर्गुण भएको कारणले शरीरका गुणहरूमा लिप्त हुँदैन ।



यद्यपि आकाश सर्वव्यापी छ । हामीले यस्मा कुनै रंग भर्न वा देख्न सक्दैनौं । यसलाई बाङ्गो वा तेर्सो पार्न सक्दैनौं । यस्को कारण के हो भने यो सूक्ष्म प्रकृति भएर रहेको छ । यो भौतिक संसारको कुनै पनि वस्तुमा लिप्त वा संलग्न हुँदैन । त्यस्तै ब्रह्म दृष्टिमा स्थित रहेको आत्माले यही सूक्ष्मताको कारणले हाम्रो शरीरमा स्थित भए तापनि शरीरसँग यो लिप्त रहँदैन । हाम्रा शरीरहरूका गुणहरू प्रकृतिको कारणले हुन्छन् । प्रकृतिको कारणले शरीरको माध्यमले जे पनि हुन्छन् ती सबै स्थूल वा नाशवान हुन्छन् । तर आत्मा कहिल्यै नाशवान हुँदैन । यो जुनसुकै वा जस्तोसुकै शरीरमा किन नरहेको होस् आत्माको त्यही स्वरूप रहने गर्दछ । यस्ले आफ्नो स्वरूप कहिल्यै परिवर्तन गर्दैन ।

**यथा प्रकाशयत्येकः कृत्स्नं लोकमिमं रविः ।**
**क्षेत्रं क्षेत्री तथा कृत्स्नं प्रकाशयति भारत ॥ ३३ ॥**

हे अर्जुन ! जसरी एउटै सूर्यले यस सम्पूर्ण ब्रह्माण्डलाई प्रकाशित गर्दछ, एउटै आत्माले सम्पूर्ण क्षेत्रलाई प्रकाशित गर्दछ ।

जसरी सूर्यले एक्लै सम्पूर्ण ब्रह्माण्डलाई प्रकाशित गर्दछ, पृथ्वीमा, रूखहरूमा, पहाडहरूमा, पशुपंक्षीहरूमा सबैमा प्रकाश छर्दछ । त्यो प्रकाशको श्रोत त एक छ तर सबैमाथि परिरहेछ । सूर्यदेवले यसरी हरेकलाई प्रकाशित गरिरहनु भएको छ । त्यस्तै आत्मा पनि हो । शरीर भित्र रहेको एउटा आत्माले चेतना प्रदान गरी सम्पूर्ण शरीरलाई प्रकाशित पार्दछ । तर ऊ कुनै शरीरमा पनि लिप्त रहँदैन । जसरी प्रकाशको उपस्थिति सूर्य रहेको प्रमाण मानिन्छ, त्यस्तै चेतना हुनु शरीरमा आत्मा हुनु भन्ने प्रमाणको रूपमा लिइन्छ । आत्मारूपी सूक्ष्म कण शरीर भित्र रहेर चेतनाद्वारा सम्पूर्ण शरीरलाई प्रकाशित गरिरहेको हुन्छ । हामीले आत्मालाई शरीरमा एउटा परमात्मा ठानौं जो शरीरमा चेतना छरेर रहेको हुन्छ, बाडिएको वा टुक्रिएको रूपमा होइन ।

**क्षेत्रक्षेत्रज्ञयोरेवमन्तरं ज्ञानचक्षुषा ।**
**भूतप्रकृतिमोक्षं च ये विदुर्यान्ति ते परम् ॥ ३४ ॥**

यस प्रकार क्षेत्र तथा क्षेत्रज्ञको भेदलाई तथा कार्य सहित प्रकृतिबाट मुक्त हुने बारेमा जुन पुरूषले ज्ञानका-आँखाहरूद्वारा तत्वले यस्लाई जान्दछ, उहाँ महात्माजनले परम ब्रह्म परमात्मालाई प्राप्त गर्नुहुन्छ ।

जुन व्यक्तिले ज्ञानका आँखाहरूद्वारा शरीर तथा शरीरको ज्ञाता बीचको सम्बन्ध तथा अन्तरलाई बुझ्दछ र सांसारिक बन्धनबाट मुक्ति हुने विधिहरू जान्दछ उहाँले परम लक्ष्य प्राप्त गर्नुहुन्छ। हामीले क्षेत्रलाई जड, विकारयुक्त तथा नाशवान ठान्नु पर्दछ। यस्लाई अस्थायी मान्नु पर्दछ। सँगैमा क्षेत्रज्ञलाई नित्य, चेतन, अविकारी, अविनाशी, अनादि, स्थायी तथा अनन्त ठान्नु पर्दछ। जो मानिसले शरीर तथा शरीरको स्वामी परमात्माको बारेमा तत्वज्ञानले बुझ्दछ, ऊ नै ज्ञानी हो। जो पुरूष प्रकृतिबाट मुक्त हुन्छ र आफ्नो ज्ञान नेत्रले क्षेत्रज्ञको तत्वलाई बुझ्दछ, ऊ नै परम ब्रह्म परमात्मालाई प्राप्त हुन्छ। यसरी जस्ले सांसारिक कर्मका बन्धनहरूबाट मुक्ति हुने विधिहरू जानी, सत्यताको बारेमा सम्झी, आफ्नो जीवनरूपी समयलाई अनावश्यक रूपमा खर्च नगरी ती विधिहरूलाई प्रयोजनमा ल्याउँछ, तब मात्र उहाँको लागि मुक्तिको मार्ग प्राप्त हुन्छ, परम ब्रह्म परमात्मा प्राप्त हुन्छ।



अथ चतुर्दशोऽध्यायः

# अध्याय चौध

# गुणत्रयविभागयोग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**परं भूयः प्रवक्ष्यामि ज्ञानानां ज्ञानमुत्तमम्।**
**यज्ज्ञात्वा मुनयः सर्वे परां सिद्धिमितो गताः ॥ १ ॥**

श्री भगवान्ले भन्नुभयोः ज्ञानहरूमा पनि अति उत्तम त्यस परम ज्ञानको बारेमा म फेरि पनि भन्छु, जस्लाई बुझेर सबै मुनीजनहरूले यस संसारबाट मुक्त भएर परम सिद्धि प्राप्त भइसकेका छन्।

भगवान् श्रीकृष्णले भन्दै हुनुहुन्छ कि म तिमीलाई फेरि पनि भन्दै छु कि ज्ञानहरूमा सर्वश्रेष्ठ यही परम ज्ञान हो जस्को बारेमा बुझेर सबै मुनिजनहरूले परम सिद्धि प्राप्त गरिसकेका छन्। यस अध्यायमा श्रीकृष्णले दिनु भएको परम ज्ञान नै सर्वश्रेष्ठ छ भनी अर्जुनलाई सम्झाउँदै हुनुहुन्छ। ज्ञान त्यस्तो जलधारा जस्तो हो जस्ले त्यो खस्ने ढुङ्गा माथि आफ्नो प्रभाव पारिरहेको हुन्छ। तर त्यस जलधाराले प्रभाव पार्ने कार्यले निरन्तरता पाएको हुनु पर्दछ। यसको लागि साधना गरिरहनु पर्दछ। यसै बारेमा भगवान्ले अब विस्तारित रूपमा वर्णन गर्न जाँदै हुनुहुन्छ। तसर्थ हामीलाई हाम्रो जीवनलाई कसरी सफल बनाउने ?, जीवनको लक्ष्य अन्ततः के हो ? भन्ने बारेमा मनन गरी हामीले परम ज्ञानको बारेमा बुझ्नु आवश्यक छ। यसै ज्ञानलाई पाएर धेरै मुनिजनहरूले विगतमा मुक्ति पाई परम सिद्धि पाइसक्नु भएको छ।

**इदं ज्ञानमुपाश्रित्य मम साधर्म्यमागताः।**
**सर्गेऽपि नोपजायन्ते प्रलये न व्यथन्ति च ॥ २ ॥**

यस ज्ञानमा आश्रय गरेर अर्थात धारण गरेर मेरो स्वरूप प्राप्त गरेको पुरूष सृष्टिको आदि वा प्रारम्भमा पुनः उत्पन्न हुने गर्दैनन् र प्रलय कालमा पनि व्याकुल हुँदैन।

यस ज्ञानमा स्थिर भएर मानिसले मेरो जस्तै दिव्य प्रकृति वा स्वभाव प्राप्त गर्न सक्दछ। यसरी स्थित भइसकेपछि ऊ न त फेरि श्रृष्टिको समयमा उत्पन्न हुन्छ र नै श्रृष्टिको समाप्तिमा अर्थात प्रलय कालमा विचलित नै हुन्छ। दिव्य ज्ञान प्राप्त

गरिसकेपछि मानिसले भगवान्सँग गुणात्मक समता कायम गर्दछ । यसै गीतामा श्रीकृष्णले पटक-पटक भन्नु भएको छ कि ज्ञान जस्लाई प्राप्त हुन्छ उस्ले परम सिद्धि प्राप्त गर्दछ । जन्म-मरणको चक्रबाट उस्ले मुक्ति पाउँदछ । यो कुरा धेरै पटक श्रीकृष्णले भन्नु भएकोले स्वभाविकै हो कि यो महत्त्वपूर्ण कुरो हुनु पर्दछ । सोही ज्ञानको बारेमा श्रीकृष्णले अर्जुनलाई यहाँ चर्चा गर्नु भएको हो ।

**मम योनिर्महद्ब्रह्म तस्मिन्गर्भं दधाम्यहम् ।**
**संभवः सर्वभूतानां ततो भवति भारत ॥ ३ ॥**

हे अर्जुन ! मेरो महत्-ब्रह्मरूप मूल प्रकृति सम्पूर्ण भूतहरूको योनि हो अर्थात् गर्भधानको स्थान हो र म त्यस योनिमा चेतन समुदाय रूप गर्भलाई स्थापना गर्दछु । त्यस जड तथा चेतनको संयोगले सबै भूतहरूको उत्पत्ति हुन्छ ।

श्रीकृष्णले अर्जुनलाई आफ्नो गुणात्मक पक्षहरूको बारेमा वर्णन गर्दा भन्नु हुन्छ कि उहाँको सर्वश्रेष्ठ एवं महान ब्रह्मरूपको मूल प्रकृति सबै जीवहरूको योनि हुन वा गर्भधानको स्थान हो । उहाँले यसैमा ब्रह्मलाई गर्भस्थ गर्नुहुन्छ । प्रकृतिलाई नै योनि मान्नु पर्दछ । अर्थात माता मान्नु पर्दछ । आठ तत्व भएको जड प्रकृति नै समस्त वस्तुहरूलाई उत्पन्न गर्ने योनि हो भनी श्रीकृष्णले भन्नु हुँदैछ । अचेतन जड प्रकृति जो स्वभावले अचेतन हुन्छिन् ती हुन्ः पानी, पृथ्वी, अग्नि, वायु, आकाश, मन, बुद्धि र अहङ्कार । श्रीकृष्णले ब्रह्म अर्थात आत्मालाई तिनीहरूमा चेतनारूपी बिऊँको रूपमा स्थापित गर्नु हुन्छ । यसरी ती जड तथा श्रीकृष्णद्वारा स्थापित गरिने चेतनको संयोग वा समायोजनले नै चर तथा अचर प्राणीहरूको जन्म सम्भव हुन्छ । हामीबाट हाम्रो चेतन तत्वलाई अलग्याइयो भने हामी निर्जीव हुन्छौं । जीवित तथा मृत्यमा यही भिन्नता हुने गर्दछ । यस प्रकार श्रीकृष्णले अर्जुनको माध्यमले सबैलाई अर्थात इच्छुक भक्तजनहरूलाई जगत, श्रृष्टिकर्ता आदिको बारेमा सम्झाउँदै हुनुहुन्छ ।

**सर्वयोनिषु कौन्तेय मूर्तयः सम्भवन्ति याः ।**
**तासां ब्रह्म महद्योनिरहं बीजप्रदः पिता ॥ ४ ॥**

हे अर्जुन ! विभिन्न किसिमका सबै योनिहरूमा जति मूर्तिहरू वा शरीरधारी प्राणीहरू उत्पन्न हुन्छन्, प्रकृति त ती सबैको गर्भधारण गर्ने आमा हुन् र म बीऊ स्थापना गर्ने पिता हुँ ।



जीवहरू सर्वत्र छन् । पृथ्वी, जल तथा अग्निमा पनि जीवहरू छन् । ती सबै शरीर धारण गर्ने जीवहरूलाई धारण गर्ने जड प्रकृति नै आमा हुन् भने श्रीकृष्ण ब्रह्म आत्मारूपी बिऊ दिने पिता हुन् । प्राणीको जन्म आमा तथा बुवाबाट नै सम्भव हुन्छ । शरीर वा कायामा प्राण नभएमा त्यो जड प्रकृति हुन पुग्दछ । अनि जब त्यस शरीरमा प्राण वा चेतन समाविष्ट हुन्छ जब त्यस्मा आत्मा वा चेतना आउँछ । आत्मालाई पूर्ण अंशको रूपमा त्यस जड शरीरमा पठाउने पिता श्रीकृष्ण नै हुनुहुन्छ ।

**सत्त्वं रजस्तम इति गुणाः प्रकृतिसंभवाः ।**
**निबध्नन्ति महाबाहो देहे देहिनमव्ययम् ॥ ५ ॥**

हे अर्जुन ! सत्त्वगुण, रजोगुण र तमोगुण-यी प्रकृतिबाट उत्पन्न तीनै गुणहरूले अविनाशी जीवात्मालाई शरीरमा बाँध्दछन् ।

भौतिक प्रकृति तीन गुणहरूले युक्त छिन् । ती हुन्ः सतो, रजो तथा तमोगुण । प्रत्येक जीवमा रहेको अविनाशी आत्मा रहने शरीरलाई तीन गुणहरूले बाँध्दछन् । आत्मा दिव्य भएकोले उस्को यस भौतिक प्रकृतिका गुणहरूसँग संसर्ग हुँदैन । चेतना वा आत्मा जड प्रकृतिबाट कसरी बाधिन्छ ? त्यसैको बारेमा श्रीकृष्णले यस श्लोकमा बताउँदै हुनुहुन्छ । प्रकृतिका तीनवटै गुणहरू भौतिक प्रकृतिबाट नै उत्पन्न भएका हुन्छन् । हाम्रो विनाशी शरीरद्वारा अर्थात यस्बाट उत्पन्न तीनै गुणहरूद्वारा हाम्रो शरीरहरूका कार्यहरू बाधिन पुग्दछन् । तर प्रकृतिका ती तीन गुणहरूको असर जीवात्मामा पनि परिरहेको हुन्छ । यसरी नै विनाशी शरीर तथा अविनाशी आत्माको बीचमा सम्बन्ध रहेको हुन्छ ।

**तत्र सत्त्वं निर्मलत्वात्प्रकाशकमनामयम् ।**
**सुखसङ्गेन बध्नाति ज्ञानसङ्गेन चानघ ॥ ६ ॥**

हे निष्पाप ! ती तीन गुणहरूमध्ये सत्त्वगुण त निर्मल भएको कारणले प्रकाश दिने र विकाररहित छ, त्यस्ले सुख र ज्ञानको सम्बन्धले अर्थात तिनीहरूको अभिमानले बाँध्दछ ।

सतोगुण अन्य गुणहरूभन्दा धेरै शुद्ध भएको कारणले प्रकाश दिने र मानिसहरूलाई सबै पाप कर्महरूबाट मुक्त गर्ने गुण हो । जो व्यक्ति यस गुणमा रहनु भएको छ, उहाँ सुख तथा ज्ञानको भावले बाधिनु हुन्छ । तीनवटै गुणहरू एक

किसिमको बन्धन हो । जसले हामीलाई बाँध्दछन् । सतोगुण पनि एउटा बन्धन हो । तर सतोगुण अन्य गुणहरूभन्दा शुद्ध भएकोले यस्ले पापकर्महरूबाट जीवहरूलाई मुक्त गराउँदछ । पापकर्मबाट मुक्त गरेर सम्बन्धित आत्मालाई यस्ले प्रकाशित गर्दछ । आत्मा हामी भित्रै छ तर हाम्रो अज्ञानताले हामीले उस्लाई देख्न सक्दैनौं । सतोगुणले अज्ञानताबाट हटाएर हामीलाई हाम्रो आत्मासँग परिचित गराउँदछ । तर सतोगुण पनि एउटा बन्धन नै हो तसर्थ यस्ले सुख र ज्ञानको बन्धनले हामीलाई बाँध्दछ पनि ।

**रजो रागात्मकं विद्धि तृष्णासङ्गसमुद्भवम् ।**
**तन्निबध्नाति कौन्तेय कर्मसङ्गेन देहिनम् ॥ ७ ॥**

हे अर्जुन ! जीवमा रागरूप रजोगुणको कामना र आसक्तिले उत्पन्न भएको हुन्छ भनी बुझ । रजोगुणले यस जीवात्मालाई कर्महरू र त्यस्का फलहरूको सम्बन्धले बाँधेको हुन्छ ।

दोश्रो रागरूप रजोगुणको उत्पत्ति अनन्त आकाङ्क्षाहरू तथा तृष्णाहरूबाट भएको हुन्छ र यसैको कारण यो शरीरधारी जीव सकाम कर्महरूमा बाधिन्छ । र जोगुण इन्द्रियतृप्ति सँग गाँसिएको हुन्छ । हामीले जे प्राप्त गरेका छैनौं त्यस्लाई प्राप्त गर्ने इच्छालाई तृष्णा भनिन्छ । अनि प्राप्त भइसकेपछि त्यसप्रतिको मोहलाई आसक्ति भनिन्छ । मानिसमा रजोगुणको कामना लोभको कारणले उत्पन्न हुने गर्दछ । संसारका बहुसङ्ख्यक जीवहरू रजोगुणमा बाँधिएका छन् । शरीरधारी जीवहरू रजोगुणको कारणले सकाम कर्ममा बाँधिन्छन् । सकाम कर्म भन्नाले कर्महरू गरेर फलको अभिलाषा गर्नुलाई भनिन्छ । रजोगुणले सकाम कर्महरू प्रति आसक्ति बृद्धि गरी जीवलाई गरिएका कर्महरू तथा तिनका फलहरूको आकाङ्क्षाले बाँध्दछ ।

**तमस्त्वज्ञानजं विद्धि मोहनं सर्वदेहिनाम् ।**
**प्रमादालस्यनिद्राभिस्तन्निबध्नाति भारत ॥ ८ ॥**

हे अर्जुन ! सबै देहाभिमानीहरूलाई मोहित गर्ने तमोगुण अज्ञानताबाट उत्पन्न भएको हो भन्ने ठान । त्यसले यस जीवात्मालाई प्रमाद, आलस्य र निन्द्राद्वारा बाँध्दछ ।

तिमी यो जानी राख कि अज्ञानताबाट उत्पन्न भएको यो तमोगुण सबै शरीरप्रति अभिमान गर्नेहरूको लागि मोह हो । तमोगुणप्रति आसक्त व्यक्तिमा कुनै भौतिक विषयवस्तु प्राप्तिको लागि पागलपन देखापर्दछ । उस्मा अल्छिपन देखिन्छ अर्थात आज गरिनु पर्ने काम उस्ले भोलि गरौला नि भनेर छाड्दछ । निन्द्रा पनि



उसैलाई बढी लाग्दछ । निन्द्राको अर्थ हो अचेत अवस्थामा नगर्नु पर्ने कार्यहरू गर्ने प्रवृति । आजको समाजमा समेत धेरै पटक धेरै मानिसहरू मेशिनले गरे झैं निरन्तर काममा खटिएका हुन्छन् । लोभमा परेर र अज्ञानी भएर भोग प्राप्तिमा लागिरहन्छन् । उनीहरूमा प्रमाद तथा निन्द्राको मिश्रण पाइन्छ जो तमोगुणको द्योतक हो ।

**सत्त्वं सुखे संजयति रजः कर्मणि भारत ।**
**ज्ञानमावृत्य तु तमः प्रमादे संजयत्युत ॥ ९ ॥**

हे अर्जुन ! सत्वगुणले सुखमा लगाउँदछ र रजोगुणले कर्ममा तथा तमोगुणले त ज्ञानलाई छोपेर प्रमादमा पनि लगाउँदछ ।

यी तीनवटै गुणहरू बन्धनकारी हुन् । सतोगुणले मानिसलाई सुखले बाँध्दछ, यस्ले प्राणीहरूलाई शाश्वत सत्यको खोजी गर्नु भनी प्रेरित गर्दछ । अर्कोतर्फ रजोगुणले मानिसलाई सकाम कर्मले बाँध्दछ, यस्मा मानिसहरू कामको फलको बारेमा, अघि भएका तथा पछि हुने कामहरूबाट फाइदा वा हानीको बारेमा सोचिरहन्छ । ऊ क्रमशः एकपछि अर्को गर्दै पहिलेभन्दा पनि धेरै पाउने उद्देश्यले अझै बढी कर्महरू गर्दछ । त्यस प्राणीले कर्मको लागि कर्म गर्दैन, बरू फलको लागि कर्म गर्दछ । तमोगुणले मानिसको ज्ञानलाई छोपेर उस्लाई निरन्तर केही प्राप्तिको लागि प्रमादमा अर्थात् पागलपनमा बाँध्दछ । यस्को लागि उस्मा लापरवाही तथा नशाको अवस्था देखिन्छ । तमोगुणमा रहेका मानिसहरूबाट गरिएका कार्यहरूले न त सम्बन्धित व्यक्तिलाई र नै सम्बन्धित समाजलाई फाइदा हुने गर्दछ ।

**रजस्तमश्र्चाभिभूय सत्त्वं भवति भारत ।**
**रजः सत्त्वं तमश्र्चैव तमः सत्त्वं रजस्तथा ॥ १० ॥**

हे अर्जुन ! रजोगुण तथा तमोगुणलाई दबाएर सतोगुण, सतोगुण तथा तमोगुणलाई दबाएर रजोगुण, त्यस्तै नै सतोगुण र रजोगुणलाई दबाएर तमोगुण हुन्छ अर्थात् बढ्दछ ।

यस श्लोकमा प्राणीहरूमा गुणको अवस्था कायम हुने बारेमा चर्चा गरिएको छ । हुन त यी तीनै गुणहरू मानिसहरूको एउटै हृदयमा नै हुन्छन् । कहिले काही सतोगुण, रजोगुण तथा तमोगुणलाई दबाएर वा थिचेर माथि आउँदछ । अर्को शब्दहरूमा मानिसले रजोगुण तथा तमोगुण घटाउदै लगेपछि सतोगुण बढद्छ ।

अर्कोतिर कहिले रजोगुण, सतोगुण तथा तमोगुणलाई थिचेर माथि आउँदछ । त्यस्तै मानिसले सतोगुण तथा तमोगुण घटाएपछि रजोगुण माथि आउँदछ । यसरीनै कहिले तमोगुणले, सतोगुण तथा रजोगुणलाई थिचेर माथि आउँदछ । अर्थात सतोगुण तथा रजोगुण घटेपछि तमोगुण बढ्दछ । मानिसमा यी गुणहरूले एकले अर्का दुइथरिलाई थिचेर माथि आउने अवसर खोजिरहेको पाइन्छ । यसरी एउटा गुणले बाँकिका दुई गुणहरूलाई परास्त गरिरहने क्रम जारी रहेको देखिन्छ ।

**सर्वद्वारेषु देहेऽस्मिन्प्रकाश उपजायते ।**
**ज्ञानं यदा तदा विद्याद्विवृद्धं सत्त्वमित्युत ॥ ११ ॥**

जुन समयमा यस शरीर तथा अन्तकरण र इन्द्रियहरूमा चेतनता तथा विवेकशक्ति उत्पत्ति हुन्छ, त्यस बेलामा यस्तो बुझ्नुपर्दछ कि सत्वगुण बढेको छ ।

कुन समयमा प्राणीमा कुन गुण प्रभावित छ भन्ने तथ्य जान्ने तरिका श्रीकृष्णले बताउँदै हुनुहुन्छ । जीवमा सतोगुण बढेको अनुभव तबमात्र गर्न सकिन्छ जब शरीरका सबै नौंवटाद्वारहरूबाट चेतनता, ज्ञान तथा विवेकशीलताको प्रकाशको अभ्युदय हुन्छ । हाम्रो शरीरका नौं ढोकाहरूः दुइ आँखाहरू, दुइ कानहरू, दुई नाकहरू, मुख, गुदा र उपस्थ वा योनी सहित हामी यस संसारको समक्षमा छौं । यी सबै ढोकाहरू बाहिरी संसारतर्फ मुख गरेर खुल्दछन् । जब यी नौं ढोकाहरूबाट ज्ञान र विवेकको प्रकाश आउन थाल्दछ तब रजोगुण तथा तमोगुणलाई घटाएर सतोगुण बढिरहेको छ भनी बुझ्नु पर्ने हुन्छ ।

**लोभः प्रवृतिरारम्भः कर्मणामशमः स्पृहा ।**
**रजस्येतानि जायन्ते विवृद्धे भरतर्षभ ॥ १२ ॥**

हे अर्जुन ! रजोगुण बढेपछि लोभ प्रवृति, स्वार्थ बुद्धिले कर्महरूको सकाम भाव आरम्भ, अशान्ति र विषयभोगमा लालसा-यी सबै उत्पन्न हुन्छन् ।

श्रीकृष्णले गुण प्रकृतिको बारेमा अर्जुनलाई सम्झाउँदा रजोगुणको सन्दर्भमा भन्नु हुँदै यो रजोगुण बृद्धि भएपछि मानिसमा अत्यधिक आसक्ति, सकाम कर्म, गहन उद्यम तथा अनियन्त्रिण इच्छा तथा आकाङ्क्षा, लोभ र स्वार्थका लक्षणहरू देखा पर्दछन् भन्नुभयो । रजोगुणी स्वभाव भएको व्यक्ति कहिल्यै पनि साबिकको पद, प्रतिष्ठा, धन वा अन्य भौतिक सुविधाहरूमा सन्तुष्ट हुँदैन । यी सबै विषयवस्तुहरू



अझै बढाउन ऊ सधैं लालायित रहन्छ । उस्मा इन्द्रिय तृप्तिको कुनै सीमा हुँदैन । उदाहरणस्वरूप भन्दा मानिसले काम गर्दछ, फलस्वरूप उस्ले केही रूपैया पाउँछ । अझै बढी रूपैया पाउन उस्ले अझै बढी कामहरू गर्दछ र उसलाई बढी रूपैया चाहिरहन्छ । यही नै रजोगुणको प्रकृति हो । रूपैयाबाट पाउने आनन्द बृद्धिको लागि यहाँ प्राणीले काम गरिरहेको हुन्छ । कामको लागि काम गरेको होइन । रजोगुणले यसरी लोभलाई उत्पन्न गरी फलको इच्छाले कार्य गर्ने प्रवृति र मनको चन्चलताको कारणले विषय भोगहरूलाई भोग्ने अनियन्त्रित इच्छा बढाउन थाल्दछ ।

**अप्रकाशोऽप्रवृत्तिश्च प्रमादो मोह एव च ।**
**तमस्येतानि जायन्ते विवृद्धे कुरूनन्दन ॥ १३ ॥**

हे अर्जुन ! तमोगुण बढनाले अन्तःकरण तथा इन्द्रियहरूमा अप्रकाश, कर्तव्य कर्महरूमा अप्रवृति र प्रमाद अर्थात व्यर्थ चेष्टा र निन्द्रादि अन्तःकरणका मोहिनी वृतिहरू-यी सबै नै उत्पन्न हुने गर्दछन् ।

तमोगुणी प्राणीहरूले कुनै नियम, विनियम, संस्कारी परम्पराहरूलाई पालना गरी कार्यहरू गर्दैनन् । उनीहरूले मात्र आफ्नो निहित स्वार्थको लागि सनकी भएर कार्यहरू गर्दछन् । शरीरप्रतिको मोहले गर्दा उनीहरूमा परिश्रम गर्ने क्षमता भएर पनि परिश्रम गर्दैनन् । आफ्ना निर्धारित कर्महरूप्रति अनासक्ति रहनु र आलस्यमा बृद्धि हुनु उनीहरूका प्रकृति प्रदत्त लक्षणहरू हुन् । उनीहरूमा चेतना हुन्छ तर उनीहरूले जीवनलाई सार्थक उचाईँमा पुर्याउनुको साटो निष्क्रिय वा अल्छि भएर बस्दछन् । जब कोही प्राणी निष्क्रिय भएर बस्नमा आनन्दको अनुभूति गर्दछ, अज्ञानमा रहनुमा खुशी ठान्दछ भने, भौतिक विषयवस्तुको आर्जनमा पागलै भएर लाग्दछ भने तथा कुनै पनि मोहको कारणले आफ्ना कार्यहरू गर्न छोड्दछ भने उस्मा तमोगुणको मात्रा बढिरहेको छ भन्ने अर्थ हुन्छ । तमोगुणको अवस्थालाई अत्यन्तै अविवेकी अवस्था भनिन्छ । सही के हो तथा गलत के हो भनी छुट्याउन सक्ने क्षमता जब समाप्त हुन्छ, उस्ले गरेका वा गर्ने कृत्यहरू गलत छन् भनी उस्लाई थाहा नै छैन भने त्यो मानिस तमोगुणको वशमा छ भनी बुझ्े हुन्छ ।

**यदा सत्त्वे प्रवृद्धे तु प्रलयं याति देहभूत् ।**
**तदोत्तमविदां लोकानमलान्प्रतिपद्यते ॥ १४ ॥**

जब यो मनुष्यमा सत्त्वगुणको बृद्धि हुँदा-हुँदै मृत्यु हुन्छ, तब उस्ले उत्तम कर्म गर्नेवालाहरूले पाउने गरेको निर्मल दिव्य स्वर्गादि लोकहरू प्राप्त गर्दछ ।

भौतिक जगतमा क्लेष र अशुद्धिहरू धेरै छन् । जीवको मृत्युको समयमा उस्ले गरेका कर्महरू तथा तिनीहरूको फलहरूको हिसाब हुने गर्दछ । तर यदि कुनै मानिसको सत्वगुणमा रहेको अवस्थामा मृत्यु हुन्छ, ऊ यदि सो समयमा सत्वगुणको बृद्धिको काममा लागिरहेको हुन्छ भने उस्ले उच्च निर्मल दिव्य स्वर्ग लोक प्राप्त गर्दछ र दैवी सुखभोग गर्दछ । निर्मल स्वर्ग लोक भन्नाले जहा सबै कुराहरू निर्मल हुन्छन्, जहा सबैले भगवान्का ज्ञानहरू जान्दछन् । त्यहाँ मृत्युलोक जस्तो अज्ञानी व्यक्तिहरू हुन्नन् ।

**रजसि प्रलयं गत्वा कर्मसङ्गिषु जायते ।**
**तथा प्रलीनस्तमसि मूढयोनिषु जायते ॥ १५ ॥**

रजोगुण बढेको अवस्थामा मृत्यु भएकाहरूले कर्महरूप्रति आसक्ति भएको कारणले मनुष्यहरूको रूपमा जन्म लिन्छन् तथा तमोगुण बढेको समयमा मृत्यु भएकाहरूले किरा, पशु आदि मूढ योनिहरूमा जन्म लिन्छन् ।

हामीले जीवनमा जे-जसो कर्महरू गर्दछौं ती सबैको लेखाजोखा हुने गर्दछ । अन्त समयमा त्यस्को लेखाजोखा परीक्षण हुने गर्दछ । जब कसैको मृत्यु रजोगुणमा रहँदाको अवस्थामा हुन्छ भने उस्ले सकामकर्मी भई जन्म लिन्छ । यदि हामीले आफ्ना सम्पूर्ण जीवनहरूमा फलको आशा गर्दै कर्म गर्दै रह्यौं भने पुनर्जन्ममा योभन्दा भिन्दै हुन सक्दैन, अर्थात त्यही गुण लिएर ऊ जन्मी सो बमोजिमका कर्महरू पुनः गरिरहेको हुन्छ । तर जब कसैको मृत्यु तमोगुणमा रहँदाको अवस्थामा हुन्छ भने उस्को जन्म किरा, फट्याङ्ग्रा तथा पशु-पंक्षी आदि निम्न योनिहरूमा हुने गर्दछ ।

**कर्मणः सुकृतस्याहुः सात्त्विकं निर्मलं फलम् ।**
**रजसस्तु फलं दुःखमज्ञानं तमसः फलम् ॥ १६ ॥**

श्रेष्ठ कर्मको त सात्त्विक अर्थात सुख, ज्ञान र वैराग्यादि निर्मल फल हुन्छ भनी भनिएको छ, राजस कर्मको फल दुःख एवं तामस कर्मको फल अज्ञान हो ।

सात्विक कर्मको फल शुभ, श्रेष्ठ र सात्विक नै हुन्छ तथा यसका फलहरूबाट सुख, ज्ञान तथा वैराग्य आदि प्राप्त हुन्छन् अर्थात सुख तथा ज्ञानले भरिएको हुन्छ, तसर्थ ऊ शान्तिमा हुन्छ र रजोगुणको कर्मको फल दुःखदायी हुन्छ किनकि जब



मनमा लोभ हुन्छ तब मानिस त्यसलाई पाउने अधैर्यतामा रहन्छ भने तमोगुणको कर्मको फल अज्ञान वा मूर्खता हुन्छ । कर्तालाई थाहा नै हुन्न कि उस्ले के गरिरहेछ, ऊ त आलस्य तथा त्यो विषयवस्तु पाउने पागलपनमा रहेको हुन्छ । सतोगुण अन्तर्गत रहेर गरिएका पुण्यकर्महरूको फल शुद्ध, निर्मल, सुखदायी र ज्ञानबर्द्धक हुन्छन्, जस्तैः मुनीगणहरूको कर्म जो सबै मोह मायाबाट मुक्त हुन्छन्, तसर्थ उनीहरू सुखी रहन्छन् । रजोगुणका कर्महरू भौतिक सुखको लागि गरिएका हुन्छन् । जे गर्दा संलग्न श्रमिकहरूलाई शारीरिक कष्ट हुन्छ, मालिकलाई धन जगेर्ना वा व्यवस्था गर्न अफ्ठेरो हुन्छ । कार्यको परिणाम कहीँ विफल भएमा ठूलो चोट लाग्दछ । तमोगुणमा रही कुनै कर्म गर्दा कर्तालाई थाहा हुन्न अर्थात् ऊ अज्ञानतामा रहन्छ कि ऊ के काम गर्दैछ, त्यस्को परिणाम के हुन्छ । जस्तैः पशुबध । पशुबध गर्नेलाई यो थाहा हुन्न कि अहिले म यस्को बध गर्दैछु भोलि यस्ले मनुष्यको चोला पाएपछि मलाई बध गर्नेछ । अनि उस्ले बध हुनको लागि भविष्यमा पशुको योनि लिनु पर्दछ ।

**सत्त्वात्संजायते ज्ञानं रजसो लोभ एव च ।**
**प्रमादमोहौ तमसो भवतोऽज्ञानमेव च ॥ १७ ॥**

सत्त्वगुणबाट ज्ञान उत्पन्न हुन्छ र रजोगुणबाट निस्सन्देह लोभ तथा तमोगुणबाट प्रमाद र मोह उत्पन्न हुन्छ र अज्ञान पनि उत्पन्न हुन्छ ।

सतोगुणबाट वास्तविक ज्ञान उत्पन्न हुन्छ जस्ले तपाईलाई ईश्वरसम्म लिएर जान्छ, जस्ले यो सम्झाउंदछ कि तपाईमा रहेको आत्मा उसै परमात्माको अंश हो । यो क्रिया हामी भित्र अज्ञानता हटेपछि मात्र सम्भव छ । रजोगुणबाट निश्चित रूपले लोभ नै उत्पन्न हुन्छ । लोभ कर्ताको लागि लोभ कहिल्यै नसकिने अवस्थामा पुग्दछ । उस्मा एकपछि अर्को लोभले जन्म लिइरहेको हुन्छ । उस्लाई यस्तो हुन्छ कि यति काम त होस् वा यति फल त पाइयोस् । तमोगुणबाट भने प्रमाद, मोह र अज्ञानता नै उत्पन्न हुन्छ । तसर्थ तमोगुणको अवस्था तीनवटै गुणहरूमध्ये खराब अवस्था हो ।

**उर्ध्वं गच्छन्ति सत्त्वस्था मध्ये तिष्ठन्ति राजसाः ।**
**जघन्यगुणवृत्तिस्था अधो गच्छन्ति तामसाः ॥ १८ ॥**

सत्त्वगुणमा स्थित पुरुष स्वर्गादि उच्च लोकहरूमा जान्छन्, रजोगुणमा स्थित राजस पुरूष मध्यमा अर्थात् मनुष्यलोकमा नै रहन्छ तथा तमोगुणमा कार्यरत

निन्द्रा, प्रमाद र अल्छिपनमा लागेर त्यो तामस पुरूषले अधोगति अर्थात किरा, पशु आदि निच योनिहरू तथा नर्कहरू प्राप्त गर्दछ ।

यस श्लोकमा तीनवटै गुणमा संलग्न हुनेहरूको कर्मको फलहरूको बारेमा चित्रण गरिएको छ । तीनवटै गुणहरू बन्धनकारी छन् । यिनीहरूले अन्ततः हामीलाई कुनै न कुनै योनिमा पठाउँदछन् । सतोगुणमा रत प्राणीहरू स्वर्ग वा उच्चलोकमा जान्छन् । त्यहाँ ज्ञान हुन्छ, ज्ञानीहरू हुन्छ र दुःख हुँदैन । रजोगुण भएकाहरू मध्यमा अर्थात यस पृथ्वीलोकमै रहन्छन् । उनीहरूको फेरि पनि यही जन्म हुन्छ । यस पृथ्वीलोकमा उनीहरू फेरि मानिसको योनिमा आउँछन् । अनि तमोगुणमा रत मानिसहरू निच योनि नर्कमा जान्छन् । निच योनि भन्नाले मानिसको योनि होइन् अर्थात पशु योनिमा । अनि उनीहरूले ज्ञान तथा विवेक नभएको कारणले कसरी आफुमा रहेको अज्ञानतालाई हटाएर आत्मा तथा परमात्मालाई चिन्न सक्दछन र ?

**नान्यं गुणेभ्यः कर्तारं यदा द्रष्टानुपश्यति ।**
**गुणेभ्यश्र्च परं वेत्ति मद्भावं सोऽधिगच्छति ॥ १९ ॥**

जुन समयमा द्रष्टाले तीनवटै गुणहरूको अतिरिक्त अन्य कसैलाई कर्ता देख्दैन र तीनवटै गुणहरूभन्दा धेरै टाढा रहेको सच्चिदानन्दघन स्वरूप म परमात्मालाई तत्वले जान्दछ, त्यस बेला उस्ले मेरो दिव्य स्वरूपलाई प्राप्त गर्दछ ।

जब कसैले यो राम्ररी बुझ्दछ कि सबै कार्यहरूमा प्रकृतिका तीन गुणहरू बाहेक अरू कोही पनि कर्ता छैनन् । जब उस्ले परमेश्वरलाई तत्त्वले जान्दछ । जो यी तीनवटै गुणहरूभन्दा टाढा परमात्मा रहेको हुनुहुन्छ र जब उस्ले स्वयंलाई पनि तीनवटै गुणहरूभन्दा टाढा रही द्रष्टाको रूपमा स्वयंलाई नियाल्दछ तब उस्ले श्रीकृष्णलाई परमात्मा जानेर उहाँको दिव्य स्वभावलाई प्राप्त गर्दछ भनेर श्रीकृष्णले सम्झाउँदै हुनुहुन्छ । हामीले गर्ने भूल के हो भने हामीमा यस्तो अवधारणा रहेको हुन्छ कि गर्ने त हामी हौँ । तर होइन, गर्ने कर्ता त प्रकृतिका तीन गुणहरू हुन् र तिनीहरूले नै मानिसहरूलाई बाँधी राखेका हुन्छन् । हामी त दृष्टा बनेर हेर्ने मात्र हो भन्ने भएमा हामीले ज्ञानको प्राप्ति गरेका छौँ र श्रीकृष्णको दिव्य स्वरूप प्राप्त गर्दछौँ ।

**गुणानेतानतीत्य त्रीन्देही देहसमुभ्दवान् ।**
**जन्ममृत्युजरादुःखैर्विमुक्तोऽमृतमश्नुते ॥ २० ॥**



यस्तो तत्त्वज्ञान हासिल भएको पुरूषले शरीर उत्पत्तिको कारण रूप यी तीनवटै गुणहरूलाई उल्लङ्घन गरेर जन्म, मृत्यु, बृद्धावस्था र सबै प्रकारका दुःखहरूबाट मुक्त भएर त्यस परमात्मालाई प्राप्त गर्दछ ।

सत, रज तथा तम यी तीनवटै गुणहरूको बन्धनबाट बच्न सम्भव छ । सम्भव मात्र होइन यो मनुष्यको एक मात्र लक्ष्य पनि हो । जस्ले यस्लाई अन्तर्आत्माले बुझ्दछ उस्ले प्रकृतिका यी तीन गुणहरूबाट पार पाउँदछ । जब देहधारी जीवले भौतिक शरीरसँग सम्बद्ध रहेको यी तीनवटै गुणहरू जो शरीर उत्पत्तिका कारणहरू हुन् लाई उछिन्न सफल हुन्छ, तब उस्ले बृद्धावस्था, जन्म, मृत्यु आदि सबै किसिमका कष्टहरूबाट मुक्त भएर त्यस परमात्मालाई प्राप्त गर्न सक्दछ अर्थात परम आनन्द स्वरूप अमृतको भोग गर्दछ । मानिसले आध्यात्मिक ज्ञानको अभिबृद्धि गरेर यी प्रकृतिका तीन गुणहरूबाट मुक्ति पाउन सक्दछ । यसैबाट उस्ले आध्यात्मिक सुख वा परम आनन्दको सुखभोग गर्न पाउँछ । परम आनन्दको अवस्था कहिल्यै समाप्त नहुने अवस्था हो । तथापि हामी क्षणिक भौतिक सुख-सुविधा पछाडी भागिरहेका छौँ, परमानन्दको पछाडी होइन, अचम्म छ !

अर्जुन उवाच (भन्दछन्)

**कैर्लिङ्गैस्त्रीन्गुणानेतानतीतो भवति प्रभो ।**
**किमाचारः कथं चैतांस्त्रीन्गुणानतिवर्तते ॥ २१ ॥**

अर्जुन भन्दछन् : यी तीनवटै गुणहरूबाट अतीत (टाढा रहेको) पुरुष कुन-कुन लक्षणहरूले युक्त हुन्छ र कस्तो किसिमको आचरण उस्मा हुन्छ तथा हे प्रभो ! तथा मानिस कुन उपायले तीनवटै गुणहरूबाट अतीत हुन्छ ?

यहाँ अर्जुनले श्रीकृष्णलाई सोध्दैछन् कि जो यी तीनवटै गुणहरूभन्दा टाढा छ उहाँलाई कुन लक्षणद्वारा पहिचान गर्ने ? उहाँको आचरण कस्तो हुन्छ ? र उहाँले प्रकृतिका यी तीन गुणहरूलाई कसरी उल्लङ्घन गर्न सक्नुहुन्छ ? संसारका भौतिक कल्मष, गुणहरूको बारेमा जानेर तिनीहरूलाई उल्लङ्घन गर्ने मानिसहरूको कसरी पहिचान हुन्छ ? उहाँहरूका लक्षणहरू के-के हुन्छन् ? हामीले कसरी बुझ्ने कि फलानोले प्रकृतिका यी तीनवटै गुणहरूको दुष्प्रभावहरूलाई आफुबाट पन्छाइसक्नु भएको छ ? यस्ता मानिसहरूको व्यवहार कस्तो हुन्छ ? उहाँका क्रियाकलापहरू कस्ता हुन्छन् ? त्यसपछि अर्जुनले ती साधन वा प्रकृयाको बारेमा सोध्दछन् कि जस्बाट त्यो दिव्य स्वभाव प्राप्त हुन्छ ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**प्रकाशं च प्रवृत्तिं च मोहमेव च पाण्डव ।**
**न व्देष्टि संप्रवृत्तानि न निवृत्तानि काङ्क्षति ॥ २२ ॥**

श्री भगवान्ले भन्नुभयो : हे अर्जुन ! जुन पुरूष सत्त्वगुणको कार्यरूप प्रकाशलाई र रजोगुणको कार्यरूप प्रवृतिलाई तथा तमोगुणको कार्यरूप मोह लाई न त प्रवृत भएको कारणले तिनीहरूसँग द्वेष गर्दछ र न निवृत भएको कारणले तिनीहरूको आकाङ्क्षा गर्दछ ।

श्रीकृष्णले अर्जुनलाई प्रकृतिका गुणहरूबाट अतीत वा टाढा भएका लक्षणहरू वर्णन गर्दै हुनुहुन्छ । यस्ता व्यक्तिहरूले सत्वगुणको कार्यरूप प्रकाशलाई, रजोगुणको कार्यरूप प्रवृतिलाई तथा तमोगुणको कार्यरूप मोह उपस्थित वा क्रियाशील भएको अवस्था आफू तथा अन्य जीवहरूमा देखेर न तिनीहरूलाई धृणा गर्दछ र न ती छैनन् भनेर तिनको आकाङ्क्षा नै राख्दछ । अर्थात् उस्ले ती सबैमा समान भाव राख्दछ । ऊ त यस्ता कृत्यबाट बेग्लै रहेको हुन्छ । त्यस गुणातीत पुरुषको अभिमान रहित अन्तःकरणमा तीनै गुणहरूको कार्य प्रकाश, प्रवृति र मोहादि वृतिहरू प्रकट हुँदा र नहुँदा कुनै कालमा पनि इच्छा वा द्वेष आदि विकारहरू उस्मा नआउनु नै ती गुणहरूबाट अतीत वा टाढा रहेको प्रधान लक्षण हो । अनि उहाँ ती तीनवटै गुणहरूको बन्धनबाट बच्नु हुन्छ ।

**उदासीनवदासीनो गुणैर्यो न विचाल्यते ।**
**गुणा वर्तन्त इत्येव योऽवतिष्ठति नेङ्गते ॥ २३ ॥**

जो साक्षीझैं स्थित भइरहेकोले उस्लाई त्रि-गुणहरूद्वारा विचलित गराउन सकिदैन् र गुण नै गुणहरूबाट ऊ टाढा रहन्छ यसरी सम्झेर जो सच्चिदानन्दधन परमात्मामा एकाग्र भावले स्थित रहन्छ एवं त्यस स्थितिबाट कहिल्यै विचलित हुँदैन ।

यदि हामीलाई सत्, रज तथा तम गुणहरूबाट छुटकारा पाउनु पर्ने छ भने एउटा उदास व्यक्तिझैं विषयवस्तुप्रतिको अभिरूचिलाई चरम न्यून गरी शून्यमा रही व्यवहार गर्नु पर्दछ । श्रीकृष्णले भन्नुहुन्छ कि जो पुरूष उदासिन भावमा रहेर कुनै पनि गुण आउनु वा हुनु तथा जानु वा नहुनुबाट विचलित हुँदैन । जे कार्य भइरहेको छ त्यस्मा त्यो सम्बन्धित गुणको प्रभाव छ भनी बुझेर परमात्माको भक्तिभावमा



एकिकृत भावले स्थित रहन्छ भने त्यो मानिसले यस्तो गुणबाट छुटकारा पाउँछ । यसको लागि एक उदासिन साक्षीको रूपमा मात्र हेर्नेको भूमिका उसले निर्वाह गर्नु पर्ने हुन्छ । त्यस गुणमा कुनै पनि अभिरूचि वा आकाङ्क्षा राख्न हुन्न ।

**समदुःखसुखः स्वस्थः समलोष्टाश्मकाञ्चनः ।**
**तुल्यप्रियाप्रियो धीरस्तुल्यनिन्दात्मसंस्तुतिः ॥ २४ ॥**

जो सधैं आत्मभावमा स्थित भएर रहन्छ, दुःख तथा सुखलाई समान सम्झिन्छ, माटो, ढुङ्गा तथा सुनमा समान भाव राख्दछ, ज्ञानी, प्रिय तथा अप्रियलाई एकै समान मान्दछ र आफ्नो निन्दा तथा स्तुतिमा पनि समान भाव राख्दछ । त्यस्ता गुणहरू भएका मानिसहरूले त्रिगुणबाट छुटकारा पाउँदछन् ।

बाहिरको कुनै भावको आवश्यकता नहुनु, मात्र आफ्नो आत्मभावमा स्थित रहने, सुख तथा दुःखको अवस्थाहरूलाई समान दृष्टिले लिने, माटो, ढुङ्गा तथा सुनमा पनि समानता देख्ने, उस्को लागि न कोही प्रिय हुन्छ र न कोही अप्रियनै हुन्छ, आफ्नै आलोचना तथा प्रशंसामा धैर्य नगुमाउने व्यक्ति यसरी समान भावमा आएपछि यी तीनवटै सत्, रज तथा तम गुणहरूको बन्धनबाट त्यो व्यक्ति बच्न सक्दछ । यी उल्लेखित लक्षणहरू कुनै मानिसमा भएमा उस्ले प्रकृतिका तीन गुणहरूको प्रभावबाट मुक्ति पाउँदछ ।

**मानापमानयोस्तुल्यस्तुल्यो मित्रारिपक्षयोः ।**
**सर्वारम्भपरित्यागी गुणातीतः स उच्यते ॥ २५ ॥**

जो मान वा अपमानमा समभाव राख्दछ, मित्र र वैरी पक्षमा पनि समभाव राख्दछ एवं सम्पूर्ण आरम्भहरूमा कर्तापनको अभिमानबाट रहित छ भने त्यो पुरूषलाई गुणातीत भनिन्छ ।

प्रकृतिका तीन गुणहरूः सत्, रज तथा तमोबाट पार पाउनु त्यति सजिलो भने छैन । दिव्य पदमा रहेको व्यक्ति कहिल्यै पनि यो मिथ्या मान तथा अपमानबाट प्रभावित हुँदैन । उस्लाई त मात्र श्रीकृष्णको सेवा वा भक्ति गर्न पाए पुग्दछ । उस्ले मान र अपमान, मित्र र वैरीमा समान भाव राखी व्यवहार गर्दछ । आफुले गरेका कर्महरूलाई मैले गरेको हुँ भन्ने अभिमान उस्मा रहेको हुन्न । त्यस्ता पुरूषलाई गुणातीत पुरूष भनिन्छ । हामीले गर्ने कर्तव्य र कर्मलाई हामीले होइन हाम्रो शरीरको प्रकृतिले गरिरहेको छ भनी बुझ्ने हुनुपर्दछ । मनै कर्ता हुँ भनी भन्न मिल्दैन ।

**मां च योऽव्यभिचारेण भक्तियोगेन सेवते ।**
**स गुणान्समतीत्यैतान्ब्रह्मभूयाय कल्पते ॥ २६ ॥**

र जुन पुरुष अव्यभिचारी भक्तियोगद्वारा मलाई निरन्तर भज्दछ, उस्ले पनि यी तीनै गुणहरूलाई राम्ररी नाघेर सच्चिदानन्दधन ब्रह्मलाई प्राप्त गर्न ऊ योग्य बन्दछ ।

जो व्यक्ति सबै परिस्थितिहरूमा अविचलित भई अनन्य भावले पूर्ण भक्तिमा प्रवृत तथा स्थिर रहन्छ, उस्ले प्रकृतिका तीनै गुणहरूलाई अति शिघ्र नाघ्दछ । यसरी ऊ ब्रह्मलाई पाउने योग्य बन्न पुग्छ । मानिसहरूले ती तीन गुणहरूको कर्महरूद्वारा कहिल्यै विचलित हुनुहुन्न । मानिसले सुख होस् वा दुःख होस्, हालत सजिलो होस् वा कठिन होस् आफ्नो भाव तथा चेतनालाई एकाग्र गरेर श्रीकृष्णमा लगाउनु पर्दछ । मनबाट श्रीकृष्णको भाव र भक्ति हटनु हुन्न । यहाँ श्रीकृष्ण भन्नाले परमात्मा बुझ्नु पर्दछ । कर्महरूलाई आफ्नो कर्तव्य ठानेर गर्ने हुनु पर्दछ । श्रीकृष्ण भन्नाले उहाँका पूर्णांशः राम, नारायण आदि पनि पर्नु हुन्छ । उहाँहरूको सेवामा प्रवृत हुने मानिसहरूले दिव्य पद प्राप्त गर्दछन् ।

**ब्रह्मणो हि प्रतिष्ठाहममृतस्याव्ययस्य च ।**
**शाश्वतस्य च धर्मस्य सुखस्यैकान्तिकस्य च ॥ २७ ॥**

किनकि त्यस अविनाशी परमब्रह्मको र अमृतको तथा नित्यधर्मको र अखण्ड एकरस आनन्दको आश्रय म हुँ ।

श्रीकृष्ण भन्नुहुन्छ कि मनै त्यस अविनाशी ब्रह्मको आश्रय हुँ, जुन अमर्त्य, अविनाशी तथा शाश्वत छ । र यो चरम सुखको स्वाभाविक पद हो । श्रीकृष्ण ब्रह्मको प्रतिष्ठा हुनुहुन्छ । त्यसैले श्रीकृष्ण शाश्वत वा सधैंको लागि हुनुहुन्छ । उहाँ यी सबैको आश्रय भएकोले त्यहाँ हामीले परम आनन्दको अनुभूति गर्न पाउँदछौ । हामी के हौँ, कहाँबाट आएका हौँ, हामीले कहाँ जानु पर्नेछ यी विषयवस्तुको ज्ञान हामीले लिइराख्नु पर्दछ । श्रीकृष्णमा नै हामीले मोक्षको प्राप्ति देख्नु पर्दछ । श्रीकृष्णबाट नै हामीलाई सबै कुराहरू पाइन्छ भनी ठान्नु पर्दछ ।



अथ पञ्चदशो ध्यायः

## अध्याय पन्द्रह

## पुरुषोत्तमयोग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**उर्ध्वमूलमधः शखमश्रवत्थं प्राहुरव्ययम् ।**
**छन्दांसि यस्य पर्णानि यस्तं वेद स वेदवित् ॥ १ ॥**

श्री भगवान्ले भन्नुभयोः आदिपुरूष मूल परमेश्र्वर रूप र मुख्य शाखा ब्रह्मा रूप- जस्लाई संसार रूप पीपलको रूखलाई अविनाशी भनिन्छ, तथा वेद जस्लाई पात भनिन्छ-त्यस संसाररूप वृक्षलाई जुन पुरूषले मूल सहित तत्वको रूपमा जान्दछ, त्यो वेदको तात्पर्य जान्नेवाला हुन्छ ।

यहाँ भगवान्ले आफ्नो तथा श्रृष्टिको स्वरूपलाई पीपलको रूखसँग तुलना गर्नु भएको छ । यो यस्तो रूख हो जो नसुक्दछ र नै कहिले मर्दछ । जस्तै पीपलको रूखको जराले सारा रूखको आधार एवं श्रोतको रूपमा कार्य गरिरहेको हुन्छ त्यस्तै यस जगतको मूलको रूपमा आदिपुरूष नारायण वासुदेव भगवान् नै नित्य, अविनाशी, अनन्त तथा सबैको आधार भई मूल जरोको रूपमा हुनुहुन्छ । उहां सबैभन्दा माथि नित्यधाममा सगुण रूपले वास गर्ने भएकोले उहाँलाई उर्ध्व नामले सम्वोधन गरिएको हो । उहाँ मायापती, सर्वशक्तिमान परमेश्र्वर नै यस संसार रूपवृक्षको कारण हुनुहुन्छ । त्यसैले यस संसार वृक्षलाई उर्ध्वमूलवाला भनिन्छ । यस वृक्षको जराहरू मास्तिर तथा हाँगाहरू र पातहरू क्रमशः तलतिर रहेका हुन्छन् । उहाँको लोकभन्दा तल यसै रूखमा हिरण्यगर्भ रूप ब्रह्मा, जस्ले संसारको विस्तार गर्नु हुन्छ ब्रह्मलोकमा रहनु हुने हुँदा लाई यस रूखको मुख्य शाखा मानिन्छ । वेदहरू वा वैदिक स्तोत्रहरू यस्का पातहरूको रूपमा रहेका छन् जस्ले मूल नारायण वासुदेवको बारेमा वर्णन गर्दछन् । जस्ले आध्यात्मिक जगतलाई तथा जीवात्मालाई आत्मोन्नत्ति गराउँदछ । यस्तो रूखझैं संसार रहेको छ भनी जस्ले तत्वले जान्दछ त्यस व्यक्तिले वेदको तात्पर्यलाई जान्दछ । जरो माथि रहेको अर्थ माथि परमात्मा हुनुहुन्छ तथा प्रकृति तल । यस विषयलाई बुझ्नेले सबै विषयवस्तुको ज्ञान पाए सरह हुन्छ अर्थात उहाँलाई वेदको अर्थ बुझ्ने भनिन्छ । नजान्नेको लागि भने उस्ले जन्म-मृत्युको चक्करमा रूमलिरहनु पर्दछ ।

**अधश्र्चोर्ध्वं प्रसृतास्तस्य शाखा**
**गुणप्रवृध्दा विषयप्रवालाः ।**

**अधश्र्च मूलान्यनुसंततानि**
**कर्मानुबन्धीनि मनुष्यलोके ॥ २ ॥**

त्यस संसाररूपी वृक्षको तीनै गुणहरू पानीद्वारा बढ्दै गएका छन् एवं विषयभोगरूप मानिसको स्थूल शरीरमा सूक्ष्म रूपमा रहेकाः शब्द, स्पर्श, रूप, रस र गन्ध कोपिला जस्तो देव, मानिस र तिर्यक (बाङ्गो) आदि योनि रूपमा तल र माथि भई सर्वत्र फैलिएर रहेका छन्, तथा मनुष्यलोकमा कर्महरू बमोजिम बाध्ने अहंता–घमण्ड वा गर्व–ममता र वासनारूप जराहरू पनि तल तथा माथिल्ला सबै लोकहरूमा व्याप्त भइरहेका छन् ।

परमात्मा तथा जीवात्मा बीचको संरचनागत अवस्थालाई पीपलको रूखसँग तुलना गर्ने क्रममा यस रूखका शाखाहरू माथि तथा तलतिर फैलिएका छन्, यिनीहरू प्रकृतिका तीनै गुणहरूद्वारा पोषित छन् । यिनीहरूका नयाँ कोपिलाहरू मानिसका इन्द्रियविषयकसँग मेल खान्छन् । यिनीहरू बेग्ला-बेग्लै योनिहरू भई रहेका छन् । यस रूखका जराहरू जो तल र मास्तिर पनि जान्छन् ती मानिसहरूमा हुने घमण्ड वा गर्वका वन्धन हुन जस्ले मानव समाजलाई सकाम कर्ममा बाँधेर राख्दछन् ।

**न रूपमस्येह तथोपलभ्यते**
**नान्तो न चादिर्न च संप्रतिष्ठा ।**
**अश्र्वत्थमेनं सुविरूढमूल**
**मसङ्गशस्त्रेण दृढेन छित्वा ॥ ३ ॥**

यस संसार वृक्षको स्वरूपको बारेमा जस्तो यहाँ वर्णन गरिएको छ त्यस्तो यहां विचारकालमा पाइन्न, किनकि यस्को न आदि छ र नै अन्त नै, तथा यस्को न राम्रो स्थिति नै छ । त्यस कारण यस अहंता (घमण्ड वा गर्व), ममता र वासनारूप अति दृढ मूलहरू भएको संसाररूप पीपलको रूखलाई दृढ वैराग्यरूप शस्त्रद्वारा काट्नु पर्दछ ।

यस श्लोकमा इन्द्रियरूपी मायाजालमा बाँधिएको रूखको बारेमा चर्चा गरिएको छ । यस रूखको वास्तविक स्वरूपको अनुभव यस संसारमा कसैले गर्न सक्दैन् । यस रूखको सुरू कहाँ छ तथा अन्त कहाँ छ, यसको मूल आधार के हो ? यस्को बारेमा कसैलाई थाहा छैन । सबै रूखहरूका जराहरू तलतिर हुन्छन, तर



यस्को जरा मास्तिर हुन्छ भनिन्छ । यस्तो रूखको कसरी कल्पना गर्न सकिन्छ ? यस्को आदि वा प्रारम्भ, अन्त र आधार कहाँ छ भनी कसैले बुझ्न सक्दैन । मनुष्यले त्यस दृढ मूल भएको वृक्षमा रहेका लोभ, मोह, अहङ्कारलाई त्यागेर आएमा वा वैराग्यरूप धारण गरेमा त्यस वैराग्यको शस्त्रद्वारा ती लोभ, मोह र अहङ्कारलाई काटेर लडाउन सक्दछ । हामीले त्यस्तो रूखको कल्पना गर्यौ र त्यसमा रहेका प्रकृतिका तीन गुणहरूका दुष्प्रभावहरूबाट ज्ञान र वैराग्यका शस्त्रहरूबाट बच्न सक्यौं भने मात्र जीवन उद्देश्यलाई सार्थक तुल्याउन सक्दछौं ।

**ततः पदं तत्परिमार्गितव्यं**
**यस्मिन्गता न निवर्तन्ति भूयः ।**
**तमेव चाद्यं पुरूषं प्रपद्ये**
**यतः प्रवृतिः प्रसृता पुराणी ॥ ४ ॥**

(वैराग्य तथा निष्काम कर्ममा हामीले हाम्रो सम्पूर्ण समय खर्च गर्नु पर्दछ । यसरी प्रभुसम्म पुग्ने कोशिस गर्न सकिन्छ ।) त्यसपछि उहाँ परमपदरूप परमेश्वरलाई राम्ररी खोज्नु पर्दछ, जस्मा गएका पुरूषहरू फेरि संसारमा फर्केर आउँदैनन् र जुन परमेश्वरबाट यस पुरातन संसार वृक्षको प्रवृतिले विस्तारित रूप प्राप्त गरेको छ, उहाँ आदि पुरूष नारायणको म शरणमा छु । (यसरी दृढ निश्चय गरेर उहाँ परमेश्वरको मनन र निदिध्यासन (अनवरत चिन्तन) गर्नु पर्दछ ।

वैराग्य तथा निष्काम कर्ममा हामीले हाम्रो सबै कुराहरू खर्चिनु पर्दछ । यस प्रकार प्रभुसम्म पुग्ने कोशिस गर्नु पर्दछ । तत्पश्चात यस्तो परम पद परमेश्वरलाई प्राप्त गर्ने खोज गर्नु पर्दछ जहाँ पुगेपछि फेरि फर्कनु पर्दैन, मानिसहरूले उहाँ भगवान्को शरणागत हुनु पर्दछ जुन परमात्माबाट आदिरहित यस संसाररूपी बृक्षको उत्पत्ति तथा विस्तार हुने गरेको छ । संसाररूपी बृक्षलाई जबसम्म वैराग्यले काटिदैन, तबसम्म प्रभु प्राप्तिको बाटो पहिल्याउन सकिदैन । यसरी उहाकै चिन्तन तथा मननमा अनवरत रूपले हामी पनि लाग्नु पर्दछ ।

**निर्मानमोहा जितसङ्गदोषा**
**अध्यात्मनित्या विनिवृत्तकामाः ॥**
**द्वन्द्वैर्विमुक्ताः सुखदुःखसंज्ञै**
**र्गच्छन्त्यमूढाः पदमव्ययं तत् ॥ ५ ॥**

जस्का मान तथा मोहको भावना र चाहना नष्ट भइसकेका छन्, जसले आसक्तिरूप दोषलाई जीतिसकेका छन्, जस्को परमात्माको स्वरूपमा सधैं स्थिति रहिरहन्छ र जस्का कामनाहरू सम्पूर्ण रूपले नष्ट भइसकेका छन्-त्यस्ता सुख-दुःख नामक द्वन्दहरूबाट विमुक्त ज्ञानीजनहरूले उहाँ अविनाशी परम पदलाई प्राप्त गर्नु हुन्छ ।

जुन पुरूषहरूमा सांसारिक झूठो मान, प्रतिष्ठा, मोह, कुसङ्गतिका भावना तथा कृत्यहरू नष्ट भइसकेका छन्, जो शाश्वत तत्त्वको महत्त्वलाई बुझी त्यस्मै सधैंजसो स्थित रहन्छन्, जस्मा कुनै पनि भौतिक चाहनाहरू छैनन्, कर्महरू मात्र फल प्राप्त गर्ने उद्देश्यले गर्ने व्यक्तिहरूको संगतबाट जो टाढा रहन्छ, जो यस सांसारिक दुःख तथा सुखको बन्धन र भेदबाट मुक्त भइसकेका छन्, जो सम्पूर्ण रूपले प्रभुको शरणागत भइसकेका छन् त्यस्ता ज्ञानीजनहरूले अविनाशी परम पद प्रभुलाई प्राप्त गर्दछन् ।

**न तम्दासयते सूर्यो न शशाङ्को न पावकः ।**
**यद्गत्वा न निवर्तन्ते तध्दाम परमं मम ॥ ६ ॥**

जुन परम पद प्राप्त गरेर मनुष्य संसारमा फर्केर आउँदैन, त्यस स्वयं प्रकाशित परम पदलाई न सूर्यले प्रकाशित गर्न सक्छ, न चन्द्रमाले र न आगोले - त्यही मेरो परम धाम हो ।

श्रीकृष्णले परम दुखदायी सांसारिक रूखलाई काटेर परम धाम जाने तरिका र परम धाम कस्तो छ भन्ने बारेमा यहाँ बताउँदै हुनुहुन्छ । सूर्यले समस्त ब्रह्माण्डलाई प्रकाशित गर्दछ । तर परम धामलाई सूर्यले प्रकाशित गर्न सक्दैन । मेरो त्यो परम धामलाई न त सूर्य वा न चन्द्रमा र न आगोले प्रकाशित गर्न सक्छ । त्यो स्वयंमा दिव्य तथा प्रभुबाट प्रकाशित हुन्छ । त्यो परम पद पाइसकेपछि मानिस फर्केर पुनः यस भौतिक संसारमा आउँदैन । यही श्रीकृष्णको परम धाम हो ।

**ममैवांशो जीवलोके जीवभूतः सनातनः ।**
**मनः षष्ठानीन्द्रियाणि प्रकृतिस्थानि कर्षति ॥ ७ ॥**

यस शरीरमा रहेको सनातन जीवात्मा मेरो नै अंश हो र त्यसैले यस प्रकृतिमा स्थित रहेको मन तथा पाँचवटै इन्द्रियहरूलाई आकर्षित गर्दछ ।

यस बद्ध संसारका सबै जीवहरूमा मेरो नै शाश्वत अंशहरू रहेका छन् । जीवका इन्द्रियहरूको बद्धताको कारणले त्यो आत्माले ६ इन्द्रियहरूसँग घोर संघर्ष



गरिरहेको छ, जस्मा मन प्रमुख भई सम्मिलित रहेकोछ । जो अति नै सूक्ष्म छ । प्रकृतिमा ब्रह्मको अंश मिलेपछि प्राणी बन्दछ । यस प्रकार सबै प्राणीहरूमा श्रीकृष्णकै अंश रहेको छ । सबै प्राणीहरूले आफ्ना ६ वटै इन्द्रियहरूद्वारा प्रकृतिको अधिन भएर आ-आफ्ना कार्यहरू गर्दछन् । जुन-जुन प्रकृतिका तीन गुणहरूले हामीद्वारा कार्यहरू गराउँदछन् हामीले त्यही गर्दछौं । कर्ता वा गर्ने त प्रकृति हुन्, हामी मानिस हैनौं । जीव त निमित्त मात्र हो । यसर्थ हामीले जब प्रभुको परम धाम प्राप्त गर्ने कोशिस गर्दछौं हामी भित्रको ब्रह्म त्यस परम धामको परम ब्रह्मसँग मिल्दछ, जस्को ऊ अंश हो । यसरी ऊ मिलिसकेपछि पुनः यस पृथ्वीमा त्यस अंशरूपी आत्माले फर्केर आउनु पर्दैन ।

**शरीरं यदवाप्नोति यच्चाप्युत्क्रामतीश्र्वरः ।**
**गृहीत्वैतानि संयाति वायुर्गन्धानिवाशयात् ॥ ८ ॥**

वायुले गन्धयुक्त स्थानबाट गन्धलाई जसरी ग्रहण गरेर उडाई लान्छ, त्यस्तै शरीरादिको मालिक जीवात्माले पनि जुन शरीरलाई त्याग्दछ, त्यसबाट यस मन सहित पाँच इन्द्रियहरूलाई लिएर जुन शरीरमा जान्छ-त्यस्मै लिएर जान्छ ।

हाम्रो शरीरको जीवन अवधिसम्म आत्मा त्यस शरीरमा रहन्छ, तर जब अवधि समाप्त हुन्छ आत्माले त्यस शरीरलाई परित्याग गर्दछ । यस संसारमा जीवले आफ्नो इन्द्रियहरूको संस्कार तथा स्वभाव सहितको देहात्मबुद्धिलाई छोडेको शरीरबाट जाने शरीरमा यस प्रकार लिएर जान्छ जसरी वायुले गन्धलाई आफ्नो साथमा उडाएर लिएर जाने गर्दछ । यस प्रकार उस्ले शरीरको बदली गरिरहन्छ र साथमा स्वभावलाई लिएर गइरहन्छ । वर्तमान शरीरका संस्कार तथा स्वभाव नै भविष्यमा धारण गरिने शरीरका संस्कार र स्वभावका आधारहरू हुन् । मर्नु अघि मानिसले जस्तो स्वभाव र धारणा लिन्छ त्यस्तै जुनी तथा स्वभाव उस्ले अर्को जुनीमा प्राप्त गर्दछ । हाम्रा कर्महरूद्वारा निर्मित संस्कारहरू अनुसार हामीलाई अर्को शरीर प्राप्त हुन्छ । जीवको हरेक कर्मको हिसाब राखिएको हुन्छ । मृत्युको समयमा यही कर्महरूको संस्कार साथमा जाने गर्दछ ।

**श्रोत्रं चक्षुः स्पर्शनं च रसनं घ्राणमेव च ।**
**अधिष्ठाय मनश्र्चायं विषयानुपसेवते ॥ ९ ॥**

यो जीवात्माले कान, आँखा, त्वचा तथा रसना, नाक तथा स्पर्श र मनहरूलाई आश्रय बनाएर-अर्थात् यिनीहरूको सहाराले बिभिन्न विषयहरूको भोग गर्दछ ।

शरीरको जीवन अवधि समाप्त भएपछि भौतिकवादी शरीर नष्ट हुन्छ । तर आत्माले पूर्व जन्मका संस्कारहरू साथमा लिएर अर्को नयाँ शरीरमा जान्छ । अर्को नयाँ शरीरमा पनि पुनः त्यही प्रकृया सञ्चालित हुन्छ । जीवात्माले कान, नाक, त्वचा, जिब्रो, स्पर्श तथा मन को सहायताले नै विषय भोग गर्दछ । उस्ले फेरि सुन्ने, खाने, सुघ्ने जस्ता कर्महरू गर्न थाल्दछ । फेरि अर्को जन्मको लेखा-जोखाको तैयारी हुन थाल्दछ । त्यस कारण हामीले यस्ता कृत्य कार्यहरू गर्नु पर्दछ कि जस्ले गर्दा आत्मा शरीरबाट निस्केर सिधै ब्रह्ममा गएर मिलोस् तथा जन्म-मृत्युको चक्कर बाट बचौँ ।

**उत्क्रामन्तं स्थितं वापि भुञ्जानं वा गुणान्वितम् ।**
**विमूढा नानुपश्यन्ति पश्यन्ति ज्ञानचक्षुषः ॥ १० ॥**

शरीरलाई छोडेर गइरहेकाहरूको अथवा शरीरमा स्थित भएकाको अथवा विषयहरूलाई भोगिरहेकाहरूको-यस प्रकार तीनवटै गुणहरूबाट युक्त भएकालाई पनि अज्ञानीजनले जान्दैनन्, मात्र ज्ञानरूप आँखा भएका विवेकशील ज्ञानीहरूले नै तिनीहरूलाई तत्वले जान्दछन् ।

जीवात्माले पछिल्लो जन्मको संस्कारको आधारमा ती संस्कारहरू बोकी पुनर्जन्म लिन्छ तथा यो क्रम तबसम्म जारिरहिरहन्छ जबसम्म ऊ विवेकशील हुँदैन अर्थात् उस्लाई तत्वज्ञान हुँदैन । यस संसारका जीवहरूले शरीरलाई छाडी कसरी गइरहेका छन्, जीवहरूले शरीरमा स्थित भएर कसरी बस्दछन् वा जीवहरूले, कसरी प्रकृतिका गुणहरूको अधिनमा रहेर विषयहरू भोग गरिरहेका छन् भन्ने बारेमा अज्ञानीहरूले जान्दैनन् । तर विवेकशील ज्ञानीहरू जस्का आँखाहरू ज्ञानको प्रकाशले प्रकाशित भएका छन् तिनीहरूले भने ती सबैको बारेमा तत्व ज्ञानको आधारमा जान्दछन् ।

**यतन्तो योगिनश्चैनं पश्यन्त्यात्मन्यवस्थितम् ।**
**यतन्तोऽप्यकृतात्मानो नैनं पश्यन्त्यचेतसः ॥ ११ ॥**

प्रयत्न गर्ने योगीजनहरूले पनि आफ्ना हृदयमा स्थित यस आत्मालाई तत्त्वले जान्दछन्, तर जस्ले आफ्ना अन्तःकरणहरूलाई शुद्ध गरेका छैनन्, यस्ता



अज्ञानीजनले त कोशिस गर्दा पनि यस आत्मालाई जान्दैनन् ।

हामी भित्र रहेको आत्मालाई जीवात्मा भनिन्छ । यस्को आउने तथा जाने प्रकृयाले नै यो संसार सञ्चालित छ । आत्मा यदि शरीरको बन्धनबाट छुट्दछ भने त्यो ब्रह्ममा गएर समाविष्ट हुन्छ । आत्मा त्यही बह्मबाट आएको हो । तर यो विधि योगबाट मात्र सम्भव छ । सही अर्थमा आत्मसाक्षात्कारको लागि योगको अभ्यासमा प्रयत्नशील योगीहरूले आत्मालाई तत्वको रूपमा जान्दछन् । यसको लागि सबैभन्दा पहिलो ती व्यक्तिहरूले आ-आफ्ना इन्द्रियतृप्ति गर्ने कृयाबाट आ-आफ्ना अन्तःकरणलाई शुद्ध पार्नु पर्ने हुन्छ । यसको लागि योगको अभ्यासमा जुट्नु पर्दछ । निरन्तर योग गरिरहनु पर्दछ । आफ्नो मन, शरीर तथा बुद्धिलाई दृढ गरेपछि मात्र आत्मालाई जान्न सकिन्छ । जसले आ-आफ्ना अन्तःकरणलाई शुद्ध पारेका छैनन् तथा योगमा लिप्त भएका छैनन् तिनीहरूलाई आत्मसाक्षात्कार सम्भव हुँदैन ।

**यदादित्यगतं तेजो जगभ्दासयतेऽखिलम् ।**
**यच्चन्द्रमसि यच्चाग्नौ तत्तेजो विद्धि मामकम् ॥ १२ ॥**

सूर्यमा स्थित जुन तेजले सम्पूर्ण जगतलाई प्रकाशित गर्दछ तथा जुन तेज चन्द्रमामा छ र जुन आगोमा छ-ती सबै मेरा नै तेज हुन भनी तिमी बुझ ।

सूर्यको तेज जस्ले सारा संसारलाई उज्यालो प्रकाश र ताप दिन्छ, जस्ले जीवनलाई गतिशीलता प्रदान गर्दछ र जीवहरूलाई जीवित राख्दछ, चन्द्रमाको तेज जस्ले शीतलता प्रदान गरेर प्रकृति जगतलाई विकसित गराउँदछ, अग्निमा भएको तेज जस्ले जीव जगतको विभिन्न कार्यहरू सम्पादन गर्दछ ती सबै तेजहरू श्रीकृष्णबाट निसृत भएका हुन भनेर तिमी बुझ भनी श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ । सारांशमा हामीले यसरी जुन ज्योतिमय प्रकाश देख्दछौँ ती सबै श्रीकृष्णकै प्रकाश हुन् भनी श्रीकृष्णको गुणतत्व बुझे हुन्छ भन्न खोजिएको छ ।

**गामाविश्य च भूतानि धारयाम्यहमोजसा ।**
**पुष्णामि चौषधीः सर्वाः सोमो भूत्वा रसात्मकः ॥ १३ ॥**

र म नै पृथ्वीमा प्रवेश गरेर आफ्नो शक्तिले सबै भूतहरूको रूप धारण गर्दछु र रसस्वरूप अर्थात अमृतमय चन्द्रमा भएर सबै औषधीहरूलाई तथा वनस्पतिहरूलाई पुष्ट गर्दछु ।

वायु मण्डलमा रहेका सबै लोकहरू श्रीकृष्णको शक्तिले नै वायु मण्डलमा परिक्रमा लगाइरहेका छन् । भगवान् प्रत्येक अणु, प्रत्येक लोकमा तथा प्रत्येक जीवमा प्रवेश गर्नु हुन्छ । उहाँको प्रवेशले सबैले आ-आफ्ना गति लिन्छन् । हामी सबै श्रीकृष्णको संकल्पको परिणाम हौँ । उहाँकै ऐश्वर्य तथा शक्तिको कारणले प्राणीहरूमा प्राणवायु आउनु तथा जानु हुने गर्दछ । उहाँले चन्द्रमाको रूपमा वनस्पतिहरूमा जीवन रस बनेर सबै प्राणीहरूको पोषण गर्नु हुन्छ । पानी, खाद, उर्बरता आदि सबैको मिश्रणबाट बालीको आकार बृद्धि हुन्छ, यसैलाई पोषण भनिन्छ । उहाँकै संकल्प बमोजिम हाम्रो जड तत्त्वमा प्राण बनेर उहाँले गति प्रदान गर्नु हुन्छ । रसको रूपमा वनस्पतिहरूमा प्रवेश गरी उहाँले तिनीहरूलाई पौष्टिक तथा स्वादिलो बनाउनु हुन्छ ।

**अहं वैश्र्वानरो भूत्वा प्राणिनां देहमाश्रितः ।**
**प्राणापानसमायुक्तः पचाम्यत्रं चतुर्विधम् ॥ १४ ॥**

मनै सबै प्राणीहरूको शरीरमा स्थित रहने प्राण र अपान (पेटबाट तल जाने वायु) ले संयुक्त वैश्वानर वा पाचक अग्निरूप भएर चार प्रकारका अन्नहरूलाई पचाउँछु ।

समस्त जीवहरूको म पाचन अग्नि हुँ र मैले चार प्रकारका अन्नहरूलाई पचाउँदछु । प्रत्येक प्राणीको पेटमा रहने अग्नि जस्ले खाएका कुराहरूलाई पचाउँदछ त्यो पाचनको शक्ति श्रीकृष्ण हुनुहुन्छ । जीवलाई खाएको खाना नपचेसम्म भोक लाग्दैन । अन्न हाम्रो लागि शक्तिको आधार हो । जीवित प्राणीले अन्न पाएन भने उस्ले मर्नु पर्ने हुन्छ । अन्नलाई चार प्रकारले वर्गिकरण गरिएको छ । चबाउने, पिउने, चाट्ने तथा चुस्ने । श्रीकृष्ण यहाँ भन्दै हुनुहुन्छ कि म नै पाचन अग्निको रूपमा समस्त जीवहरूको पेटमा रहेको हुन्छु । मैले नै प्राणवायु तथा अपानवायुलाई सन्तुलित राख्दै चार किसिमका अन्नहरूलाई पचाउँछु । त्यो आगो जस्ले हामीले खाएको अन्नलाई पचाएर हामीलाई शक्ति दिन्छ त्यो श्रीकृष्ण नै हुनुहुन्छ । यसरी ब्रह्माण्डका सबै क्रियाहरूको आधार श्रीकृष्ण हुनुहुन्छ भनी तिमी बुझ । यस श्रृष्टिमा हामी श्रीकृष्णको सङ्कल्पको परिणाम हौँ । तसर्थ हामी सबैको आधार उहाँ नै हुनुहुन्छ ।

**सर्वस्य चाहं हृदि संनिविष्टो**
**मत्तः स्मृतिर्ज्ञानमपोहनं च ।**



**वेदैश्र्च सर्वैरहमेव वेद्यो**
**वेदान्तकृद्वेदविदेव चाहम् ॥ १५ ॥**

म नै सबै प्राणीहरूको हृदयमा अन्तर्यामी रूपमा स्थित छु तथा मबाट नै स्मृति, ज्ञान र अपोहन (विचारद्वारा शङ्का, भ्रम हटाउने) निवारण हुन्छ र सबै वेदहरूद्वारा जान्नेयोग्य मै हुँ तथा वेदान्तको कर्ता र वेदहरू जान्नेवाला पनि मै नै हुँ ।

हाम्रो अन्तःकरणमा जुन आत्मा छ त्यो श्रीकृष्ण नै हुनुहुन्छ । हामीमा ज्ञान हुनु वा नहुनु श्रीकृष्णबाटै हुने गर्दछ । श्रीकृष्णको कारणले हामीमा स्मृति, विस्मृति तथा ज्ञान हुन्छ । हामीलाई ज्ञान प्राप्त हुन्छ वा हुन्न भन्ने कुरा हाम्रै कर्ममा निर्भर गर्दछ । हामीलाई कहिले काहीँ आवश्यक भएको समयमा केही कुरा वा शब्द स्मरण हुँदैन यो विस्मृति पनि श्रीकृष्णकै कारणले हुने गर्दछ । उहाँले भन्नु हुन्छ कि उहाँ नै सबै वेदहरूद्वारा जान्ने योग्य हुनुहुन्छ । उहाँबाट नै सबै वेदहरूको उत्पत्ति भएको हो । म नै सबै वेदहरूलाई जान्नेवाला हुँ । हाम्रो पूर्वजन्मका कुराहरू विस्मृत गराउनु, यसै जन्मका पनि केही कुराहरू विस्मृत गराउने, कहिले काहीँ नचिताएको, नदेखेको र नभोगेको कुरा स्मरणमा ल्याउने र सबै कार्यहरूलाई हामीबाट कर्महरूको आधारमा सन्तुलन कायम गरी राख्ने उहाँ नै हुनुहुन्छ ।

**द्वाविमौ पुरूषौ लोके क्षरश्र्चाक्षर एव च ।**
**क्षरः सर्वाणि भूतानि कूटस्थोऽक्षर उच्यते ॥ १६ ॥**

यस संसारमा नाशवान तथा अविनाशी पनि यी दुई किसिमका पुरूषहरू छन् । यस्मा सम्पूर्ण भूत प्राणीहरूको शरीर त नाशवान छ तर जीवात्मा अविनाशी छ भनिन्छ ।

जीवहरू यस संसारमा दुई किसिमका छन् । पहिलो भूत प्राणीहरू । जो नाशवान, क्षर र च्यूत हुन्छन् । जो नाशवान छन् उनीहरूको मृत्यु निश्चित छ । तर दोश्रो किसिमका जो अविनाशी समस्त जीवहरूको आत्माहरू छन् ती अक्षर तथा अच्यूत छन् । जस्को मृत्यु हुँदैन । यसरी यस संसारका अनन्त जीवात्माहरूलाई वर्गिकरण गरिएको छ । जीवहरू भगवान्का सनातन पृथक्कीकृत अंश हुन् । यही नै सबै ज्ञानहरूको आधार हो । जुन दिन शरीरलाई त्याग गरी जस्को आत्मा गएर तिनै ब्रह्ममा मिल्दछ त्यसै दिन उस्लाई मुक्ति पाइन्छ ।

**उत्तमः पुरूषस्त्वन्यः परमात्मेत्युदाहृतः ।**
**यो लोकत्रयमाविश्य बिभर्त्यव्यय ईश्वरः ॥ १७ ॥**

यी दुबैभन्दा त उत्तम पुरुष त अर्कै छ, जस्ले तीनवटै लोकहरूमा प्रवेश गरेर सबैको धारण-पोषण गर्दछ एवं अविनाशी परमेश्र्वर र परमात्मा-यस्तो प्रकार हुनुहुन्छ भनी भनिएको छ ।

यी दुबै क्षर तथा अक्षर पुरूषहरूभन्दा उत्तम वा श्रेष्ठ एउटा यस्तो पुरुष हुनुहुन्छ जस्लाई परमात्मा भनी सम्वोधन गरिन्छ । यो अविनाशी भगवान्ले तीनवटै लोकहरू : पृथ्वी, अन्तरीक्ष र स्वर्गमा प्रवेश गरेर त्यहाँका जीवहरूको भरण-पोषण गर्नु हुन्छ । परमात्माले आफ्नो चैतन्य बलले तीनवटै लोकहरूका जीवहरूको स्थूल शरीरमा प्राण उपलब्ध गराउनु हुन्छ । ती जीवहरूलाई जिउँदो राखेर उनीहरूको पालन-पोषण गर्नु हुन्छ । उनीहरूलाई गरेका कर्महरू बमोजिम भोगको सुविधा दिने उहाँले व्यवस्था गर्नु भएको छ । त्यही भगवान् आत्माको रूपमा परमात्माको अंश भई सबैको हृदयमा स्थित हुनुहुन्छ । ज्ञानी तथा बुद्धिमान व्यक्तिहरू यस कुरालाई बुझी शान्त भएर बस्दछन् । हामी भित्र जो छ त्यो आत्मा हो तथा हामी बाहिर जो छ त्यो परमात्मा हो । आत्माको परमात्मासँग अंशको रूपमा अन्योन्याश्रित सम्वन्ध छ ।

**यस्मात्क्षरमतीतोऽहमक्षरादपि चोत्तमः ।**
**अतोऽस्मि लोके वेदे च प्रथितः पुरूषोत्तमः ॥ १८ ॥**

किनकि म नाशवान जडवर्ग क्षेत्रभन्दा त सर्वथा अतीत छु र अविनाशी जीवात्माभन्दा पनि उत्तम छु, त्यसैले लोकहरूमा तथा वेदहरूमा पुरूषोत्तम नामले म प्रसिद्ध छु ।

क्षर र अक्षर पुरूषभन्दा भिन्दै अर्को एउटा श्रेष्ठ पुरूष पनि हुनुहुन्छ उहाँ परमात्मा हुनुहुन्छ भनी श्रीकृष्णले बताउनु भएको छ । नाशवान जडवर्गभन्दा अर्थात् क्षर वर्गभन्दा श्रीकृष्ण टाढा हुनुहुन्छ तथा अक्षर जीवात्माभन्दा उहाँ उत्तम हुनुहुन्छ । यो उहाँमा योगमायाको शक्ति हुनु, उहाँबाट गरिने कार्य क्षेत्र आत्माको दाँजोमा विशाल हुनु यस्को कारण हो भनी भनिन्छ । यसर्थ उहाँ वेदहरूमा तथा लोकहरूमा परम पुरूष वा पुरूषोत्तमको नामले विख्यात हुनुहुन्छ । उत्तम पुरूष भन्नाले अविनाशी, तीनवटै लोकहरूमा प्राण शक्ति दिने, जस्को बिना केही पनि सम्भव छैन, जो हामी सबैमा पनि छ तथा हामीभन्दा बाहिर पनि हुनुहुन्छ ।



**यो मामेवमसंमूढो जानाति पुरूषोत्तमम् ।**
**स सर्वविम्दजति मां सर्वभावेन भारत ॥ १९॥**

भारत ! जो ज्ञानी पुरूषले मलाई यस प्रकार तत्त्वले पुरूषोत्तम भनी जान्दछ, त्यो सर्वज्ञ पुरूषले सबै प्रकारहरूले निरन्तर म वासुदेव परमेश्वरलाई नै भज्दछ ।

यस संसारको ज्ञानी पुरुषको लक्षणको बारेमा श्रीकृष्णले बताउँदै भन्नुहुन्छ कि मलाई तत्वले पुरूषोत्तम भनी जान्ने, क्षर तथा अक्षर जीवको बारेमा जान्ने, बिना कुनै शङ्काले श्रीकृष्णलाई भगवान् रूपले सम्झिने, त्यो पुरुषले मलाई सधैँ वासुदेव परमेश्वर भनी भज्दछ । यहाँ भज्नु भन्नाले स्वयंको प्रकृति, आत्मा तथा परमात्मा बुझ्नु, जस्लाई हामीले जान्दैनौँ भने हामीले उहाँलाई कसरी प्राप्त गर्न सक्छौँ र ? हामीले पहिले भगवान्लाई सम्झे, बुझेपछि पो उहाँलाई प्राप्ति गर्ने कोशिस गर्नेछौँ । यही कोशिस नै भक्ति हो । यो कार्य त्यसैबाट सम्भव हुन्छ जस्ले आफ्नो तथा परमात्माको स्वरूपलाई जान्दछ ।

**इति गुह्यतमं शास्त्रमिदमुक्तं मयानघ ।**
**एतद्बुद्ध्वा बुद्धिमान्स्यात्कृतकृत्यश्र्च भारत ॥ २० ॥**

हे निष्पाप अर्जुन ! यस प्रकार यो अति रहस्यमय गोपनीय शास्त्र मद्वारा भनियो, यस्लाई तत्वले बुझेर मानिस ज्ञानवान तथा कृतार्थ हुन पुग्दछ ।

श्रीकृष्णले यस प्रकार अर्जुनलाई वैदिक शास्त्रको सबैभन्दा गोप्य कुराहरू बताउनु भयो । यी तात्विक विषयहरूलाई जस्ले बुझ्दछ त्यो मानिस बुद्धिमान हुन्छ तथा त्यस्का प्रयासहरू सफल हुन्छन् । भगवान्ले अर्जुनलाई सबै शास्त्रहरूको सार विषयवस्तु बताउनु भयो । यो जस्तो रूपमा बताइएको छ त्यसै रूपमा बुझ्नु पर्ने हुन्छ । यसरी श्रीकृष्णले पुरूष, आत्मा, परमात्मा तथा पुरुषोत्तमको ज्ञानलाई शास्त्रहरूको अति गोपनीय रहस्य भनी बताइरहनु भएको छ । जस्ले यस परम ज्ञानलाई सही किसिमले बुझ्दछ त्यो पुरूष बुद्धिमान हुन पुग्दछ । उस्का सबै प्रयत्नहरू सफल हुन्छन् ।

अथ षोडशोऽध्यायः

## अध्याय सोह्र

## दैवासुरसम्पद्विभागयोग

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**अभयं सत्त्वसंशुद्धिर्ज्ञानयोगव्यस्थितिः ।**
**दानं दमश्र्च यज्ञश्र्च स्वाध्यायस्तप आर्जवम् ॥ १ ॥**

श्री भगवान्ले भन्नुभयोः भयको सधैँ अभाव, अन्तःकरणको पूर्ण निर्मलता, तत्वज्ञानको लागि ध्यानयोगमा निरन्तर दृढ स्थिति र सात्विक दान, इन्द्रियहरूको दमन, भगवान्, देउता र गुरूजनहरूको पूजा तथा अग्निहोत्र आदि उत्तम कर्महरूको आचरण एवं वेद-शास्त्रहरूको पठन-पाठन तथा भगवान्को नाम तथा गुणहरूको बारे कीर्तन, स्वधर्मपालनको लागि आइपर्ने कष्ट सहन र शरीर तथा इन्द्रियहरू सहित अन्तःकरणको सरलता यी सबै दैवी प्रकृतिहरू देवतुल्य व्यक्तिहरूमा पाइन्छन् ।

भगवान्ले भन्नु हुन्छ कि जहाँ डर नहोस्, अन्तःकरण एकदमै स्वच्छ होस्, तत्त्व ज्ञानलाई प्राप्त गर्न ध्यानयोगमा निरन्तर दह्रो स्थिति रहोस्, सात्विक दान होस्, इन्द्रियहरूको दमन गर्ने इच्छा होस्, भगवान्, देउता र गुरूजनहरूको पूजा गरियोस् र अग्निहोत्र (हवन) जस्तो उत्तम कर्महरूको पालन होस्, वेद शास्त्रहरूको पठन-पाठन होस्, जस्तोसुकै कष्ट आए पनि स्वधर्मको पालन गरियोस्, अन्तःकरणमा सरलता भई सोही अनुरूप शरीर तथा इन्द्रियहरूमा पनि सरलता झल्कियोस् यी सबै लक्षणहरू दैवी सम्पदाका हुन् । यी सबै दैवी सम्पदाका गुणहरू सबैभन्दा बहुमूल्य सम्पत्ति भएकोले सांसारिक भौतिक सम्पदाहरू तिनको अगाडि निरर्थक हुन्छन् । यी दैवी सम्पदाहरू देव तुल्य व्यक्तिमा मात्र पाइने गर्दछ ।

**अहिंसा सत्यमक्रोधस्त्यागः शान्तिरपैशुनम् ।**
**दया भूतेष्वलोलुप्त्वं मार्दवं ह्रीरचापलम् ॥ २ ॥**

मन, वाणी तथा शरीरले कसैलाई कुनै प्रकारको पनि दुःख कष्ट नदिनु, यथार्थ तथा प्रिय भाषण गर्नु, आफ्नो कुभलो गर्नेहरू प्रति पनि क्रोधित नहुनु, कर्महरूमा म र मेरो कर्तापनको अभिमानको त्याग गर्नु, अन्तःकरणको उपरति अर्थात चित्तको चञ्चलताको अभाव हुनु, कसैको पनि आलोचना नगर्नु, सबै भूतप्राणीहरूमा



हेतुरहित दया हुनु, इन्द्रियहरूको विषयहरूको साथमा संयोग भए पनि तिनमा आसक्ति नहुनु, कोमल स्वभाव हुनु, लोक तथा शास्त्र बिरूद्धका आचरणहरू गर्नमा लज्जा महशुस गर्नु तथा व्यर्थका चेष्टाहरूको अभाव हुनु पनि दैविक सम्पदाका गुण पक्षहरू हुन् ।

न मनले सोचेर, र नै बाणीले बोलेर र नै शरीरले कसैलाई पनि कष्ट पुर्‍याउनु हुँदैन, मात्र साँचो तथा प्रिय लाग्ने कुरो मात्र गर्ने, आफ्नो अहितमा काम गर्नेहरू माथि पनि कहिल्यै क्रोध नगर्ने, घमण्ड तथा अभिमान पटक्कै नभएको, सबै कार्यहरू गर्ने मै नै हुँ भनी कहिल्यै नसोच्ने, चित्तलाई चन्चलताबाट बचाएर स्थिर गर्ने, कसैको पनि नराम्रो नगर्ने, सबै प्राणीहरूलाई दया गर्ने, इन्द्रियहरूमा आसक्ति हुन नदिने यी सबै लक्षणहरू दैवी सम्पदाले युक्त मानिसका हुन ।

**तेजः क्षमा धृतिः शौचमद्रोहोनातिमानिता ।**
**भवन्ति संपदं दैवीमभिजातस्य भारत ॥ ३ ॥**

तेज, क्षमा, धैर्य, बाहिरी शुद्धि एवं कसैमा पनि शत्रुभाव नहुनु र आफूमा पूज्यताको अभिमानको अभाव हुनु-यी सबै त हे अर्जुन ! दैवी सम्पदाको सम्बन्धमा उत्पन्न भएका पुरूषका लक्षणहरू हुन् ।

तेज भनेको मानिसमा हुने त्यस्तो शक्ति हो जस्को प्रभावमा आएर विषयासक्त तथा नीच प्रकृति भएका मानिसहरूले प्रायःजसो अन्यायका कार्यहरूलाई त्याग गरेर श्रेष्ठ कर्महरू गर्न थाल्दछन् । दैवी सम्पदाका गुणहरूको बारेमा श्री कृष्णले थप गर्दै भन्नु हुन्छ कि तेज, क्षमा, धैर्य वा संयम, बाहिरी शुद्धि अर्थात राम्रो संस्कार, कसैमा पनि शत्रुभाव नराख्नु, तथा आफु भित्र पटक्कै घमण्ड नहुनु नै दैवी सम्पदा भएको पुरूषका लक्षणहरू हुन् । देउताहरूको गुणहरू लिएर उत्पन्न भएकालाई नै दैवी सम्पदाले युक्त भनिन्छ । तर कसैले यी सबै गुणहरू लिएर जन्मेन तर उस्ले यस्ता व्यवहारहरू गर्दछ भने त्यस्लाई पनि दैवी सम्पदाको गुण भएको व्यक्ति भनिन्छ ।

**दम्भो दर्पोऽभिमानश्र्च क्रोधः पारूष्यमेव च ।**
**अज्ञानं चाभिजातस्य पार्थ संपदमासुरीम् ॥ ४ ॥**

हे पार्थ ! दम्भ, घमण्ड र अभिमान तथा क्रोध, कठोरता र अज्ञान पनि यी सबै आसुरी सम्पदा सम्बन्धी उत्पन्न भएका पुरूषका लक्षणहरू हुन् ।

अब अर्को पक्ष आसुरी सम्पदाका लक्षणहरूको बारेमा श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि दम्भ वा भूठो अभिमान, घमण्ड, अभिमान, क्रोध, कठोरता वा क्रुर र अज्ञान यी सबै आसुरी सम्पदाका लक्षणहरू हुन् । यी सबै दोषहरू दैविक गुणहरूको ठीक उल्टो छन् । यी लक्षणहरू भएका व्यक्तिहरूलाई आसुरी प्रवृति भएको व्यक्ति भनिन्छ । यी गुणहरू तथा दोषहरूबाट नै कसैको व्यक्तित्वको परीक्षण गर्न सकिन्छ ।

**दैवी संपद्विमोक्षाय निबन्धायासुरी मता ।**
**मा शुचः संपदं दैवीमभिजातोऽसि पाण्डव ॥ ५ ॥**

दैवी सम्पदा मुक्तिको लागि र आसुरी सम्पदा बाध्नको लागि हो भनेर मानिन्छ । त्यस कारणले हे अर्जुन ! तिमी शोक नगर, किनकि तिमी दैवी सम्पदालाई लिएर उत्पन्न भएका छौँ ।

दैवी सम्पदा मोक्षको लागि अनुकुल हुन्छ तथा आसुरी सम्पदाले हामीलाई यस संसारको मायाजालको बन्धनमा बाध्दछ । तर अर्जुन ! तिमी चिन्ता नगर किनकि तिमी त दैवी गुणहरूले युक्त भएर जन्मेका छौँ । तिमीमा आसुरी लक्षणहरू छैनन् । तसर्थ तिमीले युद्ध गर्नु तिम्रा दैवी गुणहरूमध्येकै एक कर्म हो । तर अर्जुनलाई भने भीष्म पितामह, गुरू द्रोणाचार्यलाई र कुल गुरू कृपाचार्यलाई बध गर्ने कि नगर्ने भनी व्दिविधाले सताइरहेको छ । तर क्षत्रिय धर्म बमोजिम शत्रु पक्षमा बाँण चलाउनु, तिनीहरूलाई परास्त गर्नु स्वधर्म एवं दैवी धर्म हो । तसर्थ तिमी चिन्ता नगरी युद्ध गर ।

**द्वौ भूतसर्गौ लोकेऽस्मिन्दैव आसुर एव च ।**
**दैवो विस्तरशः प्रोक्त आसुरं पार्थ मे श्रृणु ॥ ६ ॥**

हे अर्जुन ! यस लोकमा भूतहरूको श्रृष्टि अर्थात मनुष्य समुदाय मात्रै दुई प्रकारका छन् : एउटा दैवी प्रकृतिवाला र दोश्रो आसुरी प्रकृतिवाला । तीमध्ये दैवी प्रकृतिवालाको बारेमा त विस्तारले भनियो, अब तिमी आसुरी प्रकृतिवाला मनुष्य समुदायको बारेमा पनि विस्तारले मबाट सुन ।

यस संसारमा भगवान्व्दारा सृजित मानिसहरू दुइ प्रकारका छन् । पहिलो दैवी प्रकृतिवाला, जो दिव्य गुणहरूद्धारा सम्पन्न हुन्छन्, जस्ले नियमित जीवनयापन



गर्दछन्, जस्ले शास्त्र तथा प्रामाणिक गुरूहरूव्दारा बताइएका आदेशहरूको पालना गर्दछन् को बारेमा विस्तारले वर्णन गरिसकेको छुँ । अब तिमी मव्दारा आसुरी प्रकृतिवाला मानिसहरूको बारेमा सुन भनी श्रीकृष्णले अर्जुनलाई भन्नुभयो । एउटै मानिस पनि समयानुसार अपनाइएका गुण वा दोषहरूद्वारा ऊ कहिले दैवी तथा कहिले आसुरी प्रकृतिको पनि हुन सक्दछ ।

**प्रवृत्तिं च निवृत्तिं च जना न विदुरासुराः ।**
**न शौचं नापि चाचारो न सत्यं तेषु विद्यते ॥ ७ ॥**

आसुर स्वभाव भएको मानिसहरूले प्रवृति तथा निवृति-यी दुवैको बारेमा जान्दैनन् । त्यसकारण उनीहरूमा न बाहिर-भित्रको शुद्धि हुन्छ, न श्रेष्ठ आचरण हुन्छ र नै सत्य भाषण नै हुन्छ ।

आसुरी स्वभाव भएका मानिसहरूलाई उस्का दुष्कार्यपूर्ण प्रवृतिको बारेमा थाहानै हुँदैन कि उस्मा नराम्रो कर्म गर्ने स्वभाव छ, अनि त्यस्तो स्वभावबाट कसरी छुटकारा पाउने वा निवृत हुने भन्ने बारेमा थाहा नभएको कारणले उस्लाई चासो हुने कुरै भएन । यस्ता मानिसहरूमा न बाहिर कै शुद्धि हुन्छ र नै भित्र अन्तःकरण कै । यिनीहरूको आचरण पनि नराम्रो हुन्छ र यिनीहरूको भाषण सत्य नभएर भूठो हुन्छ । हुन सक्छ भने यस्ता मानिसहरूबाट दैवी प्रकृतिका मानिसहरू टाढा नै बस्नु उचित हुन्छ ।

**असत्यमप्रतिष्ठं ते जगदाहुरनीश्र्वरम् ।**
**अपरस्यरसंभूतं किमन्यत्कामहैतुकम् ॥ ८ ॥**

ती आसुरी प्रवृति भएका मानिसहरूले भन्ने गर्दछन् कि जगत आर्श्यरहित, सर्वथा असत्य र बिना ईश्वरको, आफै मात्र स्त्री-पुरूषको संयोगले उत्पन्न भएको हो, अतएव मात्र काम नै यसको कारण हो । यस बाहेक अरू के छ र ?

आसुरी प्रवृतिवाला मानिसहरूले भन्ने गर्दछन् कि यो संसार मिथ्या हो, यसको केही आधार छैन । यस्को नियमन तथा नियन्त्रक कुनै ईश्वर छैन । यो संसार स्त्री तथा पुरूषको कामेक्षाको संगमको परिणाम हो । कामको बाहेक अन्य कुनै कारण हैन । उनीहरू यस जगतको सत्यतालाई बुझ्न तैयार नै हुँदैनन् । उनीहरूले धर्म तथा अधर्मको सत्यतालाई मान्दैनन् । न उनीहरूले ईश्वरलाई मान्दछन् । उनीहरूले त सन्तान मात्र स्त्रि तथा पुरूषको संयोगले उत्पन्न हुन्छ भन्ने धारणा

बोकेका हुन्छन् । यो काम वासनाबाट हुन्छ । तसर्थ उनीहरूमा धर्मप्रति निष्ठा नभएको कारणले बेइमानी, कपट र छल गर्न उनीहरू पछि पर्दैनन् ।

**एतां दृष्टिमवष्टभ्य नष्टात्मानोऽल्पबुद्धयः ।**
**प्रभवन्त्युग्रकर्माणः क्षयाय जगतोऽहिताः ॥ ९ ॥**

आसुरी प्रवृतिवाला मानिसहरू जस्ले उपर्युक्त मिथ्या ज्ञानहरूलाई अवलम्बन गर्दछन्-जस्को स्वभाव नष्ट भइसकेको छ तथा जस्को बुद्धि मन्द वा सुस्त छ, ती सबैको अपकार गर्ने क्रूरकर्मी मनुष्यहरू जगतको नाशको लागि मात्र समर्थ हुने गर्दछन् ।

दैवी प्रवृतिका मानिसहरूको अवधारणा तथा क्रियाकलापहरू रचनात्मक हुन्छन् भने आसुरी प्रवृति भएकाहरूको अवधारणा तथा कृयाकलापहरू नाशवान हुन्छन् । दैवी प्रवृतिवाला मानिसहरू समस्या आइपरे पनि त्यस समस्यालाई समाधान गर्न खोज्दछन् र गर्दछन् पनि । तर आसुरी प्रवृति भएका मानिसहरूले मात्र समस्याहरू तेर्स्याउछन् । आसुरी स्वभावका मानिसहरूमा रहने मिथ्या ज्ञान र झूठो अवधारणाले उनीहरूको स्वभावलाई नष्ट गर्दछ । यसरी तिनीहरूको बुद्धिलाई पनि मन्द पारिदिन्छ । यस्ता प्रवृति भएकाहरूले मात्र नराम्रो कार्य गर्दछन् तथा जगतलाई क्षति पुर्याइरहेका हुन्छन् ।

**काममाश्रित्य दुष्पूरं दम्भमानमदान्विताः ।**
**मोहाद्ग्रहीत्वासद्ग्राहान्प्रवर्तन्तेऽशुचिव्रताः ॥ १० ॥**

ती दम्भ, मान र मदले युक्त मानिसहरू कुनै प्रकारले पनि पूर्ण नहुने कामनाहरूको आश्रय लिएर, अज्ञानले मिथ्या सिद्धान्तहरूलाई ग्रहण गरेर र भ्रष्ट आचरणहरूलाई धारण गरेर संसारमा विचरण गर्दछन् ।

आफ्नो पैसा, पद, तथा शक्तिमा लिप्त भई डुबेका आसुरी प्रवृतिका मानिसहरू कहिल्यै सन्तुष्ट नहुने कामनाहरू वा इच्छाहरू बोकेर तथा नचाहिँदो अभिमानको मदमा एवं झूटो प्रतिष्ठामा डुबेर अज्ञानतावश झूटा सिद्धान्तहरू बोकेर तथा तिनै सिद्धान्तहरू बमोजिम भ्रष्ट आचरणहरू गरेर यस संसारमा विचरण गरिरहेका हुन्छन् । यस अन्तर्गत धेरै पैसा चाहिनेहरूलाई अझै बढी पैसा चाहिरहन्छ । कहिल्यै सन्तुष्टी हुँदैन । यिनीहरू सम्पन्न भएर पनि बेचैन रहने गर्दछन् । त्यस माथि



अज्ञानताले मिथ्या सिद्धान्त अपनाएका हुन्छन् । यिनीहरूले धर्मको सिद्धान्तहरूलाई नमानेर आफ्नै सिद्धान्तमा रमाउँदछन् । भ्रष्ट आचरण गर्ने बाहना खोजी हिँडद्छन् । गलत कार्यहरू जस्तैः चोरी, भ्रष्टाचार गर्न हुन्न भन्ने सबैलाई थाहा भएर पनि गरिरहनु यस्ता व्यक्तिहरूका लक्षणहरू हुन् ।

**चिन्तामपरिमेयां च प्रलयान्तामुपाश्रिताः ।**
**कामोपभोगपरमा एतावदिति निश्चिताः ॥ ११ ॥**

तथा ती मृत्युपर्यन्त रहने असङ्ख्य चिन्ताहरूको आश्रय लिने, विषयभोगहरू भोग्न तत्पर रहने र 'यति नै सुख हो' यस प्रकार मान्नेवाला हुन्छन् ।

असुर प्रवृतिवाला मानिसहरूले नमरूञ्जेलसम्म असङ्ख्य चिन्ताहरू बोकिरहेका हुन्छन् । प्रत्येक समयमा उनीहरूलाई चिन्ताहरूले घेरिराखेका हुन्छन् । चिन्तामा नै घेरिएको व्यक्तिले सत्यसंग कसरी साक्षात्कार गर्न सक्छ र ? वास्तवमा पनि आसुरी प्रवृति भएकाहरूलाई सत्यसँग मतलब पनि हुँदैन । इन्द्रियहरूको इच्छा तुष्टी वा विषय भोगहरूः खानु, पिउनु, सुत्नु, स्त्री-भोग आदि नै मुख्य सुख हो भन्ने उनीहरूमा अवधारणा रहेको हुन्छ । जो यस प्रकारका भोगहरूको आनन्दको लागि मात्र बाच्दछ भने उस्ले गरेका कर्महरू समाजमा दुष्कर्म नै हुन्छन भन्ने स्पष्ट नै छ ।

**आशापाशशतैर्बद्धाः कामक्रोधपरायणाः ।**
**ईहन्ते कामभोगार्थमन्यायेनार्थसंचयान् ॥ १२ ॥**

ती आशाको सैयौं फाँसिहरूमा बाँधिएका मानिसहरूले काम क्रोधको परायण भएर विषयहरू भोगको लागि अन्यायपूर्वक धनादि पदार्थहरूको संग्रह गर्ने चेष्टा गर्दछन् ।

त्यस्ता आसुरी प्रवृतिका मानिसहरूले आफ्ना सैयौं इच्छाहरू, आशाहरू पुरा गर्न लागेका हुन्छन् । इच्छा पुरा गर्न उनीहरू जे पनि गर्न तैयार रहन्छन् । तिनै आशाहरूमध्ये कुनै पुरा नहुँदा उनीहरूमा काम तथा क्रोध उत्पन्न हुन्छ र इन्द्रियतृप्ति तथा विषयभोगको लागि अबैध धन संग्रह गर्न अन्यायपूर्ण कार्यहरू गर्न थाल्दछन् । उनीहरू मात्र इन्द्रियतृप्तिको लागि सबै किसिमका दुष्कर्महरू गर्न तैयार रहन्छन् । यसरी आशा, काम, क्रोध, अनि अन्याय यस किसिमको श्रृङ्खला उनीहरूको जीवन पर्यन्त चलिरहन्छ ।

**इदमद्य मया लब्धमिमं प्राप्स्ये मनोरथम् ।**
**इदमस्तीदमपि मे भविष्यति पुनर्धनम् ॥ १३ ॥**

तिनीहरूले सोच्दछन् कि मैले आज यो प्राप्त गरेको छु र अब यो मनोकाङ्क्षालाई प्राप्त गर्ने छु । मसँग यो यति धनहरू छन् र फेरि पनि यो पनि भइहाल्छ ।

आसुरी स्वभाव भएका व्यक्तिहरूले सोच्दछन कि उनीहरूसँग आज यतिका धन छन्, त्यस धनबाट यसो गर्ने छु उसो गर्ने छु, अनि ती इच्छाहरू पूर्ण भएपछि पुनः थप इच्छाहरू उनीहरूमा जागृत हुन्छन् तथा उनीहरू ती इच्छाहरू पुरा गर्न मरिमेट्दछन् । उनीहरूका इच्छाहरूको आकार र मूल्य क्रमशः बढदै जान्छ । यस प्रकार उनीहरूको योजना बमोजिम उनीहरूले भविष्यमा अझै धन कमाउनेतर्फ लाग्दछन् । धेरैजसोलाई यो थाहा नै हुँदैन कि उनीहरू लोभ तथा मोहको जालमा फस्दै गइरहेका छन् । केहीलाई थाहा भइहाले पनि ढिला भइसकेको हुन्छ ।

**असौ मया हतः शत्रुर्हनिष्ये चापरानपि ।**
**ईश्र्वरोऽहमहं भोगी सिद्धोऽहं बलवान्सुखी ॥ १४ ॥**

त्यो शत्रु मद्वारा मारियो र ती अरू शत्रुहरूलाई पनि म मारिदिनेछु । म ईश्र्वर हुँ, ऐश्र्वर्यहरूलाई भोग्ने हुँ । म सबै सिद्धिहरूले युक्त छु र बलवान तथा सुखी छु ।

यस श्लोकमा श्रीकृष्णले आसुरी प्रवृति भएकाहरूको स्वभाव तथा धारणाहरूको बारेमा बर्णन गर्नु भएको छ । यस्ता प्रवृतिका व्यक्तिहरूमा रहेको अहङ्कार प्रबल हुन्छ । यिनीहरू यसरी सोच्दछन कि एक शत्रुलाई त मैले मारिसके, अब अन्य शत्रुहरू पनि मव्दारा मारिने छन् । एउटा कार्य गर्न सकियो भने हरेक कार्य गर्न सकिन्छ भन्ने यिनीहरूको धारणा हुन्छ । यसरी कार्य गर्नमा जीत हुँदै जाँदा यिनीहरूको अहङ्कारमा बृद्धि हुदै जान्छ । तत्पश्चात यिनीहरूले आफुलाई ऐश्वर्यहरूको भोग गर्ने भएकाले आफूलाई ईश्वर ठान्न थाल्दछन् । उनीहरूले सबै सिद्धि प्राप्त गरेका हुन्छन्, अनि धेरै बलवान छौं भनी झूठो सुखमा रमाउन खोज्दछन् ।

**८ आढ्योऽभिजनवानस्मि कोऽन्योऽस्ति सदृशो मया ।**
**यक्ष्ये दास्यामि मोदिष्य इत्यज्ञानविमोहिताः ॥ १५ ॥**



**अनेकचित्तविभ्रान्ता मोहजालसमावृताः ।**
**प्रसक्ताः कामभोगेषु पतन्ति नरकेऽशुचौ ॥ १६ ॥**

म धेरै धनी र मेरा धेरै कुटुम्बहरू छन् । मेरो तुल्य वा समान अर्को को छ र ? म यज्ञ गर्नेछु, दान दिनेछु र आमोद-प्रमोद गर्नेछु । यस प्रकार अज्ञानले मोहित रहने तथा अनेक किसिमले भ्रमित चित्त भएको मोहरूपी जालोमा समावृत (समावेश) हुने र विषयभोगहरूमा धेरै नै आसक्त असुर मानिसहरू महान अपवित्र नर्कमा पर्दछन् ।

आसुर प्रवृति भएको मानिसले म सबैभन्दा धनी व्यक्ति हुँ र मेरा आफन्तजनहरू धेरै छन् भनी अभिमान गर्दछ । आफ्नो अगाडि कसैलाई केही गन्दैन । म जस्तो कोही सुखी तथा शक्तिवान छैन जस्ता अवधारणा उस्ले पाल्दछ । आफ्ना नराम्रा कार्यहरूको दोषलाई यज्ञ गरेर तथा दान गरेर पखाल्न खोज्दछ । रमाइलो गर्नमा उस्को अभिरूचि धेरै नै हुन्छ । उस्मा रहेको मोह अज्ञानताबाट जन्मेको हुन्छ, उस्को चित्त एकदमै भ्रमित रहन्छ । यस्ता किसिमको व्यक्ति अज्ञानतावश भ्रमित हुँदै विषयभोगमा मोहग्रस्त भई जालमा अझै फस्दै जान्छ, अनि परिणामस्वरूप ऊ घोर अपवित्र नर्कमा पर्दछ ।

**आत्मसंभाविताः स्तब्धा धनमानमदान्विताः ।**
**यजन्ते नामयज्ञैस्ते दम्भेनाविधिपूर्वकम् ॥ १७ ॥**

आसुरी प्रवृतिवालाले आफैलाई नै श्रेष्ठ मान्ने, घमण्डी पुरूष धन र मानको मदले युक्त भएर नाम मात्रको यज्ञद्वारा पाखण्डी तरिकाले शास्त्र विधिरहित भएर यजन (यज्ञ) गर्दछ ।

आफैँले आफैँलाई श्रेष्ठ मान्ने सधैँ घमण्ड गर्ने आसुरी प्रवृतिका मानिसहरू सम्पत्ति तथा झूटो प्रतिष्ठामा मोहग्रस्त भएर विधि-विधानरहित भएर नाम मात्रको लागि आडम्बरयुक्त यज्ञ गर्वको साथ गर्ने गर्दछन् । उनीहरूलाई यस्तो लाग्दछ कि उनीहरूले यज्ञ गरेर पाप जति पखालिसके । उनीहरूलाई थोरै मात्र धन तथा मानले उत्ताउलो बनाउँदछ । उनीहरूले गर्ने यज्ञहरू पनि मूल बिधि-विधानको विपरीत पाखण्डी तरिकाले गरिएका हुन्छन् । जस्को मन तथा चित्त नै भगवान्मा छैन त्यसले के यज्ञ गर्ला ?

**अहंकारं बलं दर्पं कामं क्रोधं च संश्रिताः ।**
**मामात्मपरदेहेषु प्रद्विषन्तोऽभ्यसूयकाः ॥ १८ ॥**

ती असुरहरू अहङ्कार, बल, घमण्ड, कामना र क्रोध आदिको अधिनमा हुन्छन् र अर्काको निन्दा गर्ने पुरुष आफ्नो तथा अर्काको शरीरमा स्थित म अन्तर्यामीसँग द्वेष राख्ने हुन्छन् ।

त्यस्ता असुरहरू मिथ्या अहङ्कार, बल, घमण्ड, कामना तथा क्रोधको अधिनमा रहेका हुन्छन् । उनीहरूले आफु भित्र रहनु भएको श्रीकृष्णको अंश आत्मालाई र अरू भित्र रहेको परमात्मालाई चिन्दैनन् । उनीहरूले अरूहरूको दोष पक्षमात्र देख्नु तथा त्यस दोषको बारेमा त्यस पुरूषलाई भन्नमा तिनीहरूलाई बडो मज्जा हुने गर्दछ । यस बाहेक आफ्नो तथा अर्काको शरीरमा रहेका आत्मा तथा परमात्मालाई सदैव गाली गर्दै ईर्ष्या गर्दछन् । आत्मा तथा परमात्माको उपस्थिति रहेको छ भन्ने चेतना नै तिनीहरूमा रहेको हुन्न ।

**तानहं द्विषतः क्रुरान्संसारेषु नराधमान् ।**
**क्षिपाम्यजस्रमशुभानासुरीष्वेव योनिषु ॥ १९ ॥**

ती द्वेष गर्नेवाला पापाचारी र क्रुरकर्मी नराधमहरूलाई म संसारमा पटक-पटक आसुरी योनिहरूमै हाल्दछु ।

ती इर्ष्यालु, पापाचारी, क्रूरकर्मी र नराधमहरूलाई म निरन्तर विभिन्न आसुरी योनिहरूमा भवसागरमा गई कष्टको भोग गर भनी हालिरहन्छुं भनी श्रीकृष्णले भन्दै हुनुहुन्छ । मर्ने समयमा मानिसहरूले आफ्ना संस्कारहरू साथमा लिई अर्को शरीर धारण गर्न जाने गर्दछन् । तिनै संस्कारहरू अनुरूप गरिएका दुष्कर्महरूको भोग भोग्न आसुरी योनिका व्यक्तिहरू बारम्बार आसुरी योनिमा नै जन्म लिने गर्दछन् । उनीहरूको जन्म भएको योनिमा उनीहरूले विषयभोग गर्दा उनीहरूलाई यस्तो लाग्दछ कि उनीहरूले धेरै आनन्दहरूको भोग गर्न पाइरहेका छन् । तर वास्तवमा उनीहरूले त श्रीकृष्णले दिनु भएको दण्ड भोग गरिरहेका हुन्छन् । आसुरी योनिका कृत्यहरू जस्तैः भगवान् तथा ईश्वरसँग द्वेष गर्नेहरूलाई, पाप, क्रुरकर्महरू, नराधम कार्यहरू गर्नेहरूलाई भगवान्ले पुनः यसरी भवसागर रूपी पृथ्वीमा पठाइरहनु हुन्छ । तसर्थ मानिसहरूले हेक्का राख्नु पर्दछ कि उनीहरूले



गरेका कर्महरूको फल चाहे त्यो राम्रो तथा नराम्रो होस् ती कर्महरूको हिसाब-किताब भई त्यस्को फल भोग गर्न उनीहरू तैयार रहनु पर्दछ । त्यस कारण हरेकले आफुलाई सत्कर्ममा लगाउनु उचित हुन्छ ।

**आसुरीं योनिमापन्ना मूढा जन्मनि जन्मनि ।**
**मामप्राप्यैव कौन्तेय ततो यान्त्यधमां गतिम् ॥ २० ॥**

हे अर्जुन ! ती मूढहरूले मलाई प्राप्त नगरिकनै जन्म-जन्ममा आसुरी योनि प्राप्त गर्दछन्, फेरि त्यो योनिभन्दा पनि अति नीच गति तिनीहरूले प्राप्त गर्दछन् अर्थात् घोर नर्कमा पर्दछन् ।

यस्ता आसुरी प्रवृति भएका व्यक्तिहरूले बारम्बार आसुरी योनिमा नै जन्म लिन्छन् । उनीहरूव्दारा गरिएका दुष्कर्महरू अनुसार उनीहरूले श्रीकृष्णलाई पाउनु भनेको कता हो कता ! बरू अझै नीच गति प्राप्त गर्दछन् । तमोगुणको बाहुल्यता भएपछि सतोगुण तथा रजोगुण न्यून हुन्छन् । तमोगुणले आसुरी स्वभाव भएकाहरूलाई नीच योनिमा लिएर जान्छ । आसुरी प्रवृति भएकाहरूलाई श्री कृष्णले यहाँ मूर्ख भनी सम्बोधन गर्नु भएको छ । यस्ता मानिसहरूले श्रीकृष्णलाई कहिल्यै प्राप्त गर्दैनन् । किनकि यस्ता स्वभावका व्यक्तिहरूले कहिल्यै श्रीकृष्णलाई प्राप्त गर्ने चेष्टा नै गर्दैनन् । उनीहरूले धन, मान तथा प्रतिष्ठामा नै आफ्ना सबै समय खर्चिन्छन् । यस प्रकार उनीहरू नीच गति वा नर्कमा पर्दछन् ।

**त्रिविधं नरकस्येदं द्वारं नाशनमात्मनः ।**
**कामः क्रोधस्तथा लोभस्तस्मादेतत्त्रयं त्यजेत् ॥ २१ ॥**

काम, क्रोध तथा लोभ-यी तीन प्रकारका नर्कका द्वारहरूले आत्मालाई नाश गर्ने अर्थात् उस्लाई अधोगतिमा लिएर जाने हो । तसर्थ यी तीनैलाई त्याग्नु पर्दछ ।

यस संसारमा हुने सबै अनर्थ, दुष्कर्महरू तथा अनियमितताहरूको मूल नै यी तीनः काम, क्रोध तथा लोभ भएकाले बुद्धिमान व्यक्तिले तिनीहरूको त्याग गरी आत्मालाई पतन हुनबाट बचाउनु पर्दछ । यस श्लोकमा आसुरी प्रवृति तथा जीवन प्रारम्भ हुने कारण उल्लेख गरिएको छ । मानिसले आफ्नो काम पूर्ण गर्न चाहान्छ, तर त्यो यदि पुरा भएन भने त्यस काममा देखिएको अबरोधप्रति उस्मा क्रोध भावना जागृत हुन्छ तथा त्यसप्रतिको आसक्ति अझै बढ्दै जान्छ । काम, क्रोध तथा लोभले

हामीलाई त्यस्ता कार्यहरू गर्न लगाउँदछन् जो हामीले गर्न हुँदैन, चाहे त्यो शारीरिक होस् वा मानसिक । यदि मानिसहरूलाई आफ्नो जीवनको उद्देश्य सार्थक बनाउनु पर्ने छ भने वा आसुरी योनिमा जानु छैन भने उनीहरूले यी परम शत्रुहरूको त्याग गर्नु पर्दछ ।

**एतैर्विमुक्तः कौन्तेय तमोव्दारैस्त्रिभिर्नरः ।**
**आचरत्यात्मनः श्रेयस्ततो याति परां गतिम् ॥ २२ ॥**

हे अर्जुन ! यी तीनै नर्कका व्दारहरूबाट मुक्त पुरूषले आफ्नो कल्याणको लागि आचरण गर्दछ, यसबाट ऊ परम गतिमा जान्छ अर्थात् मलाई प्राप्त हुन पुग्दछ ।

भगवान् भन्नु हुन्छ जो व्यक्तिले यी तीनवटै : काम, क्रोध तथा लोभ दोषपूर्ण रहेका नर्कका द्वारहरूलाई परित्याग गर्दछ र उस्ले आफ्नो उद्धार र कल्याणको लागि भगवान्ले निर्देशित गर्नु भएका मार्गहरू तथा आचरणहरूलाई पालना गर्दछ भने उस्ले भगवान्सँग आत्मसाक्षात्कार गरी परम गति प्राप्त गर्दछ । तसर्थ सत्मार्गको चयन गर्ने आफ्नो हातमा छ ।

**यः शास्त्रविधिमुत्सृज्य वर्तते कामकारतः ।**
**न स सिद्धिमवाप्नोति न सुखं न परां गतिम् ॥ २३ ॥**

जुन पुरूषले शास्त्र विधिहरूलाई त्यागेर आफ्नो इच्छाले मनलाग्दो आचरण गर्दछ, उस्ले न सिद्धि प्राप्त गर्दछ, न परम गति र नै सुख प्राप्त गर्दछ ।

समाजलाई उन्नत्तिको मार्गमा लिएर जानको लागि समय, अवस्था, स्थान जस्ता विभिन्न पक्षहरूलाई विचार गरी तिनीहरूको संयोजन गर्दै अघि बढ्नु पर्दछ भनी विभिन्न शास्त्रहरूमा विधि-विधानहरू वर्णन गरिएका छन् । यस प्रकार शास्त्र सम्मत किसिमले चले भने मानिसहरू दैवी प्रवृतिको हुने, नचले भने आसुरी प्रवृतिको हुने छन् । आसुरी प्रवृतिको व्यक्तिले शास्त्रको विधि विधानलाई मान्दैन । प्रत्येक व्यक्तिले यी विधि-विधानहरूको पालना गर्नुपर्ने हुन्छ । यदि कसैले यस्को पालना नगरी काम, क्रोध, लोभ बमोजिम स्वेच्छाले कार्य गर्दछ भने उस्ले कहिल्यै सिद्धि प्राप्त गर्न सक्दैन् । ती विधि-विधानहरू बमोजिम आफ्ना आचरणहरूलाई ढाल्नु पर्ने हुन्छ वा त्यस अनुरूपका व्यवहारहरू कायम गर्नु पर्दछ । अनि मात्र परम गति तथा सुख प्राप्त हुन्छ । संसारका सबै विषय वस्तुहरू सञ्चालन गर्ने विधानहरू हुन्छन् ।



ती बमोजिम मानिस तथा समाजलाई चलाइएन भने कार्य सिद्धिको साटो सामाजिक व्यवस्थाहरूमा दुर्धटनाहरू हुन्छन्, जसबाट अधोगति प्राप्त हुने अवश्यमभावी हुन्छ ।

**तस्माच्छास्त्रं प्रमाणं ते कार्याकार्यव्यवस्थितौ ।**
**ज्ञात्वा शास्त्रविधानोक्तं कर्म कर्तुमिहार्हसि ॥ २४ ॥**

यस कारण तिम्रोलागि यस कर्तव्य तथा अकर्तव्यको व्यवस्थामा शास्त्र नै प्रमाण हो । यसरी बुझेर तिमी शास्त्र विधिले नियत कर्म नै गर्ने योग्य छौ ।

तसर्थ गीताको मूल गुण पक्ष के हो भने यस्मा श्रीकृष्णले भन्नु भएको छ कि कर्मलाई कर्तव्य ठानेर फलको आशा नगरी आफ्ना कर्महरू गर । यसको लागि मानिसले यो जान्नु आवश्यक हुन्छ कि शास्त्रबमोजिम के-के कर्महरू गर्न हुन्छन् तथा के-के कार्यहरू गर्न हुँदैनन् । ती विधि-विधानहरूमा उल्लेखित गर्न हुने कार्यहरूलाई गरेमा मानिसले आफ्ना नियमित कर्महरू गरेको ठहर्छ । कर्मलाई कर्तव्य ठानेर गर्नु पर्दछ । हामीलाई हाम्रो कर्तव्यको बारेमा शास्त्रहरूबाट जानकारी प्राप्त हुन्छ । शास्त्रद्वारा जुन कर्तव्य गर्नु पर्ने हुन्छ त्यही नै नियत कर्म हुन्छ । श्री कृष्णले अर्जुनलाई यही सल्लाह दिँदै हुनुहुन्छ ।

अथ सप्तदशोऽध्यायः

# अध्याय सत्रह

# श्रद्धात्रयविभागयोग

अर्जुन उवाच (भन्दछन्)

**ये शास्त्रविधिमुत्सृज्य यजन्ते श्रद्धयान्विताः ।**
**तेषां निष्ठा तु का कृष्ण सत्त्वमाहो रजस्तमः ॥ १ ॥**

अर्जुनले भनेः हे कृष्ण ! जो मानिसहरूले शास्त्र विधिहरूलाई छाडेर श्रद्धाले युक्त भएर देवादिको पूजा गर्दछन्, उहाँहरूको स्थिति फेरि कस्तो हुन्छ ? सात्विकी हुन्छ अथवा राजसी कि तामसी ?

अर्जुनले यहाँ समसामयिक प्रश्न गरेका छन् । सबैलाई शास्त्रको ज्ञान हुन्न । सबैले सही गुरू पनि पाएका हुन्नन् । शास्त्रको ज्ञान पाएर ती ज्ञानहरूलाई व्यवहारमा ल्याउनु पनि गाह्रो कार्य हो । तसर्थ शास्त्रका विधि-विधानहरूको ज्ञानको अभावमा गरिएका भक्ति, पूजा, आराधना कुन गुणयुक्त हुन्छ ? मानिसको श्रद्धालाई दोष दिन सकिँदैन । यदि कुनै व्यक्तिले भगवान्प्रति निष्ठा राखी शास्त्र उल्लेखित विधिभन्दा बाहिर गएर भक्ति, पूजा गर्दछ भने त्यस्तो भक्तिको स्थिति गुणात्मक हिसाबले के हुन्छ ? सतो, रजो वा तमोगुणी भनी अर्जुनले प्रश्न गरेको छन् ।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**त्रिविधा भवति श्रद्धा देहिनां सा स्वभावजा ।**
**सात्विकी राजसी चैव तामसी चेति तां श्रृणु ॥ २ ॥**

श्री भगवान्ले भन्नुभयोः मनुष्यहरूको ती शास्त्रीय संस्कारहरूबाट रहित मात्र स्वभावबाट उत्पन्न श्रद्धाहरू तीन किसिमका हुन्छन् । ती हुनः सात्विकी, राजसी र तामसी । तिनीहरूको बारेमा तिमीले मसँग सुन ।

यस किसिमको श्रद्धाहरू अनन्त जन्महरूमा गरिएका कर्महरूको सञ्चित संस्कारबाट उत्पन्न हुन्छन् । शरीरधारी जीवहरूले जे-जस्ता गुणहरू अर्जित गरेर आएका हुन्छन् सोही अनुरूप उनीहरूको श्रद्धा हुने गर्दछ । यसलाई स्वभावजा पनि भनिन्छ । यसरी श्रद्धा स्वभावबाट उत्पन्न हुन्छ । हाम्रा कर्महरू हाम्रो संस्कार बनेर



सँग-सँगै लाग्ने गर्दछन् । कालान्तरमा यही हाम्रो स्वभाव पनि बन्दछ । त्यही स्वभाव अनुरूप हाम्रो स्वभाव कायम हुन्छ । अब तिनीहरूको बारेमा म तिमीलाई भन्दैछु भनी भगवान्ले अर्जुनलाई भन्दै हुनुहुन्छ ।

**सत्वानुरूपा सर्वस्य श्रद्धा भवति भारत ।**
**श्रद्धामयोऽयं पुरूषो यो यच्छ्रद्धः स एव सः ॥ ३ ॥**

हे भारत ! सबै मानिसहरूको श्रद्धा उनीहरूको अन्तःकरण अनुरूप हुने गर्दछ । यो पुरूष श्रद्धामय छ, त्यसैले जो पुरूष जस्तो श्रद्धा भएको छ, ऊ स्वयं पनि त्यही हुन्छ ।

मानिसहरूले आफ्ना कर्महरूद्धारा आफुमा विकसित गरेका गुणहरूबाट नै स्वभाव कायम हुन गई तिनीहरूले बेग्ला-बेग्ला किसिमका श्रद्धाहरूको विकास गराउँदछन् । उनीहरूको पूर्वजन्मबाट ल्याएका संस्कार, यस जन्ममा गरिएका कर्महरू यी सबैले उनीहरूमा गुणहरू विकसित गराइरहेका हुन्छन् । यही गुणहरू क्रमशः स्वभावमा परिणत हुन्छन् । गुणहरूद्धारा यसरी निर्मित श्रद्धा उत्तम अर्थात् सतोगुणी, राजस अर्थात रजोगुणी तथा तमोगुणी हुने गर्दछन् । यही श्रद्धा बमोजिम उस्ले संगति पनि बृद्धि गर्ने गर्दछ । तर भगवान् प्रतिको श्रद्धा भने मूलतः सतोगुणबाट उत्पन्न हुन्छ । जस्तो वृति हुन्छ उस्तै पुरुष हुन्छ । मन, चित्त र मस्तिष्क यी सबै हाम्रै शरीरमा छन् । सबैमा एक किसिमको आपसी तारतम्य हुने गर्दछ । व्यक्तिमा जस्तो प्रकृतिका तीन गुणहरूमध्ये एक हुने गर्दछ त्यस्तै श्रद्धाको कुनै एक रूप उस्मा हुने गर्दछ । सबैमा श्रद्धा त हुन्छ तर जो पुरुष जस्तो श्रद्धामय छ अर्थात उस्को पूर्वजन्म र यस जन्मका कर्महरूबाट निर्मित र विकसित स्वभाव र संस्कारहरूव्दारा कायम भएको श्रद्धा बमोजिम नै ऊ हुने गर्दछ । तसर्थ ऊ जस्तो प्रकृतिको हुन्छ, उस्को श्रद्धा उस्तै हुन्छ तथा उस्को श्रद्धा जस्तो हुन्छ ऊ त्यस्तै हुन्छ ।

**यजन्ते सात्त्विका देवान्यक्षरक्षांसि राजसाः ।**
**प्रेतान्भूतगणांश्र्चान्ये यजन्ते तामसा जनाः ॥ ४ ॥**

सात्त्वि पुरुषले देवताहरूको पूजा गर्दछन्, राजस पुरुषले यक्ष र राक्षसहरूको तथा अन्य जो तामस मानिसहरू छन् उनीहरूले प्रेत र भूतगणहरूको पूजा गर्दछन् ।

यस श्लोकमा श्रद्धाका रूपहरूको बारेमा वर्णन गरिएका छन् । सतोगुणी व्यक्तिहरूले देवताहरूको पूजा आराधना गर्दछन्, रजोगुणीहरूले यक्ष तथा राक्षसहरूको

भने तमोगुणीहरूले भूत तथा प्रेतहरूको पूजा गर्दछन् । श्रध्दाका रूपहरूको बारेमा सम्भाउंदै श्री कृष्णले तीनै रूपहरूको परिचय गराउँदै हुनुहुन्छ । जस्तो जस्को स्वभाव वा प्रवृति छ उस्तै उस्को श्रद्धा हुन्छ तथा जस्तो जस्को श्रध्दा छ उस्को भगवान् पनि सोही अनुरूपको हुन्छ । यसैले मानिसहरूले आफ्नो चाहना बमोजिमका देवी-देवताहरूलाई पूजा गर्ने गर्दछन् ।

**अशास्त्रविहितं घोरं तप्यन्ते ये तपो जनाः ।**
**दम्भाहंकारसंयुक्ताः कामरागबलान्विताः ॥ ५ ॥**

जुन मानिसले शास्त्र विधिले रहित भएर मात्र मनःकल्पित घोर तप गर्दछ तथा दम्भ र अहङ्कारले युक्त एवं कामना, आसक्ति र बलको अभिमानले पनि युक्त छ ।

श्रद्धा गर्ने क्रममा मानिसले मिथ्या घमण्ड तथा अहङ्कारयुक्त भएर कामना, आसक्ति तथा बलले प्रेरित भएर शास्त्र बिरूद्ध विधिले कठोर तपस्या र ब्रत गर्दछ । यस संसारमा हजारौँमध्ये सायद कुनै एक प्राणी होला जस्ले शास्त्र बिधिद्वारा भगवान्को पूजा, आराधना गरेर सत्यलाई प्राप्त गर्दछ । धेरैजसो मानिसहरू जो शास्त्र बिधि बमोजिमका कार्यहरू सम्पादन नगरेर आफ्नो मनले इच्छाए बमोजिम जे पनि गर्दछन्, आफ्नो दम्भ, अहङ्कारले आफ्नो कामनालाई धेरै महत्त्व दिन्छन् । आफ्नो आसक्ति तथा बलको अभिमानमा उनीहरू जे पनि गर्न तैयार रहन्छन् । यस्ता पुरूषहरू आसुरी हुन्छन् ।

**कर्शयन्तः शरीरस्थं भूतग्राममचेतसः ।**
**मां चैवान्तः शरीरस्थं तान्विद्ध्यासुरनिश्र्चयान् ॥ ६ ॥**

जो शरीर रूपमा स्थित भूत समुदायलाई र अन्तःकरणमा स्थित म परमात्मालाई पनि कृश (दुब्लो, कमजोर) गर्नेवाला छ, ती अज्ञानीहरूलाई तिमी आसुर स्वभावका हुन भनी जान ।

आसुरी प्रवृतिको बारेमा वर्णन गर्दै श्रीकृष्णले भन्नु हुन्छ कि यस्ता स्वभावका पुरूषहरूमा सही तथा गलत के हो ? तिनको पहिचान गरी छुट्याउने क्षमता हुँदैन । तिनीहरू विवेकहीन हुन्छन् । यस्ता पुरूषहरूले शास्त्र बिरोधी विधिले घोर आचरणहरूद्वारा उपवास आदि गरेर मात्र आफ्नो शरीरलाई सुकाउँदैनन्, तिनीहरूले



आफुभित्र रहेको परमात्माको अंश स्वरूप जो आफुमा पूर्ण छ आत्मालाई अर्थात् श्रीकृष्णलाई पनि कष्ट पुऱ्याउँछन् भन्ने कुरो तिमी बुझ भनी श्रीकृष्णले सम्झाउँदै हुनुहुन्छ ।

**आहारस्त्वपि सर्वस्य त्रिविधो भवति प्रियः ।**
**यज्ञस्तपस्तथा दानं तेषां भेदमिमं श्रृणु ॥ ७ ॥**

भोजन पनि सबैलाई आ-आफ्नो प्रकृति बमोजिम तीन प्रकारको प्रिय हुन्छ । र त्यसो पनि यज्ञ, तप र दान पनि तीन-तीन प्रकारका हुन्छन् । उनीहरूका ती पृथक-पृथक भेदहरूलाई तिमीले मबाट बुझ ।

जो जस्तो हुन्छ उस्ले त्यस्तै भोजन तथा भजन गर्दछ । यसैबाट त्यस व्यक्तिको प्रकृति स्पष्ट हुन्छ । यस संसारका व्यक्तिहरूले जस्ता भोजनहरू मन पराउँदछन्, ती प्रकृतिको गुण अनुसार तीन प्रकारका हुन्छन् । यही स्थिति यज्ञ, तप तथा दानमा पनि हुने गर्दछ । अब तिनीहरूको भेदको बारेमा तिमीलाई सम्झाउँछु । मानिसको प्रवृति सात्विक, राजसी तथा तामसी गरी तीन प्रकारको हुने गर्दछ । यसै बमोजिम पूजा-पाठ अनि खानाहरू पनि तीन प्रकारका हुने गर्दछन् । आफ्नो स्वभाव बमोजिम नै मानिसले आफ्नो जीवन रोज्दछ । यही स्वभावले उस्ले जीवन चक्रलाई बाँद्धछ ।

**आयुः सत्त्वबलारोग्य**
**सुखप्रीतिविवर्धनाः ।**
**रस्याः स्निग्धाः स्थिरा हृद्या**
**आहाराः सात्त्विकप्रियाः ॥ ८ ॥**

आयु, बुद्धि, बल, आरोग्य, सुख र प्रीति बढाउने, रसयुक्त, सफा र स्थिर रहने तथा स्वभावले नै मनलाई प्रिय-यस्तो आहार अर्थात् भोजन गर्ने पदार्थहरू सात्विक पुरूषहरूलाई प्रिय हुन्छन् ।

यस श्लोकमा सात्त्विक भोजनको बारेमा वर्णन गरिएको छ । जुन भोजन सात्विक व्यक्तिहरूलाई प्रिय हुन्छ त्यो भोजनले आयु बढाउछ, जीवनलाई शुद्ध गर्दछ तथा बल, बुद्धि, आरोग्य, सुख तथा प्रीति बढाउने हुन्छ, अनि रसले पूर्ण पनि हुन्छ । यस्तो भोजनको सार जीवनमा लामो समयसम्म स्थिर भएर रहन्छ । यस किसिमको

खानाले आयु, बुद्धि, बल तथा आरोग्यता बढाउछ। यस्ता भोजनले जीवनलाई शुद्ध राखेर आपसमा प्रीति बढाई सुख दिने गर्दछ।

**कट्वम्ललवणात्युष्णतीक्ष्णरूक्षविदाहिनः।**
**आहारा राजसस्येष्टा दुःखशोकामयप्रदाः॥ ९॥**

पिरो, अमिलो, चर्को नुन भएको, धेरै तातो, तीख्खर, भूटेको, छाती पोल्ने र दुःख, चिन्ता तथा रोगहरूलाई उत्पन्न गर्ने भोजन अर्थात भोजन गरिने पदार्थहरू राजस पुरुषहरूलाई प्रिय हुन्छन्।

राजसी प्रवृति भएका मानिसहरूलाई मनपर्ने भोजनको बारेमा यहाँ वर्णन गरिएको छ। ती हुन् : पिरो, अमिलो, टाठो नुन भएको, धेरै तातो, साह्रै तीख्खर, भूटेर सुख्खा बनाइएको भोजन। यस्ता खानाहरू खांदा छाति नै पोल्ने र दुःख, चिन्ता तथा रोगहरू उत्पन्न गराउने हुन्छन्। राजसी खानामा नुनको, तातोको र सुख्खापनको मात्रा धेरै हुन्छ। यस किसिमको खाना राजसी मानिसहरूलाई मन पर्दछ।

**यातयामं गतरसं पूति पर्युषितं च यत्।**
**उच्छिष्टमपि चामेध्यं भोजनं तामसप्रियम्॥ १०॥**

जुन भोजन आधामात्र पाकेको हुन्छ, रसरहित हुन्छ, दुर्गन्धयुक्त हुन्छ, बासी र उच्छिष्ट हुन्छ तथा जुन अपवित्र पनि हुन्छ, त्यस्ता भोजनहरू तामस पुरुषहरूलाई प्रिय हुन्छन्।

तामस मानिसहरूले खाने तामसी भोजनको बारेमा उल्लेख गर्दै यहाँ भनिएको छ कि यस्ता भोजनहरू आधा मात्र पाकेका हुन्छन्, रस नभई सुख्खा तथा बासी हुन्छन्। यी सबै तामसी खानाका गुणहरू बासी भएको कारणले तिनीहरूले सुगन्धको साटो दुर्गन्ध दिन्छन्, कसैको जूठो हुन्छन् तथा अपवित्र हुन्छन्। यस्ता खानाले त झनै राजसी खानाले भन्दा धेरै रोगहरू निम्त्याउने हुन्छन्।

**अफलाकाङ्क्षिभिर्यज्ञो विधिदृष्टो य इज्यते।**
**यष्टव्यमेवेति मनः समाधाय स सात्त्विकः॥ ११॥**

जस्ले शास्त्र विधिले नियत तरिकाले, यज्ञ गर्नु नै कर्तव्य ठान्दछ–यस प्रकार मनलाई समाधान गरेर फल नचाहिने पुरुषहरूद्वारा गरिन्छ, त्यो सात्विक हुन्छ।



श्रीकृष्णले पूजा, उपासना तथा सात्त्विक विधिले गरिने यज्ञको तरिकाको बारेमा बताउँदै हुनुहुन्छ। शास्त्रविधिले गरिनु पर्ने यज्ञलाई गर्नु नै नियत यज्ञ भनिन्छ। आफ्नो मनलाई नियन्त्रित गरेर फलप्रतिको आसक्तिलाई त्यागेर गरिने यज्ञलाई सात्त्विक यज्ञ भनिन्छ। यज्ञ वा पूजा गर्नुको सँग-सँगै आफुलाई पनि संयममा राख्नु अनिवार्य हुन्छ। ज-जस्ले आफ्नो श्वाँसको प्राण र अपान वायुलाई संयमित गरी आफ्नो प्राणको गतिलाई नियन्त्रित गर्दछन् यस्ता मानिसहरूले गरेको यज्ञ नै सात्विक यज्ञ हुन्छ।

**अभिसंधाय तु फलं दम्भार्थमपि चैव यत्।**
**इज्यते भरतश्रेष्ठ तं यज्ञं विद्धि राजसम्॥ १२॥**

तर हे अर्जुन! मात्र दम्भ आचरणको लागि अथवा फललाई पनि दृष्टिगत गरी जुन यज्ञ गरिन्छ, त्यो यज्ञलाई तिमीले राजस यज्ञ हो भनी बुझ।

श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ यदि कुनै यज्ञ आफ्नो अभिमान तथा घमण्ड पूर्तिको लागि वा आफुलाई ठूलो देखाउन तथा फलानो भौतिक फल प्राप्ति होस भनी गरिन्छ भने त्यस्ता यज्ञलाई राजस यज्ञ भनिन्छ। मात्र केही फल प्राप्तिको लागि पूजा वा यज्ञ गरिन्छ भने त्यो त पूजा वा आराधना नभई एक किसिमको भगवान्सँग गरेको व्यापारिक सम्झौता हुन पुग्दछ। यस अन्तर्गत कसैले स्वर्ग पुग्नको लागि, कसैले अपार धन प्राप्तिको लागि यज्ञ तथा अनुष्ठानहरू गर्ने गर्दछन्। यस किसिमको यज्ञ तथा पूजाले श्रीकृष्ण कहिल्यै खुशी हुनुहुन्न।

**विधिहीनमसृष्टान्नं मन्त्रहीनमदक्षिणम्।**
**श्रद्धाविरहितं यज्ञं तामसं परिचक्षते॥ १३॥**

शास्त्र विधिले हीन, अन्नदानले रहित, बिना मन्त्रहरूले, बिना दक्षिणाले र बिना श्रद्धाले गरिने यज्ञलाई तामस यज्ञ भनिन्छ।

जुन यज्ञ शास्त्रहरूद्वारा प्रतिपादित विधि विधान अनुरूप गरिँदैन, जसमा अन्नदान गरिँदैन वैदिक मन्त्रहरूलाई उच्चारण नगरेर, पूरोहितहरूलाई दक्षिणा नदिइकन तथा भगवान्लाई कुनै किसिमको श्रद्धा वा सम्मान नगरिकन गरिन्छ त्यस्ता यज्ञलाई तामस यज्ञ भनिन्छ। यो त एक किसिमको यज्ञको उद्देश्यलाई छल गरेको कृत्य पो भयो। त्यसकारण यस्ता यज्ञहरूलाई तामस यज्ञ भनिएको हो।

**देवद्विजगुरूप्राज्ञपूजनं शौचमार्जवम् ।**
**ब्रह्मचर्यमहिंसा च शारीरं तप उच्यते ॥ १४ ॥**

देउता, ब्राह्मण, गुरु र ज्ञानीजनहरूको पूजा, पवित्रता, सरलता, ब्रह्मचर्य र अहिंसारत रहनु-यिनीहरूलाई शरीर सम्बन्धी तप भनिन्छ ।

यस श्लोकको माध्यमले श्रीकृष्णले तपको बारेमा सविस्तार बताउँदै हुनुहुन्छ । शरीर सम्बन्धी तपलाई अर्थ्याउँदै उहाँ भन्नु हुन्छ देउता, योग्य ब्राह्मण, गुरू, माता-पिता, आचार्य, बृद्ध एवं जो आफुभन्दा कुनै पनि प्रकारले ठूलो हुनुहुन्छ, उहाँहरूको सम्मान गर्दै उहाँहरूले निर्देशित गर्नु भएको मार्गहरूलाई अनुसरण गरी अगाडि बढनु, उहाँहरूको पूजा गर्नुलाई नै शरीर सम्बन्धी तप भनिन्छ । अनि जीवनमा पवित्रता, सरलता, ब्रह्मचर्य, अहिंसा जस्ता विशेषताहरू अपनाइन्छ भने यस्तो किसिमको तपलाई शरीर सम्बन्धी तप भनिन्छ । यस्ता तपहरू शरीरले गरिन्छ ।

**अनुद्वेगकरं वाक्यं सत्यं प्रियहितं च यत् ।**
**स्वाध्यायाभ्यसनं चैव वाङ्मयं तप उच्यते ॥ १५ ॥**

जुन उव्देग नगर्ने, प्रिय र हितकारी एवं यथार्थ भाषण छ तथा जस्मा वेद शास्त्रहरू पठनको एवं परमेश्वरको नाम जपको अभ्यास छ-त्यसलाई वाणी सम्बन्धी तप भनिन्छ ।

यस श्लोकमा वाणी सम्बन्धी तपको बारेमा उल्लेख गरिएको छ । जुन भाषण वा वाणी यथार्थ, प्रिय र सबैको लागि हितकारी छ तथा उत्तेजित नगर्ने किसिमको छ भने यस्ता वाणीहरूलाई वाणी सम्बन्धी तप भनिन्छ । हरेक हालतमा उत्तेजित नभई शान्त रहेर, मन तथा इन्द्रियहरूद्वारा जस्तो अनुभव गरिएको छ ठीक त्यस्तै कसैले वाणी बोल्दछ अर्थात् यथार्थ भाषण गर्दछ, उस्ले सबैको हितकारी वाणी बोल्दछ तथा वेदशास्त्रहरूको पाठ तथा परमेश्वरको नाम जपको अभ्यास गर्दछ भने त्यस्लाई वाणी सम्बन्धी तप भनिन्छ । हाम्रो वाणी मधुर, साँचो, शान्त र लाभदायक हुनु पर्दछ । सबैलाई शीतलता प्रदान गर्ने वाणी बोल्नु पर्दछ ।

**मनः प्रसादः सौम्यत्वं मौनमात्मविनिग्रहः ।**
**भावसंशुद्धिरित्येतत्तपो मानसमुच्यते ॥ १६ ॥**



मनको प्रसन्नता, शान्तभाव, भगवच्चिन्तन गर्ने स्वभाव, मनको निग्रह र अन्तःकरणका भावहरूलाई राम्ररी पवित्र राख्नु-यस्ता तपलाई मन सम्बन्धी तप भनिन्छ ।

मनको तपको सम्बन्धमा श्रीकृष्णले वर्णन गर्दै भन्नुहुन्छ कि मनको तप त्यो हो जब मन प्रसन्न रहन्छ, शान्त रहन्छ, भगवान्को चिन्तनमा लाग्ने स्वभावको हुन्छ, मन संयमित हुन्छ वा विषयभोगमा लाग्न उत्तेजित हुदैन्, अन्तःकरणमा सरलता र शुद्धता कायम राख्दछ । मनले तप गर्दा मनलाई सबैतिरको विषय भोगहरूबाट वशिभूत गरी उहाँ परमात्मामा एकिकृत गरी मनलाई निग्रह गर्नुपर्ने हुन्छ । जब यी सबै गुणहरू मनले अगाँल्दछ भने मात्र मन सम्बन्धी तप सफल हुन्छ भनेर श्रीकृष्णले वर्णन गर्दै हुनुहुन्छ ।

**श्रद्धया परया तप्तं तपस्तत्त्रिविधं नरैः ।**
**अफलाकाङ्क्षिभिर्युक्तैः सात्त्विकं परिचक्षते ॥ १७ ॥**

फलको चाहना नगर्ने योगी पुरूषहरूद्वारा परम श्रद्धाले गरिएका ती उपर्युक्त तीन प्रकारका तपहरूलाई सात्विक तप भनिन्छ ।

कुनै पनि भौतिक लाभको इच्छा नगर्ने, मात्र परमेश्वरमा प्रवृत योगीहरूद्वारा दिव्य श्रद्धाले सम्पन्न गरिने तीन प्रकारका तपहरूलाई सात्विक तप भनिन्छ । तीन प्रकारका तपहरू यस प्रकारका छन्ः जब देउता, ब्राह्मण तथा गुरूलाई साँचो मनले पूजा आराधना गरिन्छ भने त्यस्लाई शरीर सम्बन्धी तप भनिन्छ । राम्रो बोलीले सबैलाई राम्रो लाग्ने र ती बोलीहरू सबैको हितमा हुन्छ भने त्यो वाणी सम्बन्धी तप हुन्छ । अनि जब मनलाई नियन्त्रणमा राखी प्रसन्नता तथा शान्तिको भावले विषयभोग परित्याग गरी श्रीकृष्णमा एकाग्रचित्तले लागिन्छ भने त्यसलाई मन सम्बन्धी तप भनिन्छ । कर्मको फलप्रति आसक्ति नभएका योगी पुरुषहरूद्वारा परम श्रद्धाले गरिएका यस प्रकारका उपर्युक्त तीन प्रकारका तपहरूलाई सात्विक तप भनिन्छ । यसर्थ मन, वचन तथा शरीरबाट गरिएका तपहरू सात्विक हुन्छन् ।

**सत्कारमानपूजार्थं तपो दम्भेन चैव यत् ।**
**क्रियते तदिह प्रोक्तं राजसं चलमध्रुवम् ॥ १८ ॥**

जुन तप सत्कार, मान र पूजाको लागि तथा अरू कुनै स्वार्थको लागि पनि स्वभावले वा पाखण्डले गरिन्छ, त्यो अनिश्चित (हुने/नहुने ठेगान नभएको) एवं क्षणिक फल दिने तपलाई यहाँ राजस तप भनिन्छ ।

कहिलेकाहिँ मानिसले आफ्नो अहङ्कार पुरा गर्न, सत्कार, सम्मान र पूजा पाउनको लागि वा अन्य कुनै इच्छा पुरा होस् भनेर तप गरेको हुन्छ, त्यस्ता तपलाई राजसी तप भनिन्छ । यस्तो तप न त स्थायी हुन्छ र नै शाश्वत हुन्छ । यस्ता किसिमका तपहरूमा श्रद्धाको साटो पाखण्डले, अरूलाई देखाउनलाई मात्र गरिएको हुन्छ । यसबाट अनिश्चित वा छोटो समयको लागि फल पाइन्छ । यस्तो तपलाई राजसी तप भनिन्छ ।

**मूढग्राहेणात्मनो यत्पीडया क्रियते तपः ।**
**परस्योत्सादनार्थं वा तत्तामसमुदाहृतम् ॥ १९ ॥**

जुन तप मूढतापूर्वक जबर्जस्ती, मन, वाणी र शरीरलाई पीडा दिएर तथा अर्काको अनिष्ट हुनको लागि गरिन्छ-त्यस्ता तपलाई तामस भनिन्छ ।

यदि कुनै तप मूर्खतापूर्वक जिद्दीपनाले आफ्नो मन, वचन र शरीरलाई उत्पिडन दिएर तथा अरूको अहित र अनिष्ट होस् भनी गरिन्छ भने त्यस्ता तपलाई तामसी तप भनिन्छ । जस्तै हिरण्यकशिपुले अमर हुन तथा देउताहरूलाई बध गर्न कठिन तप गरेको थियो । तामसी तपले अरूको मन, वाणी तथा शरीरलाई पिडा दिन्छ र यस्ले अनिष्ट गर्दछ । अरूलाई हानी पुऱ्याउने यस्तो किसिमको तपलाई सबैभन्दा खराब तप भनिन्छ ।

**दातव्यमिति यद्दानं दीयतेऽनुपकारिणे ।**
**देशे काले च पात्रे च तद्दानं सात्त्विकं स्मृतम् ॥ २० ॥**

दान दिनु नै कर्तव्य हो-यस्तो भावले जुन दान देश तथा काल र पात्र प्राप्त भएर उपकार नगर्नेहरूलाई दिइन्छ, त्यो दान सात्विक दान भनिन्छ ।

दानको परिभाषालाई श्रीकृष्णले सम्झाउँदै हुनुहुन्छ । जुन दान निस्वार्थ भावले कर्तव्य ठानेर समुचित काल तथा स्थानमा योग्य व्यक्तिलाई दिइन्छ भने त्यस दानलाई सात्विक दान भनिन्छ । जब जहाँ जुन वस्तुको अभाव छ त्यस वस्तुलाई सो



प्राणीलाई दिनुनै दान हो । उपकार गर्ने हेतुले, आवश्यकता पुरा गरिनु पर्ने व्यक्तिलाई यस्तो दान दिइनु पर्दछ । उपकार स्वरूप दिइएको दानबाट दान दिनेले कुनै अपेक्षा वा उपकार पाउने उद्देश्य र लालसा राख्नु हुन्न । दान गरिने स्थान, समय तथा पात्र सबै उपयुक्त हुनु पर्दछ । तीर्थ स्थान, मन्दिर, सूर्य तथा चन्द्र ग्रहणको समय, मसान्तको समय, आध्यात्मिक सिद्धि प्राप्त व्यक्ति, निर्धन तथा आध्यात्मिक सिद्धि पाएको योगी आदिको चयन दान दिनको लागि गर्नु पर्दछ । दान दिँदा त्यो वापत कुनै कुराको अपेक्षा राख्नु हुँदैन ।

**यत्तु प्रत्युपकारार्थं फलमुद्दिश्य वा पुनः ।**
**दीयते च परिक्लिष्टं तद्दानं राजसं स्मृतम् ॥ २१ ॥**

तर जुन दान क्लेषपूर्वक (हैरान भएर) तथा प्रत्युपकारको लागि अथवा फल प्राप्त होस् भन्ने दृष्टिले दिइन्छ भने त्यस दानलाई राजस दान भनिएको छ ।

जुन दान केही प्राप्त हुने उद्देश्यले वा गरिएको कर्मको फल प्राप्त होस् भनेर दिइन्छ भने त्यस दानलाई राजस दान भनिन्छ । जुन दान मान, बढाई, प्रतिष्ठा तथा स्वर्गादि प्राप्त होस् वा फलानो रोग वा कष्ट निवारण होस् भनी गरिन्छ ती दानहरू यसै श्रेणीमा पर्दछन् । चन्दा भनेर जबर्जस्ती दिइनु पर्ने दानलाई क्लेषपूर्वक गरिएको दान भनिन्छ । दान त खुशी भएर गरिने कार्य हो । केही प्राप्तिको लागि जस्तै मान पाइयोस्, प्रतिष्ठा बढोस्, स्वर्गको सुख-भोग गरियोस् भनी गरिएका दानहरू यस राजसी खण्डमा पर्दछन् ।

**अदेशकाले यद्दानमपात्रेभ्यश्च दीयते ।**
**असत्कृतमवज्ञातं तत्तामसमुदाहृतम् ॥ २२ ॥**

जुन दान बिना सत्कारले अथवा तिरस्कारपूर्वक अयोग्य देश-कालमा र कुपात्रलाई दिइन्छ, त्यस दानलाई तामस भनिन्छ ।

यहाँ श्रीकृष्णले दानको बारेमा वर्णन गर्दै हुनुहुन्छ । जुन दान कुनै अपवित्र स्थानमा, अनुचित समयमा, कुनै कुपात्र वा अयोग्य व्यक्तिलाई अनादरपूर्वक दिइन्छ भने त्यस्तो दानलाई तामसी दान भनिन्छ । आवश्यक नभएको मानिसलाई दान दिइनु तामसिक दान मानिन्छ । यदि कुनै मद्यपान गर्ने व्यक्ति जसलाई सत्कार गरिदैन लाई यदि दान दिइँदैछ भने त्यस्तो दानलाई तामसी दान भनिन्छ । यस्तो

दानले त उसलाई अझै मद्यपान गर्न प्रोत्साहन गरेको बुझिन्छ । अझै, नराम्रो वा कुपात्र मानिसलाई दान दिदा दिने मान्छे नै नष्ट हुन्छ भनेर पनि भनिन्छ । त्यस कारण दिने समय, स्थान र पात्र तीनवटै कुरामा बिशेष ध्यान दिएर मात्र दान दिइनु पर्दछ । आवश्यक भएको समयमा, स्थानमा तथा व्यक्तिलाई जसले समाजको हितमा कार्य गरोस् त्यसतर्फ विचार गरेर त्यस अनुरूप दान दिइनु पर्दछ ।

**ॐ तत्सदिति निर्देशो ब्रह्मणस्त्रिविधः स्मृतः ।**
**ब्राह्मणास्तेन वेदाश्र्च यज्ञाश्र्च विहिताः पुरा ॥ २३ ॥**

ॐ, तत्, सत्-यस्ता यी तीन प्रकारका सच्चिदानन्दधन ब्रह्मको नाम भनिएको छ, त्यसैबाट सृष्टिको आदिकालमा ब्राह्मण र वेद तथा यज्ञादिको रचना गरियो ।

सच्चिदानन्दधन ब्रह्मको नाम तीन प्रकारका छन् ॐ, तत् र सत् । सृष्टिको आदिकालमा यी तीनैवटा शब्दहरूवाट ब्राह्मण, वेद तथा यज्ञको रचना गरिएको थियो । यज्ञ, दान तथा तपलाई सद्‌गुण सम्पन्न बनाउन अर्थात् सबै गुणयुक्त बनाउन यसरी तीन किसिमका निर्देशहरू दिइएका छन् । ती हुन् ॐ, तत्, सत् । यी तीनै ब्रह्मका नामहरू हुन् । निर्देश भन्नाले कुनै वस्तुलाई सम्बोधन गरी भन्नु हो । यज्ञ, दान तथा तपलाई बताउन ब्रह्मका यी तीन नामहरूः ॐ, तत् र सत् शब्दहरूको सदुपयोग गरिन्छ ।

**तस्मादोमित्युदाहृत्य यज्ञदानतपः क्रियाः ।**
**प्रवर्तन्ते विधानोक्ताः सततं ब्रह्मवादिनाम् ॥ २४ ॥**

त्यसकारण वेद मन्त्रहरूको उच्चारण गर्ने श्रेष्ठ पुरूषहरूले शास्त्र विधिले नियत यज्ञ, दान र तपरूप कियाहरू गर्दा सदा ॐ यस परमात्माको नाम उच्चारण गरेर नै आरम्भ गर्दछन् ।

तसर्थ श्रेष्ठ योगीजनहरूले ब्रह्मको प्राप्तिको लागि शास्त्रीय विधि बमोजिम गर्ने यज्ञ, दान, तथा तपका सबै क्रियाहरूको शुभारम्भ गर्दा सधैं ॐ शब्दबाट नै गर्दछन् । यज्ञ, ब्राह्मण तथा वेद ॐ बाट नै जन्मेका हुन् । वेद मन्त्रहरूको उच्चारण ॐ शब्दबाट गरिन्छ । ॐ शब्दलाई नाद स्वर, ब्रह्मनाद भनिन्छ । ॐ नै हाम्रो सबैभन्दा ठूलो सत्य हो । ॐ नै हाम्रो आत्मा हो ।



**तदित्यनभिसंधाय फलं यज्ञतपःक्रियाः ।**
**दानक्रियाश्र्च विविधाः क्रियन्ते मोक्षकाङ्क्षिभिः ॥ २५ ॥**

तत् अर्थात तत् नामले भनिने परमात्माकोनै यी सबै हुन्-यस भावले फलको आसक्ति नगरेर विभिन्न किसिमका यज्ञहरू, तपरूपी कियाहरू तथा दानरूपी क्रियाहरू कल्याणको चाहना बोकेका मानिसहरूद्वारा गरिन्छ ।

तत्को अर्थ हो त्यो । त्यो परमात्मा नै सबैथोक हो । सबै उहाकै हो अर्थात परमात्माको लागि समर्थन सूचक हो । आफ्ना सबै कर्महरू जस्तैः पूजा, आराधना, सेवा, भक्ति सबै परमात्मालाईनै समर्पित गर्नु पर्दछ । उहाँको नै हामी लगायतका यी सबै विषय तथा वस्तुहरू भएकाले ती सबै पनि जाने उहाँ मै हो । मानिसहरूले कर्मफलको इच्छा नगरेर सबैको कल्याण होस् भनी बिबिध प्रकारका यज्ञ, तप तथा दानका कार्यहरू तत् शब्दको प्रयोग गरी सम्पन्न गर्नु पर्दछ । भगवान्‌को परम धाममा जाने एक मात्र उद्येश्य बोकेर श्रेष्ठ पुरूषहरूले सबैको हित हुने गरी यज्ञ, तप तथा दानादिका कर्महरू गर्दछन् ।

**सभ्दावे साधुभावे च सदित्येतत्प्रयुज्यते ।**
**प्रशस्ते कर्मणि तथा सच्छब्दः पार्थ युज्यते ॥ २६ ॥**

'सत्' यस प्रकार यो परमात्माको नाम सत्यभावमा र श्रेष्ठभावमा प्रयोग गरिन्छ तथा हे पार्थ ! उत्तम कर्ममा पनि 'सत्' शब्दको प्रयोग गरिन्छ ।

जो सत्य छ त्यो सधैंको लागि हुन्छ । यो मनमा सृजना गरिने भाव हो । त्यो कहिल्यै फेरिँदैन । तसर्थ सत् परमात्माको नाम हो । परमात्माभन्दा अन्य सत्य के नै छ र ! तसर्थ यसलाई श्रेष्ठभावमा प्रयोग गरिन्छ । जब कुनै राम्रो काम गरिन्छ त्यसमा पनि सत् शब्दको प्रयोग गरिन्छ । यसैकारणले हामीले सत्यलाई सम्मान गर्नु पर्दछ । सत्यलाई आफु तथा आफन्तलाई फाइदा हुने गरी वा कुनै स्वार्थको कारणले परिवर्तन गर्न खोज्नु हुन्न ।

**यज्ञे तपसि दाने च स्थितिः सदिति चोच्यते ।**
**कर्म चैव तदर्थीयं सदित्येवाभिधीयते ॥ २७ ॥**

तथा यज्ञ, तप र दानमा जुन स्थितिहरू हुन्छन्, त्यहाँ पनि सत् यसैले भनिन्छ र उहाँ परमात्माको लागि गरिएको कर्म निश्चयपूर्वक सत्-यसैले भनिन्छ ।

जब परमात्मा सबैभन्दा ठूलो सत्य हुनुहुन्छ भने उहाँलाई प्राप्त गर्न जुन काम गरिने गरिन्छ, त्यो उत्तम कार्य पनि त सत्य नै भयो। तसर्थ यज्ञ, तप तथा दानमा जुन स्थिति हुन्छ त्यसलाई पनि सत् नै भनिन्छ। यज्ञ, तप र दानहरू यस्ता कार्यहरू हुन जस्ले हामीलाई परमात्मासम्म पुर्याउने काम गर्दछन्। त्यसकारण उहाँबाट हुने स्थिति सत् हुन्छ। सांचो मनले यज्ञ, तप र दान जब गरिन्छ, आफ्नो हरेक कर्मलाई उहाँ परमात्मालाई जब सुम्पिइन्छ, कर्ता आफुलाई नठानी घमण्ड नगरी जब हाम्रा कार्यहरू परमात्मातर्फ लाग्दछन भने त्यस्लाई सत् नै भनिन्छ।

**अश्रद्धया हुतं दत्तं तपस्तप्तं कृतं च यत्।**
**असदित्युच्यते पार्थ न च तत्प्रेत्य नो इह ॥ २८ ॥**

हे अर्जुन! बिना श्रद्धाले गरिएको हवन, दिइएको दान एवं तापिएको तप र जे पनि गरिएका शुभकर्महरू छन् ती सबैलाई असत् यसैले भनिन्छ कि त्यो न त यस लोकमा लाभदायक छ र नै मरेपछि।

श्रद्धा नभईकन गरिएको यज्ञ, तप, दान ती असत् हुन्छन् अर्थात नश्वर हुन्छन्। त्यो न त यस जन्ममा र नै भविष्यमा हुने जन्ममा काम लाग्दछ। आध्यात्मिक लक्ष्य परिपूर्तिको लागि श्रद्धापूर्वक गरिने यज्ञ, तप तथा दान सत्य एवं उपयोगी हुन्छन्। श्रद्धा भएन भने इच्छा हुने प्रश्नै भएन, अनिच्छाले गरेको काम के दीगो हुनु र !, सत्य हुनु। कुनै विषयको वा वस्तुको चाहना राखेर गरिएका यज्ञ, दान, तप ले असत्य तर्फ डोर्याउंछ, जो सधैं अनुपयोगी हुन्छ।



अथाष्टादशो ध्यायः

## अध्याय अठाह्र

## मोक्षसंन्यासयोग

अर्जुन उवाच (भन्दछन्)

**संन्यासस्य महाबाहो तत्त्वमिच्छामि वेदितुम्।**
**त्यागस्य च हृषीकेश पृथक्केशिनिषूदन ॥ १ ॥**

अर्जुनले भनेः हे महाबाहो ! हे अन्तर्यामिन् ! हे वासुदेव ! म सन्यास र त्यागको तत्वलाई बेग्ला–बेग्लै जान्न चाहान्छु।

अर्जुनले श्रीकृष्णलाई सोद्धै छन् कि सन्यास के हो ? यस्को उद्देश्य के हो ? तथा त्याग के हो ? त्यागको उद्देश्य के हो ? सन्यास र त्याग सुन्दा एक जस्तो लाग्दछ तर यो बेग्ला-बेग्लै हो ? कुरूक्षेत्रमा युद्ध नगर्ने निर्णयमा पुगेका अर्जुनलाई श्रीकृष्णले उनको व्दिविधालाई क्रमशः समाधान गर्दै हुनुहुन्छ। तर अझै पनि अर्जनुका केही थोरै जिज्ञासाहरू बाँकि छन्। उनी यस बारेमा जान्नलाई इच्छुक छन्। यहाँ ऋषीकेश तथा केशि-निषूदन दुइ शब्दहरूको प्रयोग गरिएको छ। ऋषीकेश भन्नाले श्रीकृष्ण हुनुहुन्छ, जो सबै इन्द्रियहरूको स्वामी हुनुहुन्छ, जस्ले हामीलाई मानसिक शान्ति दिनुहुन्छ। अर्को केशि–निषूदन अर्थात श्री कृष्णले एक पटक केशी नाम भएको एउटा दुर्जेय वा जीत्न नसकिने राक्षसको बध गर्नु भएको थियो। तसर्थ उहाँलाई यस नामले सम्बोधन गरिएको हो।

श्रीभगवान् उवाच (भन्नुहुन्छ)

**काम्यानां कर्मणां न्यासं संन्यासं कवयो विदुः।**
**सर्वकर्मफलत्यागं प्राहुस्त्यागं विचक्षणाः ॥ २ ॥**

श्री भगवान्ले भन्नुभयोः कत्तिका पण्डितजनले त काम्य कर्महरूको त्यागलाई सन्यास हो भनी बुझ्दछन् तथा दोश्रो थरिका विचारकुशल पुरूषहरूले सबै कर्मको फलहरूलाई त्याग गर्नुलाई त्याग भन्दछन्।

यस श्लोकमा श्रीकृष्णले सन्यास तथा त्यागको बारेमा विद्वतवर्गका अवधारणाहरू प्रस्तुत गर्नु भएको छ। पहिलो सन्यासको सम्बन्धमा कत्तिका पण्डितहरूले वर्णन गर्नु

भए अनुसार काम्य कर्महरूको त्याग गर्नु नै सन्यास हो । केही काम नगर्नु जस्तै : धन नकमाउनु, विवाह नगर्नु, कृषि वा व्यापार नगर्नुलाई सन्यास भनिएको छ । अर्को अर्थमा आफ्नो सांसारिक जीवनका समस्त कर्म वा कामहरूको त्याग गर्नुलाई सन्यास हो भनिन्छ । अर्को त्याग भन्नाले सबै गरिएका कर्महरूको फललाई त्याग गर्नु । यसमा कर्महरू गर्दै जाने तर त्यस्को फललाई त्याग गर्ने हो । यस लोक तथा परलोकका सबै इच्छा तथा कामनाहरूको त्याग । सामान्यतया बुद्धिमान व्यक्तिहरूका यी दुई किसिमका धारणाहरू हुने गर्दछन् । सांसारिक जीवनलाई र त्यस्का कर्महरूलाई त्याग गर्नु नै सन्यास हो भने अर्को मान्यता अनुसार आफ्ना सबै कार्यहरू गर्दै तिनीहरूका फलहरूको कामनालाई त्याग्नु नै त्याग हो ।

**त्याजं दोषवदित्येके कर्म प्राहुर्मनीषिणः ।**
**यज्ञदानतपःकर्म न त्याज्यमिति चापरे ॥ ३ ॥**

कैयौँ विद्वान्हरू यस्तो भन्दछन् कि कर्ममात्र दोषयुक्त छ, त्यसकारण त्याग्नु योग्य छ र अर्काथरिका विद्वान्हरू यो भन्दछन् कि यज्ञ, दान र तपरूपी कर्महरू त्याग्ने योग्य छैनन् ।

यहाँ विद्वान्हरूको बीचमा मतऐक्य छैन । एकथरीले भन्दछन् सबै प्रकारका सकाम कर्महरूलाई दोषपूर्ण ठानेर त्याग गर्नु पर्दछ । कुनै पनि कर्ममा कुनै न कुनै दोष हुने भएकोले तिनीहरूको त्याग उचित छ । यसरी त सन्यास नै भयो । तर यस्कै ठीक उल्टो अर्कोथरीको धारणामा यज्ञ, दान तथा तपस्या जस्ता कर्महरू कहिल्यै त्याग्न हुँदैन । यज्ञ, दान तथा तपले त परमात्मालाई प्राप्त गर्ने बाटो प्रशस्त गर्दछ । यसैको त्याग गरेमा भगवान् समक्ष कसरी पुगिन्छ र ? तसर्थ यी कर्महरू त्याग्ने लायक होइनन् ।

**निश्चयं श्रृणु मे तत्र त्यागे भरतसत्तम ।**
**त्यागो हि पुरूषव्याघ्र त्रिविधः संप्रकीर्तितः ॥ ४ ॥**

हे पुरुषश्रेष्ठ अर्जुन ! सन्यास र त्याग, यी दुवैमध्ये पहिले त्यागको बारेमा तिमीले मेरो निश्चय सुन । किनकि त्याग सात्विक, राजस र तामस भेद बमोजिम तीन प्रकारका हुन्छन भनी भनिएको छ ।

शास्त्रहरूमा त्यागलाई तीन किसिमका हुन्छन भनी वर्णन गरिएको छ । त्यस बारेमा तिमीले मसंग सुन भनी भगवान्ले अर्जुनलाई भन्दै हुनुहुन्छ । यस अघि



श्रीकृष्णले विद्वान्हरूको यस बारेका मतहरू वर्णन गर्नुभयो । उहाँले यज्ञ तथा तप जस्तै त्यागको पनि तीन भेद हुन्छन भन्दै हुनुहुन्छ । यी तीनै प्रकारको बारेमा तिमीले मसँग सुन भनी अर्जुनलाई भन्दै हुनुहुन्छ ।

**यज्ञदानतपःकर्म न त्याज्य कार्यमेव तत् ।**
**यज्ञो दानं तपश्र्चैव पावनानि मनीषिणाम् ॥ ५ ॥**

यज्ञ, दान तथा तपरूप कर्महरू त्याग गर्ने योग्य छैनन्, बरू ती त गर्नै पर्ने कर्तव्यहरू हुन, किनकि यज्ञ, दान र तप-यी तीनै कर्महरूले बुद्धिमान पुरूषहरूलाई पवित्र तुल्याउँछन् ।

यज्ञ, दान र तपस्याहरूको कहिल्यै त्याग गर्नु हुँदैन, तिनीहरूलाई सक्दो कर्तव्य ठानेर सम्पन्न गर्नु पर्दछ । त्यस्ता पुरूषहरूलाई बुद्धिमान मान्नु पर्दछ जस्ले आफ्ना सबै कर्महरूका फलहरूको आसक्ति बिना यी कार्यहरू सम्पन्न गर्दछन् । ती कर्महरूले महात्माहरूलाई शुद्ध पार्दछन् । यी तीनै कार्यहरूले मानव समाजको स्तरलाई उकास्दछन् । कर्तालाई पवित्र तुल्याउँछन् । यज्ञले मानव कल्याण गर्दछ, दानले हृदय शुद्धी गर्दछ । सुपात्रलाई दिएको दानले आध्यात्मिक जीवनमा प्रगति ल्याउँछ । तसर्थ यिनीहरूलाई त्याग्नु हुँदैन ।

**एतान्यपि तु कर्माणि सङ्गं त्यक्त्वा फलानि च ।**
**कर्तव्यानीति मे पार्थ निश्र्चितं मतमुत्तमम् ॥ ६ ॥**

त्यसैले हे पार्थ ! यी यज्ञ, दान र तपरूपी कर्महरूलाई तथा अरू पनि सबै कर्तव्य कर्महरूका आसक्ति र फलहरूको त्याग गरेर तिनीहरूलाई अवश्य गर्नु पर्दछ, यही मैले निश्चय गरेको उत्तम विचार हो ।

तसर्थ यज्ञ, दान र तप लगायतका अन्य कर्महरू समेत तीप्रतिको आसक्तिलाई त्याग गरेर तथा तिनीहरूबाट प्राप्त हुने फलहरूलाई पनि त्याग गरेर निश्चित रूपमा गर्नु पर्दछ भन्ने मेरो धारणा रहेको छ भनी श्रीकृष्णले अर्जुनको प्रश्नको उत्तर दिनु भयो । मानिसहरूले मात्र भौतिक विषयवस्तुहरू प्राप्तिको लागि गरिने यज्ञलाई त्याग गर्नु पर्दछ । तर जुन यज्ञले मानिसको अस्तित्व शुद्ध हुन्छ र जस्ले आध्यात्मिक स्तर उन्नत्ति गर्दछ त्यस्ता यज्ञहरू अनिवार्य रूपमा गर्नु पर्दछ । कर्मयोगलाई मानिसहरूले अनिवार्यतः पालन गर्नु पर्दछ । सांसारिक कल्याण, परोपकार आदि उद्येश्यले गरिने

कर्मयोगलाई कहिल्यै त्याग्नु हुँदैन । तिनीहरूलाई सुअवसरहरूमा गरिरहनु पर्दछ । तर तीबाट प्राप्त हुने फलहरूलाई भने त्याग गर्नु पर्दछ । किनकि सबै उहाँ परमेश्वरको हो, यो योग गर्ने चेतना दिने पनि उहाँ नै हो, गराउने पनि उहाँ नै हो । कर्मयोगले नै हामीलाई परमात्माको सम्मुख पुर्याउँछ । यही नै उत्तम विचार तथा कार्य हो ।

**नियतस्य तु संन्यासः कर्मणो नोपपद्यते ।**
**मोहात्तस्य परित्यागस्तामसः परिकीर्तितः ॥ ७ ॥**

(निषिद्ध र काम्य कर्महरूलाई त स्वरूपले नै त्याग गर्नु उचित हुन्छ) तर नियत कर्महरूलाई स्वरूपले त्याग गर्नु उचित हुँदैन । नियत कर्महरू प्रकृतिको अनुसार शास्त्रविधिले नियत गरिएको वर्णाश्रमको धर्म र सामान्य धर्मरूप स्वाभाविक कर्महरू हुन् । त्यसकारण मोहको कारणले त्यसको त्याग गर्नुलाई तामस त्याग भनिन्छ ।

केही विद्वान्हरूले भन्दथे कि प्रत्येक कर्ममा केही न केही मात्रामा बन्धन हुन्छन् । तसर्थ सबै कर्महरू नै त्याग गर । तर श्रीकृष्णले त्यस धारणालाई मान्नु भएन । उहाँको धारणामा शास्त्रले जस्लाई ठीक मान्दछ, जस्तैः यज्ञ, यस्तो नियत कर्मलाई त्याग गर्नु उचित हुँदैन । तर जुन कर्म निषिद्ध छ वा काम्य कर्म वा जो फल प्राप्त गर्ने उद्देश्यले गरिएको हुन्छ त्यस्तो कर्मलाई त्याग्नु पर्दछ तर नियत कर्मलाई सम्पन्न गर्नु पर्दछ, त्याग्न हुँदैन । यदि कुनै मोह वा लोभको कारण हामीले नियत कर्मको त्याग गर्दछौं भने यस्तो त्यागलाई तामस त्याग भनिन्छ । यस संसारको कुनै पनि आसक्तिमा लागेर यदि तपाईले आफ्नो कर्मलाई त्याग्नु हुन्छ भने त्यस्तो त्यागलाई तामस त्याग भनिन्छ ।

**दुःखमित्येव यत्कर्म कायक्लेशभयात्त्यजेत् ।**
**स कृत्वा राजसं त्यागं नैव त्यागफलं लभेत् ॥ ८ ॥**

जे-जसो केही कर्महरू छन्, ती सबै दुःखरूप नै हुन्-यसरी बुझेर यदि कसैले शारीरिक क्लेश वा परिश्रमको डरले कर्तव्य तथा कर्मलाई त्याग गर्दछ, भने उसले यस्तो राजस त्याग गरेर त्यागको फललाई कुनै प्रकारले पनि पाउँदैन ।

जुन व्यक्तिले नियत कर्महरू कष्टप्रद हुन्छ भन्ने ठानी वा शारीरिक क्लेशको भयले त्यस कर्मलाई त्याग्दछ वा गर्दैन भने त्यस त्यागलाई राजस वा रजोगुणमा



गरिएको त्याग भनिन्छ । यस्तो गरेर उस्लाई कहिल्यै पनि त्यागको फल प्राप्त हुँदैन । आफ्नो कर्तव्य निर्वाह गर्नु वा कर्म गर्नु सजिलो कार्य होइन । कर्मगर्दा केही न केही शारीरिक परिश्रम पनि अवश्य हुन्छ । यसरी परिश्रम गर्नुपर्छ भन्ने ठानेर जुन कर्म छ त्यो दुःखरूप हुन्छ सम्झी सोही डरले कर्तव्य कर्मलाई त्याग गर्ने हो भने यस्तो त्यागलाई राजस त्याग ठानिन्छ । यस किसिमको त्यागको फल कहिल्यै पाइँदैन । सामान्यतया जब पनि कुनै त्याग गरिन्छ त्यस्को फल परम शान्ति हुन्छ ।

**कार्यमित्येव यत्कर्म नियतं कियतेऽर्जुन ।**
**सङ्गं त्यक्त्वा फलं चैव स त्यागः सात्त्विको मतः ॥ ९ ॥**

हे अर्जुन ! जस्ले शास्त्रविहित वा शास्त्रबमोजिम कर्म गर्नु कर्तव्य हो-यस्तो भावले आसक्ति र फललाई त्याग गर्दछ, त्यस्तो त्यागलाई सात्विक त्याग मानिन्छ ।

शास्त्रहरूमा उल्लेखित गर्न हुने कर्महरूलाई नै निर्धारित कर्म वा नियत कर्म मानिन्छ । यस्ता कर्महरू गर्नु नै कर्तव्य हुन्छ । तर जब मानिसले नियत कर्तव्यलाई करणीय मानेर गर्दछ वा शास्त्रहरूद्वारा निर्देशित कर्महरू गर्दछ, अनि त्यो कर्म गर्दा भौतिक फल वा आसक्तिलाई त्याग गर्दछ त्यस त्यागलाई सात्विक त्याग भनिन्छ । यस्मा कर्मको त्याग गरिन्न । तर यस्मा कर्मफलको त्याग तथा कर्मको फल प्रतिको आसक्तिलाई त्याग गरिन्छ । यस प्रकार त्यस्ता गरिएका कर्महरूले कर्ताको अन्तःकरण पवित्र र निर्मल हुन पुग्दछ । तसर्थ सात्विक त्याग अन्य त्यागको दाँजोमा श्रेष्ठ हुन्छ ।

**न द्वेष्टकुशलं कर्म कुशले नानुषज्जते ।**
**त्यागी सत्वसमाविष्टो मेधावी छिन्नसंशयः ॥ १० ॥**

जुन मानिसले अकुशल कर्मसँग द्वेष गर्दैन र कुशल कर्ममा आसक्त हुँदैन-त्यस शुद्ध सत्वगुणले युक्त पुरुष संशयरहित, बुद्धिमान र साँचो त्यागी हुन्छ ।

सतोगुणमा रहेका बुद्धिमान त्यागी मानिसहरू जस्ले न अकुशल कर्महरूलाई घृणा गर्दछन् र नै कुशल कर्महरूमा लिप्त नै हुन्छन उहाँहरूलाई कर्मको विषयमा कुनै किसिमको संशय हुँदैन । जुन कर्महरू शास्त्र वर्जित छन वा शास्त्रमा गर्न हुने कर्म भनेर भनिएको छैन त्यस्ता कर्महरूलाई अकुशल कर्म भनिन्छ । यस्ता कर्महरूले कसैको भलो हुँदैन । गर्नुपर्ने कुशल वा नियत कर्महरू त शास्त्रमा वर्णित हुन्छन् ।

किनकि अकुशल कर्म गर्नाले कहिल्यै भलो हुँदैन तर अकुशल कर्मसँग द्वेष राख्न हुन्न तथा कुशल कर्ममा लिप्त पनि हुनुहुन्न भनी श्रीकृष्णले भन्दै हुनुहुन्छ ।

**न हि देहभृता शक्यं त्यक्तुं कर्माण्यशेषतः ।**
**यस्तु कर्मफलत्यागी स त्यागीत्यभिधीयते ॥ ११ ॥**

किनकि शरीरधारी कुनै पनि मानिसव्दारा सम्पूर्ण रूपमा सबै कर्महरूलाई त्याग्न सकिँदैन, त्यसकारण जो कर्मफलको त्यागी छ, त्यो नै त्यागी हो-यस्तो भनिन्छ ।

निश्चय नै कुनै पनि शरीरधारी प्राणीद्वारा सबै कर्महरूको परित्याग गर्नु सम्भव छैन । हाम्रो कर्म, हाम्रो स्वभाव हामीसँगै बाँधिएका हुन्छन् । हामीले जब एउटा शरीरलाई छाडी अर्को शरीरमा जान्छौँ त्यसबेला हाम्रो पुरानो शरीरमा रहेका स्वभावहरू हामीसँगै नयाँ शरीरमा आउँदछन् । तसर्थ जबसम्म हाम्रो शरीर रहन्छ तबसम्म हाम्रो स्वभाव तथा कर्महरू एकपछि अर्को शरीरमा सर्ने गर्दछन् । तर जस्ले कर्मफलको त्याग गर्दछ, त्यसलाई वास्तवमा त्यागी भनिन्छ । त्यागी त्यही हो जो आफ्ना कर्महरूको बन्धनमा बाँधिदैन र साथै कर्मफलप्रति आसक्ति राख्दैन ।

**अनिष्टमिष्टं मिश्रं च त्रिविधं कर्मणः फलम् ।**
**भवत्यत्यागिनां प्रेत्य न तु संन्यासिनां क्वचित् ॥ १२ ॥**

कर्मफललाई त्याग नगर्ने मानिसहरूको कर्महरू त राम्रो-नराम्रो वा दुबै मिलेको-यस्ता तीन प्रकारका फलहरू मरिसकेपछि अवश्य पाइन्छ, तर कर्मफलको त्याग गर्ने मानिसहरूका कर्महरूको फल कुनै कालमा पनि हुँदैन ।

यस संसारमा जस्ले कर्मफललाई त्याग गर्दैन उस्ले राम्रो, नराम्रो वा यी दुवैको मिश्रित फलहरू मरेपछि अवश्य प्राप्त गर्दछ, तर ज-जस्ले कर्मफललाई त्याग गरेका छन्, उनीहरूले ती कर्महरूको फल सुख तथा दुःख वा दुबैको मिश्रित परिणाम भोग्नु पर्दैन । यसरी जस्ले सकाम कर्महरू गर्दछन् उनीहरूले गरेका कर्महरूको फल उनीहरूले पाउँदछन् । तर कर्मफलको त्याग गर्ने मानिसले कुनै पनि परिणाम भोग्नु पर्दैन । यसरी त्यो मानिसले जन्म-मरणको चक्रबाट मुक्ति पाउँछ । उस्ले परम धामको प्राप्ति गर्दछ र त्यसैलाई पूर्ण सन्यास भनिन्छ ।



**पञ्चैतानि महाबाहो कारणानि निबोध मे ।**
**सांख्ये कृतान्ते प्रोक्तानि सिद्धये सर्वकर्मणाम् ॥ १३ ॥**

हे महाबाहो ! सम्पूर्ण कर्महरूको सिद्धिको लागि यी पाँच हेतु कर्महरूको कसरी अन्त गर्ने उपाय बताउने सांख्यशास्त्रमा भनिएको छ, त्यस बारेमा तिमीले मसँग राम्रोसँग बुझ ।

साङ्ख्यशास्त्र बमोजिम सबै कर्महरूको अन्त गर्ने वा पूर्ति गर्ने पाँचवटा उपायहरू छन् । ती बारेमा श्रीकृष्णले तिमीले राम्ररी बुझ भनी अर्जुनलाई भन्दै हुनुहुन्छ । अविद्याको कारणले हामीले हामी भित्रको आत्मालाई वा श्रीकृष्णलाई देख्न सक्दैनौँ । हामी मात्र कर्महरू गर्दै तिनीहरूको बन्धनमा फस्दै जान्छौँ । तर सिद्धि त कर्महरूको समाप्ति नगरी पाइन्न । तर सँग-सँगै श्रीकृष्णले यो पनि भन्नु हुन्छ कि जबसम्म शरीर रहन्छ तबसम्म कर्महरूलाई त्याग्न सम्भव छैन । यसै द्विविधालाई समाधान गर्न उहाँले साङ्ख्यशास्त्रका पाँचवटा उपायहरू बताउँदै हुनुहुन्छ ।

**अधिष्ठानं तथा कर्ता करणं च पृथग्विधम् ।**
**विविधाश्र्च पृथक्चेष्टा दैवं चैवात्र पञ्चमम् ॥ १४ ॥**

यस विषयमा अर्थात् कर्महरूको सिद्धिमा अधिष्ठान अर्थात जस्को आश्रयमा कर्म गरिन्छ र कर्ता तथा बेग्ला-बेग्लै किसिमका करणहरू एवं विभिन्न किसिमका बेग्ला-बेग्लै चेष्टाहरू र त्यस्तै पाँचौ उद्देश्य दैव वा पूर्वमा गरिएका शुभाशुभ कर्महरूका संस्कारहरू हुन् ।

कर्महरूको सिद्धिमा भूमिका निर्वाह गर्नेहरूः कर्मको स्थान वा शरीर, कर्म गर्ने कर्ता, विभिन्न इन्द्रियहरू, विभिन्न किसिमका चेष्टाहरू तथा परमात्मा-यी पाँच तत्वनै कर्मका कारणहरू हुन् । सांख्यशास्त्रका पाँचवटा उपायहरू बताउँदै श्रीकृष्णले भन्नु हुन्छ कि पहिलो हो अधिष्ठान अर्थात गर्ने कर्ताको शरीर, जहाँ इच्छा, द्वेष, सुख, ज्ञान को अभिव्यक्ति हुन्छ, दोश्रो हो कर्ता अर्थात् हाम्रो मन, त्यसपछि करण अर्थात जुन इन्द्रियहरू वा साधनहरूद्वारा कर्म गरिन्छ, तेश्रो हो प्रत्येक कर्मको लागि रहेका बेग्ला-बेग्लै चेष्टा जस्तैः बाच्ने चेष्टाको लागि स्वाँस लिनु वा यस प्रकार अरू वायुहरूसँग जोडिएको अन्य क्रियाहरू गर्नु, चौथो हो आधार वा साधन अर्थात् जुन इच्छासँग साधन गांसिएको हुन्छ ती कामहरू पुरा हुन्छन् र पाँचौ हो दैव जसमा

हामीले त्यस अघि गरेका कर्महरूबाट आएका प्रतिफल रूपी संस्कारहरू पर्दछन् । यिनै पाँच उपायहरूबाट हामीले हाम्रा कर्महरूलाई शास्त्र बमोजिम सिद्ध गर्न सक्दछौं ।

**शरीरवाङ्मनोभिर्यत्कर्म प्रारभते नरः ।**
**न्याय्यं वा विपरीतं वा पञ्चैते तस्य हेतवः ॥ १५ ॥**

मानिसले मन, वाणी र शरीरले शास्त्रानुकूल अथवा विपरीत जुनसुकै पनि कर्महरू गर्दछ-ती कर्महरूका यी पाँच कारणहरू हुन् ।

मानिसहरूले आफ्नो शरीरले, मनले र बोलीले शास्त्रले निर्देशित गरे बमोजिम केही कर्महरू गर्दछन् भने ती कर्महरू गरिनु पछाडि यिनै पाँच किसिमका कारणहरू हुन्छन् । शास्त्रहरूको अनुकुलता बमोजिम वा निषिद्ध गरेका कार्यहरू मानिसहरूले जे गरे पनि त्यस्को पछाडि साङ्ख्य दर्शनमा वर्णन गरिएका यिनै पाँच कारणहरू हुने गर्दछन् । हामीले मन, शरीर र वाणीले गरिने कर्महरूले ती पाँच कारणहरूलाई प्रयोग गर्दछ । हामीले हाम्रा कर्महरूलाई सिद्ध गर्नु पर्ने छ भने कर्म कसरी गर्ने त्यस्को कारण तथा विधि जान्नु आवश्यक छ ।

**तत्रैवं सति कर्तारमात्मानं केवलं तु यः ।**
**पश्यत्यकृतबुद्धित्वान्न स पश्यति दुर्मतिः ॥ १६ ॥**

तर यस्तो हुँदा पनि जुन मानिसले अशुद्ध बुद्धि भएको कारणले त्यस विषयमा अर्थात् कर्महरू हुनुमा मात्र शुद्धस्वरूप आत्मालाई कर्ता सम्झिन्छ, त्यो मलिन बुद्धिवाला अज्ञानीले यथार्थ बुझेको हुँदैन ।

अशुद्ध बुद्धि भएको कारणले जस्ले उपर्युक्त पाँचवटै कारणहरूलाई कर्म हुनु पछाडिको भूमिका निर्वाह गर्ने नमानेर आत्मालाई कर्ता हो भनी बुझ्दछ, त्यो बुद्धि नभएको अज्ञानीले सत्य तथ्य बुझेको हुँदैन । आत्मा त शुद्ध स्वरूप हुन्छ, त्यसलाई हामीले कर्ता मान्न मिल्दैन । जो पटक-पटक जन्म लिन्छ, आफ्नो कर्ममा फसेको हुन्छ, त्यो मानिस यस संसारमा आएर अझै धेरै अज्ञानी भएको हुन्छ । त्यस्तो हुनुलाई दुर्बुद्धि भनिन्छ । यस्तो मानिसले सबै देखेर पनि देख्दैन । त्यसैले उसले आत्मालाई कर्ता ठान्दछ । जुन कर्ताले भगवान् कर्ता हो भन्दछ त्यसले आफ्ना कर्महरूबाट पन्छिन खोजेको हुन्छ । उपर्युक्त बताइएका पाँच कारणहरूद्वारा नै हाम्रा कर्महरू हुने गर्दछन् । आत्मा कर्महरूमा कहिल्यै पनि लिप्त हुँदैन ।



**यस्य नाहंकृतो भावो बुद्धिर्यस्य न लिप्यते ।**
**हत्वापि स इमाँल्लोकान्न हन्ति न निबध्यते ॥ १७ ॥**

जुन पुरूषको अन्तःकरणमा म कर्ता हुँ यस्तो भाव छैन तथा जस्को बुद्धि सांसारिक पदार्थहरूमा र कर्महरूमा लिप्त हुने गर्दैन, त्यस पुरूषले यी सबै लोकहरूलाई मारेर पनि वास्तवमा न त मार्दछ र न पापमा बाँधिन्छ ।

जो मानिस मिथ्या अहङ्कारले प्रेरित छैन, जस्को बुद्धि बाँधिएको छैन, उस्ले यस संसारमा मानिसहरूलाई मारेर पनि मार्दैन । र नै ऊ आफ्नो कर्मले बाँधिएको हुन्छ । कुरूक्षेत्रको युद्धभूमिमा अर्जुनले स्वयंलाई कर्ता ठानेको छन् । उनीले आफु भित्र तथा बाहिर परमात्माबाट भइरहेको निर्देशनहरूलाई बुझिरहेको छैनन् । उनी मिथ्या अहङ्कारमा फसेको छन् । जुन पुरूषको अन्तःकरणमा म कर्ता हुँ भन्ने भाव आउँदैन ऊ नै ज्ञानी हुन्छ । जो पुरूषको बुद्धि सांसारिक पदार्थहरूमा तथा कर्ममा लिप्त हुँदैन त्यो पुरूष ज्ञानी हुन्छ । यस्तो ज्ञानी पुरूष न मर्दछ र नै पापले बाँधिन्छ किनकि ऊ जीवन–मृत्युबाट मुक्त भइसकेको हुन्छ । श्री कृष्णले पुनः भन्दै हुनुहुन्छ कि कर्म गर्नु पर्दछ तर त्यस्को फलमा आसक्ति राख्नु हुँदैन । फलप्रतिको आसक्ति नै त्यो बन्धन हो जस्बाट सबैले मुक्ति पाउनु पर्ने हुन्छ । अनि मात्र कर्मको सिद्धि सम्भव हुन्छ ।

**ज्ञानं ज्ञेयं परिज्ञाता त्रिविधा कर्मचोदना ।**
**करणं कर्म कर्तेति त्रिविधः कर्मसंग्रहः ॥ १८ ॥**

ज्ञाता (जान्ने), ज्ञान (जसबाट जानिन्छ) र ज्ञेय (जानिने वस्तुको नाम)-यी तीन प्रकारका कर्म-प्रेरणाहरू हुन् र कर्ता, करण (जुन विषयवस्तुमा कर्म गरिन्छ) तथा क्रिया (गर्नु)-यी तीन प्रकारका कर्म-संग्रहहरू हुन् ।

दैनिक कार्यको लागि कर्मलाई प्रेरणा दिने तीन प्रकारका तत्वहरू छन्ः ज्ञाता, ज्ञान तथा ज्ञेय । त्यस्तै तीन प्रकारका कर्मका संघटित रूपहरू छन्ः कर्ता, कर्म तथा करण । कुनै पनि मानिसद्वारा गरिने कुनै कर्ममा यी तीनै प्रकारका तत्वहरू हुन्छन् । स्पष्टतया भन्ने हो भने कर्म गर्नु अघि मानिसलाई कुनै न कुनै किसिमको प्रेरणा हुन्छ । जस्लाई ज्ञान हुन्छ उस्लाई ज्ञाता भनिन्छ । जसव्दारा जानिन्छ त्यो ज्ञान हो । जस्लाई जानिन्छ त्यसलाई ज्ञेय भनिन्छ । उपर्युक्त तीनवटैबाट कर्म गर्ने

प्रेरणा प्राप्त हुन्छ । श्रीकृष्णले अब कर्म संग्रहको बारेमा भन्दै हुनुहुन्छ । कर्म गर्नेलाई कर्ता भनिन्छ । जुन साधनले कर्म गरिन्छ त्यो हो करण र केही पनि गर्नुको नाम हो क्रिया । यी तीनवटै कर्म संग्रहहरू हुन् । यसर्थ ज्ञान, ज्ञाता तथा ज्ञेयको प्रेरणाले हामीले कर्म गर्दछौँ । त्यसपछि कर्ता, क्रिया र करणले हाम्रा सबै कर्महरू एकिकृत हुन्छन् ।

**ज्ञानं कर्म च कर्ता च त्रिधैव गुणभेदतः ।**
**प्रोच्यते गुणसंख्याने यथावच्छृणु तान्यपि ॥ १९ ॥**

गुणहरूको संख्या गर्ने शास्त्रमा ज्ञान र कर्म तथा कर्ता गुणहरूको भेदले तीन-तीन प्रकारका हुन्छन् भनी भनिएको छ, त्यस बारेमा पनि तिमीले मसँग राम्ररी सुन ।

प्रकृतिका तीन गुणहरू बमोजिम नै ज्ञान, कर्म तथा कर्ताको पनि तीन-तीन किसिमका भेदहरू हुन्छन् । तिनको बारेमा तिमीले मसँग सुन । हामीले चौधौ अध्यायमा पढिसक्यौँ कि प्रकृति प्रदत्त गुणहरूमाः सतोगुण प्रकाशमय, परोपकारी र गुणकारी हुन्छ, रजोगुण भौतिकवादी हुन्छ, तथा तमोगुण आलस्य तथा प्रमाद प्रेरक हुन्छ । यी सबै गुणहरू मानिसको लागि बन्धनकारी हुन्छन् । यी सबैको विषयमा ज्ञान, कर्म तथा कर्ता र ती सबैका तीन-तीन किसिमका भेदहरू तिमीले मसंग सुन भनी श्रीकृष्णले भन्दै हुनुहुन्छ ।

**सर्वभूतेषु येनैकं भावमव्ययमीक्षते ।**
**अविभक्तं विभक्तेषु तज्ज्ञानं विद्धि सात्त्विकम् ॥ २० ॥**

जुन ज्ञानबाट मानिसले बेग्ला-बेग्लै सबै भूतहरूमा एउटा अविनाशी परमात्मालाई विभागरहित समभावले स्थित देख्दछ, भने त्यस ज्ञानलाई तिमी सात्विक ज्ञान भनी बुझ भनेर अर्जुनलाई श्रीकृष्णले सम्झाउँदै हुनुहुन्छ ।

जुन ज्ञानबाट अनन्त रूपमा विभक्त सबै जीवहरूलाई एउटै अविभक्त आध्यात्मिक प्रकृति हुन भनी देखिन्छ त्यस ज्ञानलाई सात्त्विक ज्ञान हो भनी बुझ्नु पर्दछ । सबै जीवहरू : देउता, मानिस, पशु-पंक्षी, जल-जन्तु, रूख-बिरूवा आदिमा जस्ले एउटै आत्मा हो भनी समभाव राख्दछ उस्मा सात्त्विक ज्ञान छ भनी बुझ्नु पर्दछ । सात्विक ज्ञानको परिपक्व अवस्थामा पुगेपछि कर्ताले केही पनि देख्दैन ।



उसमा समभाव तथा समव्यवहार जागृत हुन्छ । सात्त्विक ज्ञानले म कर्मको कर्ता हुँ भनी राख्ने अभिमानयुक्त गुणको अन्त हुन्छ ।

**पृथक्त्वेन तु यज्ज्ञानं नानाभावान्पृथग्विधान् ।**
**वेत्ति सर्वेषु भूतेषु तज्ज्ञानं विद्धि राजसम् ॥ २१ ॥**

तर जस्ले ज्ञान तथा जुन ज्ञानद्वारा मानिसले सम्पूर्ण भूतहरूमा भिन्न–भिन्न प्रकारका विभिन्न भावहरूलाई बेग्ला-बेग्लै जान्दछ, त्यस ज्ञानलाई तिमी राजस ज्ञान हो भनी बुझ ।

तर जुन ज्ञानले मानिसले विभिन्न शरीरहरूमा बेग्ला-बेग्लै प्रकारका जीवहरू देख्दछ, त्यस मानिससँग रहेको ज्ञानलाई राजसी ज्ञान भनी ठान्नु पर्दछ । यस्तो किसिमको धारणा कि भौतिक शरीर नै जीव हो यो नष्ट भएपछि चेतना पनि नष्ट हुन्छ भनी ज्ञान हुनु राजस ज्ञान हो । यस्मा शरीरलाई नै आत्मा मानिन्छ । यस ज्ञानको अनुसार चेतना वा आत्मा शरीर सँगै विलय हुन्छ । यो अस्थायी छ भन्ने हुन्छ । यस्मा उस्ले अरूभन्दा आफ्नो शरीर बेग्लै भएको कारणले आफुलाई भिन्दै ठान्दछ । तर हामी सबैमा परमात्माको अंश आत्माको रूपमा विद्यमान छ । यो मानिसको आत्मा राम्रो छ उस्को आत्मा खराब छ भनेर हामी जब सोच्दछौँ भने त्यो राजस ज्ञान हुन्छ ।

**यत्तु कृत्स्नवेदेकस्मिन्कार्ये सक्तमहैतुकम् ।**
**अतत्त्वार्थवदल्पं च तत्तामसमुदाहृतम् ॥ २२ ॥**

तर जुन ज्ञान एउटा कार्यरूप शरीरमा नै सम्पूर्ण रूपमा सदृश्य आसक्त छ तथा जो युक्ति नभएको छ, तात्विक अर्थले रहित छ र तुच्छ छ-त्यस ज्ञानलाई तामस ज्ञान भनिन्छ ।

तर त्यो ज्ञान जसले मानिसलाई एउटा कार्यरूप शरीर ठानी कार्य गर्दछ, त्यो ज्ञान युक्ति नभएको, तात्त्विक अर्थ नभएको, तथा तुच्छ हुन्छ भने त्यसलाई तामस ज्ञान भनिन्छ । जुन व्यक्तिले आध्यात्मिक ज्ञान, आदर्श आफुमा लिएको हुँदैन, सो बमोजिमको आचरण गरेको हुँदैन भने उस्को ज्ञान उसको शरीरसम्म मात्र सीमित रहन्छ । यस्तो ज्ञानलाई परम सत्यको ज्ञानसँग केही मतलब हुँदैन । उस्लाई मात्र धन कमाउने तथा ज्ञानको आर्जन भनेको त मानसिक आवश्यकताको पूर्ति मात्र हो भनी उस्ले ठान्दछ । उस्ले उस्को शरीर मात्र सबै थोक हो भनी बुझेको हुन्छ ।

तर जस्मा ज्ञान छ उस्ले हरेक जीवमा परमात्माको अंश आत्मा छ भनी बुझ्दछ र त्यसै अनुरूप समभाव राख्दछ । सबै चल-अचल ब्रह्मबाट आएको हो भन्ने तथ्यको जस्मा ज्ञान हुँदैन त्यस्तो किसिमको ज्ञान रहेकोलाई निकृष्ट, युक्तिरहित र तत्वज्ञानभन्दा टाढा रहेको बुझ्नु पर्दछ ।

**नियतं सङ्गरहितमरागद्वेषतः कृतम् ।**
**अफलप्रेप्सुना कर्म यत्तत्सात्विकमुच्यते ॥ २३ ॥**

जुन कर्म शास्त्रविधिले नियत गरिएको छ र कर्तापनको अभिमानले रहित छ तथा कर्मको फल नचाहिने पुरूषव्दारा बिना राग-द्वेषले गरिएको छ भने त्यस्तो कर्मलाई सात्विक कर्म भनिन्छ ।

अब श्रीकृष्णले कर्मको प्रकारको बारेमा बताउँदै हुनुहुन्छ । जुन कर्म गर्नु शास्त्रसम्मत छ वा शास्त्रले गर्न हुने खण्डमा राखी गर्नु भनी निर्दिष्ट गरेको छ, जस्मा कर्तालाई यो कर्म मैले गरेको हो भन्ने अभिमान हुँदैन, कर्म गर्ने त हामीमा रहेका प्राकृतिक गुणहरू हुन्, हामी होइनौँ भनी जसमा कर्तापनको अभिमान रहेको हुन्न, जस्मा कर्तालाई कर्मफल प्रति आसक्ति हुँदैन, गरिने कर्ममा कसैप्रति राग वा द्वेष वा प्रेम वा घृणा रहेको हुँदैन भने त्यस्तो कर्म सात्विक हुन्छ । यस्ता कर्महरू परमात्मालाई प्रसन्न गर्ने उद्देश्यले गरिएका हुन्छन् ।

**यत्तु कामेप्सुना कर्म साहङ्कारेण वा पुनः ।**
**क्रियते बहुलायासं तद्राजसमुदाहृतम् ॥ २४ ॥**

तर जुन कर्म धेरै परिश्रम युक्त हुन्छ तथा भोगहरूको इच्छा गर्ने पुरूषद्वारा या अहङ्कारयुक्त पुरूषद्वारा गरिन्छ, त्यो कर्मलाई राजस भनिन्छ ।

जुन कार्य आफ्नो इच्छा पूर्तिको लागि अहङ्कारी पुरूषव्दारा परिश्रम गरेर गरिन्छ, त्यो कर्मलाई राजस भनिन्छ । यदि कुनै कर्म शास्त्रविधि बमोजिम गरिँदैछ तर भोगको चाहना राखेर गरिँदैछ भने त्यस्तो कर्मलाई राजसी कर्म मानिन्छ । त्यस्ता कर्महरूमा अहङ्कार, आकाङ्क्षा र फलको प्राप्ति समावेश भएका हुन्छन् । यी सबै दोष पक्षहरू नभएको भए यही कर्म सात्विक हुन्थ्यो । तर यिनै दोषहरूको कारणले यो राजस हुन पुगेको हुन्छ ।



**अनुबन्धं क्षयं हिंसामनवेक्ष्य च पौरूषम् ।**
**मोहादारभ्यते कर्म यत्तत्तामसमुच्यते ॥ २५ ॥**

जुन कर्म परिणाम, हानि, हिंसा र सामर्थ्यलाई विचार नगरेर मात्र अज्ञानले आरम्भ गरिन्छ, त्यस्तो कर्मलाई तामस कर्म भनिन्छ ।

जुन कर्म केही परिणामको प्राप्ति होस्, कसैलाई फलानो हानि होस्, कसैको हिंसा होस् तथा त्यो कर्म गर्न सामर्थ्य छ/छैन भनी विचार गरिएको हुन्न भने त्यो कर्म तामसको श्रेणीमा पर्दछ । यस्ता कर्महरू मोह तथा लोभवस गरिन्छन् । यस्ता कर्महरू नसोचेर गरिन्छन, त्यस बारेमा कुनै योजना बनाइएको हुन्न । यस्ता कर्महरू विचार नपुर्याएर अज्ञानतावश गरिएका हुन्छन् । यस्ता किसिमले गरिने कर्महरू योजनावद्ध नहुने हुदा यस्मा कत्तिको हिंसा, खर्च, फल प्राप्ति हुन्छ वा हुन्न, समाजलाई फलदायी छ वा छैन भनी विचार पुर्याइएको हुन्न । त्यो कर्म गर्न कर्ताको सामर्थ्य छ वा छैन भनी विचार गरिएको हुँदैन । यसरी गरिने कर्महरूलाई तामसी कर्म भनिन्छ ।

**मुक्तसङ्गोऽनहंवादी धृत्युत्साहसमन्वितः ।**
**सिद्ध्यसिद्ध्योनिर्विकारः कर्ता सात्त्विक उच्यते ॥ २६ ॥**

जुन कर्ता संगरहित छ, अहङ्कारका वचनहरू नबोल्ने छ, धैर्य र उत्साहले युक्त रहेको छ तथा कार्य सिद्ध हुनु वा नहुनुमा हर्ष वा शोकादि विकारबाट रहित रहेको छ भने त्यस्लाई सात्विककर्ता भनिन्छ ।

अब श्रीकृष्णले सात्विक कर्ताको गुण तत्वको बारेमा वर्णन गर्दै हुनुहुन्छ । जुन कर्ताले कुनै पनि भौतिक विषयवस्तुका गुणहरूमा आसक्ति राख्दैन, कर्म गर्दा अहङ्कारी भएर वचनहरू बोल्दैन, राम्रो संकल्प तथा उत्साहपूर्वक आफ्ना नियत कर्महरू गर्दछ, कार्यको सफलता तथा असफलतामा आसक्ति नरहेको कारणले सुख तथा दुःखको उस्ले अनुभव संगाल्दैन भने त्यस्ता कर्तालाई सात्त्विक कर्ता भनिन्छ । कर्मफलप्रति आसक्ति नरहेको कारणले कर्मको समाप्ति पश्चात ऊ न त खुशी हुन्छ र नै दुःखी । सात्त्विक कर्ताहरू प्रकृतिको गुणहरूव्दारा परिचालित हुन्छन् । निर्धारित कर्महरू गर्दै परिणाम प्रति उनीहरूको आसक्ति र चाँसो हुन्न । उनीहरूमा म कर्ता हुँ, यो मैले गरेको हुँ भनेर मिथ्या अहङ्कार हुन्न । उनीहरूमा कार्य गर्नमा कहिल्यै

उत्साहको कमी हुँदैन किनकि कर्म गर्नु भगवान्को निर्देशन हो भन्ने उनीहरूको धारणा रहेको हुन्छ । तसर्थ उनीहरूले कर्महरू उत्साहका साथमा गरिरहेका हुन्छन् । यसरी उनीहरूले सुख तथा दुःखमा समभाव कायम गरेका हुन्छन् ।

**रागी कर्मफलप्रेप्सुर्लुब्धो हिंसात्मकोऽशुचिः ।**
**हर्षशोकान्वितः कर्ता राजसः परिकीर्तितः ॥ २७ ॥**

जुन कर्ता आसक्तिले युक्त छ, कर्महरूको फललाई चाहने र लोभी छ तथा अरूहरूलाई कष्ट दिने स्वभावको छ, अशुद्धाचारी छ र हर्ष र शोकमा लिप्त रहन्छ भने-त्यसलाई राजस भनिन्छ ।

राजसी कर्ताको गुणहरूको श्रीकृष्णले बयान गर्दै हुनुहुन्छ । जुन कर्ताले कर्म गर्दा कर्मफल प्रति आसक्ति राखेर फललाई भोग गर्ने इच्छा राख्दछ तथा जो लोभी र इर्ष्यालु छ, अपवित्र छ तथा कर्म गरे वापत प्राप्त सुख र दुःखबाट विचलित हुने गर्दछ भने त्यस्ता कर्तालाई राजस गुणयुक्त कर्ता भनिन्छ । जुन कर्तामा आसक्ति वा मोह र लोभ छ र जस्ले कर्म गर्दा फलको आकांक्षा राख्दछ त्यसलाई राजसी कर्ता मानिन्छ । अरूलाई कष्ट दिन उस्लाई असजिलो लाग्दैन । ऊ अन्तःकरणबाट पनि शुद्ध हुँदैन र न बाहिर गरिएका व्यवहारबाट नै शुद्ध हुन्छ । यस्ता कर्ताहरू कर्मफलको परिणामबाट प्राप्त भोगहरूलाई भोग गरेर कि धेरै नै खुशी हुन्छन् वा धेरै नै दुःखी हुन्छन् । राजसी कर्ताका यिनै गुणहरू हुन्छन् ।

**अयुक्तः प्राकृतः स्तब्धः शठो नैष्कृतिकोऽलसः ।**
**विषादी दीर्घसूत्री च कर्ता तामस उच्यते ॥ २८ ॥**

जुन कर्ता अयुक्त, अशिक्षित, घमन्डी, धूर्त र अरूको जीविकालाई नाश गर्नेवाला तथा शोक गर्ने, अल्छी र दीर्घसूत्री (काममा अल्छि जस्ले छोटो समयमा सकिने कामलाई लामो समयसम्म नगरेर पद्दि गरौंला भन्दछ) छ भने त्यसलाई तामसी कर्ता भनिन्छ ।

तामसी कर्ता नाश गर्नेवाला हुन्छ । जुन कर्ताले शास्त्रको विधान विपरीत कार्य गर्दछ, जो नपढेको, घमन्डी, चलाक र अरूको जीविकापार्जनको स्रोतलाई नाश गर्नेवाला, काम गर्नमा साह्रै नै अल्छी, सधैं कामहरूलाई पछि गरौंला भनी टार्ने गर्दछ त्यस्तो कर्ता तामस गुणको हुन्छ । जस्ले शास्त्रको वचनलाई उल्लङ्घन गरेर नगर्नु पर्ने कार्यहरू गर्दछ, शरीरको प्रकृतिले जे माग्यो त्यही गर्ने गर्दछ,



शास्त्रको आदेशानुसार कार्यहरू नगर्ने त्यस्तो कर्ता धूर्त तथा कपटी हुन्छ र त्यस्ताले अरूको अपमान पनि गर्दछ । त्यो धेरै नै अल्छी हुने गर्दछ । कहिल्यै समयमा कार्यहरू पुरा गर्दैन । यस प्रकार कामलाई लम्ब्याई रहने हुँदा यिनीहरूलाई दीर्घसूत्री भन्दछन् ।

**बुद्धेर्भेदं धृतेश्र्चैव गुणतस्त्रिविधं श्रृणु ।**
**प्रोच्यमानमशेषेण पृथक्त्वेन धनंजय ॥ २९ ॥**

हे धनन्जय ! अब तिमी बुद्धिको र धृतिको पनि गुणहरू अनुसार तीन प्रकारका भेदहरू मद्वारा सम्पूर्ण रूपमा विभागपूर्वक भनिनेवाला छ, सुन !

श्रीकृष्णले प्रकृतिको तीनवटै गुणहरू बमोजिम अर्जुनलाई बुद्धि तथा धृतिको विषयमा वा तिनका भेदहरू विभागहरू अनुसार सम्पूर्ण रूपमा राम्ररी सुन भनेर भन्दै हुनुहुन्छ । कर्ताको बुद्धि तथा धारणा वा संकल्पको बारेमा श्रीकृष्णले बताउँदै हुनुहुन्छ । ज्ञान, कर्म तथा कर्ताको भेदको बारेमा बताई सकेपछि यी दुईः बुद्धि तथा धृतिका गुणहरूको बारेमा बताउँदै हुनुहुन्छ । हाम्रो चित्तमा बुद्धि र धृति पनि हुन्छन् । बुद्धि बमोजिम हामी सोच्दछौं र सम्झेका कुराहरू लिन्छौं । धृति भनेको धारण गर्ने शक्ति हो । आफैंलाई रोक्ने शक्ति । बुद्धि तथा धृतिमा गहिरो सम्बन्ध हुन्छ । जब हामीले कुनै विषयमा आफुलाई रोक्न सक्छौं तब मात्र बुद्धिलाई कुनै विचार राम्रो लाग्ने छ । जब हामीमा विचार वा बुद्धि आउँछ तब त्यस विचारलाई व्यवहारमा ढाल्नलाई हामीले आफैंलाई नियन्त्रण गर्नु पर्दछ ।

**प्रवृत्तिं च निवृत्तिं च कार्याकार्ये भयाभये ।**
**बन्धं मोक्षं च या वेत्ति बुद्धिः सा पार्थ सात्विकी ॥ ३० ॥**

हे पार्थ ! जुन बुद्धिले प्रवृत्तिमार्ग (गृहस्थमा रहँदा फल र आसक्तिलाई त्याग गरेर भगवदर्पण-बुद्धिले मात्र लोकशिक्षाको लागि राजा जनक जस्तै व्यवहार गर्नु) र निवृत्तिमार्गलाई (शरीरको अभिमानलाई त्याग गरेर मात्र सच्चिदानन्दघन परमात्मामा एकाग्र भावले स्थित भएर संसारबाट उपराम वा विरक्त भई विचरण गर्नु, जस्तैः शुकदेवजी र सनकादि ऋषिहरूले गरेका थिए) कर्तव्य र अकर्तव्यलाई, भय र अभयलाई तथा बन्धन र मोक्षलाई यथार्थ रूपमा जान्दछ-त्यो बुद्धि सात्विकी हो ।

यहाँ भगवान्ले सात्विकी बुद्धिका गुणहरूको बारेमा वर्णन गर्दै यस्तो मानिसले यो बुद्धिद्वारा वा यो तरिकाले प्रवृतिमार्गमा अर्थात कुन बाटोमा लाग्नु उचित हुन्छ र

कुन बाटोबाट निवृतिमार्ग अपनाउनु पर्दछ अर्थात् मुक्ति पाइन्छ, के गर्ने योग्य छ वा के गर्ने योग्य छैन्, के बाट डराउनु पर्दछ वा के बाट डराउनु हुन्न, के ले बन्धन सृजना गर्नेवाला छ वा के ले मुक्ति दिनेवाला छ आदि विषयहरूमा यथार्थ व्यहोरा जान्दछ। यस संसारमा धेरैजसोले निवृतिमार्गलाई रोज्नु भएको पाइन्छ। यी सबैलाई जान्नु तत्वज्ञानलाई जान्नु हो। यस्तो बुद्धिलाई सात्विकी बुद्धि भनिन्छ।

**यया धर्ममधर्मं च कार्यं चाकार्यमेव च।**
**अयथावत्प्रजानाति बुद्धिः सा पार्थ राजसी ॥ ३१ ॥**

हे पार्थ! मानिसले जुन बुद्धिद्वारा धर्म र अधर्मलाई तथा कर्तव्य र अकर्तव्यलाई पनि यथार्थ रूपमा जान्दैन भने त्यो बुद्धि राजसी बुद्धि हो।

मानिसमा रहेको जुन बुद्धिले उस्ले धर्म के हो ? तथा अधर्म के हो ? र कर्तव्य वा गर्नु पर्ने के हो ? वा अकर्तव्य वा नगर्नु पर्ने के हो ? को बारेमा यथार्थ रूपमा बुझ्दैन, भिन्नता बताउन सक्दैन भने त्यस्तो बुद्धि राजसी बुद्धि हो भनी बुझ्नु पर्दछ। शास्त्रहरूले जुन कार्य गर्न हुन्छ भनी भन्दछ त्यो कार्य गर्नु धर्म हो तथा जुन कार्य गर्न हुन्न भन्दछ त्यो गर्नु अधर्म हो। बुद्धिले नै यी दुबै बीचको भिन्नता बताउँदछ। तर जुन बुद्धिले यस बारेको भिन्नता बताउँदैन, शङ्कामा रहन्छ भने त्यो बुद्धिलाई राजसी मान्नु पर्दछ। त्यस्तै राजसी बुद्धिले कर्तव्य तथा अकर्तव्यको बीचको भिन्नतालाई पनि जान्दैन। जुन बुद्धिले हाम्रो कर्म सही वा गलत के छ बताउन सक्दैन, जुन बुद्धिले हाम्रो जीवनलाई कल्याण गर्दछ त्यो धर्म हो, जस्ले जीवनलाई बन्धनहरूमा बांधेर राख्दछ त्यो अधर्म हो भनी छुट्याउन सक्दैन भने त्यो बुद्धि राजसी हुन्छ।

**अधर्मं धर्ममिति या मन्यते तमसावृता।**
**सर्वार्थान्विपरीतांश्र्च बुद्धिः सा पार्थ तामसी ॥ ३२ ॥**

हे अर्जुन! जो तमोगुणीबाट घेरिएको बुद्धिले अधर्मलाईनै यो धर्म हो भनी यस्तो मान्दछ, त्यस्तै यसरी अन्य सम्पूर्ण पदार्थहरूलाई पनि विपरीत मान्दछ भने त्यो बुद्धि तामसी हो।

जुन बुद्धि माया तथा लोभको कारणले वशीभूत भएर धर्मलाई अधर्म तथा अधर्मलाई धर्म मान्दछ र सबै पदार्थहरूका गुण तत्वलाई सधैं विपरीत दिशामा रहेको



भनी ठान्दछ त्यस्तो किसिमको बुद्धिलाई तामसी बुद्धि भनिन्छ। सात्विक बुद्धिले धर्मलाई धर्म ठान्दछ, अधर्मलाई अधर्म। राजसी बुद्धि सधैं शङ्कामा रहन्छ कि कुन काम धर्म हो वा अधर्म हो। तर तामसी बुद्धि भएकाले त्यस्ता धर्मलाई स्वीकार गर्दछन् जुन गर्नु वा सही हो भन्नु वास्तवमा धर्म हुँदैन तथा जो वास्तविक धर्म हुन्छ त्यसलाई उस्ले धर्म होइन भनी भन्दछ। उस्ले जुन दिशामा काम गर्नु पर्ने हुन्छ त्यो नगरेर ठीक त्यस्को उल्टो दिशामा काम गर्दछ। उस्ले महात्मालाई सामान्य मानिस ठान्दछ र सामान्य मानिसलाई महात्मा ठान्दछ। उस्ले सत्यलाई असत्य तथा असत्यलाई सत्य ठान्दछ। यसर्थ उस्ले कहिल्यै सही परिणाम पाउन सक्दैन।

**धृत्या यया धारयते मनःप्राणेन्द्रियक्रियाः।**
**योगेनाव्यभिचारिण्या धृतिः सा पार्थ सात्विकी ॥ ३३ ॥**

हे पार्थ! जुन अभिचारिणी धारणाशक्तिले मानिसले ध्यानयोगको माध्यमले मन, प्राण र इन्द्रियहरूका क्रियाहरूलाई धारण गर्दछ, त्यो धृति सात्विकी हो।

धृति त्यस्लाई भनिन्छ जस्मा हामीले निर्धारण गरेका लक्ष्यहरूमा हामी कायम रहन्छौं, त्यसबाट पर जादैनौं। यसलाई धारणा शक्ति पनि भनिन्छ। श्रीकृष्णले अर्जुनलाई तात्विक धृतिको बारेमा सम्झाउँदै हुनुहुन्छ कि मानिसले जुन अव्यभिचारिणी धारणा शक्तिले अथवा दोषरहित भई मात्र भगवद् विषयमा अटूट रूपमा कायम रहेर ध्यानयोगद्वारा मन, प्राण तथा आफ्ना इन्द्रियहरूलाई त्यसतर्फ लगाउने कार्य गर्दछ भने त्यो बुद्धि धृति सात्विकी हो। अव्यभिचारिणी धारणामा रहनेहरूले मात्र परमात्मामा एकाग्रता कायम गर्दछन, सांसारिक विषयवस्तुमा होइन। अर्कोतर्फ योगले हामीलाई परमात्मासँग मिलन गराउँदछ। त्यस्तो बुद्धि जो सांसारिक भौतिक विषयवस्तुमा अल्झिदैन, एकिकृत भएर ध्यानयोगको माध्यमले भगवान्मा मन, प्राण तथा इन्द्रियहरूद्वारा चित्त लगाई आफ्नो लक्ष्य प्राप्त गर्दछ भने त्यस्तो बुद्धिलाई सात्विक धृति बुद्धि भनिन्छ।

**यया तु धर्मकामार्थान्धृत्या धारयतेऽर्जुन।**
**प्रसङ्गेन फलाकाङ्क्षी धृतिः सा पार्थ राजसी ॥ ३४ ॥**

तर हे पृथापुत्र अर्जुन! फलको इच्छा गर्ने मानिसले जुन धारणशक्तिद्वारा अत्यन्त आशक्त भई धर्म, अर्थ र कामहरूलाई धारण गर्दछ, त्यो धारण शक्ति राजसी हो।

अर्जुनलाई धृतिको राजसी प्रवृतिको बारेमा सम्झाउँदै श्रीकृष्णले भन्नुहुन्छ कि जुन मानिसले धर्म, अर्थ तथा कामको फल प्राप्त गर्ने धारणा राख्दछ त्यो धारणशक्तिलाई राजसी मानिन्छ । यस्ता मानिसहरूको इच्छा मात्र इन्द्रियतृप्ति हुने गर्दछ । मानिसहरूका चारवटा पुरूषार्थहरूः धर्म, अर्थ, काम र मोक्ष हुन्छन् । जब फलको इच्छा गर्ने मानिसले जुन धारणशक्तिव्दारा धर्म, अर्थ तथा काम यी तीनवटालाई धारण गर्दछ, त्यो राजसी धृति ठहर्छ । यी तीनवटा पुरूषार्थले उस्लाई बन्धनयुक्त तुल्याउँछन् ।

**यया स्वप्नं भयं शोकं विषादं मदमेव च ।**
**न विमुञ्चति दुर्मेधा धृतिः सा पार्थ तामसी ॥ ३५ ॥**

हे पार्थ ! दुष्ट बुद्धि भएको मानिसले जुन धारणाशक्तिले निन्द्रा, भय, चिन्ता र दुःखको तथा उन्मत्ततालाई पनि छोड्दैन अर्थात धारण गरेर राख्दछ भने-त्यो धारणशक्ति तामसी हुन्छ ।

दुर्बुद्धि भएको दुष्ट मानिसको धारणाशक्ति यस्तो हुन्छ कि उस्ले निन्द्रा, भय, चिन्ता, दुःख र उन्मत्ततालाई आफुमा धारण गरिरहेको हुन्छ । त्यस्तो धारणशक्तिलाई तामसी भनिन्छ । यहाँ निन्द्रा भन्नाले अति निन्द्रा, आलस्ययुक्त निन्द्रा हो । यस्तो मानिस निन्द्रा, भय, चिन्ता, दुःख र उन्मत्तताको अधिन रहेको हुन्छ । उस्का दुष्कर्म तथा दुर्बुद्धिको कारणले उस्ले भय, चिन्ता, दुःख तथा उन्मत्तता सबै धेरै मात्रामा भोग्न चाहान्छ ।

**सुखं त्विदानीं त्रिविधं श्रृणु मे भरतर्षभ ।**
**अभ्यासाद्रमते यत्र दुःखान्तं च निगच्छति ॥ ३६ ॥**
**यत्तदग्रे विषमिव परिणामेऽमृतोपमम् ।**
**तत्सुखं सात्त्विकं प्रोक्तमात्मबुद्धिप्रसादजम् ॥ ३७ ॥**

हे भरतश्रेष्ठ ! अब तीन प्रकारका सुखहरूको बारेमा पनि तिमीले मसग सुन । जुन सुखमा साधक मानिस भजन, ध्यान र सेवादिको अभ्यास गरेर रमण गर्दछ र जसबाट उस्ले दुःखको अन्त प्राप्त गर्दछ-जो यस्तो सुख छ, जो सुरूमा विष झैं बुझिए पनि पछि त्यस्को परिणाम भने अमृत समान हुन्छ, त्यसैकारण त्यो परमात्मा विषयक बुद्धिको प्रसादबाट उत्पन्न हुने सुखलाई सात्त्विक सुख भनिन्छ ।



यस मायाजालरूपी दोषले भरिपूर्ण लोकको लागि श्रीकृष्णले सुखलाई परिभाषित गर्दै हुनुहुन्छ । सांसारिक विषयवस्तुमा फसेका मानिसहरूलाई परमात्माको ध्यान, भजन, सेवा आदि को अभ्यास प्रारम्भमा राम्रो लाग्दैन वा भनौं विष जस्तो लाग्दछ, तर पछि गएर यही भगवान्को भजन, कीर्तन, ध्यान उनीहरूलाई अमृत लाग्दछ । जब साधकले ती ध्यान, भजन र सेवाको अर्थ र आवश्यकता बुझ्दछ तब उस्लाई परमात्मा प्राप्ति हुन्छ । यसरी उस्ले दुःखको अन्त भई सुखको अनुभूति गर्दछ । जसबाट सुख तथा दुःखको अन्त हुन्छ यस्तो सुख अमृत समान हुन्छ । यस्तो सुख सात्विक हुने गर्दछ ।

**विषयेन्द्रियसंयोगाद्यत्तदग्रेऽमृतोपमम् ।**
**परिणामे विषमिव तत्सुखं राजसं स्मृतम् ॥ ३८ ॥**

जुन सुख विषय तथा इन्द्रियको संयोगले प्राप्त हुन्छ, त्यो पहिले अर्थात भोग गर्ने समयमा-अमृत समान बुझिँदा पनि परिणाममा विष समान हुन्छ, त्यसैले त्यो सुखलाई राजस सुख भनिएको छ ।

जुन सुख सम्बन्धित विषय र हाम्रा इन्द्रियहरूको संयोग वा संसर्गबाट प्राप्त हुन्छ तथा सुरूमा अमृत झैं लाग्दछ र अन्तमा विष समान लाग्दछ भने त्यो सुखलाई राजस सुख भनी जानिन्छ । यी सबै भौतिक विषयहरूसँग सम्बन्धित संसारका सबै सुखहरू राजसी हुन्छन् । यस्तो सुखमा पहिले त यो अमृत झैं लागेर भोक्तालाई बडो आनन्द दिन्छ तर पछि गएर यस्ले विष झैं फल दिन्छ । जस्तै जब हामी धन, बल, नाम, यश कमाउँछौं तब हामीलाई आनन्दको अनुभूति हुन्छ तर समय बित्दै गएपछि जब अर्जित गरिएका ती धन, बुद्धि, बल, नाम, वीर्य, उत्साह र परलोकको नाश हुन्छ तब त्यो सुख भोग गरिरहेकालाई विष झैं लाग्दछ । यस्तो सुखलाई राजस सुख भनिन्छ ।

**यदग्रे चानुबन्धे च सुखं मोहनमात्मनः ।**
**निद्रालस्यप्रमादोत्थं तत्तामसमुदाहृतम् ॥ ३९ ॥**

जुन सुख भोगकालमा तथा परिणामकालमा पनि आत्मालाई मोहित गर्ने हुन्छ-त्यो निन्द्रा, आलस्य र प्रमाद वा उन्मादबाट उत्पन्न सुखलाई तामस सुख भनिन्छ ।

जुन सुखले आत्म साक्षात्कारलाई वास्ता गर्दैन तथा जुन विषयवस्तुको भोग गर्नाले अति निन्द्रा, अति आलस्य तथा नशा वा उन्माद उत्पन्न गराई इन्द्रिय सुखभोग उपलब्ध गराउँदछ त्यस्तो सुखलाई तामस सुख भनिन्छ । यस किसिमको सुख भोगीलाई सुरूदेखि अन्तसम्म बडो आनन्द महशुस भइरहेको हुन्छ । यस्ता सुखहरूले प्रारम्भमा तथा भोगकालदेखि अन्तसम्म मनलाई मोहित गर्दछन् । यस्तो किसिमको सुख भौतिक विषयवस्तुको संसर्गबाट प्राप्त हुने गर्दछ । अल्छिपना तमोगुणको मूल धर्म हो । यस्तो सुखको भोगकर्ताले कामलाई टार्ने कार्य मात्र गर्दछ र यसैबाट उस्ले सुख पाएको अनुभव गर्दछ । यस बारेमा सकारात्मक रूपमा सोचौँ भन्दा पनि उस्लाई अल्छि लाग्दछ । यसैमा उस्लाई आनन्द महशुस हुन्छ ।

**न तदस्ति पृथिव्यां वा दिवि देवेषु वा पुनः ।**
**सत्त्वं प्रकृतिजैर्मुक्तं यदेभिःस्यात्त्रिभिर्गुणैः ॥ ४० ॥**

पृथ्वीमा वा आकाशमा अथवा देउताहरूमा तथा यिनीहरू बाहेकको मा र कही पनि यस्तो कुनै पनि सत्व (अस्तित्व, वास्तविकता) छैन, जो प्रकृतिबाट उत्पन्न यी तीन गुणहरूबाट रहित होस् ।

ब्रह्माण्डमा रहेका समस्त विषयवस्तुहरूमा यहाँसम्म कि देउताहरू लगायत सबैमा प्रकृतिका तीन गुणहरूः सतो, रजो तथा तमोगुण रहेका हुन्छन् । सबै कुरा यी तीन गुणहरूबाट नै परिभाषित हुन्छन् । यसबाट सम्बन्धित विषयवस्तुको अस्तित्व र वास्तविक गुण तत्वको पहिचान गर्न सकिन्छ । यसरी आफैँलाई पनि पहिचान गरेर मानिसहरूले आफैँलाई र क्रमशः यस संसारलाई नै सुधार्न सक्दछन् ।

**ब्राह्मणक्षत्रियविशां शूद्राणां च परंतप ।**
**कर्माणि प्रविभक्तानि स्वभावप्रभवैर्गुणैः ॥ ४१ ॥**

हे परंतप ! ब्राह्मण, क्षत्रिय र वैश्य तथा शूद्रहरूको कर्म स्वभावले उत्पन्न गुणहरूको आधारमा विभक्त गरिएका छन् ।

मनुस्मृति तथा गीता लगायतको वैदिक साहित्यहरूमा पाइने श्लोकहरू बमोजिम हिन्दु वर्ण व्यवस्थामा चार किसिमका जातीहरू छन् : ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र । यो समाजको कार्य पूर्तिको एउटा सांगठनिक स्वरूप हो । यी चारवटैका मानिसहरूमा प्रकृतिको गुण बमोजिम उनीहरूको स्वभाव कायम भएको हुन्छ । तिनै



गुणहरूको आधारमा यो चार भेद कायम हुँदै आएको हो । हाम्रो स्वभाव अनुसार हाम्रा कर्महरू हुने गर्दछन् । जस्तो हाम्रो कर्म हुन्छ त्यस्तै हाम्रो जाती कायम हुन जान्छ । हाम्रो स्वभाव रूपी गुणले निर्णय गर्दछ कि हाम्रो जाती के हो । यी तिनै प्रकृतिका गुणहरू हुन जस्को आधारमा जातीका चार विभागहरू कायम गरिएका छन् ।

**शमो दमस्तपः शौचं क्षान्तिरार्जवमेव च ।**
**ज्ञानं विज्ञानमास्तिक्यं ब्रह्मकर्म स्वभावजम् ॥ ४२ ॥**

अन्तःकरणलाई निग्रह गर्नु, इन्द्रियहरूलाई दमन गर्नु, धर्मपालनाको लागि कष्ट सहनु, बाहिर तथा भित्रबाट शुद्ध रहनु, अरूले गरेका अपराधहरूलाई क्षमा गर्नु, मन, इन्द्रिय तथा शरीरलाई सरल राख्नु, वेद, शास्त्र, ईश्र्वर र परलोक आदिमा श्रद्धा राख्नु, वेद शास्त्रहरूको अध्ययन-अध्यापन गर्नु र परमात्माको तत्वलाई अनुभव गर्नु-यी सबै ब्राह्मणका स्वाभाविक कर्महरू हुन् ।

यहाँ पहिलो जाती ब्राह्मणका कर्महरूको बारेमा विस्तारित रूपमा वर्णन गरिएको छ । मनलाई सबैतिरबाट हटाएर एक ठाउँ परमेश्वरमा केन्द्रित गर्नु, इन्द्रियहरूलाई नियन्त्रणमा राख्नु, आफ्नो धर्म निर्वाह गर्न कष्ट सहनु, बाहिरी तथा भित्री दुवै व्यवहारहरूमा शुद्ध रहनु, अरूले गरेका अपराधहरूलाई क्षमा गर्नु ब्राह्मणका गुणहरू हुन् । ब्राह्मणको हरेक काममा सरलता हुने गर्दछ, मन, इन्द्रिय र शरीरलाई सरल राख्ने गर्नु, वेद, शास्त्र, ईश्वर र परलोकमा श्रद्धा राख्नु, वेद शास्त्र आफुले पनि पढनु अरूलाई पनि पढाउनु र परमात्माको तत्वलाई अनुभव गर्नु-यी सबै ब्राह्मणका स्वाभाविक कर्महरू हुन् ।

**शौर्यं तेजो धृतिर्दाक्ष्यं युद्धे चाप्यपलायनम् ।**
**दानमीश्र्वरभावश्र्च क्षात्रं कर्म स्वभावजम् ॥ ४३ ॥**

शूरवीरता, तेज, धैर्य, चतुरता र युद्धबाट नभाग्ने, दान दिने र स्वाभिमान-यी सबै नै क्षत्रियहरूका स्वाभाविक कर्महरू हुन् ।

वीरता, शक्ति, सङ्कल्प, दक्षता, युद्धमा धैर्य वा संयम, उदारता तथा नेतृत्व क्षमता यी क्षत्रियहरूका स्वाभाविक गुणहरू हुन् । यिनीहरूले युद्धमा विपक्षीहरूको डटेर सामना गर्दछन्, कहिल्यै भाग्दैनन् । युद्धमा तेज, संयम, कुटनीति र रणनीतिको प्रयोग गर्नमा यिनीहरू चतुर हुने गर्दछन् ।

**कृषिगौरक्ष्यवाणिज्यं वैश्यकर्म स्वभावजम् ।**
**परिचर्यात्मकं कर्म शूद्रस्यापि स्वभावजम् ॥ ४४ ॥**

खेती, गाईपालन र किन-बेच रूपी सत्य व्यवहार-यी वैश्यका स्वाभाविक कर्महरू हुन् । तथा सवै वर्णहरूको सेवा गर्नु शुद्रको पनि स्वाभाविक कर्म हो ।

खेती सम्बन्धी कामहरू गर्नु, गाईपालन गर्नु, तिनीहरूलाई स्याहार गर्नु, साँचो अर्थमा व्यापार गर्नु अर्थात तौल, नाप, दाम आदिमा बेइमानी, भूठो, कपट नगर्नु, चोर्ने काम नगर्नु, अरूको हकलाई ग्रहण नगर्नु यी सबै वैश्यका स्वाभाविक कर्महरू हुन् । शूद्र जो अल्पज्ञ हुन्छन् अर्थात उनीहरूमा ज्ञानको कमी छ भने उनीहरू आफ्नो उद्धार अरूको सेवा गरेर मात्र गर्न सक्दछन् । हामीले हाम्रो ज्ञान बढाएनौँ भने हामी शूद्रको श्रेणीमा पर्न जानेछौँ । सबैको सेवा गर्नु शुद्रको स्वाभाविक कर्म हो ।

**स्वे स्वे कर्मण्यभिरतः संसिद्धिं लभते नरः ।**
**स्वकर्मनिरतः सिद्धिं यथा विन्दति तच्छृणु ॥ ४५ ॥**

आ-आफ्ना स्वाभाविक कर्महरूमा तत्परताले लागेका मानिसहरूलाई भगवत्प्राप्ति रूप परम सिद्धि प्राप्त हुने गर्दछ । आफ्नो स्वाभाविक कर्ममा लागेका मानिसहरूले जसरी कर्म गरेर परम सिद्धिलाई प्राप्त गर्दछन्, त्यस विधिलाई तिमी सुन ।

मानिसहरूमा रहेका गुणहरू बमोजिम उनीहरूले आ-आफ्ना कर्महरू सम्पादन गर्ने गर्दछन् । मानिसहरूले शास्त्र विधि बमोजिम आफ्नो निर्धारित कर्महरूको गुणहरूलाई पालना गरेर भगवत्प्राप्ति रूप परम सिद्धि प्राप्त गर्न सक्दछन् । सबैले आफ्ना स्वकर्म गर्नु पर्दछ । त्यस्मै निरन्तर लागिरहनु पर्दछ । हामीले हाम्रो स्वकर्ममा यसरी लागिरह्यौँ भने हामीलाई सिद्धि प्राप्त गर्न कसैले पनि रोक्न सक्दैन । तसर्थ हामीले राम्रा गुणहरू ग्रहण गर्यौं भने हाम्रा कर्महरू राम्रा हुन्छन् । अनि हामीले स्वकर्मलाई मन, वचन तथा पूर्ण परिश्रमले गर्दछौँ भने हामीले परम सिद्धि अवश्य प्राप्त गर्नेछौँ । तर यो कसरी प्राप्त गर्न सकिन्छ त्यसको बारेमा सुन भनी श्रीकृष्णले अर्जुनलाई सुनाउँदै हुनुहुन्छ ।

**यतः प्रवृत्तिर्भूतानां येन सर्वमिदं ततम् ।**
**स्वकर्मणा तमभ्यर्च्य सिद्धिं विन्दति मानवः ॥ ४६ ॥**



जुन परमेश्वरबाट सम्पूर्ण प्राणीहरू उत्पत्ति भएका छन् र जस्ले गर्दा यो समस्त जगत व्याप्त छ, त्यस परमेश्वरलाई आफ्नो स्वाभाविक कर्महरूद्वारा पूजा गरेर मानिसले परम सिद्धि प्राप्त गर्दछ ।

जो सबै प्राणीहरूको उद्‌गम हुनुहुन्छ, उहाँबाट नै यो सम्पूर्ण जगत व्याप्त छ, त्यस भगवान्‌लाई आफ्ना स्वाभाविक कर्महरूद्वारा पूजा उपासना गरेर मानिसले परम सिद्धि प्राप्त गर्दछ । स्वाभाविक कर्महरू हाम्रो शरीरमा रहेका प्राकृतिक गुणहरू अनुरूप हुने गर्दछन् । भगवान् आफ्ना परा तथा अपरा शक्तिद्वारा सम्पूर्ण जगतमा व्याप्त हुनुहुन्छ । जगतको सृष्टि उहाँबाटै भएको हो । जसरी वर्फ एउटा रूप हो तर वास्तवमा त्यो त पानी हो, त्यसैगरी यो पुरा संसार पनि बेग्ला-बेग्लै रूपमा भए पनि तर असलमा त्यो त ब्रह्म हो । त्यस्तै ब्रह्म परमेश्वरबाट सबै प्राणीहरूको उत्पत्ति भएको छ । त्यसैले सम्पूर्ण संसार सच्चिदानन्दधन परमात्माको कारणले व्याप्त छ । संसारमा एउटा पतिब्रता महिलाले जसरी आफ्नो पतिको आज्ञा बमोजिम पतिको लागि मन, वचन तथा शरीरले कर्म गर्दछिन्, हामीले त्यसरी नै परमेश्वरको चिन्तन गर्दै परमेश्वर को आज्ञा बमोजिम मन, वाणी तथा शरीरले परमेश्वरको लागि स्वाभाविक कर्तव्य तथा कर्मका आचरणहरू गर्नु पर्दछ । यसैबाट हामीलाई परम सिद्धि प्राप्त हुन्छ ।

**श्रेयान्स्वधर्मो विगुणः परधर्मात्स्वनुष्ठितात् ।**
**स्वभावनियतं कर्म कुर्वन्नाप्नोति किल्बिषम् ॥ ४७ ॥**

राम्रोगरी आचरण गरिएको अरूको धर्मभन्दा गुणरहित भए पनि आफ्नो धर्म श्रेष्ठ हुन्छ, किनकि स्वभावले नियतरूपमा गरिएका स्वधर्मरूप कर्महरूलाई गर्दै गरेमा मानिसले पाप प्राप्त गर्दैन ।

मानिसहरूले आ-आफ्ना स्वधर्महरूलाई राम्रो आचरण गरी पालना गर्नु पर्दछ । यो गर्नु अन्य धर्मका गुणहरूलाई लिनु वा गर्नुभन्दा धेरै राम्रो हुन्छ । आफ्नो स्वधर्मको स्वभाव बमोजिम निर्दिष्ट कर्महरू गर्दा कहिल्यै पनि पापबाट प्रभावित हुँदैन । हामीलाई थाहा छ कि ब्राह्मण, क्षत्रिय, वैश्य तथा शूद्रका कर्तव्यहरू उनीहरूको बिशेष प्राकृतिक गुणहरूद्वारा निर्दिष्ट हुन्छन् । कसैले पनि अरूको स्वभाव तथा कार्यलाई अनुकरण गर्नु आवश्यक छैन । मानिसमा जब इर्ष्याले जन्म लिन्छ अनि मात्र उस्ले अरूको नक्कल गर्न खोज्दछ । आफ्ना जे-जसो निर्धारित कर्महरू छन तिनीहरूलाई नै सम्पादन गर्दै गएमा कुनै पनि पाप लाग्दैन । अर्थात मानिस आफ्नो

प्राकृतिक स्वभावले जुन कर्मप्रति आकृष्ट हुन्छ, उस्ले आफुलाई त्यही श्रेणीमा राख्नु पर्दछ । तसर्थ मानिसले आफ्नो स्वभाव बमोजिम कर्म गर्नु पर्दछ ।

**सहजं कर्म कौन्तेय सदोषमपि न त्यजेत् ।**
**सर्वारम्भा हि दोषेण धूमेनाग्निरिवावृताः ॥ ४८ ॥**

तसर्थ हे कुन्तिपुत्र ! दोषयुक्त भएर पनि सहज कर्मलाई त्याग्न हुँदैन, किनकि धूँवा आगोबाट आउने भए जस्तै सबै कर्महरू कुनै न कुनै दोषले युक्त छन् ।

आगोलाई चोखो मानिन्छ । आगो चोखो भएता पनि त्यस्मा धूँवा पनि अवश्य हुन्छ, त्यस्तै कर्म हुन्छ भने त्यसमा केही दोषहरू हुनु अस्वभाविक होइन । यदि हाम्रो कर्म दोषयुक्त छ तर त्यो कर्म गर्नु हाम्रो धर्म हो भने त्यो कर्म हामीले गर्नु पर्दछ । सहज कर्महरू हाम्रो स्वभावबाट जन्मिने हुदा ती कर्महरू दोषयुक्त भए पनि तिनीहरूलाई त्याग नगरेर गर्नु पर्दछ । हामीमा आ-आफ्ना स्वभावहरू हामीमा निहित प्राकृतिक गुणहरूबाट जन्मेका हुन्छन् । गुणहरूको पहिचान गरेर हामीले हाम्रो कर्म गर्नु पर्दछ । हामीले अरूले के गर्दैछन् त्यस बारेमा सोच्नु र त्यस्तै गर्न खोज्नु आवश्यक छैन । हामीले पूर्ण इमान्दारीपूर्वक आफ्ना स्वभावहरू बमोजिम आफ्नो धर्मले निर्दिष्ट गरेका कार्यहरू गर्नु पर्दछ ।

**असक्तबुद्धिः सर्वत्र जितात्मा विगतस्पृहः ।**
**नैष्कर्म्यसिद्धिं परमां संन्यासेनाधिगच्छति ॥ ४९ ॥**

सर्वत्र आसक्तिरहित बुद्धिवाला, स्पृहारहित (इच्छा तथा कामना रहित) र अन्तःकरणलाई जीतेको पुरूषले सांख्ययोगद्वारा त्यस परम नैष्कर्म्यसिद्धि प्राप्त गर्दछ ।

संन्यासीले साङ्ख्ययोगद्वारा कसरी परम सिद्धि प्राप्त गर्दछ त्यस बारेमा श्रीकृष्णले बताउँदै हुनुहुन्छ । जुन मानिसमा कुनै पनि भौतिक विषयवस्तु प्रति आसक्ति छैन, केही कुराको चाहना छैन, अनि जस्ले आफ्नो अन्तःकरणलाई आफ्नो वशमा राखेको छ त्यस्तो व्यक्तिले साङ्ख्ययोगको विधिले परम नैष्कर्म्यसिद्धि वा परम सिद्ध अवस्था प्राप्त गर्नु हुन्छ । त्यस्ता संन्यासीले साङ्ख्ययोगको माध्यमले नैष्कर्म्यसिद्धि अर्थात कर्म गरेर पनि कर्मप्रति आसक्ति कायम नगरी कर्म नगरेको अवस्था कायम गर्ने योगको अवस्था जो मात्र कर्मयोगीहरूलाई प्राप्त हुने गर्दछ मा रही परम ब्रह्मलाई प्राप्त गर्दछ ।



**सिद्धिं प्राप्तो यथा ब्रह्म तथाप्नोति निबोध मे ।**
**समासेनैव कौन्तेय निष्ठा ज्ञानस्य या परा ॥ ५० ॥**

जो ज्ञानयोगको परानिष्ठा छ, त्यस नैष्कर्म्य सिद्धिलाई जस प्रकारले प्राप्त गरेर मानिसले ब्रह्म प्राप्त गर्दछ, त्यसैले हे कुन्तिपुत्र ! तिमीले सो बारेमा संक्षेपमा मबाट सुन ।

ज्ञानयोगीहरूले कसरी ज्ञानको परानिष्ठा वा परम अन्त ब्रह्मलाई प्राप्त गर्दछन् वा उहाँको अनुभूति गर्दछन्, त्यस नैष्कर्मसिद्धिको बारेमा मसँग संक्षेपमा सुन भनी श्री कृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ । मानिसले सिद्धि प्राप्त गरिसकेपछि उस्लाई अन्य केही पनि प्राप्त गर्ने इच्छा हुन्न । अर्थात मानिसले जब आफ्नो मनलाई जीतेर, आफ्ना इन्द्रियहरूलाई वशमा राखेर आफ्ना कामनाहरू तथा मोहहरूलाई समाप्त पार्दछ भने त्यो मानिस सिद्ध भएको छ भनी बुझ्नु पर्ने हुन्छ । यही नै योग हो । अनि यस प्रकारले जे-जस्तो ज्ञान प्राप्त हुन्छ त्यो सबैभन्दा ठूलो ज्ञान हो । सन्यासी तथा साख्ययोगीको लागि सबैभन्दा ठूलो सिद्धि यही नै नैष्कर्मसिद्धि हो । नैष्कर्मसिद्धि पछि त्यो मानिसलाई ब्रह्मको प्राप्ति हुन्छ ।

**बुद्ध्या विशुद्धया युक्तो धृत्यात्मानं नियम्य च ।**
**शब्दादीन्विषयांस्त्यक्त्वा रागद्वेषौ व्युदस्य च ॥ ५१ ॥**
**विविक्तसेवी लघ्वाशी यतवाक्कायमानसः ।**
**ध्यानयोगपरो नित्यं वैराग्यं समुपाश्रितः ॥ ५२ ॥**
**अहंकारं बलं दर्पं कामं क्रोधं परिग्रहम् ।**
**विमुच्य निर्ममः शान्तो ब्रह्मभूयाय कल्पते ॥ ५३ ॥**

विशुद्ध बुद्धिले युक्त तथा अलि-अलि सात्विक र नियमित भोजन गर्नेवाला, शब्दादि विषयहरूलाई त्याग गरेर एकान्त र शुद्ध देशको सेवन गर्नेवाला, सात्विक धारणा शक्तिद्वारा अन्तःकरण र इन्द्रियहरूलाई संयम गरेर मन, वाणी र शरीरलाई वशमा गर्ने, राग-द्वेषलाई सर्वथा नष्ट गरेर राम्ररी दृढ वैराग्यको आश्रय लिने तथा अहङ्कार, बल, घमण्ड, काम, क्रोध र परिग्रहलाई त्याग गरेर निरन्तर ध्यानयोगमा परायण रहने, ममतारहित र शान्तियुक्त पुरुष सच्चिानन्दधन ब्रह्ममा अभिन्न भावले स्थित हुने पात्र हुन्छ ।

कर्मयोगीले त निष्काम कर्म गरेर ब्रह्मलाई प्राप्त गर्दछ। तर एउटा सन्यासी जस्ले सबै कुराहरू त्यागी सकेको हुन्छ उस्ले कसरी ब्रह्मलाई प्राप्त गर्दछ त्यस बारेमा श्रीकृष्णले सम्झाउँदै हुनुहुन्छ। जुन मानिसले बुद्धिद्वारा शुद्ध भएर, आफुलाई सतोगुणमा कायम राखेर, अन्तःकरण, मन, वाणी, शरीर तथा इन्द्रियहरूलाई संयममा राखेर, आफुद्वारा गरिने कार्यप्रति कुनै राग तथा द्वेष नराखेर, आफ्नो धारण शक्तिलाई सात्विक राख्ने, विरक्ति भावले एकान्त रोजी बस्ने र शान्तिको चाहना गर्ने, थोरै खाना खाने, कुनै विषयवस्तु प्रति मोह नगर्ने, बल, घमण्ड, काम, क्रोधलाई त्याग गर्ने, झूठो अहङ्कार तथा गर्वबाट रहित रहने र जे पाइयो त्यस्मै सन्तुष्ट रहने यस्तो ममता र आसक्तिरहित संन्यासी शान्तियुक्त हुन्छ र सच्चिदानन्दधन ब्रह्मलाई उस्ले प्राप्ति गर्दछ।

**ब्रह्मभूतः प्रसन्नात्मा न शोचति न काङ्क्षति।**
**समः सर्वेषु भूतेषु मम्दक्तिं लभते पराम् ॥ ५४ ॥**

फेरि त्यो सच्चिानन्दघन ब्रह्ममा एउटै भावले स्थित, प्रसन्न मन भएको योगीले न त कसैको लागि शोक गर्दछ र न कसैको वा केहीको लागि आकाङ्क्षा नै गर्दछ। यस्तो समस्त प्राणीहरूमा समभाव राख्ने योगीले मेरो पराभक्ति वा तत्वज्ञानको पराकाष्टालाई प्राप्त गर्दछ।

त्यो साङ्ख्ययोगी जस्ले वैराग्य तथा सन्यासमा सिद्धि पाएको हुन्छ ऊ ब्रह्ममानै केन्द्रित रहन्छ। ऊ आफ्नो ध्यानबाट कहिल्यै विचलित हुँदैन। यसरी दिव्य पदमा स्थित प्रसन्न मनवाला योगीले तुरून्त परब्रह्म प्राप्तिको अनुभव गर्दछ। उस्ले आफ्नो भावलाई एकाग्र गरेर परमेश्वरमा लगाउँदछ, मन तथा भावलाई अन्यत्र लाग्न दिदैन। उस्ले कसैको लागि शोक गर्दैन र कुनै विषयको आकाङ्क्षा पनि राख्दैन। सबैप्रति उस्को समभाव रहेको हुन्छ, उस्ले कुनै किसिमको भेदभाव गर्दैन। त्यस अवस्थामा उस्ले परम ब्रह्मको पराभक्ति वा तत्वज्ञानको पराकाष्टालाई प्राप्त गर्दछ। यो तथ्य जानिसकेपछि अरू जान्नु उस्लाई बाँकि नै रहन्न। यही नै परम सिद्धि पनि हो।

**भक्त्या मामभिजानाति यावान्यश्चास्मि तत्वतः।**
**ततो मां तत्वतो ज्ञात्वा विशते तदनन्तरम् ॥ ५५ ॥**



त्यस पराभक्तिद्वारा उस्ले म परामात्मालाई, म जे हुँ र जति छु, ठीक त्यस्ताको त्यस्तै तत्वद्वारा जान्दछ तथा त्यस भक्तिले मलाई तत्वले जानेर तत्कालै म मा प्रवेश हुन्छ।

शुद्ध भक्तिको उत्कृष्ट अवस्थामा भक्तले म परमात्मालाई यथारूपमा जान्दछ। यसरी मलाई तत्वले जानेर ऊ ममा प्रवेश गर्दछ। पराभक्ति अर्थात् ज्ञानको पराकाष्टा प्राप्त व्यक्तिले मलाई प्राप्त गर्दछ। साङ्ख्ययोगी उही हो जस्ले भक्तिले श्रीकृष्ण जे-जस्तो हुनुहुन्छ र जस्तो हुनुहुन्छ ठीक त्यही रूपमा जान्दछ। श्रीकृष्णलाई तत्वले जान्नु नै भक्तिको सर्वोत्कृष्ट परिणाम हो। यस प्रकार श्रीकृष्णलाई तत्वले जानी सकेपछि ऊ तत्कालै श्रीकृष्णमा प्रविष्ट हुन्छ।

**सर्वकर्माण्यपि सदा कुर्वाणो मद्व्यपाश्रयः।**
**मत्प्रसादादवाप्नोति शाश्वतं पदमव्ययम् ॥ ५६ ॥**

मेरो परायण भएको कर्मयोगी सम्पूर्ण कर्महरूलाई सधैं गर्दै पनि मेरो कृपाले सनातन अविनाशी परम पदलाई प्राप्त हुने गर्दछ।

श्रीकृष्णको सेवा भक्तिमा मन, वचन तथा कर्मले लागेको कर्मयोगीले आफ्ना नियमित कर्महरूमा संलग्न रहेर उहाँको कृपाले सनातन एवं अविनाशी परम पद प्राप्त गर्दछ। कर्मयोगीले श्रीकृष्णलाई आफ्नो मनमा राखेर आफ्ना सबै कर्महरू गर्दै पनि परम ब्रह्मलाई प्राप्त गर्दछ। कर्मयोगीको निष्काम कर्मले पनि साङ्ख्ययोगीको ज्ञाननिष्ठा रूपी पराभक्तिले योगमार्गद्वारा सच्चिदानन्दधन परमात्मा पाए झैं परम पद प्राप्त गर्न सक्दछ। एउटा मात्र आश्रय श्रीकृष्ण रहेको कर्मयोगीले कर्म गर्दा-गर्दै सनातन अविनाशी परम पद प्राप्त गर्दछ।

**चेतसा सर्वकर्माणि मयि संन्यस्य मत्परः।**
**बुद्धियोगमुपाश्रित्य मच्चित्तः सततं भव ॥ ५७ ॥**

सबै कर्महरूलाई मनले ममा अर्पण गरेर तथा समबुद्धिरूप योगलाई अवलम्बन गरेर मेरो परायण र सधैं ममा चित्त लगाउने होऊ।

यस्ता कर्मयोगीहरूले आफुलाई सेवक ठानी सबै कर्महरूलाई मनले नै ममा अर्पण गर्नु पर्दछ। उनीहरूले परमेश्वरको निर्देशानुसार कर्महरू गरिरहनु पर्दछ।

उनीहरूले सबैमा समभाव राखेर योगमा निरन्तर लाग्नु पर्दछ । योगले दुःखलाई नाश गरी यस्लाई सदा अभ्यास गरेर चित्तमा मात्र श्रीकृष्णलाई राख्ने गर्नु पर्दछ । जे सत्कर्म गरे पनि श्रीकृष्णमा अर्पण गर्नु पर्दछ । योगगर्दा चित्तमा श्रीकृष्णलाई राख्दा पुरा जिम्मेवारी श्रीकृष्णले लिनु हुन्छ । त्यसपछि भक्तिकर्ता श्रीकृष्णको तथा श्रीकृष्ण भक्तिकर्ताको हुने गर्दछ ।

**मच्चितः सर्वदुर्गाणि मत्प्रसादात्तरिष्यसि ।**
**अथ चेत्त्वमहंकारन्न श्रोष्यसि विनङ्क्ष्यसि ॥ ५८ ॥**

उपर्युक्त किसिमले ममा चित्तवाला भएर तिमीले मेरो कृपाले सबै संकटहरूलाई अनायस नै पार गर्नेछौँ र यदि अहङ्कारको कारणले मेरो वचनहरूलाई सुन्ने छैनौँ भने नष्ट हुनेछौँ अर्थात परमार्थबाट भ्रष्ट हुनेछौ ।

माथि उल्लेख भए बमोजिम शुद्ध चित्त भावले तिमी ममा लाग्यौ भने तिमीले मेरो कृपाले सबै बिघ्न-बाधाहरूलाई पार गर्नेछौँ । तर यदि तिमीले मिथ्या अहङ्कारले मेरो भनाईलाई मानेनौँ, यी सबै गर्ने म हुँ, मैले यी सबै गरेको हुँ भनी ठान्यौ भने तिम्रो विनाश हुनेछ र तिमीले परमार्थलाई प्राप्ति गर्न सक्ने छैनौँ । यहाँ धेरै मानिसहरू छन् जस्ले शास्त्रलाई नमानी मनपरी गर्दछन् । मात्र फलको लागि काम गरेर आफुलाई बुद्धिमान ठान्दछन् । यस्ता मानिसहरूलाई संकट आइलागी नष्ट हुने गर्दछन् ।

**यदहंकारमाश्रित्य न योत्स्य इति मन्यसे ।**
**मिथ्यैष व्यवसायस्ते प्रकृतिस्त्वां नियोक्ष्यति ॥ ५९ ॥**

जुन तिमीले अहङ्कारको आश्रय लिएर यो मानिरहेको छौ कि 'म युद्ध गर्दिन' भने तिम्रो यो निश्चय भ्रूटो हो, किनकि तिम्रो स्वभावले तिमीलाई जबर्जस्ती युद्धमा लगाउनेछ ।

अर्जुनलाई श्रीकृष्णले सम्झाउँदै हुनुहुन्छ कि तिमीमा जुन अहङ्कार छ कि म कर्ता हुँ, म आफ्ना नातामा परेका भीष्म, गुरू द्रोणसँग युद्ध गर्दिन, पापको भागी बन्दिन त्यो सबै तिम्रो मिथ्या घमण्ड र धारणा हो । तिमी आफ्ना कर्महरूको स्वामी होइनौँ । तिमी विस्मृतिमा छौँ । तर तिमी क्षेत्रिय भएबाट र एउटा सैनिक भएबाट स्वभावले तिमी युद्धमा सहभागी हुनेछौँ । हाम्रो गुण तथा स्वभाव बमोजिम हाम्रो शरीरमा रहेको तात्विक प्रकृतिले हामीसँग कर्म गराउँदछ । त्यही नै कर्ता हो । यसर्थ



अर्जुनको अहङ्कार मिथ्या हो र सत्य उस्को स्वभाव हो जस्ले उस्लाई युद्ध गराउनेछ ।

**स्वभावजेन कौन्तेय निबद्धः स्वेन कर्मणा ।**
**कर्तुं नेच्छसि यन्मोहात्करिष्यस्यवशोऽपि तत् ॥ ६० ॥**

हे कुन्तिपुत्र ! जुन कर्मलाई तिमीले मोहको कारण गर्न चाहँदैनौँ, त्यसलाई पनि आफ्नो पूर्वकृत्य स्वाभाविक कर्मले बाँधिएको परवश वा पराधीन भएर गर्नेछौँ ।

यतिबेला तिमीले मोहमा परेर मेरो निर्देशन बमोजिम कर्म नगर्ने भनिरहेका छौ । तर तिमीले आफ्नै पूर्वकृत्य बमोजिम कायम भएको स्वभावले पराधीन भई युद्ध गर्नेछौँ । उनको स्वभावले उनीलाई युद्ध गर्नलाई विवश गर्नेछ । हामी सबैको पूर्वकृत्य बमोजिमका स्वाभाविक स्वभावहरू हुने गर्दछन् । चाहे त्यो पूर्वजन्ममा गरिएको होस् वा यस जन्ममा । त्यही स्वभावले हाम्रा कर्महरू हामीले चाहेर पनि वा नचाहेर पनि गराउँदछ । स्वभाव बमोजिम कर्म गर्नु स्वधर्म पनि हो । त्यसकारण मोहमा वशिभूत भएर यस्तो सोच्नु कि म कर्तव्य गर्दिन वा गर्छु, गलत तथा मिथ्या हुन्छ ।

**ईश्वरः सर्वभूतानां हृद्देशेऽर्जुन तिष्ठति ।**
**भ्रामयन्सर्वभूतानि यन्त्रारूढानि मायया ॥ ६१ ॥**

हे अर्जुन ! शरीररूप यन्त्रमा बसेका सम्पूर्ण प्राणीहरूको अन्तर्यामी परमेश्वरले आफ्नो मायाले उनीहरूलाई उनीहरूका कर्महरू बमोजिम भ्रमण गराउँदै सबै प्राणीहरूको हृदयमा ऊहाँ स्थित रहेको हुनुहुन्छ ।

श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ कि परमेश्वर प्रत्येक जीवको हृदयमा रहनु भएको छ । उहाँले आफ्नो मायाको शक्तिले सबै प्राणीहरूलाई उनीहरूका कर्महरू बमोजिम कर्म गर्न लगाउनु हुन्छ । जीवात्मा नै सबै शक्तिहरूको मालिक हुँदैन । हाम्रो शरीररूपी यन्त्रलाई ईश्वरले चलाउनु हुन्छ । किनकि यन्त्रलाई चलाउने कोही न कोही चाहिन्छ नै । ईश्वर वा परमात्मा वा ब्रह्मको माया हो यो संसार । उहाँको नियन्त्रणमा उहाँको निर्देशन बमोजिम यो संसार चल्ने हुँदा शरीर पनि उहाँको निर्देशनमा चल्दछ । हाम्रो शरीरमा उहाँ आत्मा भएर बस्नु भएको छ । श्रीकृष्णले अन्तर्यामी परमात्माको रूपमा जीवको हृदयमा बसी जीवलाई निर्देशन दिने काम गर्नु हुन्छ । मृत्यु पश्चात जीवले आफ्ना कर्मको लेखाजोखा बिर्से पनि परमात्माले भूत,

वर्तमानहरूको बारेमा ज्ञाता भई उस्का समस्त कर्महरूको साक्षी बनी कर्महरूबाट निस्कने परिणाम बमोजिम कार्यहरू गर्न उस्लाई निर्देश गरिरहेको हुनुहुन्छ । जबसम्म तिमीले त्यस परमात्माको पूर्ण अंशको रूपमा रहेको आत्मा तथा उहाँका कार्यहरूको बारेमा जान्दैनौं तबसम्म शरीर सञ्चालित भई रही जन्ममृत्युको क्रममा घुमिरहन्छ ।

**त्वमेव शरणं गच्छ सर्वभावेन भारत ।**
**तत्प्रसादात्परां शान्तिं स्थानं प्राप्स्यसि शाश्र्वतम् ॥ ६२ ॥**

हे भारत ! तिमी सबै प्रकारले उहाँ परमेश्र्वरको शरणमा जाऊ, उहाँ परमात्माको कृपाले नै तिमीले परम शान्ति तथा सनातन परम धाम प्राप्त गर्नेछौं ।

तिमी सबै प्रकारले उहाँ परमात्माको शरणमा जाऊ । उहाँकै कृपाले तिमीले परम शान्ति तथा परम धाम पाउने छौं । हामीले सबै भावहरूलाई बिर्सेर प्रत्येक हृदयमा रहेको आत्मालाई चिनेर त्यसको शरणमा जानु उचित हुन्छ । सबै भाव भन्नाले लाज, मान, बढाई, भय र आसक्तिहरू हटाई डर, घमण्ड र स्नेह सबै भावहरूलाई बिर्सनु पर्दछ । अनि परमेश्वरको आश्रयमा जानुको अर्थ हो उहाँको सर्वस्वलाई बुझ्नु, श्रद्धा तथा प्रेमले उहाँ भगवान्को गुण, प्रभाव र स्वरूपको चिन्तन गर्नु, उहाँको आज्ञानुसार आफ्ना कर्तव्य तथा कर्महरूलाई निस्वार्थ भावले गर्नु, त्यसबाट आएको फलादि उहाँलाई नै अर्पण गर्नु नै उहाँको शरणमा जानु हो । यही तरिका हो परम शान्ति तथा परम धाम पाउने । यस कार्यबाट सांसारिक सबै दुःखहरूबाट छुटकारा पाई अन्तमा परमेश्वरमा ऊ पुग्दछ ।

**इति ते ज्ञानमाख्यातं गुह्याद्गुह्यतरं मया ।**
**विमृश्यैतदशेषेण यथेच्छसि तथा कुरू ॥ ६३ ॥**

यस प्रकार यो गोपनीयभन्दा पनि अति गोपनीय ज्ञान मैले तिमीलाई बताए । अब तिमीले यस रहस्ययुक्त ज्ञानलाई पूर्णरूपले राम्ररी विचार गरेर जस्तो चाहान्छौं त्यस्तै गर ।

भगवान्ले अर्जुनलाई ब्रह्मभूत गुह्य ज्ञान बताउनु भयो । जो व्यक्ति यस ब्रह्मभूत अवस्थामा रहन्छ ऊ प्रसन्न रहने स्वभावको हुन पुग्दछ किनकि न उस्ले शोक गर्दछ र नै केही कामना नै गर्दछ । जस्तो मन लाग्छ त्यस्तै गर भन्नुको अर्थ के हो भने ईश्वरले जीवात्माको अधिकार क्षेत्रमा हनन गर्न चाहनु हुन्न । श्रीकृष्ण



सारथी र गुरू भएर शिष्यलाई सबै ज्ञानहरू सिकाएर युद्धमा पठाउँदै हुनुहुन्छ । अर्जुनलाई मार्ग दर्शन गर्नु भयो । त्यसपछि शिष्य, गुरूले दिनु भएको ज्ञान र शिष्यको आफ्नो अभ्यासको भूमिका हुन्छ । श्रीकृष्णले सबै ज्ञान शिष्य तथा मित्र अर्जुनलाई दिएर तिम्रो जे इच्छा हुन्छ गर भन्नु भयो । त्यस गुह्य ब्रह्मज्ञानको बारेमा श्रीकृष्ण बाहेक अरूलाई थाहा थिएन ।

**सर्वगुह्यतमं भूयः श्रृणु मे परमं वचः ।**
**इष्टोऽसि मे दृढमिति ततो वक्ष्यामि ते हितम् ॥ ६४ ॥**

सम्पूर्ण गोपनीयहरूभन्दा अति गोपनीय मेरो परम रहस्ययुक्त वचनलाई तिमी फेरि पनि सुन । तिमी मलाई अतिशय प्रिय छौ, त्यसकारणले यो परम हितकारक वचन म तिमीलाई भन्नेछु ।

तिमी मेरो अत्यन्त प्रिय मित्र हौ, म तिम्रो भलो चाहान्छु । त्यसकारण म तिमीलाई परम गुह्य वा गोपनीय ज्ञानको बारेमा बताउदैछु । यस्लाई ध्यानले सुन भनी श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ । यो गुह्यतम ज्ञान परमात्मामा शरणागत हुने, सधैं उहाँको चिन्तन गर्ने ज्ञान हो । यो ज्ञानको धेरै नै महत्त्वपूर्ण अंश हो ।

**मन्मना भव मभ्दक्तो मद्याजी मां नमस्कुरू ।**
**मामेवैष्यसि सत्यं ते प्रतिजाने प्रियोऽसि मे ॥ ६५ ॥**

हे अर्जुन ! तिमी ममा मनवाला होऊ, मेरो भक्त बन, मेरो पूजा गर्नेवाला बन र मलाई प्रणाम गर । यस्तो गर्नाले तिमी मलाई नै प्राप्त हुनेछौं, यो म तिमीसँग सत्य प्रतिज्ञा गर्दछु, किनकि तिमी मलाई अत्यन्तै प्रिय छौ ।

अर्जुनलाई गुह्यतम ज्ञानमा श्रीकृष्णले भन्दै हुनुहुन्छ कि तिमीले मेरो चिन्तन गर, मेरो भक्त बन, मेरो पूजा गर र मलाई नमस्कार गर । यसरी गर्यौ भने तिमी मलाई प्राप्त हुने छौ, तिमी मेरो परम मित्र भएकोले म तिमीलाई वचन दिन्छु । श्रीकृष्णको शुद्ध भक्त बन्नु, सधैं उहाँकै चिन्तन गर्नु पर्दछ, उहाँको भक्त बनी उहाँको पूजा गर्नु पर्दछ । यसरी उहाँकै लागि कर्महरू गर्नु भनेको श्रीकृष्णको सान्निध्यता प्राप्त गर्नु हो ।

**सर्वधर्मान्परित्यज्य मामेकं शरणं व्रज ।**
**अहं त्वा सर्वपापेभ्यो मोक्ष्ययिष्यामि मा शुचः ॥ ६६ ॥**

सम्पूर्ण धर्महरूलाई अर्थात सबै कर्तव्य र कर्महरूलाई ममा त्यागेर तिमी मात्र एउटा म सर्वशक्तिमान, सर्वाधार परमेश्वरको शरणमा आऊ । म तिमीलाई सम्पूर्ण पापबाट मुक्त गर्नेछु, तिमी शोक नगर ।

तिमीले सबै प्रकारका धर्महरू, कर्तव्यहरू, कर्महरू त्यागेर तिमी ममा आऊ । मैले तिम्रो सबै पापहरूलाई पखाली तिम्रो उद्धार गर्नेछु भनेर श्रीकृष्णले अर्जुनलाई भन्दै हुनुहुन्छ । आफ्नो अहङ्कार, आफ्नो अस्तित्व, आफु रहेको भाव सबै कुराहरू बिर्सेर आफुलाई श्रीकृष्णको शरणमा लगाउनु भनेर यहाँ भनिएको छ । आफ्ना सबै धर्महरू, कर्तव्यहरू तथा कर्महरू सर्वशक्तिमान र सबैको आधार रहनु भएको श्रीकृष्णलाईनै सुम्पिदेऊ भनी भन्दै हुनुहुन्छ । यस प्रकार तिमी आयौ भने म तिमीलाई सबै पापहरूबाट मुक्त गरिदिन्छु । तिमी शोक नगर । किनकि श्रीकृष्णको शरणमा गइसकेपछि शोक निवारणको कुरो पनि भक्तको नभएर भगवान्कै हुनजान्छ, आखिर सबै त उहाँकै हो ।

**इदं ते नातपस्काय नाभक्ताय कदाचन ।**
**न चाशुश्रूषवे वाच्यं न च मां योऽभ्यसूयति ॥ ६७ ॥**

तिमीले यो गीता रूपी रहस्यमय उपदेश कुनै पनि कालमा न त तपरहित मानिसलाई भन्न हुन्छ, न भक्तिरहितलाई र न सुन्ने इच्छा नगर्नेलाई भन्न हुन्छ, तर जस्ले ममा दोषदृष्टि राख्दछ त्यसलाई त कहिल्यै भन्न हुन्न ।

जो व्यक्ति संयमी छैन् वा तपरहित छ, श्रीकृष्णप्रति भक्तिरहित छ, न श्रीकृष्णका सन्दर्भहरू सुन्नमा कुनै इच्छा राख्दछ तथा श्रीकृष्णमा दोष देख्दछ भने त्यस्ता व्यक्तिलाई यो गीताको ज्ञान कहिल्यै पनि भन्न हुन्न भनी श्रीकृष्णले निर्देश गर्दै हुनुहुन्छ । जस्ले श्रीकृष्णको स्वरूपलाई नै स्वीकार गर्दैन त्यसलाई उहाँको महिमाको बारेमा बर्णन गर्नु उचित हुँदैन । जस्ले गीता वा यस्का उपदेशहरूको सम्मान गर्दैन त्यस्तो मानिसलाई गीताको बारेमा भन्नु हुन्न भनी श्रीकृष्णको आसय रहेको छ ।

**य इमं परमं गुह्यं मभ्दक्तेष्वभिधास्यति ।**
**भक्तिं मयि परां कृत्वा मामेवैष्यत्यसंशयः ॥ ६८ ॥**

जुन पुरूषले मलाई परम प्रेम गरेर यस परम रहस्ययुक्त गीताशास्त्रको बारेमा मेरा भक्तहरूलाई सुनाउँछ, ऊ मलाई नै प्राप्त हुन्छ-यसमा कुनै शङ्का छैन ।



जुन व्यक्तिले श्रीकृष्णका भक्तहरूलाई गीताको यस परम रहस्यको बारेमा सुनाउँदछ अन्तमा ऊ उहाँलाई प्राप्त हुन्छ । तर जुन पुरूषले मलाई परम प्रेम गरेर यस परम रहस्यले भरिएको गीताको बारेमा उहाँका भक्तहरूलाई सुनाउँछ उस्ले श्रीकृष्णलाई प्राप्त गर्नेछ । जस्ले यो श्रीकृष्णले बताउनु भएको रहस्यपूर्ण ज्ञानहरूलाई बाँड्दछ र ऊ स्वयं पनि त्यसै मार्गमा हिडने छ भने ऊ श्रीकृष्णलाई प्राप्त हुनेछ ।

**न च तस्मान्मनुष्येषु कश्चिन्मे प्रियकृत्तमः ।**
**भविता न च मे तस्मादन्यः प्रियतरो भुवि ॥ ६९ ॥**

त्योभन्दा बढी मेरो प्रिय काम गर्नेवाला मानिसहरूमा अरू कोही पनि छैन तथा पृथ्वीभरिमा त्योभन्दा ठूलो मेरो प्रिय अर्को कोही भविष्यमा हुदा पनि हुँदैन ।

यस प्रकार गीताको ज्ञान समुचित पात्रलाई गराउने मानिस मेरोलागि साह्रै प्रिय हुन्छ । त्यस्तो प्रिय सेवक र भक्त मेरोलागि पछि पनि कोही हुन सक्दैन । अर्जुनले श्रीकृष्णलाई गुरू मानी उहाँले दिनु भएका उपदेशहरूलाई ध्यान दिएर सुनी तिनीहरूको पालना गर्दथे । त्यसकारणले अर्जुन श्रीकृष्णको प्यारो थिए । यस प्रकार अर्जुनसँग गरेको व्यवहार मात्र अर्जुनसँग गरिएको होइन । यो त सबैको लागि हो भनी हामीले बुझ्नु खाँचो छ । तसर्थ जस्ले गीताको प्रचार गर्दछ त्यो मानिस उहाँको लागि धेरै प्रिय हुन्छ । गीताले निर्देश गरेको बाटोमा जस्ले अरूलाई पनि ज्ञान तथा कर्मको बाटोमा लाउँछ त्योभन्दा बाहेक श्रीकृष्णलाई पृथ्वीभरिमा कोही पनि प्रिय छैन । भविष्यमा पनि यस्ता भक्त बाहेक श्रीकृष्णलाई अरू कोही पनि प्रिय हुँदैनन् भन्ने अवधारणा उहाँले व्यक्त गर्नु भएको छ ।

**अध्येष्यते च य इमं धर्म्यं संवादमावयोः ।**
**ज्ञानयज्ञेन तेनाहमिष्टः स्यामिति मे मतिः ॥ ७० ॥**

जुन पुरूषले यस धर्ममय हामी दुबैको सम्वादरूप गीता शास्त्रलाई पढ्दछ, उसबाट पनि म ज्ञानयज्ञले पूजित हुनेछु-यस्तो मेरो धारणा रहेको छ ।

श्रीकृष्णले आफ्नो धारणा बताउँदै भन्नु हुन्छ कि जस्ले यस धर्ममय गीतालाई वा हामी बीच भएको यस सम्वादलाई अध्ययन गर्दछ भने त्यस्को त्यस अध्ययनले म ज्ञानयज्ञबाट पूजित हुनेछु । मात्र पाठ गर्नाले पनि पाठकलाई ज्ञानयज्ञको फल प्राप्त हुने कस्तो महत्त्वपूर्ण महिमा रहेको छ यस गीताको । यो मात्र पाठ होइन । यस्लाई

पढनाले यस्ले हाम्रो मस्तिष्कमा ज्ञानको तरंग ल्याउँछ । त्यस तरङ्गले हाम्रो जीवनको अवधारणा, कर्म, ज्ञान आदिका पाटाहरूलाई उज्ल्याउँछ । गीताको पाठ ज्ञानयज्ञ हो जस्को परिणाम ज्ञान हो । यसर्थ ज्ञान भएपछि परिवर्तन लगायतका विषयवस्तुहरू सम्भव हुन पुग्दछ ।

**श्रद्धावाननसूयश्च शृणुयादपि यो नरः ।**
**सोऽपि मुक्तः शुभाँल्लोकान्प्राप्नुयात्पुण्यकर्मणाम् ॥ ७१ ॥**

जुन मानिसले श्रद्धायुक्त र दोषदृष्टिबाट रहित भएर यस गीताशास्त्रलाई श्रवण मात्र पनि गर्नेछ, ऊ पनि पापबाट मुक्त भएर उत्तम कर्म गर्नेहरूको लागि रहेको श्रेष्ठ लोकहरू उस्ले प्राप्त गर्नेछ ।

जस्ले गीतालाई श्रद्धाले द्वेषरहित भएर सुन्दछ, ऊ सबै पापहरूबाट मुक्त हुन्छ तथा उत्तम कर्म गर्नेहरूले पाउने श्रेष्ठ लोकलाई उस्ले प्राप्ति गर्दछ । गीताको पाठ सुनाउनेलाई ज्ञानयज्ञको फल त प्राप्त हुन्छ नै । तर गीताको पाठलाई जस्ले श्रद्धापूर्वक द्वेषरहित भएर सुन्दछ भने त्यो मानिस पापहरूबाट मुक्त हुन्छ तथा उत्तम कर्म गर्नेहरूले पाए सरह श्रेष्ठ लोक प्राप्त गर्दछ । सुन्नेले ती उपदेशहरूलाई आफ्नो व्यवहारमा र स्वभावमा ग्रहण गरी व्यवहारमा कार्यरूप दिनु पर्ने हुन्छ । तर यदि उस्लाई कुनै कारणवश ती उपदेशहरू बमोजिम व्यवहार गर्न गाह्रो भइरहेको छ भने ऊ पापहरूबाट मुक्ति भई श्रेष्ठ लोकमा जान्छ । गीताको ज्ञानलाई आफुमा समाहित गर्ने कार्य कर्म गरेर होस् वा सन्यास ग्रहण गरेर होस् वा गीता श्रवण गरेर होस् सबै अवस्थामा श्रीकृष्ण तपाईको साथमै हुनुहुन्छ ।

**कच्चिदेतच्छ्रुतं पार्थ त्वयैकाग्रेण चेतसा ।**
**कच्चिदज्ञानसंमोहः प्रनष्टस्ते धनंजय ॥ ७२ ॥**

हे पार्थ ! के यस्लाई वा गीतालाई तिमीले एकाग्रचित्तले श्रवण गर्यौ ? र हे धनंजय ! के तिम्रो अज्ञानजनित मोह नष्ट भइसक्यो ?

यहाँ भगवान्ले अर्जुनको लागि गुरूको काम गर्दै हुनुहुन्छ । गुरूको धर्म बमोजिम उहाँले अर्जुनलाई सोध्नु भयो कि तिमीले मैले गुह्यज्ञानको वर्णन रहेको गीतालाई एकाग्रचित्त भएर सुन्यौ कि सुनिनौं ? सुनेको भए, गीतालाई सुनेपछि तिम्रो



अज्ञानजनित मोह हट्यो वा हटेन ? भगवद्गीता सामान्य ग्रन्थ होइन, यसलाई साक्षात् भगवान्ले भन्नु भएको हो भनी हामीले पनि स्मरणमा राख्नु पर्दछ ।

अर्जुन उवाच (भन्दछन्)

**नष्टो मोहः स्मृतिर्लब्धा त्वत्प्रसादान्मयाच्युत ।**
**स्थितो स्मि गतसन्देहः करिष्ये वचनं तव ॥ ७३ ॥**

अर्जुनले भनेः हे अच्युत ! हजुरको कृपाले मेरो मोह नष्ट भयो र मैले स्मृति प्राप्त गरिसके, अब म संशयरहित भएर स्थित छु, अतः हजुरको आज्ञालाई पालना गर्ने छु ।

वैदिक शास्त्रानुसार पहिले-पहिले स्मृतिबाट प्राप्त ज्ञानलाई जगतमा उपयुक्त स्थानमा बाँडिन्थ्यो । अर्जुनले भन्दैछन् कि उनको मोह हटिसक्यो । यसै मोहले अर्जुनले आफ्नो शस्त्र राखेर युद्ध नगर्ने भनेको थिए । तर अब उनीलाई ज्ञानको प्राप्ति भइसक्यो । अब उनी युद्ध गर्न तैयार भइसके । हजुरको अनुग्रहले मेरो सम्झना पनि फर्किसक्यो । अब म शंकारहित भई दृढ रहेको छु र हजुरको आदेशानुसार कार्य गर्न तत्पर छु । यहाँ अर्जुनले जीवको प्रतिनिधित्व गर्दैछन् । अर्जुनले आत्मअनुशासन कायम राखेर वा संयमी भएर परमेश्वरको आज्ञालाई मान्न तैयार भएका छन् । जीवले परमात्माको सेवा गरेर बद्धबाट मुक्त दासको अवस्थामा पुग्दछ । तसर्थ जीवले परमेश्वरको सेवा गर्नु पर्दछ ।

संजय उवाच (संजय भन्दछन्)

**इत्यहं वासुदेवस्य पार्थस्य च महात्मनः ।**
**संवादमिममश्रौषमभ्दुतं रोमहर्षणम् ॥ ७४ ॥**

संजयले भनेः यस प्रकार मैले श्रीवासुदेवको र महात्मा अर्जुनको यो अद्भुत रहस्ययुक्त, रोमाञ्चकारक संवादलाई सुने ।

संजयले भने कि उनीले दुइ महापुरूषहरू बीच भएको सम्वादलाई सुने । त्यो सम्वाद साह्रै नै रहस्यपूर्ण, आश्चर्यचकित पार्ने तथा रोमाञ्चकारक थियो । संजयले धृतराष्ट्रलाई कुरूक्षेत्रमा भइरहेको विवरण सुनाउंदै थिए । गुरू वेदव्यासको कृपाले उनले दिव्य दृष्टिको शक्ति प्राप्त गरी धृतराष्ट्रलाई युद्धस्थलमा भएको घट्ना

सुनाउन पाएको थिए । त्यस सम्वादमा भगवान्ले सम्पूर्ण जीवात्माको हितलाई ध्यानमा राखेर अर्जुनलाई निमित्त पात्रको रूपमा स्थापित गरेर बहुमूल्य तथा बहुउपयोगी गोपनीय योगको बारेमा प्रत्यक्ष रूपमा उपदेश दिनु भएको छ । यस्तो रहस्ययुक्त तथा आश्चर्यचकित पार्नसक्ने उपदेश सुनेर उनी रोमाञ्चित हुन पुगे ।

**व्यासप्रसादाच्छ्रुतवानेतद्गुह्यमहं परम् ।**
**योगं योगेश्र्वरात्कृष्णात्साक्षात्कथयतः स्वयम् ॥ ७५ ॥**

श्री व्यासजीको कृपाले दिव्य दृष्टि पाएर मैले यस परम गोपनीय योगको बारेमा अर्जुनलाई स्वयं योगेश्वर भगवान् श्रीकृष्णबाट भन्दै गरेको प्रत्यक्ष सुनेको छु ।

व्यास संजयको गुरू हुनुहुन्थ्यो । उहाँको कृपाले उनले समेत परम गोपनीय योगको बारेमा जान्न पाए । यहाँ गुरूबाट ज्ञान लिने परम्परा दर्शाउँदै प्रामाणिक गुरूबाट नै ज्ञान लिनु पर्दछ भनेर पनि ज्ञान दिइएको पाइन्छ । यस संसारमा विभिन्न किसिमका योगीहरू छन तर श्री कृष्ण त योगेश्वर हुनुहुन्छ । उहाँ योगेश्वर भएकोले अरू इच्छुकहरूलाई पनि योगको शक्ति प्रदान गर्ने क्षमता राख्नु हुन्छ ।

**राजन्संस्मृत्य संस्मृत्य संवादमिममद्भुतम् ।**
**केशवार्जुनयोः पुण्यं हृष्यामि च मुहुर्मुहुः ॥ ७६ ॥**

हे राजन ! भगवान् श्रीकृष्ण तथा अर्जुनको यस रहस्यमय, कल्याणकारक र अद्भुत संवादलाई पुनः-पुनः स्मरण गरेर म पटक-पटक हर्षित भइरहेको छु ।

संजयले भने कि मैले यो परम गुह्य ज्ञान साक्षात् योगेश्वर श्रीकृष्णबाट सुनेको सन्दर्भलाई पटक-पटक सम्झेर म हर्षित भइरहेको छु । जुन ज्ञानको बारेमा संजयले सुनेको थिए त्यो सबै अब उनको साथमा थियो । उनीलाई विश्वास गर्न गाह्रो भइरहेको थियो कि यति ठूलो रहस्यमय ज्ञान उनीले स्वयं सुने । भगवद्गीताको ज्ञान यति दिव्य छ कि जस्ले अर्जुन तथा श्रीकृष्ण बीचमा भएको सम्वादलाई सुन्दछ, उसले त्यसलाई कहिल्यै बिर्सिदैन, सदा सम्झिरहन्छ र अमूल्य ज्ञान पाइयो भनेर खुशी भइरहन्छ । ऊ आध्यात्मिक जीवनको दिव्य स्थितिमा पुग्दछ ।

**तच्च संस्मृत्य संस्मृत्य रूपमत्यम्दुतं हरेः ।**
**विस्मयो मे महान् राजन्हृष्यामि च पुनः पुनः ॥ ७७ ॥**



हे राजन् ! श्री हरिको त्यस अत्यन्त विलक्षण रूपलाई पनि फेरि-फेरि स्मरण गरेर मेरो चित्तमा महान आश्चर्य हुन्छ र म पटक-पटक हर्षित भइरहेको छु ।

व्यासको कृपाले प्राप्त दिव्य दृष्टिको सहायताले श्रीकृष्णले देखाउनु भएको विराट दिव्य स्वरूप संजयले देखे । त्यो अद्भुत रूपलाई देखेर उनी अत्यधिक आश्चर्यचकित भए । अनि त्यस घटनालाई सम्झी-सम्झी उनी हर्षित भइरहेका छन् । यसभन्दा पहिला श्रीकृष्णले आफ्नो दिव्य विराट स्वरूप कहिल्यै कतै प्रकट गर्नु भएको थिएन । त्यो स्वरूप अर्जुनलाई देखाउन भनेर प्रकट गरियो । तर त्यस क्षेत्रमा उपस्थित व्यास लगायतका केही महान भक्तहरूले पनि उहाँको स्वरूपलाई देख्ने अवसर पाए । त्यस दृष्यलाई सम्झेर संजय धेरै पटक खुशी भइरहे ।

**यत्र योगेश्वरः कृष्णो यत्र पार्थो धनुर्धरः ।**
**तत्र श्रीर्विजयो भूतिर्ध्रुवा नीतिर्मतिर्मम ॥ ७८ ॥**

हे राजन ! जहाँ योगश्वर भगवान् श्रीकृष्ण हुनुहुन्छ र जहाँ गाण्डीव-धनुषधारी अर्जुन हुनुहुन्छ, त्यही श्री, विजय, विभूति र अचल नीतिहरू छन्-यस्तो मेरो धारणा रहेको छ ।

त्यस दिव्य दृश्यलाई हेरिसकेपछि संजयले समीक्षा गर्दै आफ्नो मत जाहेर गर्दै भन्दछन् कि जहाँ श्रीकृष्ण भगवान् हुनुहुन्छ, उहाँको मित्र एवं शिष्य अर्जुन छन्, त्यहाँ नै श्री, विजय, विभूति र अचल नीति पनि हुन्छन् । धृतराष्ट्रको अबधारणा कि भीष्म, द्रोण, कर्णहरू जस्ता महारथीहरू उनको पक्षमा छन तसर्थ विजय उनको पक्षमा छ, लाई चिर्दै संजयले विजय पाण्डवहरूको पक्षमा छ भनी भनेका हुन् । राजाले आफ्नो पक्षको विजयको आशा मारे हुन्छ । श्रीकृष्ण अर्जुनको सारथीको रूपमा हुनु नै विजय, सम्मान र ऐश्वर्यको सूचक हो । श्रीकृष्णका विभिन्न ऐश्वर्यहरूमध्येको वैराग्य पनि एक हो । जहाँ श्रीकृष्णको ज्ञान, अर्जुनको भक्ति हुन्छ, श्री कृष्ण स्वयं सारथी हुनुहुन्छ, अर्जुन जस्तो उहाँलाई मान्नेवाला हुन्छ भने त्यहाँ सम्मान तथा विजय निश्चित हुन्छ ।

ॐ तत्सदिति श्रीमभ्दगवद्गीतासूपनिषत्सु ब्रह्मविद्यायां योगशास्त्रे श्रीकृष्णार्जुनसंवादे मोक्षसंन्यासयोगो नामाष्टदशोऽध्यायः ।

## श्री कृष्ण सम्बन्धी केही दिव्य श्लोकहरू :

**१. ॐ शान्ताकारं भुजगशयनं पद्मनाभं सुरेशं**
**विश्ववाधारं गगनसदृश्यं मेघवर्णं शुभाङ्गम् ।**
**लक्ष्मीकान्तं कमलनयनं योगिभिर्ध्यानगम्यम्**
**वन्दे बिष्णुं भवभयहरं सर्वलोकैकनाथम् ॥**

भावार्थः– जस्को आकृति अत्यन्त शान्त छ, जस्ले शेषनागको शय्यामा शयन गर्नु भएको छ, जस्को नाईटोमा कमल छ, जो देवताहरूको ईश्वर तथा सम्पूर्ण जगतको आधार हुनुहुन्छ, जो आकाश जस्तै सर्वत्र व्याप्त हुनुहुन्छ, जस्को शारीरिक वर्ण निलो आकाश जस्तो छ, जस्का सबै शारीरिक अङ्गहरू अतिशय सुन्दर छन्, जस्लाई योगीहरूद्वारा ध्यान गरेर मात्र गर्न सकिन्छ, जो सम्पूर्ण संसारको स्वामी हुनुहुन्छ, जो जन्म मरण रूप भयलाई नाश गर्नेवाला हुनुहुन्छ यस्ता लक्ष्मीपति, कमलनेत्र भगवान् श्री विष्णुलाई म (शीर निहुराई) प्रणाम गर्दछु ।

**२. यं ब्रह्मा वरूणेन्द्ररूद्रमरूतः स्तुन्वन्ति दिव्यैः स्तवैर्–**
**वेदैः साङ्गपदक्रमोपनिषदैर्गायन्ति यं सामगाः ।**
**ध्यानावस्थिततद्गतेन मनसा पश्यन्ति यं योगिनो**
**यस्यान्तं न विदुः सुरासुरगणा देवाय तस्मै नमः ॥**

भावार्थः– ब्रहमा, वरूण, ईन्द्र, रूद्र र मरूद्गणहरूले दिव्य स्तोत्रहरूले जस्को स्तुति गान गर्दछन्, सामवेदमा गाईने अङ्ग, पद, क्रम र उपनिषद्हरू सहित वेदहरूद्वारा जस्को गीत गाईन्छ, योगीजनहरूले ध्यानमा स्थित भई तद्गत् मनले जस्को दर्शन गर्दछन्, देवता तथा असुरगण (कोई पनि) जस्को अन्तलाई बुझ्दैनन् ती परमपुरूष नारायण देवको लागि मेरो नमस्कार छ ।

**३. मंगलम् भगवान विष्णुः, मंगलम गरूणध्वजः ।**
**मंगलम पुन्डरी काक्षः, मंगलाय तनो हरिः ॥**

भावार्थः भगवान् विष्णु मंगलदायी छन्, गरूडमा वाहन गर्ने मङ्गल हुन्, कमल समान नेत्र भएको मङ्गलदायी हुन्, हरि मङ्गलको भण्डार नै हुन् अनि शुभ तथा कल्याणपद पनि छन् ।



**४. क) हे कृष्ण करूणासिन्धो दीनबन्धो जगत्पते ।**
**गोपेश् गोपिकाकान्त राधाकान्त नमो कस्तुते ॥**

भावार्थः हे कृष्ण ! हजुर दुःखीहरूको साथी तथा सृष्टिको उद्गम हुनुहुन्छ । हजुर गोपीनीहरूको स्वामी तथा राधारानीको प्रेमी हुनु हुन्छ । म हजुरलाई सादर प्रणाम गर्दछु ।

**५. ख) तप्तकाञ्चनगौरांगि राधे वृन्दावनेश्वरी ।**
**वृषभानुसुते देवि प्रणमामि हरिप्रिये ॥**

भावार्थः म उहाँ राधारानीलाई प्रणाम गर्दछु जस्को शारीरिक कान्ति पग्लेको सुन जस्तो छ, उहाँ बृन्दावनकी महारानी हुनु हुन्छ । उहाँ राजा बृषभानुकी पुत्री हुनुहुन्छ तथा भगवान् श्रीकृष्णको अत्यन्त प्रिय हुनु हुन्छ ।

**६. प्रातः स्मरामि भवभीतिमहार्तिनाशं**
**नारायणं गरूडवाहनमब्जनाभम् ।**
**ग्राहाभिभूतवरवारणमुक्तिहेतुं**
**चक्रायुधं तरूणवारिजपत्रनेत्रम् ॥**

भावार्थः संसारको भय रूपी महान् दुःखलाई नष्ट गर्ने, ग्राहबाट गजराजलाई मुक्त गर्ने, चक्रधारी तथा नवीन कमलदल जस्तै आँखा भएका, नाइटोबाट कमल निस्केका, गरूडलाई वाहनको रूपमा प्रयोग गर्नु हुने श्रीनारायणलाई म प्रातःकालमा नमस्कार गर्दछु ।

**७. ॐ कायेन वाचा मनसेंद्रियैर्वा ।**
**बुद्धात्मना वा प्रकृतिस्वभावात् ।**
**करोमि यद्यत् सकलं परस्मै ।**
**नारायणायेति समर्पयामि ॥ ॥**

साभारः श्रीविष्णुसहस्रनामस्तोत्रम् ।

भावार्थः आफ्नो शरीर तथा यसका अङ्गहरू, मष्तिष्क, बुद्धि विवेक तथा अन्तर आत्माले जानेर वा नजानेर म जे जसो गर्दछु ती सबै सर्व शक्तिमान परमेश्वर नारायणलाई समर्पण गर्दछु ।

८. **नारायणं नमस्कृतं नरं चैव नरोत्तमम् ।**
**देवीं सरस्वतिं व्यासं ततो जय मुदिरयेत् ॥**

भावार्थः परमेश्वर श्रीमन् नारायण, जो नरहरूमा सर्वोत्तम छन्, को सामुन्ने आदरभावले उभिएर श्रीकृष्ण परमात्मा तथा देवी सरस्वती तथा भागवत् ग्रन्थको व्याख्याकार व्यास भगवान्ले जसले विजय प्रदान गर्दछन् म/हामी उहाँलाई नमन गर्दछु /गर्दछौँ । साभारः **श्रवेतश्वर उपनिषद् ६-७-८ ।**

९. **तमीश्र्वराणां परमं महेश्वरं तं देवतानां परमं च दैवतम् ।**
**पतिं पतीनां परमं परस्ताद् विदाम देवं भुवेनशमीड्यम् ॥**
**न तस्य कार्य करणं च विद्यते न तत्समश्र्चाभ्यधिकश्र्च दृश्यते ।**
**पराश्य शक्तिर्विविधैव श्रूयते स्वाभाविकी ज्ञानबलकिया च ॥**

भावार्थः परमेश्वर समस्त देवताहरूको पनि देवता हुनुहुन्छ तथा लोकपालकहरूमा सबैभन्दा महान् लोकपालक हुनुहुन्छ । सबै उहाँको अधिनमा छन् । सबै जीवहरूलाई परमेश्वरबाट नै विशिष्ट शक्ति प्राप्त हुन्छ, जीव स्वयम्मा श्रेष्ठ हुन् । उहाँ सबै देवताहरूद्वारा पुज्य हुनुहुन्छ तथा सबै संचालकहरूको पनि सञ्चालक हुनु हुन्छ । तसर्थ उहाँ सम्पूर्ण भौतिक नेताहरू तथा देवताहरूभन्दा उच्च हुनुहुन्छ र सबैद्वारा आराध्य पनि हुनुहुन्छ । उहाँभन्दा उच्च कोही छैनन्, अनि उहाँ नै सम्पूर्ण कारणहरूको पनि कारण हुनुहुन्छ । उहाँको शारीरिक स्वरूप अन्य जीव जस्तो हुन्न । उहाँको शरीर तथा आत्मा बीच कुनै अन्तर हुन्न । उहाँ परम हुनुहुन्छ । उहाँका सबै ईन्द्रियहरू दिव्य छन् । उहाँको कुनै पनि ईन्द्रियले अन्य ईन्द्रियको कार्य सम्पादन गर्न सक्छ । तसर्थ उहाँभन्दा न कोही उच्च छन् र न कोही उहाँ समान नै छन् । उहाँका शक्तिहरू विभिन्न रूपका छन्, तसर्थ उहाँको सबै कार्यहरू प्राकृतिक अनुक्रम वा चरणबद्धता बमोजिम सम्पन्न हुने गर्दछन् ।

१०. **श्रीमद्भागवत ९.४.६८**
**साधवो ह्दयं मह्यं साधूनां ह्दयं त्वहम् ।**
**मदन्यत्ते न जानन्ति नाहं तेभ्यो मनागपि ॥**

भावार्थ : भक्तगण सधैँ नै मेरो हृदयमा बास गर्दछन् तथा म भक्तको हृदयमा बास गर्दछु । भक्तले म बाहेक केही पनि जान्दैन तथा म पनि भक्तलाई कहिल्यै भूल्दिन । म तथा मेरा शुध्द भक्तहरूको बीचमा घनिष्ट सम्बन्ध रहेको हुन्छ । ज्ञानी



शुद्ध भक्तहरू कहिल्यै पनि आध्यात्मिक सम्पर्कभन्दा टाढा जादैनन् । अतः त्यस्ता भक्तहरू मेरा लागि अत्यन्तै प्यारा छन् ।

ज्ञानी भक्तहरू भगवानलाई यसकारण प्रीय छन् कि उहाँहरूको उद्देश्य प्रेम तथा भक्तिले परमेश्वरको सेवा गर्नु मात्र हो । यस्ता किसिमका भक्तहरूको प्रकृति वा स्वभाव यस्तो हुन्छ कि उहाँहरूले एकछिन पनि भगवान्को सेवा नगरी बस्न सक्नुहुन्न । यसरी परमेश्वरले भक्तहरूलाई धेरै माया गर्नु हुन्छ तथा उहाँले भक्तलाई कहिल्यै त्याग गर्नु हुन्न । यसो त भौतिक ईच्छाहरूको सम्पूर्ण कल्मषहरूबाट मुक्त आर्त (दुःखी), जिज्ञासु, धनहीन, तथा ज्ञानी व्यक्तिहरू सबै शुद्ध भक्त बन्न सक्दछन् । तर यिनमा पनि जो परम् सत्यको बारेमा ज्ञानी हुनुहुन्छ र भौतिक कल्मष एवं ईच्छाहरूबाट मुक्त हुनुहुन्छ उहाँ नै भगवान्को कथनानुसार सर्वश्रेष्ठ हुनुहन्छ ।

११. **११.१५.४१ श्रीमद्भागवत**
**देवर्षि भूताप्तनृणां पितृणां न किंकरो नायमृणी च राजन् ।**
**सर्वात्मना यः शरणं शरण्यं गतो मुकुन्दं परिहत्य कर्तम् ॥**

भावार्थ : जुन पुरूषले उस्का अन्य सबै कर्तव्यहरूलाई त्यागेर मुक्तिको दाता मुकुन्दको चरणकमलको शरण ग्रहण गर्दछ तथा यस पथमा गम्भिरतापूर्वक हिडदछ भने ऊ देवताहरू, मुनिहरू, सामान्य जीवहरू, आफन्तजनहरू, मानिसहरू वा पितृहरू प्रतिको आफ्नो कर्तव्य वा ऋणबाट मुक्त हुन्छ ।

१२. **अच्युतं केशबं राम नारायणं,**
**कृष्ण दोमोदराम वासुदेवं हरिं,**
**श्रीधरं माधवं गोपिका वल्लभं,**
**जानकी नायकं रामचन्द्रम भजे ।**

भावार्थः कहिल्यै पनि च्युत नहुने अविनाशी श्रीकृष्ण जस्का युग अनुसार विभिन्न रूपहरू छन्, तद्अनुरूप नामहरू पनि छन् जस्तैः अच्युत, केशव, राम, नारायण, कृष्ण, दामोदर, वासुदेव, श्रीधर, माधव, गोपिका बल्लभ (प्रिय व्यक्ति), जानकी वा सीताको नायक रामचन्द्रको भजन कीर्तन गरौँ ।

१३. **जले विष्णुः स्थले विष्णुः विष्णु पर्वतेमस्तके ।**
**ज्वालमालाकुले विष्णुः सर्व विष्णुः मयं जगत् ॥**

भावार्थः विष्णुले हामीलाई जलमा संरक्षण गर्नु हुन्छ, स्थलमा संरक्षण गर्नु हुन्छ, हिमालको टाकुरामा संरक्षण गर्नु हुन्छ, उहाँले मलाई अग्निको माँझमा संरक्षण गर्नु हुन्छ, किनकि उहाँ संसार भरी नै व्याप्त हुनु हुन्छ ।

**१४. सच्चिदानंद रूपाय विश्वोत्पत्यादिहेतवे ।**
**तापत्रय विनाशाय श्री कृष्णाय वयं नमः ॥**

भावार्थः सच्चिदानंद स्वरूप भगवान् श्रीकृष्णलाई हामी नमस्कार गर्दछौं, जो यस जगतको उत्पत्ति, स्थिति, र विनाशको लागि तथा आध्यात्मिक,आधिदैविक र आधिभौतिक तीनै प्रकारका तापहरूलाई नाश गर्ने हुनु हुन्छ । भगवान् सत्य स्वरूप हुनु हुन्छ, भगवान् सिध्द स्वरूप हुनु हुन्छ, भगवान आनन्द स्वरूप हुनु हुन्छ । जीवनमा श्रीकृष्ण भक्तिको प्राप्ति भएमा आनन्द प्राप्ति भयो । संसारमा सबैलाई शान्ति तथा आनन्द चाहिन्छ । उहाँ तीनै प्रकारका तापहरूः दैहिक, दैविक र भौतिकको विनाशक हुनुहुन्छ । उहाँलाई हामी सबैले नमस्कार गर्दछौं ।

**१५. ॐ श्री कृष्णाय शरणं मम ।** यो मन्त्र श्रीकृष्णको कुनै मन्त्र पाठ गर्नु अघि पाठ गर्नु पर्दछ । यसो गर्नाले उच्च फल प्राप्त हुने गर्दछ ।

**ॐ नमः भगवते वासुदेवाय ।**

**१६. कृष्णाय वासुदेवाय हरये परमात्मने ।**
**प्रणतः क्लेशनाशाय गोविंदाय नमो नमः ॥**

भावार्थः यो मन्त्र पाठ गर्दा पवित्रताको विशेष ध्यान दिनु पर्दछ । स्नान गरी कुशको आसनमा (कुशको आसन नभएमा अन्य बाक्लो कपडाको आसनमा) बसेर विहान र साँझ १०८ पटक जप गर्नु पर्दछ । यस्ले जीवनमा कुनै किसिमको सङ्कट आउँदैन । जप गर्दा तुलसीको मालाको प्रयोग गरी पूर्वतिर फर्केर गर्नाले बढी फलदायी हुनेछ ।

**१७. हरे कृष्ण हरे कृष्ण, कृष्ण कृष्ण हरे हरे ।**
**हरे राम हरे राम, राम राम हरे हरे ॥**

भावार्थः यो महामन्त्र पटक-पटक दोहर्याई रहनु पर्दछ । यो मन्त्र हिडदा, डुल्दा, उठ्दा बस्दा जहिले पनि कुनै पनि क्षणमा पाठ गरिरहनाले श्रीकृष्णसँग सम्बन्ध कायम हुन पुग्दछ तथा मोक्ष प्राप्तिको मार्ग पुष्ट गर्दछ ।



## केही भजनहरू :

**१) हे कृष्ण ! मलाई मीठो बंशी सुनाई देउन**
**तिमीलाई मात्र होईन त्रिलोक थर्काई दिऊला । : राजु अधिकारी ।**

हे कृष्ण ! मलाई मीठो बंसी सुनाई देउन्
तिमीलाई मात्र होईन त्रिलोक थर्काई दिऊला ।
कसरी बंशीले त्रिलोक थर्काई दिन्छौ ?
तपश्वी ज्ञानीको आसन डगाई दिन्छौ ? हे कृष्ण १
बंशीको महिमा बुझ्दैनौं तिमी राधा ।
योगी र ध्यानीको ध्यानमा पार्छ बाधा ॥ हे कृष्ण १
बासका टुक्राको महिमा के पो हुन्छ ।
हामीले सिवाय अरूले कहाँ सुन्छ ॥ हे कृष्ण १
तिम्रा ती देवता सबको शेखी झार्छ ।
ब्रह्मादि त्रि-देव मोहित यसले पार्छ ॥ हे कृष्ण १
सुरिलो तानको मोहिनी कस्तो राजा ।
सुनेर यी कुरा चकित भए आज ॥ हे कृष्ण १
हे प्यारी यसैले गोपिनी डाकी ल्याउँछ ।
ज-जस्ले यो सुन्छ तुरून्त यहाँ आउँछ ॥ हे कृष्ण १
हे कृष्ण ! मलाई मीठो बंशी सुनाई देउन्
तिमीलाई मात्र होईन त्रिलोक थर्काई दिऊला .....३ ।

**२) धुन बज्यो धुन बज्यो पक्कै कृष्ण हुन् ।**
**वजाई देऊ बासुरी रून्छ मेरो मन ।।**

धुन बज्यो धुन बज्यो पक्कै कृष्ण हुन ।
वजाई देऊ बासुरी रून्छ मेरो मन ॥
बृन्दावनमा खोज्दै आए गाई चराउनेलाई ।
यमुनालाई हेर्दै आए रास रचाउनेलाई ॥ धुन १
चन्द्रमाले लुकायो कि मेरो कृष्णलाई
पवनले उडायो कि मेरो राधाश्यामलाई ।

आउन कृष्णजी मनका पुजारी
मन उड्यो कृष्णजीलाई भेटु कसोरी ॥ धुन १
हृदयमा दम रूक्यो तिमीलाई सम्भदा हो....२
दिन बिते रात बिते बेहोस हुँदा हुँदा हो.... २
मुख दुख्यो कृष्णजी भेटु कसोरी
मन उड्यो कृष्णजीलाई भेटु कसोरी ........२, धुन
जहिले हामी हतार हतार जहिले हामीलाई काम ।
मर्ने बेला भईसक्यो कहिले जप्ने राम ॥ धुन १

**३) कति राम्रो त्यो बृन्दावन सललल बगेकी यमुना**
**उस्तै राम्रो मथुरा शहर जान मलाई लाग्दैछ रहर ।**

कति राम्रो त्यो बृन्दावन सललल बगेकी यमुना ।
उस्तै राम्रो मथुरा शहर जान मलाई लाग्दैछ रहर ॥ कति १
वृन्दावनको भिलिमिली कृष्णजीको दर्शन ।
कृष्णजीको दर्शन गर्ने पापी पनि तर्छन् ॥ २, कति १
पहिलो दर्शन विहारीको पछि रंगनाथ
यमुनामा स्नान गर्नु गर्नु भक्ति साथ । पहिलो २, कति १
राधा कुण्ड श्याम कुण्ड गिरी गोबर्धन
बंशी बज्यो मधुर मधुर मोही बृन्दावन । राधा २, कति १
माखन चोऱ्यो, मिश्री चोऱ्यो, दहि सबै चोऱ्यो
सबै थोक चोरी सक्यो प्राण पनि चोऱ्यो । माखन २, कति
गाई बाच्छा लिई प्रभु जान्थे वन वन
गोपिनीको प्रेम ठूलो रून्थे मन मन । गाइ २, कति १

**४) गोविन्द जय जय गोपाल जय जय**
**राधारमण हरि गोविन्द जय जय**

गोविन्द जय जय गोपाल जय जय ।
राधारमण हरि गोविन्द जय जय ॥ गोविन्द २
श्रीकृष्ण जय जय श्री राम जय जय ।
मुकुन्द माधव गोपाल जय जय ॥ श्रीकृष्ण २



राधारमण हरि गोविन्द जय जय ।
गोविन्द जय जय गोपाल जय जय ॥ राधारमण २
श्रीविष्णु जय जय श्री लक्ष्मी जय जय ।
मुकुन्द केशव गोविन्द जय जय ॥ श्रीविष्णु २
लक्ष्मीरमण हरि श्रीविष्णु जय जय
गोविन्द जय जय गोपाल जय जय
राधारमण हरि गोविन्द जय जय ।
श्रीकृष्ण जय जय श्री राम जय जय ।
मुकुन्द माधव गोपाल जय जय ॥ श्री कृष्ण २
राधारमण हरि गोविन्द जय जय
गोविन्द जय जय गोपाल जय जय
राधारमण हरि गोविन्द जय जय
गोविन्द जय जय गोपाल जय जय ।
श्रीविष्णु जय जय श्री लक्ष्मी जय जय ।
मुकुन्द केशव गोविन्द जय जय ॥ श्री विष्णु
लक्ष्मीरमण हरि श्रीविष्णु जय जय
गोविन्द जय जय गोपाल जय जय
राधारमण हरि गोविन्द जय जय । गोविन्द ३

**५) ओम् जय जगदीश हरे**
**प्रभु जय जगदीश हरे**

ओम् जय जगदीश हरे !
प्रभु जय जगदीश हरे !
प्रभुका चरण उपासक
हरिका चरण उपासक
कति-कति पार तरे
ओम् जय जगदीश हरे !
मनको थाल मनोहर
प्रेम रूप वाति
प्रभु ! प्रेम रूप वाति

भाव त पो रेछ मङ्गल
भाव त पो रेछ मङ्गल
आरती सब भाँति
ओम् जय जगदीश हरे !

नित्य निरञ्जन निर्मल
कारण अविनाशी
प्रभु कारण अविनाशी
शरणागत प्रतिपालक
शरणागत प्रतिपालक
छिनमय सुखराशी
ओम् जय जगदीश हरे !

श्रृष्टि स्थितिलय कर्ता
त्रिभुवनका स्वामी
प्रभु ! त्रिभुवनका स्वामी
भक्ति सुधा वर्साऔँ
प्रेम सुधा वर्साऔँ
आासुर भाव निवारक
तारक सुखदाता
प्रभु ! तारक सुखदाता
गुण अनुरूप तिमी हौँ
गुण अनुरूप तिमी हौँ
हरिहर हौँ धाता
ओम् जय जगदीश हरे !

युग युग पालन गर्छौं
अगणित रूपधरी
प्रभु ! अगणित रूपधरी
लीलामय रस विग्रह
लीलामय रस विग्रह
करूणा मूर्ति हरि
ओम् जय जगदीश हरे !



समता शान्ति प्रदायक
सज्जन हितकारी
प्रभु ! सज्जन हितकारी
चरण शरण अब पाऊँ
चरण शरण अब पाऊँ
प्रभु भव भय हारि
ओम् जय जगदीश हरे !

भाव मनोहर देऊ
साधक फलदायी
प्रभु ! साधक फलदायी
जीवन धन्य बनोस् प्रभु
प्रभु पद सेवा पाई
ओम् जय जगदीश हरे !

सम्यम सुर सरिताको
अबिरल धार बगोस्
प्रभु ! अबिरल धार बगोस्
जति-जति जन्म भए पनि
जहाँ-जहाँ जन्म भए पनि
प्रभुमा प्रेम रहोस्
ओम् जय जगदीश हरे !

प्रेम सहित शुभ आरती
जसले नित्य गर्‍यो
प्रभु ! जसले नित्य गर्‍यो
दिन-दिन निर्मल बन्दै
प्रति दिन पावन बन्दै
त्यो भव सिन्धु तर्‍यो
ओम् जय जगदीश हरे ! १

**६) तन मन वचनले प्रभु नाम गाऊ**
**हरे राम हरे कृष्ण भन्दै रमाऊ : भक्त राज आचार्य**

तन मन वचनले प्रभु नाम गाऊ ।
हरे राम हरे कृष्ण भन्दै रमाऊ ॥ तन मन २
कति अग्निमा स्वर्ण चम्कन्छ धेरै ।
अति मोहमा बढ्छ चाहना धेरै ॥ कति २
तेसैले प्रभु गन्ध यो बुझ्न पाऊ । २
सधैं कृष्ण कृष्ण भन्दै विन्ति लाऊ । तन मन ३
सधैं फूल हाँस्दछ काँढामा झुल्दै ।
तिमी भित्रै छौ खोजी हिड्छु म डुल्दै ॥ २
विपत्तिमा हास्ने म सामर्थ पाऊ । २
गोविन्द गोपाल जपी खुब रमाऊँ । तन मन १
म हु बिन्दु भगवान तिमी सिन्धु मेरो ।
म हु दास तिम्रो तिमी स्वामी मेरो ॥ २
म जस्तो छु जे छु अरू के भनाऊ । २
सधैं कृष्ण केशब भनी विन्ति लाऊ । तन मन १

**७ ) श्री कृष्ण गोविन्द हरे मुरारेः (खैजडी भजन)** लक्ष्मी सुवेदी र हरि अधिकारी

श्रीकृष्ण गोविन्द हरे मुरारे
हे नाथ ! नारायण वासुदेव ।
वासुदेव भज ओम् वासुदेवं भज । २
भज वासुदेवं भज वासुदेवं । २
कृष्ण वासुदेवाय हर परमात्मा ।
हे नाथ क्लेष नाशयः गोविन्दाय नमो नमः ।
हे हरि ! पैलाझैं गरी आउन हरि ।
हे राम ! बजाउदै मुरली । हे हरि २
हे हरि ! पैलाझैं गरी
साझ विहान हरि कीर्तन जसले गाउँछन् सुन्छन्
हे हरि ! पैलाझैं गरी
बाँचुन्जेल सुख शान्ति, मरे मुक्ती हुन्छन्



पुग्छ सबलाई चाहेको मनले
कलि युगमा हे राम ! हरिकै कीर्तनले । पुग्छ २
पुग्छ सबलाई चाहेको मनले
तिम्रो लीला जाने जति भक्तलाई सुनाउँछु
पुग्छ सबलाई चाहेको मनले
मुक्ति देउन् भक्त सगैं गोकुलमा आउँछु
हे हरि ! दयाको खानी
हामीलाई गोकुल हे राम ! लाने कि नलाने ? हे हरि २
हे हरि दयाको खानी
बालकैमा एक दिन तिमीले माटो खाका थियौ
हे हरि ! दयाका खानी
आं गर भन्दा देवकीलाई संसार देखाई दियौ
जीवात्माको घट-घटमा तिमी छौं
हाम्रो माया हे राम छ, छैन बुझ्दैनौ
हाम्रो माया हे राम छ, छैन बुझ्दैनौ । जीवात्मा २
जीवात्माको घट-घटमा तिमी छौं
सोह्र हजार गोपिनी त तिम्रै आशा गर्छन्
जीवात्माको घट घटमा तिमी छौं
ब्रह्मा विष्णु महेश्वर नि तिम्रै दर्शन गर्छन्
हे हरि ! कदमको डालीमा
तिम्रै मात्र हे राम ! रूप देख्छु थालीमा । हे हरि २
हे हरि ! कदमको डालीमा
सोह्र हजार एक सय आठमा मन परेकी राधा
हे हरि ! कदमको डालीमा
तिमीलाई भजे हट्छन् मनका दुःख पीर चिन्ता बाधा
दुर्गा, दया, सरस्वती, लक्ष्मी
सबलाई शक्ति हे राम ! कृष्ण नै हौ तिमी । दुर्गा २
दुर्गा, दया, सरस्वती, लक्ष्मी
पहिला मार्‍यौ पुतनालाई अनि राक्षस कंश
दुर्गा, दया, सरस्वती, लक्ष्मी
रक्षा सधैं गर्छौ तिमीले साधु, सज्जन वंश

कृष्ण, तिम्रा लीला छन् कति
सुनी रहन हे राम ! खोज्छ यो मन कति ।
सुनी रहन हे राम ! खोज्छ यो मन कति । सुनी २
कृष्ण, तिम्रा लीला छन् कति
भाद्र महिना अष्टमी तिथि बुधवारको दिन
कृष्ण, तिम्रा लीला छन् कति
मथुरामा ईच्छा गऱ्यौ तिमीले जन्म लिन
कृष्ण तिमी मथुरा आयौ
योगमायालाई हे राम ! सहारा बनायौ । २,
योगमायालाई हे राम ! सहारा बनायौ । कृष्ण १
कृष्ण तिमी मथुरा आयौ
कंश राजले देवकी वसु जेलमा थुन्या थियो
कृष्ण तिमी मथुरा आयौ
देवकीका ६ वै पुत्र कंशले मारी दियो
फस्यो कंश ६ पुत्र मारी
हरि जन्म हे राम ! लिन छन् तयारी । फस्यो २
बस्यो कंश ६ पुत्र मारी
देवकीले सातौँ गर्भ जब धारण गरिन्
बस्यो कंश ६ पुत्र मारी
कृष्णजीका आज्ञाले देवी पृथ्वीमा झरिन्
देवकीले सात गर्भ लिइन्
रोहिणीमा हे राम ! देवीले साट्दिन् । देवकी २
देवकीले सात गर्भ लिइन्
आठौँ गर्भ कृष्णजीको अब पालो आयो
देवकीले सात गर्भ लिइन्
पृथ्विमा हर्ष, सुख, उमंगले छायो
हे हरि ! झपक्कै बली
तिमी श्रृष्टि हे राम ! चलायौ के गरी ?
हे हरि ! झपक्कै बली
तिमी श्रृष्टि हे राम ! चलायौ के गरी ? २



हे हरि ! जगतै भरी
पृथ्वीलाई बढदै गयो दुष्टजनको भार
हे हरि ! जगतै भरी
रूपधारी रूदै भन्छिन् ब्रह्माजीसँग आएर
पृथ्वीको भार हल्का पार्न
गए देवता हे राम ! शिवलाई पुकार्न
गए देवता हे राम ! शिवलाई पुकार्न । गए २
पृथ्वीको भार हल्का पार्न
देवता सबले स्तुति गरी उनकै शरण परे
पृथ्वीको भार हल्का पार्न
तेती खेर गोविन्दले आकाशवाणी गरे
अवतार छिटै लिनेछु मैले
गोकुलमा गई हे राम ! जन्म लेऊ सबैले
अवतार छिटै लिनेछु मैले
गोकुलमा गई हे राम ! जन्म लेऊ सबैले । गोकुल २
अवतार छिटै लिनेछु मैले
देवंगना देवता सबले गोकुल जन्म लिए
अवतार छिटै लिनेछु मैले
मुलुकको भार हरण गर्ने उनै हरि थिए ।
आउँछन् हरि मुलुकको भार हर्न
दुष्ट राक्षस हे राम ! सब निर्मूल पार्नलाई । आउँछन् २
दुष्ट राक्षस हे राम ! सब निर्मूल पार्नलाई ।
आउछन् हरि भूको भार हर्नलाई
रोहिणीलाई सातौँ गर्भ सारी सके थिए
आउछन् हरि भूको भार हर्नलाई
यसोमतिका खबर आफैँ जन्म
बलराम दाजु आफु भाई बनाई
साथै हुन्छिन् हे राम ! त्रिलोककी जानकी । बलराम २
बलराम दाजु कृष्ण भाई बनाई
चतुर्भुज कृष्णजीले मथुरामा अवतार लिए
बलराम दाजु कृष्ण भाई बनाई

देवकी र वासुदेवलाई पहिला दर्शन दिए
बच्चा बनी रून्छन् च्या गरेर
बाबु आमाले हे राम ! हेर्छन् छक्क परेर
बाबु आमाले हे राम ! हेर्छन् छक्क परेर । बच्चा २
बच्चा बनी रून्छन् च्या गरेर
उज्यालो नहुदै मलाई गोकुलमा पुऱ्याऊ
बच्चा बनी रून्छन् च्या गरेर
गोकुलमा योगमाया छन् मथुरामा ल्याउ
रात-रात मै यमुना तरी
गोकुल पुगे हे रामै वासुदेव मुरारी
गोकुल पुगे हे रामै वासुदेव मुरारी । रात २
राता-रातमै यमुना तरी
योगमायालाई देवकीका काखमा राखी दिए
राता-रातमै यमुना तरी
पाले पहरा ब्युँझिए सबै नास्ता वास्ता दिए
बच्चै हुदै खेल्या छन् झूलमा
तलाई मार्न हे राम ! पुग्नु भो गोकुलमा
तलाई मार्न हे राम ! पुग्नु भो गोकुलमा । बच्चै २

**८) तिम्रो घुमरिएको बाल कृष्ण : श्री कर्ण जंग सिजापति**
**सामल मुहार देखी नाच्यो मेरो मन**

जय जय राधा रामणी
जय जय नन्द कुमार
जय गोपीचन्द्र चित्त चोर प्रभु
जय माखन चोर ।
तिम्रो घुमरिएको बाल कृष्ण !
सामल मुहार देखी
नाच्यो मेरो मन
नाच्यो मेरो मन । तिम्रो १
भृगु पाद हृदयमा
पिताम्बरको धोती



तीन लोकै जगमग गर्ने
मुहार दिव्य ज्योती
तिम्रो मुहार दिव्य ज्योती
हेरि मधुर मुस्कान
उस्मा मुरलीको तान
नाच्यो मेरो मन । तिम्रो १
किरिम, कुण्डल जगमग गर्ने
झल्क्यो मुकुट शीरमा
संसारलाई मोह पार्ने
मुरली त्यो हातमा
लिई मुरली त्यो हातमा
नाचे राधासँग श्याम
गाए गोपिनीले गान
नाचे राधासँग श्याम
गाए गोपिनीले गान
कृष्ण ! नाच्यो मेरो मन । २, तिम्रो १
तारा गण ओढनी बने
बादल बने सारी
ढाँचा पारी घुम्ट्यो हाली
नक्कल पारी-पारी
कृष्ण ! नक्कल पारी–पारी
आँखा उन मै जुधाई
घुम्टो भित्र नै शर्माई, २
आज नाच्यो मेरो मन
छम-छम नाच्यो मेरो मन, २
तिम्रो घुमरिएको बाल कृष्ण
सामल मुहार देखी
नाच्यो मेरो मन
छम-छम नाच्यो मेरो मन । ३

## ९) गली त चारै बन्द भए
### कसरी भेटौं म हरिलाई : नुपुर भट्टाचार्य

गली त चारै बन्द भए ।
कसरी भेटौँ म हरिलाई ॥ कसरी २
अग्लो होचो बाटो चिप्लो
अग्लो होचो बाटो चिप्लो
टेकिदैन कही मेरो पाऊ पाऊ........
टेकिदैन कही मेरो पाऊ
गली त चारै बन्द भए
कसरी भेटौँ म हरिलाई । कसरी २
साथ उतै पाईन । २
साछुं जतनले । २
बारम्बार चिप्लिन्छु म
हे.....बारम्बार चिप्लिन्छु म
गली त चारै बन्द भए
कसरी भेटौं म हरिलाई । कसरी २
उच नीच छ महल प्रेमीको । २
मबाट जसमा चढिँदैन । २
गली त चारै बन्द भए
कसरी भेटौँ म हरिलाई । कसरी २
युगौँदेखि छाडिएकी मीरा । २
मलाई तिमीमै लिन गरी । २
गली त चारै बन्द भए
कसरी भेटौं म हरिलाई । २
अग्लो होचो बाटो चिप्लो । २
टेकिदैन कही मेरो पाऊ पाऊ । २
अग्लो होचो बाटो चिप्लो । २
टेकिदैन कही मेरो पाऊ पाऊ । २
गली त चारै बन्द भए
कसरी भेटौं म हरिलाई । २



## १०) हरि भजनमा लाग्यो मेरो मन
### आज बंशीको धुन सुनेर – निर्मल सिल्वाल

हरि भजनमा लाग्यो मेरो मन
आज बंशीको धुन सुनेर
बंशीको धुन सुनेर ओ......
मुरलीको तान सुनेर । बंशी २
हरि भजनमा लाग्यो मेरो मन
आज बंशीको धुन सुनेर । हरि २

के चढाऊ प्रभु तिम्रो चरणमा ? २
फूल चढाऊ भने भवराको जूठो प्रभु !
भँवराको जूठो । फूल २
भँवराले छाडी दियो फूल
आज बंशीको धुन सुनेर ........। भँवरा २

के चढाऊ प्रभु तिम्रो चरणमा ? २
जल चढाऊ भने प्रभु ! माछाको जूठो
माछाको जूठो जल
माछाले छाडी दियो जल
आज बंशीको धुन सुनेर । माछा २
हरि भजनमा लाग्यो मेरो मन
आज बंशीको धुन सुनेर........।

के चढाऊ प्रभु तिम्रो चरणमा ? २
फल चढाऊ भने चमेराको जूठो प्रभु !
चमेराको जूठो । फल २
चमेराले छाडी दियो फल प्रभु !
चमेराले छाडी दियो फल
आज बंशीको धुन सुनेर । २
हरि भजनमा लाग्यो मेरो मन
आज बंशीको धुन सुनेर........ ।

**११) कृष्ण गए वनैमा**

कृष्ण गए वनैमा
राधिकालाई सम्झी मनैमा । कृष्ण २
राधिकालाई सम्झी मनैमा । २
कृष्ण गए .......
कृष्णजीको सानो छँदा नाम थियो काले
माटो खादा गाली गर्थिन यशोदा माताले । २
कृष्ण गए वनैमा.................. २
सोह्र सय गोपिनीका सोह्र सय सारी
साना-साना कृष्णजीलाई पुगी गयो भारी । २
कृष्ण गए वनैमा ...........................२
दही नौनी चोरी चोरी हण्डी फुटाउने । २
गाइ गोठ घुमी घुमी बाच्छा फुकाउने । २
कृष्ण गए वनैमा ..........................। २
राधिकालाई सम्झी मनैमा ...............। ३

**१२) कृष्णको अवतार (खैंजडी भजन)**

(भगवान रामको सातौँ अवतार पछि श्रीकृष्ण भगवानको आठौँ अवतारको बारेमा )

नारायण !
कृष्णको अवतार । २
हे सुन ! सुन ! कृष्णको अवतार
ओ कृष्णको अवतार । २
हरे राम ! कृष्णको ३
हे अष्टम अवतार नारायणको
कृष्णको अवतार । हे अष्टम २

(कंसले देवकीको गर्भको अष्टम अवतारले उस्को बध हुन्छ भनी थाहा पाए पछि, उस्ले देवकी तथा वसुदेवलाई कारागारमा थुनेर राख्यो ।)

नारायण !
देवकी र वसुदेवलाई
राख्यो थुनेर । २
हरे राम ! राख्यो थुनेर । २



देवकी र वसुदेवलाई
राख्यो थुनेर । २
नारायण ! देवकी ...२

(कंसले श्रीकृष्णलाई मार्न अनेर गर्यो तर सकेन । यसरी श्रीककृष्ण संसारमा आउनु भई विभिन्न लीला गर्नु भयो ।)

नारायण !
कृष्णले लीला गर्नु भो । २
कति राम्रो लीला गर्नु भो.... । कृष्ण २
चतुर्बाहु नारायणले लीला गर्नु भो .....२
नारायण !
हे चतुर्बाहु .................................२
नारायण !
अष्टम अवतार नारायणको
कृष्णको अवतार

(श्री कृष्णले विभिन्न लीलाहरू गर्दै जरासन्धको बध गर्नु भो, गोपिनीहरूसँग प्रिती गास्नु भो । यसै क्रममा बाँडासुर तथा उस्को ठूलो सेनासँग र छपन्न कोटी यदु वंशीसँग लडाई भयो ।)

नारायण !
भारी लडाई भो । २
हरे राम ! भारी लडाई भो । २
हरे दैव ! के लाग्छ र
भारी लडाई भो । भारी २

(अघिल्लो जन्ममा अंगदलाई श्रीरामले **बाबु मार्ने** वरदान दिनु भएको थियो । सोही अंगदले ब्याधाको तथा रामले कृष्णको अवतार लिएर आउनु भयो । तसर्थ उहाँको लीला अपरम्पार छ, बुझी नसक्नु छ । )

नारायण !
बुझी नसक्नु । २
हेर ! हेर ! बुझी नसक्नु । २
बुझी नसक्नु । २

कोहीलाई मार्ने
कोहीलाई तार्ने
बुझ्न नसक्नु । कोहीलाई २

भगवान्का लीलाहरू पनि समाप्त हुन थाल्नु, श्राप मोचन पनि सकिन थालेकोले बैकुण्ठ धाम फर्कन बेलामा उहाँले म फर्किने बेला भो भनी सुनाउँदा भक्त विदुरले म पनि हजुरसँगै बैकुण्ठधाम जान्छु भन्दा)

नारायण !
लागे बताउन ।
हे तेती खेर लागे बताउन । २
भए भरको कुरो सबै
लागे बताउन । भए २

(हजुरले यो संसार छाडी बैकुण्ठधाम जानु भो भने यो संसार छोरी अनमाई सकेपछिको घर र सूर्य नभएको दिन जस्तो हुन्छ । हजुरसँगै जान पाए हुन्थ्यो भनी भक्त विदुरले भने । भगवान्ले यो अष्टम अवतारका लीलाहरू समाप्त भएकोले म जानै पर्छ भन्दा विदुर भने)

नारायण !
लागे रून लाई । २
धुरूधुरू लागे रून लाई । २
हरे राम ! लागे रूनलाई
बरबर आँसु झारे
मनमा गाँठो पारे । २
लागे रून लाई । २

(विदुरले म पनि धाम जान्छु भन्दा भगवान्ले सम्झाउँदै भन्नु भयो । अहिले होइन, केही समय पछि तिम्रो लागि पनि विमान आउने छ, अब तिमी बद्रीका आश्रममा गएर वास बस भनी सम्झाउनु भयो ।)

नारायण !
लागे सम्झाउन । २
हे तेतिखेर, लागे सम्झाउन । २



लागे सम्झाउन । २
हरे राम ! लागे सम्झाउन । २
भएभरको कुरो सबै लागे सम्झाउन ।
ए नारायण ! भएभरको कुरो सबै लागे सम्झाउन ।
लागे सम्झाउन । हे ! लागे सम्झाउन ।

धाम जानको लागि श्रीकृष्ण पिपलको बोट आश्रममा विमान कुरेर बस्नु भएको थियो । उता ब्याधाको रूपमा रहेको अंगदले शिकार खेल्दा-खेल्दै एउटा मृग फेला पारेछ र उस्ले मृगलाई ताकी बाड हान्दा बाँड लागि बिझेछ । अनि मृग घनघोर जंगलमा भाग्यो । मृग भाग्दै र ब्याधाले खेद्दै गयो । भगवान् उता पिपलको रूखमुनी विमान कुरेर बस्नु भएको थियो । उहाँले पिताम्बर वस्त्र धारण गर्नु भएकोले त्यो टलटल टल्किरहेको थियो । त्यसरी पिपलको पातहरूलाई छिछोल्दै आएको घामले पिताम्बर वस्त्र झनै टल्किरहेकोलाई ब्याधाले मृग त्यहाँ पल्टेको बुझ्यो र बाड खिँची हान्यो ।

नारायण !
छोडी दिएछ । २
तेती खेरी छोडी दिएछ । २
छोडी दिएछ । २
हरे राम ! छोडी दिएछ । २
        छोडी दिएछ । २
हरे दैव, के लाग्छ र
        छोडी दिएछ । २
हे नारायण ! हरे दैव ! के लाग्छ र
छोडी दिएछ । २

(यसरी भगवान् श्रीकृष्णले आफ्नो देब्रे पैर माथि दाहिने खुट्टा अड्याउनु भएको र बुढी औंला फिटफिट गरेर हल्लाइरहनु भएको थियो । त्यो देखेर ब्याधाले मृगको कान हल्लेको ठानेछ । त्यो बुढी अम्लालाई ताकेर मृगको कान भनेर ताकेर ब्याधाले बाँड चलाएछ । त्यो बाँड श्रीकृष्णको दाहिने गोडाको बुढी अम्लामा बिझ्न गयो । भगवान् श्रीकृष्ण भने मुर्छा पर्नु भयो ।

नारायण !
भगवान् कृष्ण भने, परे मुर्छामा । २
हे ! तेतीखेर परे मुर्छामा ।
हरे ! परे मुर्छामा । २
हरे राम ! परे मुर्छामा । २
हरे दैव ! के लाग्छर
परे मुर्छामा ।
ए नारायण ! हरे दैव २

(यतातिर श्रीकृष्ण मुर्छा पर्नु भयो । उता ब्याधाले मृगलाई अर्को बाँड पनि लाग्यो भनी कुद्दै गई हेर्दा त श्रीकृष्णको दाहिने खुट्टाको बुढी अम्लामा बाँड लागेको देखी पश्चाताप गर्दै ब्याधाले घुडा टेकेर रून लाग्यो ।)

लाग्यो रूनलाई । २
हे धरधर लाग्यो रूनलाई । २
लाग्यो रूनलाई
आँसुको धारा
बगाएर सारा
लाग्यो रूनलाई । आँसु २

यसरी ब्याधाले बरबर आँसु झार्दै रून थाल्यो र माफी माग्दै म भूलमा परेँ, मलाई क्षमा गरिबक्सियोस् भन्न थाल्यो । मैले मृग भनी हानेको, मेरो बाँड हजुरको पैरमा लाग्यो । क्षमा पाऊँ । यत्तिकैमा भगवान्ले भन्नु भयो । हेर अघिल्लो जन्ममा तिमी अंगद भएर आएका थियौ । लङ्कामा विजय प्राप्त गरिसके पछि सबैलाई एक-एकवटा वरदान दिने क्रममा तिमीलाई वरदान माँग भन्दा तिमीले मेरो बाबु मार्ने शत्रुलाई मार्न पाऊँ भनी वरदान माग्यौँ । मैले तेतिखेर तिमीलाई त्यो वरदान दिए । यतिखेर त्यो वरदानको पालना गर्न यो मेरो अष्टम अवतारमा मैले त्यो पुरा गरेको हो । मैले यो कष्ट खप्नै पर्ने हो । तिमीलाई केही दोष लाग्दैन भनी सबै कुराहरू बताई दिनु भयो । त्यति नै खेर स्वर्गबाट विमान पनि आइपुग्यो । श्रीकृष्णले ब्याधाको बाँडलाई थुतेर फाली विमानमा बस्नु भई स्वर्गमा जानु भयो ।



नारायण !
गए स्वर्गैमा । २
भरर रर गए स्वर्गैमा । २
हरे राम ! गए स्वर्गैमा ।
हेर्दा हेर्दै
देख्दा देख्दै
गए स्वर्गैमा । हेर्दा २

(यसरी श्रीकृष्ण भगवान् स्वर्ग गइसके पछि भगवान्को अष्टम अवतारको लीला पनि पुरा भयो । चतुर्भज नारायण, कृष्णको लीला कसैले भनेर साध्य छैन ।)

नारायण !
लीला अपारको ।
ए ! हेर ! हेर ! लीला अपारको । २
ईश्वरको महिमा
बुझिसक्नु छैन । २
लीला अपारको । २

**१३) आउन साथी सबैले भजन गरौं ।**

आउन साथी सबैले भजन गरौं
कृष्णको नाम जप्नु छ यो कलि कालैमा ।
नामको महिमा सबैले गाउनु पर्छ
ईश्वरको नामले तरिन्छ यो कलि कालैमा । २

यो मन भित्र हृदयमा प्रभुलाई सजाऊं
मनको कालो मैलो हटाई प्रेम भाव जगाऊँ । यो मन २
नाम जपेर मात्र पार तरिन्छ
महिमा यस्को ठूलो छ यो कलि कालैमा । २

धर्म गर्नलाई नपर्खनु नभन्नु है भोलि
भोलि-भोलि भन्दा-भन्दै लाग्ला है कालको गोली । धर्म २

दीन दुःखीको सबैले सेवा गरौं
सेवा नै धर्म ठूलो छ यो कलि कालैमा ।

आउन साथी ..................................। १
ईश्वरको नामले तरिन्छ यो कलि कालैमा । २

**१४) मिली जुली गाऊ आरती हरिको**

मिली जुली गाऊ आरती हरिको । २
कृष्ण कन्हैयाको पीर हरैयाको । २
मिली जुली गाऊ आरती हरिको । २

कन्चन थलियामा कपुर र बाति
पारी सब ठीक भाती भाती
फूल चढाऊ पाऊमा हरिको । कृष्ण २
स्नेहको झोलमा चोपी बत्ति । २
श्रमको आगोले बाली बत्ति । २
आरती गाऊं परमेश्वरको । २, कृष्ण २

मनमा हरिकै मूर्ति सजाऊ । २
सबमा हरि छन् भाव बनाऊ । २
हृदय चढाऊ पाऊमा हरिको ।
आरती गाऊ परमेश्वरको । २, कृष्ण २
मिली जुली गाऊ आरती हरिको । ७



## अनुक्रमणिका

१. श्रीमद्भगवद्गीता, गीताप्रेस, गोरखपुर ।
२. श्रीमद्भगवद्गीता यथारूपा, श्री श्रीमद् ए.सी. भक्तिवेदान्त स्वामी प्रभुपाद तथा अन्य विभिन्न श्रोतहरू ।